# इन्द्रजात्रा


लेखक

डा. अजय क्रान्ति शाक्य

सुरेश किरण मानन्धर

सहायक लेखन

सन्ध्या वज्राचार्य



प्रकाशक

यें महानगरपालिका

काठमाडौं महानगरपालिका

शहरी योजना आयोग

*प्रकाशक:*

काठमाडौं महानगरपालिका
शहरी योजना आयोग

*प्रकाशन अधिकार:*

काठमाडौं महानगरपालिका

*पहिलो प्रकाशन:*

२०७७ भाद्र

*नक्सा:*

रजिता शाक्य उदास

*चित्र:*

एकाराम सिं

*छपाई:*

१००० प्रति

ISBN No.: 978-9937-0-7472-8

*साजसज्जा:*

बाबुराजा महर्जन

*मुद्रक:* एम. एस. प्रिन्टिङ्ग सोलुसन
फोन नं. ०१-४१०८११०
मो. ९८५११८५०४२

काठमाडौं महानगरपालिका
नगर कार्यपालिकाको कार्यालय
काठमाडौं, ३, नेपाल

ने.स. ११४० यंलाथ्व ६
मिति ....२०७७।०५।०८.......

पत्र संख्या:-

चलानी नं.:-



## धन्यवाद एवं शुभकामना

काठमाडौं महानगरपालिका ऐतिहासिककाल देखि नै कला, संस्कृति, सम्पदा र मौलिक वास्तुकलाले सम्पन्न नगरको रूपमा रहि आएको छ। यहाँको कला, संस्कृति र सम्पदाले विश्व सामु समग्र मुलुककै पहिचान स्थापित गरेको छ। राष्ट्र संघीय निकाय युनेस्कोद्वारा अनुसूचित नेपालका आठ वटा सांस्कृतिक विश्व सम्पदाहरू मध्ये चार वटा काठमाडौं महानगर भित्रै छन्। हाम्रा पुर्खाले निर्माण गरेका यी सांस्कृतिक धरोहरहरूकै आधारमा हामीले पनि 'सांस्कृतिक नगर, काठमाडौं महानगर' भन्ने अभियानलाई महानगरको मूल नारा बनाएका हौं।

काठमाडौंमा मनाइने विभिन्न संस्कृति मध्ये इन्द्रजात्रा अर्थात् यँयाः एक प्रमुख जात्रा हो। काठमाडौंको पहिचान नै बनिसकेको यो जात्रालाई संवर्द्धन र प्रवर्द्धन गर्न काठमाडौं महानगरपालिकाको पहलमा संघीय सरकार, बागमती प्रदेश सरकार र गुठी संस्थानको समेत सहभागितामा पाँच करोड रुपैयाँको अक्षय कोष निर्माण गरेका छौं। यो जात्रालाई अन्तर्राष्ट्रिय क्षेत्रमा प्रचार प्रसार गरी यसको प्रवर्द्धन गर्न गत वर्ष काठमाडौं महानगरपालिकाले आफ्नो भगिनी सम्बन्ध भएका विभिन्न मुलुकका नगरका प्रमुख एवं प्रतिनिधिहरूलाई इन्द्रजात्रा अवलोकन गर्न निम्त्याएका थियौं। साथै, सो जात्रासम्बन्धी समग्र जानकारी सहितका ग्रन्थ प्रकाशनको जिम्मेवारी शहरी योजना आयोगलाई सुम्पेका थियौं। सो अनुरुप विज्ञ डा. अजय क्रान्ति शाक्य लगायत आयोगका सहायक विज्ञद्वय सुरेश किरण मानन्धर र सन्ध्या वज्राचार्यको सहयोगमा यो पुस्तक तयार भएको छ। पुस्तक तयार पार्न उहाँहरूले गहन अध्ययन, अनुसन्धान र लेखनमा धेरै मिहिनेत गर्नुएको छ। म उहाँहरूको मिहिनेत र लगनशिलताको हृदयदेखि सन्हाहना गर्दछु।

इन्द्रजात्रा जस्तै काठमाडौं महानगरका अन्य महत्वपूर्ण जात्राहरू सेतो मछिन्द्रनाथको जात्रा, पचली भैरवको जात्रा र पाहाँचःऱ्हे जात्राको संरक्षण एवं प्रवर्द्धनको लागि पनि काठमाडौं महानगरपालिकाले सहकार्य अघि बढाइरहेको छ। काठमाडौंको कला संस्कृति संरक्षणका लागि विभिन्न टोलका स्थानीय बाजागुरुहरूलाई नगद सहित सम्मान गर्ने र बाजा खरिद र मर्मत कार्यमा सहयोग गरेर परम्परा र संस्कृतिलाई निरन्तरता दिने काम गर्दै आइरहेको छ।

अन्तमा, इन्द्रजात्रा सम्बन्धी यस पुस्तकको अनुसन्धान एवं प्रकाशन कार्यका लागि शहरी योजना आयोगका उपाध्यक्ष श्री सरोज बस्नेत, सदस्यहरू र पुस्तक प्रकाशनमा प्रत्यक्ष अप्रत्यक्ष सहयोग गर्नुहुने सबैलाई धन्यवाद दिन चाहन्छु। आशा छ, इन्द्रजात्राको गरिमा र महत्व बारे देश विदेशमा प्रचार प्रसार गर्न र अध्ययन अनुसन्धान गर्न यो पुस्तक सहायकसिद्ध हुनेछ।

विद्यासुन्दर शाक्य
प्रमुख
काठमाडौं महानगरपालिका

फोन नं.: ४२३१४८१ (प्रमुख), ४२३१४२९ (उपप्रमुख), ४२३१३१२ (कार्यकारी अधिकृत), ४२६८५०६/७/८/१०, फ्याक्स नं.: ४२६८५०९
ईमेल: kmcmayor@mos.com.np, ceo@kathmandu.gov.np पोष्ट बक्स नं. ८४१६, बाग दरबार, काठमाडौं, नेपाल
वेभ साइट: www.kathmandu.gov.np

काठमाडौं महानगरपालिका
नगर कार्यपालिकाको कार्यालय
बागदरबार, काठमाडौं, बाग्मती प्रदेश, नेपाल

## शुभकामना सन्देश



काठमाडौं उपत्यकामा मनाइने अत्यन्त विशिष्ट र मौलिक पर्वहरू मध्ये इन्द्रजात्रा एक प्रमुख पर्व हो । हरेक वर्ष भाद्रशुक्ल द्वादशीका दिन धुमधामपूर्वक मनाइने इन्द्रजात्रा पर्वसँग नेपाली समाजको सांस्कृतिक जीवन जोडिएको छ । यस पर्वको महत्वलाई अझ उँचो बनाई देश विदेशसम्म प्रचार गर्ने उद्देश्यले इन्द्रजात्रा सम्बन्धी अनुसन्धानात्मक पुस्तक प्रकाशन गर्न पाउँदा मलाई अत्यन्त खुशी लागेको छ । 'सांस्कृतिक नगर काठमाडौं महानगर' भन्ने नारालाई सार्थक तुल्याउन काठमाडौं महानगरपालिकाले चालेको एक सार्थक कदमका रूपमा यसलाई लिन सकिन्छ ।

इन्द्रजात्राबारे अध्ययन अनुसन्धान गरी पुस्तक तयार गर्ने काठमाडौं महानगरपालिका शहरी योजना आयोग, अध्ययन अनुसन्धान एवं लेखन कार्यको जिम्मेवारी पुरा गर्ने विज्ञ टोली र सम्बन्धित सबैलाई हार्दिक धन्यवाद दिन चाहन्छु ।

यो पुस्तक काठमाडौंको कला, संस्कृति र सम्पदा सम्बन्धी विषयमा चासो राख्ने र खोज अनुसन्धान गर्ने जिज्ञासुहरूका लागि उपयोगी पाठ्य सामाग्रीका रुपमा रहन सक्ने विश्वास लिएकी छु । धन्यवाद । जय नेपाल ।

हरिप्रभा खड्गी श्रेष्ठ
उपप्रमुख
काठमाडौं महानगरपालिका

मिति: २०७७ / ०५ /०८

बागदरबार, काठमाडौं, नेपाल । फोन नं.: ४२६८५०६, फ्याक्स: ४२६८५०९
पो.ब.नं.: ८४१६, ईमेल: info@kathmandu.gov.np, kmcmayor@mos.com.np, वेभसाईट: www.kathmandu.gov.np

# काठमाडौं महानगरपालिका
## यें महानगरपालिका
## नगर कार्यपालिकाको कार्यालय
काठमाडौं, नेपाल

पत्र संख्या:-

चलानी नं.:-

मिति २०७७।०५।०८



**शुभकामना ॥**

काठमाडौं महानगरपालिकाको पहलमा ऐतिहासिक पर्व "इन्द्रजात्रा" सम्बन्धी अनुसन्धानात्मक पुस्तक प्रकाशन गर्न लागेको उपलक्ष्यमा हार्दिक शुभकामना व्यक्त गर्दछु ।

हाम्रो देश प्राकृतिक सुन्दरताको अतिरिक्त अनेक ऋषिमुनि, महान तपस्वी, ध्यानी तथा ज्ञानीहरूको तपोभूमि रहँदै आएको छ । उनै ध्यानी तपस्वीहरूको आध्यात्मिक चिन्तनद्वारा सिर्जित अनगिन्ती संस्कार एवं संस्कृतिहरूबाट यो मुलुकको समाज विकसित हुँदै आएको छ । हाम्रा यी जीवनोपयोगी ऐतिहासिक संस्कार एवं संस्कृतिहरू वर्तमानकालमा हाम्रो पहिचानको एक अभिन्न अंग बन्न पुगेको यथार्थ सर्वविदितै छ । यिनै उन्नत परम्परागत संस्कृतिहरू मध्ये काठमाडौंमा विशेषगरी नेवारी समुदायले मनाउने इन्द्रजात्रा पनि एक महत्वपूर्ण एवं विशिष्ट पर्व हो ।

ऐतिहासिक पर्व इन्द्रजात्रा बारे यथार्थ जानकारी दिने उद्देश्यले काठमाडौं महानगरपालिका शहरी योजना आयोगबाट अध्ययन अनुसन्धान गरी पुस्तक समेत प्रकाशन गर्न लागिएको यो रचनात्मक कार्य प्रशंसनीय छ । यस पुस्तकबाट काठमाडौं महानगरमा मनाइने मौलिक संस्कृतिको महत्व अझ उजागर हुने विश्वास लिएको छु ।

अन्तमा, यस कार्यका लागि शहरी योजना आयोगका सम्पूर्ण पदाधिकारीहरू एवं पुस्तक लेखन तथा अनुसन्धानमा सक्रिय हुनुभएका विज्ञ टोलीलगायत सम्बद्ध सबैलाई पनि धन्यवाद दिन चाहन्छु । धन्यवाद ।

एकनारायण अर्याल<br>
प्रमुख प्रशासकीय अधिकृत<br>
सचिव, नेपाल सरकार<br>
काठमाडौं महानगरपालिका

फोन नं.: ४२३१४८१ (प्रमुख), ४२३१४२९ (उपप्रमुख), ४२३१३१२ (कार्यकारी अधिकृत), ४२६८५०६/७/८/१०, फ्याक्स नं.: ४२६८५०९
ईमेल: kmcmayor@mos.com.np, ceo@kathmandu.gov.np पोष्ट बक्स नं. ८४१६, बागै दरबार, काठमाडौं, नेपाल
वेभ साइट: www.kathmandu.gov.np

# शहरी योजना आयोगको तर्फबाट मन्तव्य

काठमाडौं उपत्यकाका तीन मुख्य शहरहरू काठमाडौं, ललितपुर र भक्तपुरको मौलिक वास्तुकला, भाषा, रितिरिवाज, कला, संस्कृतिले यहाँको जनजीवन जीवन्त बनाउनुको साथै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय रुपमा विशिष्ट पहिचान बनाएको छ । तर विकासको अवधारणालाई राम्ररी परिभाषित गरी कार्यान्वयन गर्न नसक्दा यहाँका मूर्त अमूर्त सम्पदाहरूको मौलिक अस्तित्व संकटमा पर्ने खतरा रहेको छ । यसै सन्दर्भमा काठमाडौं महानगरपालिकाले "साँस्कृतिक शहर, काठमाडौं नगर" भन्ने यथार्थलाई साकार पार्न आफ्नो नीति, कार्यक्रम तथा बजेटमा सम्पदाको सम्वर्धन तथा प्रबर्द्धनलाई विशेष प्राथमिकतामा राखेको छ ।

काठमाडौंको मौलिक जात्रा परम्परामध्ये सबभन्दा महत्वपूर्ण इन्द्रजात्रा हो । आठ दिनसम्म चल्ने यस पर्व यहाँका आदिवासी समुदायमात्र नभई सम्पूर्ण उपत्यकावासीले नै ठूलो हर्षउल्लासका साथ मनाउँदै आएका छन् । इन्द्रजात्राको तेश्रो दिनमा राष्ट्रप्रमुख, राज्यका तीनै अङ्गका प्रमुख, विदेशी कुटनीतिक नियोगका प्रमुखहरूको साथै विशिष्ट गण्यमान्य अतिथिगणबाट जात्राको अवलोकन गर्ने गरिन्छ । यस पर्वलाई अन्तर्राष्ट्रियकरण गर्न गएको बर्षदेखि काठमाडौं महानगरपालिकाले भगिनी सम्बन्ध भएका नगरहरूको प्रमुखलाई आमन्त्रण गर्ने पनि गरेको छ ।

विगतमा इन्द्रजात्रा सम्बन्धी थुप्रै लेख, रचना, शोधपत्र आदि प्रकाशित भएका छन् । तर धेरैजसो रचनाहरू फुटकर, कुनै एक सन्दर्भ वा विषयसँग मात्र सम्बन्धित रहेका र इन्द्रजात्राको सम्पूर्ण इति वृतान्त एकीकृत रुपमा एउटै पुस्तकमा समेटिएको पाइएन । यसबारेमा थप अध्ययन, अनुसन्धान गरी भावी पुस्तालाई सही सूचना तथा जानकारी दिने उद्देश्यले गत बर्षको इन्द्रजात्राको लगत्तैपछि शहरी योजना आयोगबाट शोधकार्यको थालनी गर्ने जमर्को गरियो

र करिब दश महिनाको अथक मिहिनेतपछि यसले पुस्तकको रुप ग्रहण गर्न सक्यो । जुन अहिले यहाँहरूको सामु छ ।

यो पुस्तक तयार गर्न निरन्तर हौसला तथा प्रेरणा दिने काठमाडौं महानगरपालिकाका प्रमुख विद्यासुन्दर शाक्यज्यू प्रति हार्दिक आभार व्यक्त गर्न चाहन्छु । ग्रन्थको परिकल्पना गर्नुका साथै दस्तावेज संकलन, अनुसन्धान तथा लेखनमा पनि मुख्य भूमिका निभाउनुहुने वागमति प्रदेश सभाका माननीय डा. अजय क्रान्ति शाक्यज्यूप्रति शहरी योजना आयोगको तर्फबाट विशेषरुपमा आभारी छु । इतिहासकार, संस्कृतिविद तथा विषयविज्ञहरूसँग अन्तर्वार्ता लिने, तथ्यपरक सूचनाहरूको संकलन गर्ने तथा लेखन कार्यमा संलग्न आयोगका साथीहरूलाई हार्दिक धन्यवाद ज्ञापन गर्न चाहन्छु । अग्र भूमिकामा रही कार्य गर्नुहुने सहायक विज्ञद्वय श्री सुरेश किरण मानन्धर तथा श्री सन्ध्या बज्राचार्यप्रति आयोग विशेषरुपमा अनुगृहित छ । साथै पुस्तकलाई थप आकर्षक बनाउन चित्र तयार गर्ने वरिष्ठ कलाकार श्री एकाराम सिंह, तस्वीरहरू उपलब्ध गराउने फोटोग्राफर साथीहरू, जात्राको रुट नक्शा तयार गर्ने आयोगका सहायक विज्ञ आर्किटेक्ट श्री रजिता शाक्य उदासप्रति पनि हार्दिक धन्यवाद तथा आभार व्यक्त गर्न चाहन्छु । कोभिड १९ को कारणले भएको बन्दाबन्दीमा समेत लगनशीलताका साथ कार्य गर्नुहुने तपाई सबैप्रति कृतज्ञता व्यक्त गर्न चाहन्छु ।

यस किसिमको कार्य योजना आयोगको पहिलो प्रयास भएको हुँदा अवश्यमेव केही कमी कमजोरी वा त्रुटि हुन सक्लान् । कमी वा त्रुटि औंल्याउने जिम्मा तपाई पाठकहरूलाई नै सुम्पन चाहन्छु । आगामी दिनमा यसको नेपाल भाषा तथा अंग्रेजीमा अनुवाद गर्नुपर्छ भन्ने हामीलाई लागेको छ । साथै अन्य महत्वपूर्ण तर ओझेलमा परेका विषयहरूमा पनि यस्तै अनुसन्धनात्मक ग्रन्थ प्रकाशित गर्दै जाने हाम्रो योजना रहेको पनि जानकारी गराउन चाहन्छु ।

**सरोज बस्नेत**
उपाध्यक्ष
काठमाडौं महानगरपालिका
शहरी योजना आयोग, थापाथली

श्रावण २, २०७७
(११४० दिल्लागा द्वादशी)

# लेखकीय

काठमाडौं महानगरपालिका विभिन्न कला, संस्कृति एवं मूर्त अमूर्त सम्पदाहरूले भरिएको सांस्कृतिक नगर हो । विश्व सम्पदाको सूचीमा सूचीकृत नेपालका दश वटा सम्पदाहरू मध्ये चार वटा सांस्कृतिक सम्पदाहरू काठमाडौं महानगरपालिका भित्रै विद्यमान रहेका छन् । नगरको यही सांस्कृतिक विशेषतालाई अंगीकार गर्दै काठमाडौं महानगरपालिकाले 'सांस्कृतिक नगर, काठमाडौं महानगर' भन्ने मूल नारालाई अभियानकै रूपमा अघि बढाएको छ। यहाँ विद्यमान विभिन्न मौलिक सांस्कृतिक जात्रा पर्वहरू मध्ये इन्द्रजात्रा एक प्राचीन एवं अति विशिष्ट संस्कृति हो । भाद्रशुक्ल द्वादशीदेखि लगातार आठ दिनसम्म मनाइने यो जात्राका बेला काठमाडौं महानगरमा पूर्ण उल्लासमय वातावरण सिर्जना भइरहेको हुन्छ ।

काठमाडौंको विशिष्ट पर्व भएको कारणले काठमाडौं महानगरपालिकाले इन्द्रजात्राको संवर्द्धन र प्रवर्द्धनलाई उच्च प्राथमिकतामा राखेको छ । यसै क्रममा इन्द्रजात्रालाई अन्तर्राष्ट्रिय रुपमा प्रचार प्रसार गरी पर्यटकीय प्रवर्द्धन गर्न गत वर्ष काठमाडौं महानगरपालिकाले आफूसँग भगिनी सम्बन्ध रहेका विश्वका विभिन्न नगरका प्रमुख, उपप्रमुख एवं प्रतिनिधिहरूलाई इन्द्रजात्रा पर्व अवलोकनका लागि निमन्त्रणा गरेको थियो । उक्त निमन्त्रणालाई स्वीकार गरी काठमाडौं पाल्नुभएका विदेशी पाहुनाहरूलाई इन्द्रजात्रासम्बन्धी जानकारी दिने प्रयोजनका लागि सामग्रीहरूको खोजी हुँदा पर्याप्त रुपमा उपलब्ध हुन सकिएन । जसले गर्दा इन्द्रजात्रा जस्तो विशिष्ट पर्वका विषयमा एक विस्तृत अनुसन्धानात्मक ग्रन्थको आवश्यकता महसुस हुन पुग्यो । सोही आवश्यकतालाई पूर्ति गर्न काठमाडौं महानगरपालिका शहरी योजना आयोगले आफ्नै स्रोत र साधनको प्रयोगबाट इन्द्रजात्राबारे अध्ययन अनुसन्धान गरी एक छुट्टै ग्रन्थ तयार गर्ने सोच बनायो । उक्त कार्यको लागि काठमाडौंको सांस्कृतिक अध्ययन अनुसन्धान कार्यमा सक्रिय रहनुभएका बागमती प्रदेशका सांसद माननीय डा. अजय क्रान्ति शाक्यको सल्लाह बमोजिम उहाँको

संयोजकत्वमा कामपा शहरी योजना आयोगका सहायक विज्ञद्वय सुरेश किरण मानन्धर र सन्ध्या वज्राचार्यलाई सो कार्यको जिम्मेवारी प्रदान गरियो। हामी तीन जनाको यो समूहले करिब दश महिनासम्म लगातार गरेको अध्ययन, अनुसन्धानबाट इन्द्रजात्रा सम्बन्धी यो ग्रन्थ तयार भएको छ।

यो पुस्तक तयार गर्न अध्ययन अनुसन्धान गर्नका लागि विवरणात्मक तथा विश्लेषणात्मक अनुसन्धान पद्धति अनुसार कार्यारम्भ गरेका थियौँ। अध्ययन अनुसन्धानका क्रममा प्राथमिक स्रोत संकलनका लागि नेपाल उपत्यकाका संस्कृति विषयका विभिन्न विद्वान एवं विज्ञहरू, इन्द्रजात्रासँग आवद्ध विभिन्न सांस्कृतिक नाच एवं सहायक जात्राहरूसँग सम्बन्धित गुठियारहरूलाई प्रत्यक्ष भेटेर अन्तर्वार्ता लिएका थियौँ। उहाँहरूबाट प्राप्त सूचना एवं विचारहरू यो अध्ययन कार्यमा अत्यन्त उपयोगी सिद्ध भएको छ। त्यस्तै द्वितीय स्रोतका रुपमा नेपालको संस्कृति, इतिहास, समाज, राजनीति आदि विषयमा विभिन्न स्वदेशी तथा विदेशी विद्वानहरूले लेख्नुभएको पुस्तक तथा लेखरचनाहरूको विस्तृत अध्ययन गरिएको थियो। समग्र इन्द्रजात्राका बारेमा मात्रै अध्ययन गरी तयार गरिएको छुट्टै ग्रन्थ उपलब्ध नभएको कारणले यसका लागि पूर्णिमा, प्राचीन, अभिलेख जस्ता अनुसन्धानात्मक लेख संग्रहमा प्रकाशित विभिन्न लेखरचनाहरूको समेत सहयोग लिनुपरेको थियो। द्वितीय स्रोतको रुपमा अध्ययन गरिएका ती अधिंकांश सामग्रीका आवश्यक अंशहरूलाई लिप्यान्तर एवं भाषान्तर गर्ने कार्य सहायक विज्ञ वज्राचार्यले गरेकी थिइन् भने संकलित ती सामग्रीहरूको विश्लेषण एवं लेखन कार्य संयोजक डा. शाक्य र सहायक विज्ञ मानन्धरबाट सम्पादन गरिएको थियो। संकलित सामग्रीहरूको अध्ययन एवं विश्लेषण गरी लेखन कार्य सम्पन्न गर्न भने कोभिड-१९ महामारीका कारण नेपाल सरकारले लागू गरेको तीन महिना लामो लकडाउन निकै सहयोगी साबित भयो। उक्त अवधिभरि नै हामी संयोजक डा. शाक्यको रविभवनस्थित निजी पुस्तकालयमा बसी प्राप्त सामग्रीहरू बारे विचार विमर्श गर्दै यस पुस्तक तयार गर्न समर्थ भएका थियौँ। यस क्रममा प्राप्त भएका सामग्रीहरूलाई स्रोत सहित उल्लेख गर्ने र कतिपय स्रोतको विश्वसनीयताका सन्दर्भमा विश्लेषण गरी त्यसमाथि टिप्पणी गर्ने कार्य पनि यसमा भएको छ।यसरी कतिपय पूर्व प्रचलित भ्रमहरूलाई विश्लेषण गरी चिर्ने र तर्कका आधारमा नयाँ अवधारणा स्थापित गर्ने कार्य पनि यसमा गरिएको छ। तसर्थ इन्द्रजात्रा पर्व जस्तै इन्द्रजात्रा सम्बन्धी यो पुस्तक पनि

मौलिक हुन पुगेको हामीलाई लागेको छ। यसमा इन्द्रजात्राको मौलिक पक्ष र यसको इतिहासमा रहेको सत्यतथ्यलाई सकभर उजागर गर्ने प्रयास गरेका छौँ। यो पुस्तक इन्द्रजात्रा लगायत काठमाडौंका मौलिक संस्कृतिप्रति अभिरुची राख्नुहुने जिज्ञासु पाठक एवं यस बारे अनुसन्धान गर्न इच्छुक अध्येताहरूका लागि उपयोगी हुने विश्वास गरेका छौँ।

पुस्तक तयार गर्ने क्रममा हामीलाई निरन्तर हौसला र प्रेरणा दिइरहनु हुने काठमाडौं महानगरपालिकाका प्रमुख श्री विद्यासुन्दर शाक्यप्रति विशेष आभारी छौँ। साथै अध्ययन अनुसन्धानका क्रममा समय समयमा सरसल्लाह र हौसला दिनुहुने शहरी योजना आयोगका उपाध्यक्ष श्री सरोज बस्नेत लगायत अरु सदस्यहरू, शहरी योजना आयोगका वरिष्ठ अधिकृत ई. रविनमान श्रेष्ठ र अधिकृत सुशील सुवेदी लगायत सम्पूर्ण काठमाडौं महानगर-पालिका परिवारलाई विशेष धन्यवाद दिन चाहन्छौँ। अध्ययनकै क्रममा आवश्यक सूचना प्रदान गर्नुहुने विभिन्न विद्वानहरू, इन्द्रजात्रा व्यवस्था समिति लगायत इन्द्रजात्रासँग सम्बन्धित विभिन्न गुठीका पदाधिकारीहरू, उहाँहरूसँग सम्पर्क गर्न सहयोग गर्नुहुने सहयोगीहरू, पुस्तकमा प्रयोग गर्न आवश्यक नक्सा तयार गर्नु हुने शहरी योजना आयोगका सहायक विज्ञ रजिता शाक्य उदास लगायत पुस्तकको लागि आवश्यक तस्वीरहरू उपलब्ध गराउनुहुने फोटाग्राफर मित्रहरूलाई पनि हार्दिक धन्यवाद दिन चाहन्छौँ।

वास्तवमा कुनै पनि मुलुकको इतिहास भनेको अत्यन्त गहिराई भएको विशाल महासागर जस्तै हो जसको गर्भमा असंख्य अमूल्य तथ्यहरू लुकेर बसेका हुन्छन्। इतिहासको गर्भमा रहेका यी सबै तथ्यहरू अझै पनि बाहिर प्रस्फुट नहुन सकेका छैनन्। निरन्तरको अध्ययन, अनुसन्धान र अन्वेषणले मात्रै इतिहासका नयाँ नयाँ तथ्यहरू फेला पर्दै जाने हुन्छ। यस क्रममा पाठकबाट आउने रचनात्मक सल्लाह सुझावलाई सदैव हृदयदेखि स्वागत गर्दछौँ। अन्तमा पुनः सबै महानुभावहरूलाई एकपल्ट साधुवाद।

**लेखक**

वि.सं. २०७७ श्रावण ४
ने.सं. ११४० दिल्लागा चतुर्दशी

अजय क्रान्ति शाक्य (पीएच.डी)
सुरेश किरण मानन्धर
सन्ध्या वज्राचार्य (सहायक लेखन)

# विषयसूची


| क्र.सं. | शीर्षक | पृष्ठ संख्या |
|---|---|---|
| १) | परिचय | १-२८ |
| | - स्थानीयकृत मौलिक जात्रा | ५ |
| | - यँया: र इन्द्रजात्रा | १४ |
| | - काठमाडौं बाहिर मनाइने इन्द्रजात्रा | १८ |
| | - भक्तपुरमा इन्द्रजात्रा | १९ |
| | - ललितपुरमा इन्द्रजात्रा | २१ |
| | - दोलखामा इन्द्रजात्रा | २३ |
| | - प्यांगामा इन्द्रजात्रा | २४ |
| | - विदेशमा इन्द्रजात्रा | २५ |
| २) | इन्द्रजात्राको इतिहास | २९-७२ |
| | - पूर्व वैदिककाल | २९ |
| | - वैदिककाल | ३० |
| | - पौराणिक काल | ३१ |
| | - किरातकाल | ३५ |
| | - लिच्छविकाल | ३७ |
| | - मल्लकाल | ४० |
| | - शाहकाल | ६३ |
| | - वर्तमान अवस्था | ६८ |
| | - इन्द्रजात्रा मनाइने तिथि बारे | ७० |
| ३) | इन्द्रजात्राका सांस्कृतिक पर्वहरू | ७३-१७४ |
| | - य:सिं थने | ७६ |
| | - विभिन्न य:सिंहरू | ८६ |
| | - उपाकु वने | ८८ |
| | - कुमारी सालेगु (श्री कुमारी रथयात्रा) | ९३ |
| | - कुमारी एक : परिचय | १०६ |

- कुमारी छ्नौट १२०
- चिताइदार १२५
- श्री गणेश र श्री भैरव १२७
- गणेश र भैरव छ्नौट विधि १२८
- हाथु हायेके १२९
- दागिं १३५
- पंजरां दागिं १४०
- बौमत १४१
- आजुद्यः (आकाश भैरव) ब्वये १४५
- बाकादे आजु १५६
- इन्द्रद्यः ब्वये १५९
- ग्वराः मत १६७
- ह्यूमत १६९
- समयूद्वँ र समयूबजि १७०

४) **इन्द्रजात्राका सांस्कृतिक नाचहरू** १७५-२१२
- दीप्याखं १७६
- लाखे १८०
- पुलुकिसि १८८
- सवःद्यः १९४
- महाकाली प्याखं १९८
- दश अवतार २०२
- लोप भएका नाचहरू २०८
- दबू प्याखं २०९
- खः प्याखं २१०

५) **इन्द्रजात्रासँग सम्बन्धित गुठीहरू** २१३-२३४

६) **इन्द्रजात्रासँग राजनीतिक तथा सामाजिक-सांस्कृतिक सम्बन्ध** २३५-२६२

- सामाजिक-सांस्कृतिक २५०

७) इन्द्रजात्रा र काठमाडौं महानगरपालिका २६३-२८४
- सांस्कृतिक पर्यटन प्रवर्द्धनमा इन्द्रजात्रा २७०

८) उपसंहार २८५-३०४

९) सन्दर्भ ग्रन्थ ३०५-३१२

१०) अन्तर्वार्ता लिएका व्यक्तिहरू ३१३-३१४

११) शब्दावली ३१५-३२०

१२) तस्बिरहरू ३२१-३५८

१३) नक्साहरू ३५९-३६८

# परिचय

नेपाल विभिन्न जातजाति, भाषाभाषी र संस्कार संस्कृतिले सम्पन्न एक सार्वभौम मुलुक हो । नेपाल भित्र बसोवास गर्ने विभिन्न जातजातिहरूले सदियौंदेखि आफ्ना पुर्खाले चलाएका विभिन्न जात्रा, चाडपर्व जस्ता संस्कृतिहरू आजपर्यन्त मनाउँदै आइरहेका छन् । उपत्यका भित्र मनाइने बुंगद्यः (रातो मछिन्द्रनाथ) को रथ जात्रा, जनबहाःद्यः (सेतो मछिन्द्रनाथ) को रथ जात्रा, बिस्काः (बिस्केट) जात्रा, दक्षिण भेगको न्हयूगां (सात गाउँ) जात्रा, सिन्दूर जात्रा, जिब्रो प्वाल पार्ने जात्रा, पाहाँ चःऱ्हेको खट जात्रा, घोडेजात्रा, गाइजात्रा जस्ता जात्राहरूले यहाँको संस्कृतिमा प्राण भर्ने काम गरेको छ ।

ती विभिन्न जात्रापर्वहरू मध्ये काठमाडौं उपत्यकामा मनाइने इन्द्रजात्रा एक विशिष्ट र अत्यन्त पुरानो संस्कृति हो । काठमाडौं उपत्यकामा, अझ खास गरी काठमाडौं नगरमा मनाइने इन्द्रजात्रा पर्व अहिले विश्व सामु नेपालको प्रतिनिधिमूलक जात्राकै रूपमा स्थापित भइसकेको छ । राज्य र सर्वसाधारण जनता दुवैले उत्तिकै आस्था र महत्वकासाथ मनाउने इन्द्रजात्रा हाल नेपाली संस्कृतिको सम्पन्नता र महत्तालाई पूर्ण गौरवकासाथ प्रदर्शन गर्ने एउटा ठूलो अवसरसमेत बनिसकेको छ । नेपालमा राष्ट्र प्रमुखदेखि समाजका सबै वर्गसमेत एकै ठाउँ भेला भई मनाउने सांस्कृतिक पर्व भएकोले इन्द्रजात्रा अहिले मुलुककै राष्ट्रिय पर्वको रूपमा स्थापित भइसकेको छ ।

अनुसन्धाताहरूले यो जात्रालाई काठमाडौंको 'मुख्य जात्रा'[१] र

१ Gerard Toffi, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present*, Kirtipur: Contributions To Nepalese Studies (Volume 19), TU, 1992, p. 73.

नेपालमा निरन्तर रुपमा प्रचलित यात्रा-उत्सवहरूमा 'सबैभन्दा प्राचीनतम'[२] भनेका छन् ।

प्रत्येक वर्ष भाद्रशुक्ल द्वादशी अर्थात नेपाल संवत् अनुसार यँलाथ्व द्वादशीका दिन शुरु हुने यो जात्रा आठ दिन आठ रातसम्म सञ्चालन भई आश्विनकृष्ण चतुर्थी अर्थात यँलागा चतुर्थीका दिन समापन हुन्छ । काठमाडौंको हनुमानढोका दरवार क्षेत्र यो जात्रा मनाइने मुख्य थलो हो । जात्रा शुरु भएको दिनदेखि नै काठमाडौंका स्थानीय जनता विभिन्न बाजागाजाकासाथ जात्रामा सहभागी हुने हुँदा जात्रा अवधिभर काठमाडौंको सम्पूर्ण वातावरण नै अत्यन्त उल्लासमय बनेको हुन्छ ।

भाद्रशुक्ल द्वादशीका दिन बिहानी साइतमा हनुमानढोकाको कागेश्वर मन्दिरसँगैको खुल्ला ठाउँमा यःसिं अर्थात इन्द्रध्वज (लिङ्गो) उठाए पछि इन्द्रजात्रा आरम्भ हुन्छ । इन्द्रध्वज उठाउने कार्यलाई स्थानीय समुदायले 'यःसिं थनेगु' भन्दछन् । त्यस पछि इन्द्रजात्राका अवसरमा विभिन्न स्थानबाट निकालिने विभिन्न नाचहरू मजिपातको लाखे, किलागलको पुलुकिसि, भक्तपुरको महाकाली, हल्चोकको आकाश भैरव, किलागलकै दीप्याखं (देवी नाच) को सार्वजनिक प्रदर्शन शुरु हुन्छ। सोही दिन इन्द्रचोकमा आकाश भैरवको मूर्तिलाई बाहिर दबू (डबली) बनाई प्रदर्शन गरिन्छ भने त्यसकै सामुन्ने वटु टोलमा बाकादे आजुको मूर्ति पनि प्रदर्शनमा राखिन्छ । उता हनुमानढोकामा श्वेत भैरव (हाथुद्यः) को मूर्ति सर्वसाधारणका लागि त्यही दिनदेखि खुल्ला गरिन्छ भने विभिन्न टोलहरूमा काठका भैरवमूर्तिहरू पनि प्रदर्शन गर्ने गरिन्छ । यी मूर्तिहरू आठै दिनसम्म सार्वजनिक प्रदर्शनीमा राख्ने चलन रहेको पाइन्छ ।[३]

यःसिं उठाएकै साँझ त्यस वर्ष दिवंगत भएका व्यक्तिका नाममा उनका आफन्तहरूले परम्परागत रुपमा तोकिएको एउटा निश्चित मार्गमा काँचो माटोको पाल्चा (एक प्रकारको दियो) राख्दै, धुप-बत्ती बाल्दै, स्तोत्र पाठ गर्दै बाजागाजाका साथ परिक्रमा गर्दछन् जसलाई उपाकु जाने भनिन्छ । सोही दिन कुमारी घर सँगै रहेको त्रैलोक्यमोहनको मन्दिर पछाडि विष्णुका विभिन्न

२ बाबुराम आचार्य, *नेपालको सांस्कृतिक परम्परा*, काठमाडौं: श्रीकृष्ण आचार्य (सम्पादक/प्रकाशक), वि.सं. २०५४, पृ. १०९ ।

३ अवलोकन ।

अवतारहरूको झाँकी देखाइने दशअवतार प्रदर्शन गरिन्छ ।[४]

सोही अवसरमा मरु नासःद्यः एवं सिँल्यं सतःको अगाडी दुवै हात फैलाएर बाँधिएका इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ। इन्द्र स्वर्गका राजा भएकाले उनको मूर्तिलाई भुइँमा नराखी ३२ फिट अग्लो काठको खाँबो माथि हात्ती आकारको खत बनाई त्यसैमा विराजमान गराइन्छ ।[५] यस्तो मूर्ति काठमाडौंमा मरु टोल बाहेक इन्द्रचोक, किलागल र नरदेवीमा पनि राखिन्छ ।

भाद्रशुक्ल चतुर्दशीका दिन भने श्री कुमारीको रथ पनि तानिने भएकोले जात्रामा विशेष रौनक थपिने गर्दछ । उक्त दिन हनुमानढोका दरवार क्षेत्रबाट जीवित देवी श्री कुमारी तथा जीवित देवताहरू श्री गणेश र श्री भैरवको रथ तानेर जात्रा गरिन्छ । देवी देवताहरूको रथयात्रा अवलोकन गर्न राष्ट्रप्रमुख लगायत सरकारका उच्च पदस्थ व्यक्तित्वहरू, विदेशी कुटनीतिक नियोगका पदाधिकारीहरू पनि हनुमानढोका पुगी पुजा चढाउने चलन रहेको छ। विशाल जनसमुदाय बीच अनेकथरी बाजागाजाका साथ तीन वटा रथलाई उक्त दिन काठमाडौंको दक्षिणी क्षेत्र अर्थात तल्लो भागमा तानेर लगिन्छ । तल्लो भागमा तान्ने भएकोले उक्त दिनलाई 'क्वःनेयाः' भनिन्छ । सो दिन तल्लो भेगका जैसी देवल, लगन, चिकंमुगः, कोहिटी, भिनसेनथान क्षेत्रमा ठूलो भीड लागेको हुन्छ भने त्यही क्षेत्रका विभिन्न डबलीमा दीप्याखं देखाउने गरिन्छ। उक्त दिन लाखे, पुलुकिसि लगायतका नाचहरू पनि क्वःने क्षेत्रमै केन्द्रित भएका हुन्छन् । श्री कुमारीको रथ तान्दा सबैभन्दा पहिले श्री गणेशको रथ तानिन्छ । त्यस पछि श्री भैरवको र अन्तिममा श्री कुमारीको रथलाई तानेर लगिन्छ । कुमारीको रथ अगाडि पञ्च बुद्धका प्रतीकका रुपमा वज्राचार्य गुर्जुहरू पाठ गर्दै रथयात्रामा सहभागी हुन्छन् ।[६]

क्वःनेयाः समापन भए लगत्तै मरु टोलकै छ्वासपाखाबाट इन्द्रकी आमाको प्रतीक स्वरुप दागिं निकालिन्छ । दागिं निस्कँदा उक्त वर्ष दिवंगत भएका व्यक्तिका आफन्तहरू उनै दागिंलाई छोएर नगर परिक्रमा गर्दछन् । दागिंको नगर परिक्रमा भने काठमाडौंको तल्लो भाग र माथिल्लो भाग (थःने र क्वःने) दुवै क्षेत्र घुमेर मरु टोलमै पुगे पछि विसर्जन हुन्छ ।

दागिं नगर परिक्रमा गर्दै गर्दा आधी बाटो पुगे पछि काष्ठमण्डप

४ अवलोकन ।

५ ऐजन ।

६ ऐजन ।

पछाडिबाट बौमत निकालिन्छ । नाग आकारमा बनाइएको बाँसको लामो फ्रेममाथि पाल्चामा बालिएको बत्ती राखी बौमत निकालिने गरिन्छ । यो पनि काठमाडौंको क्वःने र थःने क्षेत्र परिक्रमा गरी मरु टोलमै पुगे पछि समापन हुन्छ । यसरी सो दिनको जात्रा समाप्त हुँदा मध्यरात कटिसकेको हुन्छ ।[७]

वि.सं. १८२५ मा गोर्खाका राजा पृथ्वीनारायण शाहले यही रात काठमाडौंमा आक्रमण गरेका थिए । रातको समय पृथ्वी नारायणको फौज हनुमानढोका प्रवेश गर्दा तत्कालीन राजा जयप्रकाश मल्ल कुमारीको रथ सँगै जात्रामा सरिक भई जैसी देवल पुगिसकेका थिए । पृथ्वीनारायण शाहले हनुमानढोकाको गद्दी कब्जा गरिसकेको जानकारी पाए लगत्तै उनी त्यतैको बाटो भई पाटनतिर भागे ।

कुमारी जात्राको दिन घर घरमा दलूमत बालेर पूजा गरिन्छ । त्यस्तै कामपा १२ वडास्थित ह्यूमत टोलमा पाल्चामा राखिएको बत्ती घुमाउने गरिन्छ । रोटेपिङ जस्तै घुम्ने बत्ती भएकोले त्यसको नामै 'ह्यूमत' भएको हो । यही बत्तीको कारण उक्त टोलको नाम पनि 'ह्यूमत' हुन गएको छ ।[८]

क्वःनेयाःको भोलिपल्ट पूर्णिमाको दिनलाई यँयाः पुन्हि भनिन्छ । यँयाः पुन्हिका दिन समयूबजि खाने र अरुलाई बाँड्ने पनि भएकोले सो दिनलाई 'समयू पुन्हि' पनि भन्ने गरिन्छ । सो दिन श्री कुमारी, श्री गणेश र श्री भैरवको रथलाई काठमाडौंको माथिल्लो भेग अर्थात थःनेतिर तान्ने गरिन्छ । त्यसैले यसलाई कुमारीको 'थःनेयाः' पनि भनिन्छ ।

यस पछिका दुई दिन भने कुमारीको रथ तानिँदैन । आश्विन कृष्ण चौथीका दिन पुनः एक पटक कुमारीको रथ तानिन्छ । यस दिनमा भने रथलाई नरदेवी, किलागल, इन्द्रचोक, मखन हुँदै हनुमानढोका पुऱ्याइन्छ । यसरी काठमाडौंको माथिल्लो भेगको बीच बाटोबाटै रथ तान्ने भएको हुनाले यसलाई 'दथुयाः' पनि भनिन्छ । आजभोलि यस दिनमा गरिने रथयात्रालाई 'नानीचायाः' भन्ने गरिन्छ । नानीचायाः समापन भएकै दिन बेलुकी राष्ट्रप्रमुख कुमारी घर सवारी भई श्री कुमारी, श्री गणेश र श्री भैरवको हातबाट टीका ग्रहण गरिन्छ । सो कार्य सकिए पछि रातको साइतमा हनुमानढोकामा उठाइएको इन्द्रध्वज ढालिन्छ । ढालिएको इन्द्रध्वजलाई तानेर पचली भैरवको

---

७ अवलोकन ।

८ ह्यूमत टोल गुठीका अध्यक्ष अ.व. ६० का इन्द्रप्रसाद महर्जनसँग अन्तर्वार्ता ।

छेउमा रहेको टेकु दोभानको बागमती नदीमा सेलाउने गरिन्छ । यसरी उक्त वर्षको इन्द्रजात्रा समाप्त हुन्छ ।[९]

## स्थानीयकृत मौलिक जात्रा

इन्द्रजात्राका प्रमुख पात्र देवराज इन्द्र स्वर्गका राजा हुन् । इन्द्र देवताका बारे वेदहरूमा पनि धेरै चर्चा गरिएको पाइन्छ । ऋग्वेदका २०२८ सुत्तहरू मध्ये २५० जति सुत्तमा इन्द्रको वर्णन गरिएको छ ।[१०]

त्यसपछि हिन्दू धर्मका ग्रन्थहरू पुराण, संहिता, रामायण, महाभारत आदिमा इन्द्र र इन्द्रजात्रा दुवैका बारे उल्लेख गरिएको पाइन्छ ।

बिष्णु धर्मोत्तर पुराणमा इन्द्रका प्रतिमा पक्षण यस प्रकार छन् : नीलो लुगा लगाएको, स्वर्ण जस्तो अनुहार, निधारमा तेश्रो आँखा, सम्पूर्ण गहना लगाएको, पत्नी शची इन्द्रदेवको देब्रेतिर, वाहन, ऐरावत हात्ती श्वेतवर्णको र चार दाँत भएको हुनु पर्दछ । अंशुमदभेदागमा इन्द्रको यस्तो रूपको वर्णन छ । दुईवटा भुजा र दुइटा मात्र आँखा भएका इन्द्रको रंग गाढा बनाइनु पर्दछ । मूर्ति सारै राम्रो र आकर्षक हुनु पर्दछ जसमा किरीट, कुण्डल, हार, केयुर र अन्य गहनाको प्रयोगको साथै रातो वस्त्रको पनि प्रयोग गर्नुपर्दछ । दायाँ हातमा शक्ति र बायाँमा अंकुश लिएको इन्द्रको मूर्तिमा घाँटी मसिनो र पेट अलिकति ठूलो बनाइनु पर्दछ । इन्द्रको देब्रेतर्फ सम्पूर्ण गहनाले श्रृंगारिएको, हातमा आदल फूल लिएकी इन्द्राणीलाई युवतीको रुपमा दर्शाइनु पर्दछ । यी दिव्य जोडीको दुबै तर्फ एक जोडी गन्धर्व कन्याले बहुरंगी चमर हम्किएको देखाइनु पर्दछ ।[११]

वैदिककालदेखि नै स्वर्गका राजाका रुपमा चर्चित देवता इन्द्रको नाममा जात्रा मनाउने चलन प्राचीन भारतको विभिन्न स्थानमा रहेको पाइन्छ । खास गरी भारतको बंगाल लगायतका ठाउँमा इन्द्रजात्रा मनाएको देखिन्छ । प्राचीनकालमा भारतमा इन्द्रध्वजोत्सव धूमधामसँग मनाइन्थ्यो । तर इस्लामको

---

९ अवलोकन ।

१० Dandekar, R.N., *Vedic Maythologival Traks*, A.P., New Delhi: 1979. pp. 190-191

११ बीणा पौड्याल, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १)*, कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी, पृ. ७१ ।

प्रवेश भएपछि भारतबाट यो परम्परा लोप भएर गएको देखिन्छ ।[१२] तर भारतमा लोप भए पनि नेपालमा भने यो परम्परा अहिले पनि जीवित रहेको र उल्लासपूर्वक मनाउँदै आइरहेको पाइन्छ ।

इन्द्रजात्रा जस्तै लिङ्गो उठाउने एउटा पर्व युरोपतिर पनि रहेको पाइन्छ जसलाई 'मे पोल' भनिन्छ । हरेक वर्ष मे महिनाको पहिलो दिन यो जात्रा मनाउने गरिन्छ ।[१३] इन्द्रजात्रा भारतमा शुरु भई पछि नेपालमा मनाइएको भएता पनि हाल नेपालमा जसरी इन्द्रजात्रा मनाइन्छ, त्यसमा भारतमा मनाइने इन्द्रजात्राको छाप भने पाइँदैन । भारतमा शुरु भएको इन्द्रजात्रा नेपालमा पूर्ण रूपमा स्थानीयकरण भइसकेको पाइन्छ । अहिले काठमाडौंमा आफ्नै शैलीले धुमधामसाथ मनाइने इन्द्रजात्रा यति मौलिक भइसक्यो कि अब यसलाई भारतमा प्रारम्भ भई पछि नेपालमा मनाउन थालिएको भन्दा अविश्वसनीय लाग्न सक्दछ । कुनै पनि धर्म र संस्कृतिलाई आफैभित्र सहवरण गर्ने उपत्यकाको आफ्नै विशेषताका कारण यसो भएको मान्न सकिन्छ ।

लेखक मेरी स्लसरले लेख्नुभएको छ, "नेपाल मण्डलमा इन्द्रलाई आफ्नै मौलिक धर्म र संस्कृति अन्तर्गत राखेर मनाउने गरिएको पाइन्छ । यहाँ पाइने फरक खाले इन्द्रका मूर्तिहरू मौलिक तथा सिर्जनशील देखिन्छ । यसले देखाउँदछ कि नेपाल मण्डलमा भारतबाट आउने सांस्कृतिक धारलाई जस्ताको तस्तै कुनै मौलिकताविहिन ढंगले होइन बरु त्यसमा ताजापन, स्थानीयता र सिर्जनशीलता समेत थपेर मात्रै ग्रहण गर्ने परम्परा रहिआएको छ । भारतमा इन्द्रको सम्मानमा कमी आए पनि नेपाल मण्डलमा भने उनको सम्मानलाई यथावत राखिएबाट पनि यो कुरा पुष्टि हुन्छ । काठमाडौंका अन्य देवीदेवताहरूसँगै इन्द्रको पनि जात्रा चलाउने परम्पराले यहाँ कसरी सांस्कृतिक एकता कायम भएको छ र इतिहास तथा समाजशास्त्रलाई गति दिएको छ भन्ने देखाउँदछ ।"[१४] लेखक कुलचन्द्र कोइरालाका अनुसार "वैदिक कालका विशिष्ट देवता इन्द्रको यज्ञ विधान र प्रतिमा पूजा भन्दा

---

१२ आचार्य, बाबुराम, *नेपालको सांस्कृतिक परम्परा*, श्रीकृष्ण आचार्य (सम्पादक/प्रकाशक), काठमाडौं: २०५४ । पृ. ११२

१३ Hemant Jha, *Hindu-Buddhist Festival of Nepal,* New Delhi: Nirala Publication, 1996, p. 95.

१४ Mary Shepherd Slusser, *Nepal Mandala (v. 1),* Kathmandu: Mandala Book Point, 1998, p. 269.

इन्द्रध्वजोत्थानको उत्सव समाजको निम्ति प्रभावकारी थियो । पुराणहरूमा इन्द्रजात्रा मनाउँदा विशेष उत्सव गर्नुपर्ने, नाचगान गर्नुपर्ने, बाजागाजाहरू बजाउनु पर्ने व्यहोरा उल्लेख गरिएको पाइन्छ । एक सप्ताहसम्मको नाच, गान, खेल, तमासा, क्रयविक्रय, खानपानले गर्दा देशभरिका जनताको आकर्षणको केन्द्र नै इन्द्रजात्रा थियो । .... यसै कारण इन्द्रध्वजाको परम्परा यस उपमहाद्विपका देशहरूमा सर्वत्र चलेको अनुमान गर्न सकिन्छ ।"[१५]

इन्द्रजात्रासँगै आयोजना गरिने यस्ता अतिरिक्त पर्वहरू कस्ता हुन्छन् भन्ने कुरा पुराणमा उल्लेख छैन । तर काठमाडौंको इन्द्रजात्रासँग जोडिएका यस्ता अतिरिक्त पर्वहरू भने सबै स्थानीय चरित्रका छन् । कुमारी जात्रा, दागिं, लाखे, पुलुकिसि, दशअवतार, दीप्याखं, महाकाली प्याखं आदि सबै काठमाडौंको आफ्नै मौलिक सिर्जना हुन् ।

लेखक जे. गोन्डाका अनुसार "भारतमा मनाइने इन्द्रजात्रामा इन्द्रध्वजलाई नै इन्द्रको प्रतीक बनाई पूजाआजा गरिन्छ । पृथ्वीमा रहुन्जेल इन्द्रको बास इन्द्रध्वजका रुपमा उठाइएको त्यही रूखमा रहने विश्वास गरिन्छ। तर नेपालको इन्द्रजात्रामा भने इन्द्रध्वज मात्रै उठाइने होइन स्वयम् इन्द्रको मूर्ति नै बनाएर सार्वजनिक रूपमा प्रदर्शन समेत गरिन्छ ।"[१६]

त्यति मात्र होइन, काठमाडौंमा इन्द्रजात्रा कसरी आरम्भ भयो भन्ने सन्दर्भमा वेद र पुराणमा वर्णित भन्दा फरक खालको कथा समेत यहाँ प्रचलित छ । इन्द्रजात्राको उत्पत्ति बारे यहाँ लोक प्रचलनमा रहेको किंवदन्ती यस प्रकार छ :[१७]

एकदिन स्वर्गमा इन्द्रकी आमालाई बसुन्धरा व्रतका लागि पारिजात फूलको आवश्यक भएछ । तर त्यो फूल स्वर्गमा नपाइने रहेछ । त्यसैले आमाका लागि स्वर्गका राजा इन्द्र आफै त्यो फूल टिप्न काठमाडौं आएछन् । काठमाडौंको बिष्णुमती र मरु टोलको बीचमा रहेको ख्यःक्यब भन्ने ठाउँमा उनी पारिजात फूल टिप्दै थिए । त्यो देखेर स्थानीय मानिसहरूले उनलाई समाते । कारण के रहेछ भन्दा काठमाडौंमा पारिजात फूल बोटमै टिप्नु हुन्न, त्यो बोटबाट झरेको मात्रै टिप्नु पर्छ भन्ने मान्यता रहेछ ।

१५ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा*, काठमाडौं: गुठी संस्थान, वि.सं. २०४२, पृ. १६ ।

१६ J. Gonda, *The Indra Festival According to the Atharvavedins*, India: Journal of the American Oriental Society (Vol. 87, No. 4), 1967, p. 422.

१७ जनश्रुति अनुसार ।

इन्द्रले बोटैमा फूल टिपिरहेको कारणले उनी पक्राउ परेका थिए । पछि बुझ्दा उनी काठमाडौंका रैथाने होइनन्, बाहिरिया रहेछन् भन्ने पनि थाहा भयो । त्यसपछि उनलाई पाता कसेर सार्वजनिक रूपमै उभ्याउने काम गरियो । इन्द्र काठमाडौं आउँदा उनले आफू चढेर आएको ऐरावत हात्तीलाई हालको किलागल टोलनिर छोडेर आएका रहेछन् । हात्ती (नेपालभाषामा किसि) छोडेर आएको ठाउँ भएकै कारण उक्त ठाउँको नाउँ 'किसिगल' अर्थात 'हात्ती राख्ने ठाउँ' हुन गएको र पछि त्यही शब्द अपभ्रंश हुँद 'किलागः' वा 'किलागल' बन्न गएको हो भन्ने किंवदन्ती पाइन्छ ।

अहिले इन्द्रजात्राका बेला हरेक वर्ष यही ठाउँबाट पुलुकिसि निकालिने गरिन्छ । पुलुकिसिलाई इन्द्रकै ऐरावत हात्तीको प्रतीक मानिन्छ । फूल टिप्न गएका इन्द्र धेरै दिनसम्म पनि नआए पछि कता गएछन् भनी खोज्न ऐरावत हात्ती भौंतारिन थालेछन् । ऐरावत हात्ती त्यसरी भौंतारिएर यताउति दगुर्नुलाई नै अहिले पुलुकिसि जात्राको रूपमा प्रस्तुत गरिएको हो ।

किम्बदन्तीका अनुसार उता छोरा धेरै दिनसम्म पनि नफर्के पछि स्वर्गमा उनकी आमा पनि चिन्तित हुन थालिन् । त्यसपछि छोरो किन आएन भनी इन्द्रकी आमा दागिं (डाकिनी) को भेषमा खोज्दै आउँदा उनलाई मरु टोलमा पाता कसेर बाँधिराखेको अवस्थामा फेला पारिन् । त्यहाँ इन्द्र र उनकी आमा बीच भएको संवादबाट यिनीहरू त स्वर्गका राजा इन्द्र र उनकी माता पो रहेछन् भन्ने स्थानीय जनताले थाहा पाए । त्यस पछि उनीहरूले इन्द्रलाई बन्धनमुक्त गरे । इन्द्रकी आमाले आफ्नो छोरालाई मुक्त गरे वापत खेतमा धान पाक्न सहयोग गर्न कुइरो प्रदान गर्ने बचन दिइन् । त्यही भएर काठमाडौंमा अहिले पनि इन्द्रजात्रा पश्चात कुइरो आउने विश्वास गरिन्छ । त्यस्तै इन्द्र स्वर्गका राजा भएको कारणले आफूहरूलाई पनि स्वर्ग लगी आफ्ना दिवंगत आफन्तहरूसँग भेट गराउनु पर्ने शर्त पनि स्थानीय जनताले राखे । इन्द्रकी आमाले त्यसलाई पनि स्वीकारिन् । अनि आफू स्वर्ग प्रस्थान गर्ने बेला त्यो वर्ष दिवंगत भएका आफन्तहरूलाई पनि आफ्नो पछि पछि लगाउँदै स्वर्गतिर हिंडे । दिवंगतका आफन्तहरूलाई पछि लगाएर इन्द्रकी आमाले गरेको त्यो यात्रालाई 'दागिं वनेगु' भनिन्छ । यो मरु टोलको छ्वासपाखादेखि शुरु हुन्छ । काठमाडौंको थःने र क्वःने (माथिल्लो र तल्लो) क्षेत्र परिक्रमा गरिसके पछि थानकोटको इन्द्रदहमा पुगी दागिं वनेगु समाप्त हुन्छ । इन्द्रदहसम्म आफू सँगै आएका सबैजनालाई

इन्द्रकी आमाले 'अब हामी यहींबाट स्वर्ग प्रस्थान गर्ने हो, स्वर्ग जानु अघि यहाँको कुण्डमा सबैले एकचोटी नुहाएर चोखोनीति गर्नुपर्छ' भनिन् । सबैजना कुण्डमा नुहाउन थाले । मानिसहरू नुहाइरहेको त्यही मौका पारी इन्द्र र उनकी आमाले त्यहाँ एकआपसलाई देख्नै नसक्ने गरी कुइरो प्रकट गरी आफूहरू अन्तर्ध्यान भए ।[१८]

इन्द्रजात्रा बारे काठमाडौंमा प्रचलित यो कथा वेद र पुराणहरूमा सुन्न पाइँदैन । यो काठमाडौंको आफ्नै मौलिक कथा हो जसले इन्द्रजात्रालाई यो शहरको स्थानीय मौलिक पर्व मान्न सहयोग गर्दछ। यो कथामा घोत्लिनु पर्ने एउटा विषय अर्को पनि छ, त्यो के हो भने काठमाडौंमा प्रचलित इन्द्रजात्राको यो कथामा पुराणहरूमा भनिए जस्तो इन्द्रध्वज अर्थात लिङ्गो उठाउने प्रशंग उल्लेख गरिएको छैन । अर्कोतिर इन्द्रजात्रा ताका हनुमानढोकामा उठाइने इन्द्रध्वज बारे हामीसँग प्रामाणिक इतिहास पनि छैन । हनुमानढोकामा इन्द्रध्वज उठाउने चलन श्री ५ प्रताप सिंह शाहको पालादेखि मात्रै शुरु भएको मानिन्छ ।[१९] त्यो भन्दा अघि काठमाडौंको अट्कोनारायण मन्दिर सँगै एउटा सानो आकारको लिङ्गो उठाउने गरिन्थ्यो । काठमाडौंमा इन्द्रजात्राकै बेला मात्र लिङ्गो उठाउने गरिँदैन । पाहाँचःऱ्हे पर्वका बेला पनि इन्द्रचोक, कंकेश्वरी आदि विभिन्न ठाउँमा लिङ्गो उठाउने गरिन्छ । त्यसलाई पनि यःसिं वा इन्द्रध्वज नै भनिन्छ । भक्तपुरमा बिस्केट जात्रामा उठाइने लिङ्गोलाई संस्कृतमा विश्वध्वज भनिए पनि नेपालभाषामा 'यःसिं' नै भन्ने गरिन्छ भने कतै कतै यसलाई पनि इन्द्रध्वज नै भनिएको पनि पाइन्छ । त्यसैले काठमाडौंमा मनाइने इन्द्रजात्रा यहाँ उल्लेख गरिएको मौलिक किंवदन्ती जस्तै नै मौलिक छ ।

किंवदन्ती संक्षिप्त व्याख्या गरेको भए पनि काठमाडौंमा मनाइने इन्द्रजात्रा यथार्थमा भने यो भन्दा विस्तृत रुपमा मनाइन्छ। अहिले हनुमानढोका अगाडि इन्द्रध्वजारोहण (यःसिं थनेगु) पछि इन्द्रजात्रा पर्व शुरु हुन्छ । इन्द्रजात्राको अवधिभरि लाखे, सवःभकु (हल्चोक आकाश भैरव), दीप्याखं, महाकाली प्याखं जस्ता देवी- देवताका नाचहरू प्रदर्शन गरिन्छ । यी नाचहरू प्रदर्शन हुँदा बजाइने फरक फरक बाजा र धुनहरूले

१८ किम्बदन्ती अनुसार ।

१९ तोफाँ, पूर्ववत् १, पृ. ७६ ।

काठमाडौंको वातावरणलाई अत्यन्त उल्लासमय बनाइदिएको हुन्छ । इन्द्रचोकमा आकाश भैरव, बाकादे आजुको सार्वजनिक प्रदर्शन हुन्छ, हनुमानढोकामा श्वेत भैरव (हाथुद्यः) को मुखबाट बाँसको मसिनो पाइप राखी जाँड अर्पण गरिन्छ भने कुमारी घर अगाडि दशअवतार प्रदर्शन गरिन्छ । जीवित देवी श्री कुमारी र देवताहरू श्री गणेश र श्री भैरवको रथयात्रा विश्वमै दुर्लभ जात्रा हो जुन अहिले इन्द्रजात्राकै पर्याय जस्तो बनिसकेको छ । पुराणहरूमा राजा महाराजाले इन्द्रध्वजलाई पूजा र होम गर्ने लेखिएको छ । तर काठमाडौंमा राजा (अहिले राष्ट्रपति) इन्द्रध्वजमा जाँदैनन्, कुमारी रथयात्रामा मात्र सरिक हुन्छन् । यही जात्राका बेला स्थानीय मानिसहरू आफ्ना दिवंगत आफन्तका नाममा उपाकु जाने (देश घुम्ने), समयूबजि खाने र बाँड्ने, दलुमत (बत्ती) पूजा गर्ने जस्ता कार्यहरू पनि सम्पन्न गर्छन् । यी सबै सांस्कृतिक कार्यहरूले गर्दा इन्द्रजात्राको आयोजना अत्यन्त भव्य हुन पुगेको देखिन्छ ।[२०]

तसर्थ काठमाडौंमा मनाइने इन्द्रजात्रा केवल इन्द्रकै मात्र जात्रा नभएको पुष्टि हुन्छ । विभिन्न देवदेवीहरूको नाममा आयोजना गरिने विविध प्रकारका जात्रा एवं पर्वहरूको सामुहिक नाम नै इन्द्रजात्रा हो । इतिहासकार प्रा.डा. त्रिरत्न मानन्धर इन्द्रजात्रालाई विभिन्न संस्कृतिहरूको संगम मान्नुहुन्छ । विभिन्न जात्रा, पर्व र संस्कृतिहरूलाई इन्द्रजात्रामा एकीकृत रूपले मनाउने गरिन्छ ।[२१]

इन्द्रजात्रामा मनाइने यी पर्वहरू मध्ये केही पर्व यस्ता पनि छन् जसको इन्द्रसँग कुनै सम्बन्ध छैन । जस्तो कि लाखे, आकाश भैरव, श्वेत भैरव, दशअबतार, बौमत, यहाँसम्म कि श्री कुमारीको रथयात्राको समेत इन्द्र र इन्द्रजात्रासँग कुनै सम्बन्ध भएको देखिँदैन । संस्कृतिविद् तीर्थलाल नःघःभनी (राजभण्डारी) ले कुमारी रथयात्रा सम्बन्धी आफ्नो एउटा लेखमा कुमारी रथयात्रा र इन्द्रजात्रा बीच एक आपसमा कुनै सम्बन्ध नभएको दावी गर्नुभएको छ । उहाँका अनुसार यी दुवै छुट्टाछुट्टै जात्रा हुन् जुन 'संयोगवस' एउटै समयमा मनाउने गरिन्छ ।[२२]

---

२० अवलोकन ।

२१ लुम्बिनी बौद्ध विश्व विद्यालयका पूर्व उपकुलपति प्रा. डा. त्रिरत्न मानन्धरसँग अन्तर्वार्ता ।

२२ तीर्थलाल नःघःभनी (राजभण्डारी), *'भक्तपुरको लिङ्गो जात्रा'*, अभिलेख, वर्ष १६, पूर्णांक १६, काठमाडौंः राष्ट्रिय अभिलेखालय, बि.सं. २०५५, पृ. ३५ ।

नेपाल विषय अध्ययन गर्नुभएका फ्रान्सेली अन्वेषक जेराँ तोफाँले पनि इन्द्रजात्रालाई इन्द्रको मात्र जात्रा मान्नुभएको छैन । उहाँले इन्द्रजात्रा सम्बन्धी आफ्नो अनुसन्धानमूलक लेखमा 'इन्द्र, भैरव र कुमारीको तीन पक्षीय जात्रा नै इन्द्रजात्रा हो' भनेर लेख्नुभएको छ ।[२३]

इन्द्रजात्रामा आयोजना गरिने यी पर्वहरू सबै एकैपटक अस्तित्वमा आएका भने होइनन् । इतिहासको विभिन्न कालखण्डमा तत्कालीन शासकहरूले इन्द्रजात्रामा विभिन्न सहायक जात्राहरू थप्दै लगेको देखिन्छ । यस मध्ये कुमारीको रथयात्रा भने अन्तिम मल्ल राजा जयप्रकाश मल्लले इन्द्रजात्राकै बेला चलाएको स्पष्ट इतिहास छ ।

त्यस पछि शाह राजा प्रताप सिंह शाहको पालामा इन्द्रध्वजोत्थान कार्यलाई व्यवस्थित गरिएको, रणबहादुर शाहको पालामा श्वेत भैरव स्थापना गरी जाँड अर्पण गर्न थालिएको आदि विवरणहरू पनि इतिहासमा पाइन्छन् ।[२४]

इन्द्रजात्रा नेपाली समाजको एक अत्यन्त भव्य पर्व भएको कारणले नै विभिन्न कालखण्डका शासकहरूले यसै जात्राका अवसरमा अरु पर्वहरू पनि थपी यसलाई अझ जीवन्त बनाएको अनुमान गर्न सकिन्छ ।

इन्द्रजात्रामा विभिन्न नाच एवं पर्वहरू थपिँदै आएको मात्र होइन, पहिले प्रचलनमा रहेका कतिपय नाचहरू हराउँदै गएका पनि छन् । आजभन्दा ३० वर्ष जति अघि इन्द्रजात्राका बेला काठमाडौंको टोल टोलमा डबली बनाएर 'दबू प्याखं' प्रदर्शन गरिन्थ्यो । त्यो अहिले लोप भइसकेको छ । त्यो भन्दा पछि इन्द्रजात्राकै अवसरमा काठमाडौं ज्याठा टोलका स्थानीय कुम्हाले महर्जनहरूले 'खःप्याखं' प्रदर्शन गर्दथे । अहिले त्यो पनि लोप भइसकेको छ । त्यस्तै यँयाःपुन्हि (पूर्णिमा) का दिन 'ला छ्कू वयेक समयूबजि, वल वल पुलुकिसि' भन्दै घरघरै गएर समयूबजि माग्ने चलन पनि थियो । त्यो चलन अहिले विरलै मात्र देख्न पाइन्छ ।[२५]

केही चलन भने हालसालै मात्र थपिँदै आइरहेको पनि देखिन्छ । इन्द्रजात्राको पहिलो दिन अर्थात लिङ्गो उठाएकै दिन उपाकु परिक्रमा गर्न जाँदा जति पनि ठाउँमा जाने हो ती सबै ठाउँमा रहेका मन्दिर सामुन्ने अहिले

२३ तोफाँ, पूर्ववत १, पृ. ७४ ।

२४ ऐ. ऐ., पृ. ७६ ।

२५ संस्कृतिविद् डा. चुन्दा वज्राचार्यसँग अन्तर्वार्ता ।

समयद्धँ राख्ने चलन केही समय अघिदेखि चलिआएको देखिन्छ। यस्तो समयद्धँ पहिले एकाध ठाउँमा, त्यो पनि विशेष गरी गणेश र भैरव मन्दिर अगाडि मात्रै राख्ने गरिन्थ्यो । अहिले चीभाः (चैत्य) को अगाडि समेत राखेको पाइन्छ । गत वर्ष कुल ५४ ठाउँमा त्यस्तो समयद्धँ राखिएको थियो । त्यस्तै श्री गणेश र श्री भैरवलाई जात्राका दिन वहाँहरूको निवासबाट कुमारी घरसम्म बोकेर ल्याउने गरिएकोमा हाल काठको छुट्टाछुट्टै खटमा हाली बाजागाजा सहित कुमारीसम्म लिएर आउने नयाँ चलन पनि शुरु भएको छ ।

स्वर्गका राजाको रुपमा चर्चित देवता इन्द्रका बारे विभिन्न हिन्दू धार्मिक ग्रन्थहरूमा वर्णन गरिएको भएता पनि इन्द्रको नाममा काठमाडौंमा मनाइने इन्द्रजात्रा भने धेरैजसो वज्रयानी बौद्ध परम्परामा आधारित देखिन्छ । विशेष गरी काठमाडौंको नेवार समाजमा बौद्ध धर्म अंगीकार गर्ने विभिन्न जातीय समुदायहरूले नै इन्द्रजात्राको अधिकांश अभिभारा वहन गर्दै आइरहेको देखिन्छ । हनुमानढोकामा इन्द्रध्वज (यःसिं) उठाउने काम स्थानीय मानन्धर समुदायले गर्छन् भने मरु टोलमा इन्द्रको मूर्ति स्थापना गर्ने काम मरु टोलकै किसान (ज्यापु) समुदायले गर्ने गर्छन् । यी दुवै बौद्ध धर्मावलम्बी हुन् । इन्द्रजात्राको पहिलो दिन दिवंगत आफन्तका नाममा उपाकु वनेगु (देश घुम्ने) कार्यमा पनि विशेष गरी बौद्ध समुदायकै नेवारहरू सहभागी हुने गर्छन् ।[२६]

त्यसो त काठमाडौंमा दिवंगत आफन्तका नाममा देश घुम्ने कार्य गाइजात्राका बेलामा पनि गर्ने चलन छ। गाइजात्रामा पनि दिवंगत आफन्तका नाममा शहरको क्वःने र थःने (तल्लो र माथिल्लो) क्षेत्र नै परिक्रमा गरिन्छ। तर गाइजात्रामा त्यसरी गरिने परिक्रमामा हिन्दू नेवारहरू (ज्यापु समुदाय बाहेक) बढी सहभागी हुने गर्छन् । इन्द्रजात्रामा दिवंगतकै नाममा गरिने उपाकुमा भने बौद्ध नेवारहरू मात्र सहभागी हुने गर्छन् । तथापि अहिले भने गाइजात्रामा बौद्ध नेवारहरू पनि सहभागी हुने र उपाकुमा हिन्दू नेवारहरू पनि सहभागी हुने क्रम बढ्दै गइरहेको देखिन्छ। यसलाई नेवार समाजमा विकसित हुँदै आएको धार्मिक-सांस्कृतिक समन्वय भन्न सकिन्छ ।

इन्द्रजात्राकै बेला श्री कुमारीको रथयात्रा पनि चलाइन्छ । श्री कुमारी काठमाडौंका बौद्ध शाक्यवंशीय कुलपुत्रीहरूबाट छानिएर प्रतिष्ठापन गर्ने

२६ अवलोकन ।

परम्परा छ । श्री कुमारीको रथयात्रा गरिँदा रथको अघि अघि पञ्चबुद्धका प्रतीकका रुपमा वज्राचार्य गुर्जुहरू पनि सहभागी भएका हुन्छन् । इन्द्रजात्रामा आयोजना गरिने जात्राहरू मध्ये दशअवतार बाहेक अधिकांश अभिभारा नेवाः समुदायका बौद्धहरूद्वारा नै वहन गर्दै आइरहेको पाइन्छ ।[२७]

इन्द्रजात्रा बारे काठमाडौंमा प्रचलित किंवदन्तीमा उल्लेख भए अनुसार इन्द्रकी आमाले स्वर्गमा आयोजना गर्न लागेको 'बसुन्धरा व्रत' पनि वज्रयानी बौद्ध परम्परा अनुरुपको व्रत हो ।

बौद्ध विद्वान यज्ञमानपति वज्राचार्यका अनुसार पनि इन्द्रजात्रा मूलतः बौद्ध पर्व हो । उहाँ भन्नुहुन्छ, 'यःसिं स्वयम्भूको गर्भमा पनि छ । पाहांचःऱ्हेको समयमा टेबहाल र कंगमा पनि यःसिं उठाइन्छ । यो स्थानीय राजाले जनतालाई चाडपर्व बारे जानकारी दिन यःसिं उठाउने गरिएको हो ।'[२८]

काठमाडौंको स्थानीय समाजमा ऐतिहासिककालदेखि नै बुद्ध धर्म र बौद्ध संस्कारको ठूलो प्रभाव रहँदै आएको छ । बाहिरबाट आएर काठमाडौंमा बसोवास गरेका ब्राह्मणहरू समेत कालान्तरमा गएर बौद्ध बनेको इतिहास पाइन्छ । काठमाडौंको तल्लो क्षेत्रमा अवस्थित मुसुंबहालमा ब्राह्मणहरू आएर बसेकोले उक्त टोलको नाउँ नै 'ब्रम्हूत्वाः' रहन गएको हो । नेपालभाषामा 'ब्रम्हू' भन्नाले ब्राह्मण र 'त्वाः' भन्नाले टोल बुझिन्छ । केही ब्राह्मणहरूलाई यहाँका अरु बौद्धहरू जस्तै आफूहरू पनि विहार बनाएर बस्न मन लाग्यो । उनीहरूले पनि एउटा विहार बनाए । त्यो विहारलाई ब्रम्हशील महाविहार भनिन्छ । तर उनीहरूका कुलदेवता नारायण हुन् । ललितपुरको विशंखु नारायणलाई कुलदेवता मान्ने ब्राह्मणहरूले त्यहाँसम्म जान गाऱ्हो भएकोले काठमाडौं नगर भित्रै ती नारायणलाई स्थापना गरेको हो ।[२९]

कतिपय बौद्ध ग्रन्थ र बौद्ध संस्कारहरूमा इन्द्रको पनि चर्चा गरिएको पाइन्छ । बौद्ध ग्रन्थ अष्टसहस्रिका प्रज्ञा पारमितामा शक्र देवराज इन्द्रको उल्लेख गरिएको छ ।[३०] हिन्दू ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्राको चर्चा पाइएता

२७ अवलोकन ।

२८ का.म.पा. वडा नं.२३ स्थित सिखमू बहाःका बौद्ध विद्वान यज्ञमानपति वज्राचार्यसँग अन्तर्वार्ता ।

२९ ऐजन ।

३० स्व.पं. जोगमुनि वज्राचार्य, अष्टसहस्रिका प्रज्ञापारमिता, काठमाडौंः पृ. ५८ ।

पनि काठमाडौंमा जुन शैली र विधिबाट इन्द्रजात्रा मनाइन्छ त्यो हिन्दू ग्रन्थहरूमा गरिएको वर्णन भन्दा नितान्त भिन्न छ । यसैबाट स्पष्ट हुन्छ, इन्द्र र इन्द्रजात्रा बारे जहाँ जस्तोसुकै वर्णन र व्याख्या गरिएको भएता पनि काठमाडौंमा मनाइने इन्द्रजात्रा ती सबैभन्दा पृथक र मौलिक छ ।

यसमा प्रा. सुवर्ण शाक्यको भनाई थप्नु उचित हुन्छ । उहाँ भन्नुहुन्छ, "संस्कृति सार्वभौम हुन्छ, यसमा धर्मको कुरो आउँदैन । इन्द्रजात्रा पनि त्यस्तै हो । यसलाई हिन्दूहरू हिन्दू तालले मनाउँछन्, बौद्धहरू बौद्ध तालले मनाउँछन् । इन्द्रजात्रा सबैको साझा हो, त्यसैले त यो राष्ट्रिय पर्व हो ।"[३१]

## यँया: र इन्द्रजात्रा

इन्द्रजात्रालाई स्थानीय नेपालभाषामा 'यँया:' भनिन्छ । यो जात्रालाई 'यँया:' किन भनियो भन्ने विषयमा भने विभिन्न तर्क एवं दावीहरू रहेका छन् । 'यँया:' शब्दमा दुई एकाक्षरी शब्दहरू जोडिएर रहेका छन् - 'यँ' र 'या:' । 'या:' को अर्थ यात्रा वा जात्रा हो । 'यँ' को अर्थ के हो र यसको व्युत्पत्ति कसरी भयो भन्ने सम्बन्धमा भने विभिन्न तर्कहरू पाइन्छ ।

वर्तमान काठमाडौं शहरको नाम मध्यकालमा कान्तिपुर थियो ।[३२] त्यो भन्दा अघि यो शहरको नाम 'यँ' रहेको थियो ।[३३] 'यँ' शहरलाई उत्तर र दक्षिण गरी दुई क्षेत्रमा विभाजन गरिएको थियो । उत्तरी भागलाई 'यँबु' भनिन्थ्यो भने दक्षिणी भागलाई 'यँगल' भनिन्थ्यो । लिच्छविकालमा भने 'यँबु' क्षेत्रलाई उत्तर कोलिग्राम र 'यँगल' क्षेत्रलाई दक्षिण कोलिग्राम भन्ने गरिन्थ्यो । अहिले कुमारीको रथयात्रा गर्दा पहिलो दिन रथ परिक्रमा गरिने 'क्वःने' क्षेत्र प्राचीनकालको 'यँगल' अर्थात दक्षिण कोलिग्राम हो भने दोश्रो दिन रथ परिक्रमा गरिने 'थःने' क्षेत्र तत्कालीन 'यँबु' अर्थात उत्तरकोलिग्राम हो ।

इतिहास शिरोमणि बाबुराम आचार्यका अनुसार लिच्छविकालको प्रारम्भतिर दक्षिण कोलिग्राम क्षेत्रमा 'इन्द्र-गृह' नामक एउटा भव्य राजदरवार रहेको थियो । यो मानदेव प्रथमले बनाएको दरवार भन्ने मान्यता छ । त्यही दरवारको छेउछाउमै इन्द्रध्वजोत्सव मनाइने गरिन्थ्यो । इन्द्रलाई

---

३१ का.म.पा. वडा नं. २३ स्थित मञ्जुश्रीनक महाविहारका बौद्ध विद्वान सुवर्ण शाक्यसँग अन्तर्वार्ता ।

३२ बलदेव जुजु, *'वंघःत्वाःया आजुद्यः व यैंदेय्'*, इन्द्रभक्त श्रेष्ठ, काठमाडौंः वि.सं २०६०, पृ. ७ ।

३३ ऐजन, पृ. ८ ।

नेपालभाषामा 'यम्बाद्यः-यम्माद्यः-यमाःद्यः' पनि भनिन्छ । यही 'यमाःद्यः' बाट यो नगरको नाम 'यँ' रहन गएको भन्ने विश्वास गरिन्छ ।[३४] तर यस विषयमा थप अनुसन्धान गर्न बाँकी छ ।

यसै सन्दर्भमा कपिलवस्तुमा विरुढकको आक्रमण पछि त्यहाँबाट पलायन हुन बाध्य भएका शाक्यहरू पनि नेपाल उपत्यकामा प्रवेश गरेका विषयलाई बौद्ध ग्रन्थहरूमा उल्लेख गरिएको पाइन्छ । बुद्धकालीन समय अगाडि अथवा उक्त समयदेखि समय समयमा बसाइँ सर्दै आएका शाक्यहरूको आवादी यहाँ विस्तारै बढ्दै गयो । साथै कपिलवस्तुमा शाक्य गणराज्यको पतन पछि त्यहाँका शाक्यहरू र रामग्रामका कोलियहरू पनि विस्तारै अवन्नति हुँदै गएकोले तिनीहरू धेरैको संख्यामा नेपाल उपत्यकामा पसे र यहाँ आएर उनीहरूले दक्षिणमा हालको यंगाल टोलसम्म र उत्तरमा किलागल टोलसम्म घनावस्ती नै बसालेको कुरा खंपिंछेँ वसन्तदेवको वि. सं. ५८७ को लिच्छविकालका अभिलेखमा नै दक्षिण कोलिग्राम उल्लेख भएबाट स्पष्ट हुन्छ । कोलीहरूको प्रभुत्व भएरै यस काठमाडौं शहरको केही भागको नाम कोलीग्राम कहलाइएको थियो । हनुमानढोका दरवारको दक्षिणी भाग दक्षिण-कोलीग्राम र उत्तरी भाग उत्तरकोलीग्राम नामले पुकारिन्थ्यो । मछिन्द्रबहाःतिरको केलटोलले अहिले पनि कोलीग्रामलाई सम्भाइरहेको छ ।[३५]

दक्षिण कोलिग्राम र कोलिग्राम क्षेत्रमा शाक्यहरू बसोबास गर्थे र उनीहरू बौद्ध थिए । त्यस क्षेत्रमा सय भन्दा बढी विहारहरू बनाई शाक्यहरूले बौद्ध धर्म संघ परम्परालाई निरन्तरता दिंदै आइरहेको बुझिन्छ । उक्त कोलिग्राम क्षेत्रमा बौद्ध शाक्यहरू विहारमा नै बसोबास गर्ने र बौद्ध धर्म र संघ परम्पराको अभ्यास गर्ने भएको र यस क्षेत्रमा बसोबास गर्ने अधिकांश मानिसहरू बौद्ध नै भएको हुनाले यस क्षेत्रमा इन्द्र-गृह बनाउने, भव्य राजदरवार बनाउने कुरै आउँदैन । यहाँ रहेका कतिपय विहारहरू साह्रै भव्यशाली देखिन्थे त्यसैले ती विहारहरू मध्ये कुनै एक विहार जो विशाल र भव्य देखिन्थ्यो त्यसैलाई नै अज्ञानतावस राजदरवार भनिदिएको हो कि

३४ योगन्द्रमान श्रेष्ठ, *नेपाःया इतिहासय् यैंयाः, शुक्रवाःया तँसापौ (नेपालभाषा टाइम्स)*, काठमाडौंः सन्ध्या टाइम्स पिथना प्रा.लि., वि.सं. २०७६, पृ. ३ ।

३५ अजय क्रान्ति शाक्य, *कान्तिपुरका बही शाक्यहरूको संस्कृति : एक अध्ययन,* (शोधग्रन्थ), लुम्बिनीः लुम्बिनी बौद्ध विश्वविद्यालय, बि.सं. २०७१, पृ. ३१ ।

भन्ने अनुमान गर्न सकिन्छ । इतिहास शिरोमणि बाबुराम आचार्यले उल्लेख गर्नुभएको इन्द्र-गृह राजदरवार सम्बन्धको कुनै अभिलेख तथा पुरातात्विक प्रमाण नभेटिनु र कोलिग्राम क्षेत्र विशुद्ध रुपमा बुद्धकालीन समयदेखिनै बौद्ध शाक्यहरूको वस्ती भएको र उनीहरूकै समुदायको नाममा उक्त क्षेत्र रहन गएको हुनाले आचार्यले उल्लेख गर्नुभएको तथ्य विश्वासयोग्य छैन ।

अब जहाँसम्म इन्द्रजात्रालाई सम्बोधन गरिने 'यँयाः' को सन्दर्भ छ, केही विद्वानहरू यसलाई येँदेय् अर्थात काठमाडौंको जात्रा भएकोले 'येँयाः' भनिएको भन्ने मान्यता राख्दछन् । बौद्ध विद्वान यज्ञमानपति वज्राचार्यका अनुसार येँदेय्को जात्रा भएकै कारण यसलाई 'यँयाः' भनिएको हो । त्यस्तै संस्कृतिविद् डा. चुन्दा वज्राचार्य पनि यो काठमाडौं (येँ देय्) को जात्रा भएकैले यसको नाम 'यँयाः' हुन गएको बिचार राख्नुहुन्छ ।

इन्द्रजात्रामा विशेष रूपले पूजा गरिने अर्को एउटा देवता इन्द्रचोकस्थित आकाश भैरव पनि हो । बौद्ध विद्वान यज्ञमानपति वज्राचार्यका अनुसार आकाश भैरव आकाशमा बस्ने भएकाले पृथ्वीमा वर्षा गराउन उनको पनि भूमिका छ । आकाश भैरवको मूर्तिलाई पहिलो किराती राजा यलम्बरको टाउको भन्ने गरिन्छ । यलम्बरलाई बुद्ध भन्दा पनि अधिका किराती राजा मानिन्छ । यलम्बरको देश भएकोले पनि यो नगरलाई 'येँदेय्' भनिएको भन्ने अर्को तर्क छ ।[३६]

राजा गुणकामदेव प्रथमले कान्तिपुर नगर बसाए पछि त्यसैको उत्सव स्वरुप 'यँयाः' पर्व मनाउन शुरु गरिएको भन्ने पनि विश्वास गरिन्छ । यो तर्कलाई मान्नेहरू 'यँयाः' पर्वलाई काठमाडौंको पहिचानसँग जोडेर हेर्न रुचाउँछन् ।[३७]

तर यँयाः पर्व केवल काठमाडौंमा मात्रै मनाइने पर्व भने होइन । यो काठमाडौं लगायत ललितपुर, भक्तपुर र दोलखामा समेत आआफ्नै शैलीले मनाउने गरिन्छ । त्यहाँ पनि यो पर्वको नाम इन्द्रजात्रा वा यँयाः नै हो । त्यसैले भक्तपुर, ललितपुरका वासिन्दाहरू 'यँयाः' लाई काठमाडौंको मात्रै जात्रा मान्न तयार छैनन् ।

इतिहास शिरोमणि बाबुराम आचार्यका अनुसार नेपाल अधिराज्यको

३६ डा. चुन्दा वज्राचार्य, *नेवाः सांस्कृतिक चाडपर्व*, ललितपुरः आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, वि.सं. २०७२, पृ. ८३ ।

३७ बलदेव, पूर्ववत् ३२, पृ. २० ।

एकीकरण हुनुभन्दा अघि ललितपुर र भक्तपुरमा पनि काठमाडौंकै जस्तो इन्द्रजात्रा मनाइने चलन प्रचलित थियो ।[३८] त्यहाँ मनाइने इन्द्रजात्राको स्वरुप र आकार भने काठमाडौंको भन्दा छोटो हुने गर्थ्यो ।

अभिलेखहरूमा पनि भक्तपुर र ललितपुरमा मल्लकालदेखि नै इन्द्रजात्रालाई विशेष महत्व दिएर मनाउँदै आइरहेका विवरणहरू पाइन्छन् । मल्लकालमा ललितपुर मातहत रहेका कीर्तिपुर, थानकोट, फर्पिङ लगायत लुभु, ठैब जस्ता ग्रामीण भेगहरूमा समेत इन्द्रजात्रा मनाउने चलन रहेको तथ्य तत्कालीन अभिलेखहरूबाट थाहा हुन्छ । यसरी इन्द्रजात्रालाई विभिन्न विद्वानहरूले 'यँया:' अर्थात काठमाडौं नगरको जात्रा भनी व्याख्या गरेता पनि यसलाई 'यँ' अर्थात काठमाडौं नगरको मात्र जात्रा भनी मान्न सकिँदैन ।

इन्द्र स्वर्गका राजा मात्र नभई एक पराक्रमी चरित्र भएका वीर लडाकू समेत भएको कारणले हिन्दू धर्मप्रति आस्था राख्ने आर्य सम्प्रदायका राजा महाराजाहरूले उनको स्तुती गाउनु स्वाभाविकै हो । तर जनस्तरमा समेत इन्द्रजात्राप्रति यति ठूलो आस्था रहनुको मूल कारण भने इन्द्रको लडाकू चरित्र भन्दा पनि उनलाई प्राप्त 'वर्षादको देवता' भन्ने मान्यता प्रमुख हो । कृषि युग शुरु भइसके पछि मानिसका लागि वर्षा अत्यन्त महत्वको विषय बन्न थाल्यो । वर्षा राम्रो भए कृषि सप्रिने र वर्षा नभए कृषि बिग्रिने हुन थाले पछि राम्रो वर्षाका लागि मानिसले वर्षाका देवता इन्द्रलाई पुज्न थाले । उनको नाममा गरिने यो जात्रा पनि ठीक त्यही समयमा आरम्भ गरिन्छ जुन समय यस क्षेत्रको प्रमुख वाली धान फसलको लागि ठीक्क हुँदै गर्दछ । इन्द्र स्वर्गका राजा भएकाले उनलाई मर्त्यलोकका राजा महाराजाले मान्ने र कृषिका लागि चाहिने वर्षाका देवता भएकाले जनताले पनि मान्ने भएकाले इन्द्रजात्रा राजा र जनताको साझा चाड बन्न पुगेको थियो ।

संस्कृतिविद् यज्ञमानपति वज्राचार्यका अनुसार हरेक चाडपर्वको त्यहाँको राष्ट्रिय पेशासँग सम्बन्ध रहेको हुन्छ । केवल रहरबहरकै लागि मात्र चाडपर्व बनाइएको हुँदैन । नेपाल एक कृषिप्रधान देश भएको कारणले कृषि नै हाम्रो राष्ट्रिय पेशा हो । यो नै हाम्रो राष्ट्रिय अर्थतन्त्रको मेरुदण्ड पनि हो । कृषि राम्रो भए राष्ट्र र व्यक्तिको प्रतिव्यक्ति आय पनि बढ्छ । त्यसैले प्रति व्यक्ति आय बढाउने क्षेत्र नै कृषि हो । कृषि वर्षामा आधारित भएको कारणले

३८ आचार्य, पूर्ववत् १२, पृ. ११५ ।

यसको लागि वर्षा नै महत्वपूर्ण हुन आउँछ । वर्षामा पनि मनसुन सबैभन्दा प्रमुख हुन पुग्दछ । मनसुन राम्रो भए कृषि सप्रिन्छ, मनसुन बिग्रिए आम्दानी पनि बिग्रन्छ । मनसुन राम्रो पार्ने देवता आकाशमा छ, वा भनौं यो देवता इन्द्र हो । त्यसैले मनसुनका बेला नेपालमा इन्द्रको आराधना गरिन्छ ।

लोककथन अनुसार 'भाद्र महिनामा कृषिको लागि जति पानी पारेको हो त्यसको लागि धन्यवाद दिन र अब अर्को वर्षा पुग्यो भन्नका लागि इन्द्रलाई पूजा गर्ने हो । इन्द्रजात्रा सकिने बित्तिकै चंगा उडाउने गरिन्छ । चंगा उडाउनु भनेको इन्द्रलाई अब वर्षा पुग्यो भनी सन्देश प्रवाह गर्नु हो'।

काठमाडौं नगरको जात्रा भएको कारणले इन्द्रजात्रालाई यँया: भनिएको हो भनी विद्वानहरूले विभिन्न तर्क राखेता पनि इन्द्रलाई नेपालभाषामा 'यमा:द्य:' भनी सम्बोधन गर्ने कारणले 'यमा:द्य:' को जात्रालाई नै 'यँया:' भन्न थालिएको तर्क धेरै हदसम्म सत्यको नजिक रहेको देखिन्छ । त्यस्तै इन्द्रध्वज पनि 'यमा:द्य:को सिँ' भएको कारणले नै यसलाई 'य:सिं' भनिएको देखिन्छ । यसै गरी यमा:द्य:को जात्रा 'यँया:', यमा:द्य:को सिँ 'य:सिं', यमा:द्य:को ला (महिना) यँला, यमा:द्य:को दह 'यंकिदह' बन्न गएको देखिन्छ । यसरी जात्राको नाम, जात्रा मनाउने विधि र जात्रा सम्बन्धी लोक्तोक्ति समेत भिन्नै रहेको कारणले यो इन्द्रकै जात्रा भए पनि वैदिक एवं पौराणिक ग्रन्थहरूमा वर्णन गरिएको जस्तो इन्द्रजात्रा होइन, बरु यहींकै माटोमा सिर्जित अत्यन्त मौलिक र स्थानीय जात्रा हो भनी मान्न सकिन्छ ।

## काठमाडौं बाहिर मनाइने इन्द्रजात्रा

काठमाडौंमा इन्द्रजात्रा धुमधामपूर्वक मनाउने चलन भए जस्तै काठमाडौं बाहिरका अन्य जिल्लाहरूमा पनि इन्द्रजात्रा पर्व मनाउने चलन रहेको पाइन्छ । खास गरी काठमाडौं उपत्यकामै रहेका जिल्लाहरू ललितपुर र भक्तपुरमा पनि इन्द्रजात्रालाई 'यँया:' कै नामबाट मनाउने गरिन्छ । ललितपुर र भक्तपुरमा पनि इन्द्रजात्रालाई यँया: नै भन्ने गरिएकोले यो जात्रालाई यँ अर्थात काठमाडौंको मात्र जात्रा होइन भन्ने तर्क ललितपुर र भक्तपुरका संस्कृतिविद्हरू राख्ने गर्दछन् ।

## भक्तपुरमा इन्द्रजात्रा

काठमाडौंमा मनाइने इन्द्रजात्रामा विभिन्न नाच एवं सांस्कृतिक पर्वहरू मनाउने परम्परा भए जस्तै भक्तपुरमा मनाइने इन्द्रजात्रामा पनि विभिन्न सांस्कृतिक नाच एवं उपजात्राहरू सम्पन्न गर्ने परम्परा रहँदै आएको छ ।

भक्तपुरमा भाद्रशुक्ल पूर्णिमा अर्थात यँयाः पुन्हिको आठ दिन अगाडि नै विभिन्न टोलहरूमा इन्द्रको मूर्ति स्थापना गर्न थालिन्छ । यो मूर्तिलाई 'यमद्यः' भनिन्छ । भक्तपुर नगर निर्माण हुँदा २१ वटा टोल बनाइएकोले यमद्यः पनि २१ वटै टोलमा खडा गरिने विश्वास गरिन्छ । यमद्यःहरू काठबाट बनाइएका हुन्छन् । यमद्यः उठाउँदा इन्द्रको मूर्तिलाई पसूका (धार्मिक अनुष्ठान गरिएको एक प्रकारको सप्तरंगी धागो) ले बाँधिएको हुन्छ । भाद्रशुक्ल द्वादशी अर्थात काठमाडौंमा इन्द्रध्वज उठाइने दिन भक्तपुरमा स्थापना गरिएका यी सबै यमद्यःहरू अगाडि होम गरी पूजा गरिन्छ । होम गर्दा यमद्यःलाई बाँधिएको पसूका फुकाइन्छ । गाइजात्राका दिन हातमा बाँधिने डोरा पनि यही बेला फुकालेर यमद्यःको खम्बामा बाँध्ने चलन छ ।[३९]

पूर्णिमाको तेश्रो दिन मूपात्र निस्कन्छ । मूपात्र लगातार तीन दिनसम्म तीन विभिन्न ठाउँबाट निकाल्ने परम्परा रहेको छ । पहिलो दिन दत्तात्रयबाट, दोश्रो दिन छुमा गणेशथानबाट र तेश्रो दिन भैरवथानबाट मूपात्र लिकालिन्छ । मूपात्र सरकारका तर्फबाट गुठी संस्थानले निकाल्ने गर्दछ । मूपात्रले मुख छोपेको हुन्छ । अहिले गुठी संस्थानले मूपात्र निकाल्ने कार्य पनि ठेक्कामा दिने गरेको छ । त्यसैले मूपात्र जो बने पनि हुन्छ ।[४०]

त्यस पछि यांमत निकालिन्छ । यांमत भनेको यमाद्यःको मत अर्थात इन्द्रको बत्ती हो । यांमत भक्तपुरका मानन्धरहरूले निकाल्ने गर्दछ । भक्तपुरमा साकोलां, गोलमढी र तापालाछी टोलमा मानन्धरहरूको बसोवास रहेको छ । यांमत पनि तीन दिन नै निकाल्ने गरिन्छ । पहिलो दिन यांमत निकाल्दा त्यसको पछाडि सल्ला गणेशको जात्रा चलाउँदै आएको हुन्छ भने दोश्रो दिन छुमा गणेश र तेश्रो दिन पुलु भैरवको जात्रा चलाउँदै आइरहेको हुन्छ ।[४१]

---

३९ अवलोकन ।
४० ऐजन ।
४१ ऐजन ।

भक्तपुरस्थित इन्द्रायणी देवीको जात्रा पनि इन्द्रजात्राकै समयमा चलाइन्छ । इन्द्रायणीको खटलाई बोकेर भक्तपुरको तःपुखू अर्थात सिद्ध पोखरीमा लगी घुमाएर ल्याइन्छ । यो जात्रा राति चलाइन्छ । सिद्ध पोखरीलाई भक्तपुरमा यंकिदह (इन्द्र दह) पनि भनिन्छ । भाद्रशुक्ल पूर्णिमाका दिन यो जात्रा हुँदा सिद्ध पोखरीमा ठूलो मेला लाग्ने गर्दछ ।

यँयाः पुन्हिको पाँचौं र छैठौं दिन पुलुकिसि निकालिन्छ । भक्तपुरको लाकुलाछेँ टोलबाट पुलुकिसि निकालेर विभिन्न ठाउँमा घुम्ने परम्परा रहेको छ । भक्तपुरमा निकालिने पुलुकिसि भने काठमाडौंमा निकालिने पुलुकिसि भन्दा फरक किसिमको छ । यहाँको पुलुकिसिको स्वरुप पनि काठमाडौंको भन्दा फरक देखिन्छ । यहाँ पुलुकिसि बनाइसकेपछि त्यसलाई पुलु भैरवमा राखिएको पुलु (बेतबाट बनाइएको एक किसिमको मान्द्रो) ले छोप्ने गरिन्छ । नेवार मृत्यु संस्कारमा मान्छे मर्दा मृत शरीरलाई यही पुलुले बेर्ने गरिन्छ । त्यसपछि कपडा बेरिन्छ । अनि त्यसमाथि फूल, अक्षेता, अबिर आदि राखेर घाटसम्म शवयात्रा चलाइन्छ । भक्तपुरमा निकालिने पुलुकिसि बनाउँदा त्यसमा प्रयोग गरिने पुलु कुनै घाटबाटै ल्याइएको र धेरै वर्ष अघि कुनै सिद्ध पुरुषको मृत्यु हुँदा यही पुलुले उनको शव बेरिएको थियो भन्ने विश्वास गरिन्छ । सिद्ध पुरुषको शव बेरिएको पुलु भएकोले त्यसलाई भैरवको मन्दिरमा सुरक्षित राखिएको थियो । उक्त पुलुलाई पुलु भैरव भनिन्छ ।[४२] पुलु प्रयोग गरी बनाइने किसि (हात्ती) भएकोले यसलाई पुलुकिसि भनिएको हो भन्ने जनश्रुति पाइन्छ । पुलुकिसि निकाल्ने काम स्थानीय ज्यापू जातिले गर्दछ । पुलुकिसिको सुँढले लाकुलाछेँ टोल बाहेक अन्य ठाउँबाट आएका मानिसलाई छोयो भने उक्त मानिसलाई दशा लाग्छ भन्ने पनि विश्वास गरिन्छ । त्यसैले पुलुकिसि निकाल्दा त्यसको सुँढले छोइएला भनेर मानिसहरू पर पर भाग्ने गर्छन् ।[४३]

काठमाडौंमा प्रचलित किंवदन्ती अनुसार स्वर्गमा इन्द्रकी आमालाई व्रत बस्न आवश्यक भएको पारिजातको फूल टिप्न इन्द्र आफै धरतीमा आएका थिए । तर भक्तपुरमा प्रचलित किंवदन्ती अनुसार स्वर्गमा इन्द्रकी श्रीमतीले व्रत बस्न लाग्दा उनलाई चाहिएको पारिजातको फूल टिप्न इन्द्रका छोरा गेहेन्द्र

---

४२ भक्तपुरस्थित भैरव गुठीका गुठियार न्हुछेराम भेलेसँग अन्तर्वार्ता ।

४३ अवलोकन ।

धरतीमा आएका थिए र भक्तपुरवासीले उनैलाई पक्रेर बाँधिराखेका थिए। यहाँ इन्द्रजात्रामा उठाइने यमद्यःलाई इन्द्र नभई इन्द्रका छोरा गेहेन्द्रको प्रतीक मानिन्छ।[४४]

भैरव गुथिका न्हुछेराम भैले इन्द्रजात्रा पर्वको आरम्भ भक्तपुरबाटै भएको र यहींबाट काठमाडौं पनि सारिएको अनुमान गर्नुहुन्छ। पहिले पहिले नेपाल उपत्यकाको राजधानी भक्तपुर भएको कारणले इन्द्रजात्रा पर्व नै भक्तपुरबाट शुरु भएको हो भन्ने उहाँको तर्क रहेको छ।

## ललितपुरमा इन्द्रजात्रा

इन्द्रजात्रा ललितपुरमा पनि आठ दिन नै मनाउने गरिन्छ। तर ललितपुरमा मनाइने इन्द्रजात्रा भने काठमाडौं र भक्तपुरमा मनाइने इन्द्रजात्रा भन्दा फरक देखिन्छ। यहाँ मनाइने इन्द्रजात्रालाई पनि स्थानीय जनताले 'यँयाः' नै भन्ने गर्दछन्।[४५]

ललितपुरमा मनाइने इन्द्रजात्रामा विभिन्न टोलहरूमा इन्द्रका मूर्तिहरू स्थापना गरिन्छन्। तर यो मूर्ति सबै ठाउँमा एकैचोटी स्थापना नगरी फरक फरक ठाउँमा फरक फरक दिनमा स्थापना गर्ने चलन छ। ललितपुरमा भाद्रशुक्ल त्रियोदशीका दिनदेखि इन्द्रको मूर्ति स्थापना गर्न शुरु हुन्छ। त्रियोदशीका दिन यहाँको आल्को, नागबहाल र च्यासल टोलमा इन्द्रका मूर्तिहरू स्थापना गरिन्छन्। मूर्ति स्थापना गरे पछि त्यहाँ पर्व शुरु भएको मानिन्छ। चतुर्दशीका दिन हःखा, सौगल, सुन्धारा र वकुबहालमा इन्द्रको मूर्ति स्थापना गरिन्छ। पूर्णिमाको दिन हौगल, मंगल बजारमा मूर्ति स्थापना गरिन्छ। उक्त दिन मंगलबजारमा स्थानीय ताम्रकारहरूले आफूले बनाएका तामाका विभिन्न कलात्मक सामग्रीहरू प्रदर्शन गर्दछन्। यसलाई स्थानीय भाषामा 'बात्चा दायेगु' भनिन्छ। त्यस्तै त्यही टोलका मिठाई पसलेहरूले पनि विभिन्न परिकारका मिठाईहरू प्रदर्शन गर्दछन्।[४६]

पूर्णिमाको भोलिपल्ट अर्थात परेवाका दिन गाःबहालस्थित पूर्णचण्डीको मन्दिरमा पुंचली भुजा नामको विशेष पूजा हुन्छ। यसमा एकमुरी चामलको

---

४४ अवलोकन।

४५ स्थानीयसँग कुराकानी।

४६ अवलोकन।

भातबाट बनाइएका १२ वटा भुजाहरूलाई पूर्णचण्डी मन्दिर अगाडि राखेर पूजा गरिन्छ। ती भुजाहरू साढे दुई फिट अग्ला हुन्छन्। पुंचली भुजा पूजा गर्नाले चट्याङ पर्दैन भन्ने विश्वास गरिन्छ। यसलाई 'ग्वंग:मल:' जात्रा पनि भनिन्छ। नेपालभाषामा चट्याङलाई मल: भन्ने गरिन्छ।[४७]

ललितपुरका विभिन्न टोलहरूमा स्थापना गरिने इन्द्रको मूर्तिको हात बाँधिएको हुन्छ। यो काठबाट बनाइएका हुन्छन्। धेरैजसो ठाउँमा यस्तो मूर्ति स्थापना गर्ने छुट्टै गुठी समेत रहेको पाइन्छ।[४८]

इन्द्रजात्रामा ललितपुरको आल्कोमा बुद्ध जीवनीसँग सम्बन्धित माटाका मूर्तिहरू प्रदर्शन गरिन्छ। यसमा खास गरी जातक कथामा आधारित झाँकीहरू प्रदर्शन गरिन्छ। त्यस्तै हिरण्यवर्ण महाविहारमा भगवान बुद्धका कथामा आधारित तस्वीर प्रदर्शन गरिन्छ भने बाहिर गणेशको मन्दिर सामू समयद्वँ राखिन्छ। कुम्भेश्वरमा रामायण र महाभारतमा आधारित मूर्तिहरू बनाई प्रदर्शन गरिन्छ। नागबहालमा लाखेसँग सम्बन्धित नाटक प्रदर्शन गरिन्छ। च्यासल टोलमा झ्यालमा पर्दा हाली विभिन्न यौनजन्य हाउभाउ देखाउने गरिन्छ। यसलाई 'झ्याल्चा क्यनेगु' भनिन्छ। राजा श्रीनिवास मल्लले यो चलन शुरु गरेको भन्ने जनश्रुति पाइन्छ। बूबहालमा हात्ती चढिरहेको इन्द्र नै स्थापना गरी पूजा गरिन्छ। यी प्रदर्शनीहरू हेर्न टोल टोलमा मानिसहरूको भीड लागेको हुन्छ।[४९]

ललितपुरमा पनि इन्द्रजात्रामा समयूबजि बनाएर खाने र बाँड्ने परम्परा छ। घरमा कसैको निधन भएको छ भने सो घरबाट अनिवार्य रुपले नै समयूबजि बाँड्ने गर्दछ। शाक्य वज्राचार्यहरूले चाहिँ आफू नजिकको बहालमा गई समयूबजि दान गर्ने चलन छ।[५०]

यसरी इन्द्रजात्राका विभिन्न दिनमा विभिन्न धार्मिक सांस्कृतिक कार्यहरू गरी इन्द्रजात्रा पर्व मनाए पछि पूर्णचण्डीमा गरिने पुंचली भुजालाई इन्द्रजात्राको समापन मान्ने चलन छ। तर इन्द्रजात्रासँग पूर्णचण्डी र त्यहाँ मनाइने पुंचली भुजाको सम्बन्ध भने स्पष्ट छैन। पूर्णचण्डीलाई महालक्ष्मी देवी मानिन्छ।

---

४७ जनश्रुति अनुसार।

४८ अवलोकन।

४९ ऐजन।

५० ललितपुर निवासी सांस्कृतिक पत्रकार मञ्जु वज्राचार्यसँग अन्तर्वार्ता।

गोपालराज वंशावलीमा राजा जयस्थिति मल्लले पाटनको पुल्चोकबाट तोरण ल्याई इन्द्रजात्रा मनाएको र त्यसको दुई दिन पछि श्रीलक्ष्मीको व्रत बसेको प्रशंग उल्लेख गरिएको छ। त्यसमा लेखिएको छ, "ने.सं. ४९९ (वि.सं. १४४०) भाद्र कृष्ण चतुर्थी आदित्यवारको दिन, स्थिर बुद्धि भएका स्थितिराजमल्ल देवले राजल्लदेवीसँग उत्तम, चिताएको सबै कुरा पुऱ्याउने श्रीलक्ष्मीव्रत बस्नुभयो। यस साल भाद्र कृष्ण द्वितीयाको दिन, श्रीद्विजराजजुले पाटन पुल्चोकको तोरण ल्याई एन्देयात (इन्द्रजात्रा) गरे।"[५१]

इन्द्रजात्रामा विभिन्न टोलमा इन्द्रको मूर्ति स्थापना गर्ने समयक्रमलाई बुंगद्यः (रातो मछिन्द्रनाथ) को रथयात्रासँग पनि जोडेर हेर्ने गरिएको पाइन्छ। रातो मछिन्द्रनाथको रथयात्रा गर्दा जुन ठाउँमा पहिलो याः अर्थात यात्रा चलाइन्छ (गाबहाल) त्यहाँ अन्तिम दिन इन्द्रको मूर्ति स्थापना गरिन्छ। जुन ठाउँमा मछिन्द्रनाथ रथयात्राको अन्तिम याः चलाइन्छ (च्यासल टोल) त्यहाँ भने पहिलो दिनमै इन्द्रको मूर्ति स्थापना गरिन्छ।[५२]

इन्द्रजात्रा समापन भए पछि विभिन्न टोलमा उठाइएका इन्द्रका मूर्तिहरू निकालेर आआफ्नै घरमा फर्काएर लगिन्छ। घरमा उक्त मूर्तिलाई आगम कोठामै अरु देवीदेवताका मूर्तिहरूसँगै राखिन्छन् र अरु मूर्ति सरह नै दैनिक पूजा गरिन्छन्।[५३]

## दोलखामा इन्द्रजात्रा

कुनै बेला नेपाल मण्डल क्षेत्रकै एक अंगको रूपमा रहेको दोलखा जिल्लामा मनाइने इन्द्रजात्रा पनि आफ्नै मौलिक प्रकारको छ। यहाँ इन्द्रजात्रालाई स्थानीय दोलखा नेपालभाषामा 'येँदला पुनिस' भनिन्छ। यहाँ भाद्र शुक्लपक्ष द्वादशीदेखि आश्विन कृष्णपक्ष प्रतिपदासम्म पाँच दिन इन्द्रजात्रा मनाइन्छ। जात्राको पहिलो दिन दुइन टोलमा दुइटा, पिंगल टोलमा एउटा, बहिर टोलमा एउटा, कोर्छें टोलमा एउटा, माथिल्लो टोलमा स्वयम्भू चैत्यसँगै एउटा गरी जम्मा छ वटा लिङ्गो गाडिन्छ। साथै यी सबै टोलहरूमा

---

५१ धनवज्र वज्राचार्य, कमल पी. मल्ल, *द गोपालराज वंशावली*, काठमाडौँ: नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स्, सन् १९८५, पृ. ८५।

५२ ललितपुर निवासी संस्कृति अभियन्ता विद्या शाक्यसँग अन्तर्वार्ता।

५३ अवलोकन।

हाथुद्यः (भैरव) र इन्द्रको मूर्ति (राजा रानी पनि भन्ने गरिन्छ) बाहिर निकोलेर प्रदर्शन गरिन्छ। भैरवको मुखबाट जाँड पनि निकालिन्छ। पूजा गर्न आउने भक्तजनहरूले यो जाँड खान सक्दछन्। लिङ्गो ठड्याउँदा त्यसमा इन्द्रको मुकुण्डो राख्ने र मुकुण्डो सँगै एउटा काँक्रो पनि झुण्ड्याउने गरिन्छ। लिङ्गो ठड्याइसके पछि त्यसमा मानिसहरू चढ्न थाल्छन्। जसले चढ्न सक्छ उसले काँक्रो खानुको साथै इन्द्रलाई पिट्ने गर्दछ। यहाँ लिङ्गोलाई 'मेम्सी' र देउतालाई 'खु देउ (चोर देउता)' भन्ने गरिन्छ।[५४]

यहाँ मनाइने इन्द्रजात्रामा नाचगान, लाखे, खरिप्याखं, माजिपा डाकस, देवीनाचहरू पनि प्रदर्शन गरिन्छ। यहाँ प्रचलित इन्द्रजात्रा सम्बन्धी किंवदन्ती अनुसार इन्द्रले आफूलाई हाँक दिने असुरलाई पराजित गरी उसको क्षेत्रमा समेत विजय स्वरुप यो उत्सव मनाएको हो। त्यस्तै अर्को किंवदन्ती अनुसार स्वर्गमा इन्द्रकी आमा बसुन्धरालाई गणेशको व्रत बस्न पारिजात फूल आवश्यक भएकोले त्यो फूल टिप्न इन्द्र मर्त्यलोक आए। उनले यहाँ राक्षसको बगैंचामा फूल टिप्न लागेकोले राक्षसले समातेर बाँधेर राखे, पछि इन्द्रकी आमा मानिसको रूप धारण गरी इन्द्रलाई छुटाएर लगे।[५५]

## प्यांगामा इन्द्रजात्रा

काठमाडौं बाहिर मनाइने इन्द्रजात्रांमध्ये ललितपुरका प्याँगामा मनाइने इन्द्रजात्रा भने आफ्नै मौलिक प्रकारको छ। लेखक जेराँ तोफाँले प्यांगामा मनाइने इन्द्रजात्रालाई प्राचीनकालीन भारतको बंगालमा मनाइने जस्तै देखिने भनी लेख्नुभएको छ। उहाँका अनुसार प्यांगामा मनाइने 'देशजात्रा' इन्द्रजात्रा कै अर्को रुप भन्न सकिन्छ। त्यहाँ यो जात्रा इन्द्रजात्रा मनाउने समयमै एघार दिनसम्म मनाउने गरिन्छ। यो पर्वका बेला गाउँमा दुइटा लिङ्गो उठाइन्छ। उक्त लिङ्गोलाई स्थानीय भाषामा 'यःसिं' वा 'ल्यःसि' भन्ने गरिन्छ। सँगै उठाइने यो लिङ्गो सल्लाको रूख काटेर बनाइएको हुन्छ। यी दुई लिङ्गो मध्ये एकलाई पुरुष र अर्कोलाई स्त्रीको रुपमा लिने गरिन्छ। काठमाडौंमा जस्तो यो लिङ्गो हरेक वर्ष नयाँ ल्याउने गरिँदैन। जात्रा सकिए पछि दुवै लिङ्गोलाई स्थानीय गुठीकै घरमा राख्ने गरिन्छ र

५४ तीर्थनारायण जोशी, *अनुसन्धानको पर्खाइमा दोलखा,* दोलखा : शान्तकृष्ण श्रेष्ठ, वि.सं. २०६७, पृ. ३०

५५ ऐजन, पृ. ३१।

अर्को सालको जात्रामा पुनः त्यही लिङ्गो प्रयोग गर्ने गरिन्छ । काठमाडौंमा मनाइने इन्द्रजात्रामा स्वर्गका राजा इन्द्रलाई पारिजातको फूल चोर्न आएका चोर भनी समातेर दोबाटोमा उभ्याउने गरिन्छ । प्याँगाको इन्द्रजात्रामा स्थानीय बल्मु गुठीका युवाहरू मिलेर छरछिमेकको बारीमा गएर काँक्रो चोरेर ल्याउँछन् र उक्त काँक्रोलाई 'तुसिखुँ द्यः (काँक्रो चोर देउता)'लाई चढाउँछन् । उक्त देवताको टाउकोमा एउटा मुकुट मात्रै राखिएको हुन्छ । जात्रा सकिए पछि उक्त मुकुट गुठीका थकालीको घरमा राख्ने गरिन्छ । तुसिखुँ द्यःलाई काँक्रो चढाउने उक्तकार्य महिलाहरूले हेर्नु हुँदैन भनिन्छ । भाद्रशुक्ल चतुर्दशीका दिन चढाएको काँक्रो टिपेर सबैले प्रसादका रुपमा ग्रहण गर्छन् ।[५६]

त्यस्तै काठमाडौ बाहिर ठेचो लगायतका नेवार वस्ती भएका ठाउँहरुमा पनि इन्द्रजात्रा पर्व आआफ्नै स्थानीय शैलीमा मनाउने गरेको पाइन्छ ।

## विदेशमा इन्द्रजात्रा

गएको केही वर्षदेखि संसारका विभिन्न देशमा बसोवास गर्ने नेपालीहरूले आफू बसिरहेकै ठाउँमा इन्द्रजात्रा पर्व मनाउने चलन पनि शुरु गरेको पाइन्छ । तर इन्द्रजात्रा पौराणिककालमै भारतमा मनाउन थालिसकेको तथ्य विभिन्न अभिलेखहरूमा उल्लेख गरिएको पाइन्छ ।

बंगालका पश्चिम भागमा इन्द्रध्वजका रुपमा सालको रुखको पूजा गरिने प्रथा भएको चर्चा पीयूषकान्ति महापात्रको 'ट्री-सिम्बल् वर्शिप इन् बेंगाल् (बंगालमा वृक्षचिन्हको पूजा)' मा भएको कुरा ई.सं.१९६५ (वि.सं. २०२२/२०२३) मा कलकत्ताबाट प्रकाशित शंकर सेन गुप्तको 'ट्री-वर्शिप् इन् इण्डिया (भारतमा वृक्षपूजा)' को १३३ पृष्ठबाट थाहा पाइन्छ भनी यान खोन्डाले लेखेका छन् (जर्नल अफ दि अमेरिकन ओरियन्टल सोसाइटीको ८७ भागको ४१३ पृष्ठ, ४ टिप्पणी) । यताबाट पश्चिम बंगालमा इन्द्रजात्रा मान्ने कुरा थाहा हुन्छ । तापनि सेन गुप्त थर भएका खुद बंगालीले पनि पुरानो किताबबाट यस जात्राको विषयमा उद्धरण गर्नुपरेको देखिएकोले त्यहाँ जात्रा त्यति प्रशिद्ध नभएको छर्लङ्ग हुन्छ । जंगबहादुरको पालामा अंग्रेजी दूतावासमा डाक्टर भई आएका ओल्डफिल्डले 'इट इज पेक्युलिएर

५६ तोफाँ, पूर्ववत् १, पृ. ८६ ।

टु निपाल, नो फेस्टिवल अफ द सर्ट अकरिङ् इन द प्लेन्ज अफ इन्डिया (त्यस किसिमको जात्रा भारतको मैदानी भागमा नमानिने हुनाले यो नेपालको वैशिष्ट्य हो) (ई. सं. १८८० (वि. सं. १९३६/१९३७) मा लन्डनबाट डब्लु.एच. आलेन एण्ड कम्पनीद्वारा प्रकाशित हेनरी एम्ब्रोस ओल्डफिल्डको 'स्केच फ्रम निपाल् (नेपालको वर्णन)' को २ भागको ३१२ पृष्ठ) लेखेकोबाट पनि इन्द्रजात्रा अन्यत्र मान्ने चलन त्यति नभएको स्पष्ट हुन्छ ।[५७]

गएको केही वर्षदेखि नेपाल बाहिर केही विदेशी भूमिमा पनि इन्द्रजात्रा मनाउन थालिएको छ । अहिले नेपाल बाहिर अमेरिका, बेलायत, जापान, क्यानाडा, अष्ट्रेलिया आदि मुलुकहरूमा समेत त्यहाँ रहेका नेपाली समुदायहरूले आआफ्नै शैलीमा इन्द्रजात्रा पर्व मनाउने गरिएको पाइन्छ । त्यसको आयोजना त्यहीं रहेका विभिन्न नेवाः संघ संस्थाहरूले गरिरहेका छन् ।

काठमाडौंमा मनाइने इन्द्रजात्राकै स्वरुपमा विदेशमा इन्द्रजात्रा मनाउने चलन सबैभन्दा पहिले भारतको पूर्वोत्तर राज्य सिक्किममा करिब एक दशक अघिदेखि आरम्भ भएको थियो । त्यहाँ इन्द्रजात्राका सबै पर्व र नाचहरू देखाउने नभई कुमारीको रथयात्रा, लाखे, पुलुकिसि आदि जस्ता आकर्षक उपजात्राहरू मात्र मनाउने गरिन्छ । काठमाडौंमा श्री कुमारीको रथयात्रा गरिने दिन नै राजधानी गान्तोकमा कुमारीको फोटो राखिएको रथ तानेर इन्द्रजात्रा मनाइन्छ । इन्द्रजात्रा पर्वलाई राष्ट्रिय महत्व दिई उक्त दिन त्यहाँ सार्वजनिक बिदा समेत गरिएको छ ।

त्यस्तै अमेरिकाका विभिन्न राज्यहरूमा पनि अहिले स्थानीय नेवाः संघ संस्थाहरूको आयोजनामा इन्द्रजात्रा मनाउने चलन शुरु भएको छ । सार्वजनिक पार्क भित्र समयूद्वँ राखी लाखे, पुलुकिसि नाच निकालेर त्यहाँ इन्द्रजात्रा मनाइन्छ । गएको केही वर्ष अघिदेखि काठको सानो रथ नै बनाई त्यसमा कुमारी भेषमा रहेकी एक बालिकालाई राखेर जात्रा मनाउन थालिएको छ ।[५८]

इन्द्रजात्राको यस्तो समारोह अहिले विदेशमा बस्ने नेपाली संस्कृतिको पहिचान अभिव्यक्त गर्ने माध्यम बनिसकेको छ । त्यति मात्रै होइन, त्यस्ता

५७ महेशराज पन्त, *'पिशाचचतुर्दशी/घोडेजात्राको विषयमा'*, काठमाडौं: पूर्णिमा, संशोधन मण्डल, वर्ष २२, अंक ३, वि.सं. २०५१, मार्ग, पृ. ९१ ।

५८ नेवाः अर्गनाइजेशन अफ अमेरिकाका शुशिल प्रजापतिसँग कुराकानी ।

कार्यक्रमहरूमा सम्बन्धित देशका स्थानीय मानिसहरूले समेत भाग लिने भएकोले अचेल इन्द्रजात्रा विदेशमा नेपाल चिनाउने सांस्कृतिक पर्वका रूपमा पनि विकसित हुँदै गइरहेको पाइन्छ ।

यसरी हेर्दा इन्द्रजात्रा नेपालको अत्यन्त पुरानो र ऐतिहासिक महत्व भएको गौरवपूर्ण पर्व हो भनेर बुझ्न सकिन्छ । इन्द्रजात्रा पर्व प्राचीनकालमा भारतका विभिन्न स्थानहरूमा मनाइने गरिए पनि अहिले भने त्यहाँ लोप भइसकेको छ तर परिमार्जित रुपमा नेपालमा अझै चलिरहेको छ । वेद, पुराण जस्ता हिन्दू ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्रा बारे वर्णन गरिएको भएता पनि नेपालमा भने यो जात्रा अधिकांश रुपमा वज्रयानी बौद्ध समुदायको संलग्नतामा आफ्नै मौलिकताकासाथ सञ्चालन हुँदै आइरहेको छ । नेपालमा मनाइने इन्द्रजात्रा पुराणमा वर्णन गरिएको भन्दा भिन्न रहेको पाइन्छ । त्यसैले यसलाई स्थानीयकरण भइसकेको नेपालको मौलिक पर्वका रुपमा लिन सकिन्छ । इन्द्रजात्रालाई स्थानीय उपत्यकावासीहरू 'यँयाः' भन्दछन् । कसै कसैले यसलाई 'यें' अर्थात् काठमाडौंको जात्रा भएकोले 'यँयाः' भनिएको भने पनि इन्द्रजात्रा काठमाडौं बाहेक देशका अन्य भेगमा पनि मनाउने गरिएकोले यसलाई काठमाडौंको मात्र जात्रा भन्न मिल्दैन । बरु इन्द्रलाई नेपालभाषामा 'यमाद्यः' भन्ने गरिएकोले उनै 'यमाःद्यः'को नामबाट यो जात्राको नाम 'यँयाः' हुन गएको मान्न सकिन्छ । राष्ट्रिय महत्व भएको इन्द्रजात्रा अहिले देशविदेशमा नेपाललाई चिनाउने प्रमुख सांस्कृतिक माध्यम समेत बन्न पुगेको छ ।

# इन्द्रजात्राको इतिहास

इन्द्रजात्रा नेपालको इतिहासमा विशिष्ट स्थान रहेको धार्मिक-सांस्कृतिक परम्परा हो । नेपालका धैरै ऐतिहासिक अभिलेखहरूमा इन्द्रजात्रा बारे उल्लेख भएको पाइन्छ। नेपालमा इन्द्रजात्रा कसले र कहिलेदेखि मनाउन थालियो भन्ने निश्चित तिथिमिति ठम्याउन नसकिए पनि नेपालको प्राचीन शिलापत्र लगायत विभिन्न ऐतिहासिक सामग्रीहरूमा इन्द्रजात्रा बारे स्पष्टरुपमा उल्लेख भएकोले यो नेपालको धैरै पुरानो र महत्वपूर्ण जात्रा हो भन्ने स्पष्ट हुन्छ ।

इन्द्रजात्रामा पूजाआजा गरिने प्रमुख देवता इन्द्र हुन् । इन्द्रका बारेमा प्राचीन हिन्दू धार्मिक ग्रन्थ वेदमा प्रशस्त वर्णन गरिएको पाइन्छ । त्यसपछि पौराणिककालका विभिन्न धार्मिक ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्राको पनि बयान गरिएको पाइन्छ । त्यस्तै इतिहासका विभिन्न कालखण्डमा पनि इन्द्रजात्रा र जात्रासँग सम्बन्धित विभिन्न कार्यबारे उल्लेख भएको देखिन्छ । यस अध्यायमा पूर्व वैदिककालदेखि वर्तमानकालसम्म इन्द्रजात्रा बारे चर्चा गरिने छ ।

## पूर्व वैदिककाल

इन्द्रजात्रा हिन्दू देवता इन्द्रसँग सम्बन्धित भएकोले यो वेदकालपछि मात्रै उत्पत्ति भएको अनुमान गरिन्छ । तर इन्द्रजात्रामा जस्तै लिङ्गो उठाउने चलन वैदिककालभन्दा अघि सिन्धु सभ्यतामै पाइसकेको छ । वरिष्ठ संस्कृतिविद् सत्यमोहन जोशीले लेख्नुभएको छ, "इन्द्रका बारेमा वेदमा धैरै उल्लेख भए पनि सिन्धुघाटी सभ्यताको पुरातात्विक खोज हुँदा मोहनजोदाडो र हडप्पामा प्राचीन विलुप्त नगरहरू पत्ता लागे, तब

# इन्द्रजात्राको इतिहास

इन्द्रजात्रा नेपालको इतिहासमा विशिष्ट स्थान रहेको धार्मिक-सांस्कृतिक परम्परा हो । नेपालका धेरै ऐतिहासिक अभिलेखहरूमा इन्द्रजात्रा बारे उल्लेख भएको पाइन्छ। नेपालमा इन्द्रजात्रा कसले र कहिलेदेखि मनाउन थालियो भन्ने निश्चित तिथिमिति ठम्याउन नसकिए पनि नेपालको प्राचीन शिलापत्र लगायत विभिन्न ऐतिहासिक सामग्रीहरूमा इन्द्रजात्रा बारे स्पष्टरुपमा उल्लेख भएकोले यो नेपालको धेरै पुरानो र महत्वपूर्ण जात्रा हो भन्ने स्पष्ट हुन्छ ।

इन्द्रजात्रामा पूजाआजा गरिने प्रमुख देवता इन्द्र हुन् । इन्द्रका बारेमा प्राचीन हिन्दू धार्मिक ग्रन्थ वेदमा प्रशस्त वर्णन गरिएको पाइन्छ । त्यसपछि पौराणिककालका विभिन्न धार्मिक ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्राको पनि बयान गरिएको पाइन्छ । त्यस्तै इतिहासका विभिन्न कालखण्डमा पनि इन्द्रजात्रा र जात्रासँग सम्बन्धित विभिन्न कार्यबारे उल्लेख भएको देखिन्छ । यस अध्यायमा पूर्व वैदिककालदेखि वर्तमानकालसम्म इन्द्रजात्रा बारे चर्चा गरिने छ ।

## पूर्व वैदिककाल

इन्द्रजात्रा हिन्दू देवता इन्द्रसँग सम्बन्धित भएकोले यो वेदकालपछि मात्रै उत्पत्ति भएको अनुमान गरिन्छ । तर इन्द्रजात्रामा जस्तै लिङ्गो उठाउने चलन वैदिककालभन्दा अघि सिन्धु सभ्यतामै पाइसकेको छ । वरिष्ठ संस्कृतिविद् सत्यमोहन जोशीले लेख्नुभएको छ, "इन्द्रका बारेमा वेदमा धेरै उल्लेख भए पनि सिन्धुघाटी सभ्यताको पुरातात्विक खोज हुँदा मोहनजोदाडो र हडप्पामा प्राचीन विलुप्त नगरहरू पत्ता लागे, तब

ती नगरका निवासीहरूले बनाएका ढुङ्गाका शिश्न अर्थात् लिङ्गाका भग्नावशेषहरू पनि प्राप्त भए । यस परिप्रेक्ष्यमा लिङ्गो गाडी उत्सव मनाउने चलन त्यहाँका वासिन्दाहरूमा थियो होला भन्ने अनुमान हुन्छ ।"[1]

यसरी लिङ्गो उठाउने कार्य सिन्धुघाटीको सभ्यतादेखि नै प्रचलनमा रहेको र पछि वैदिककाल हुँदै वर्तमान समयसम्मै चलिरहेको देखिन्छ । तर सिन्धुघाटीको सभ्यतामा प्रचलित लिङ्गो ठड्याउने कार्य इन्द्रको नाममा गरिएको इन्द्रध्वजोत्थान नै हो वा अरु नै कुनै कार्य हो भन्ने विषयमा भने अनुसन्धान गर्नु आवश्यक छ ।

## वैदिककाल

इन्द्रजात्राका मुख्य पात्र देवराज इन्द्र हुन् । इन्द्र स्वर्गका राजा हुन् । इन्द्रलाई वर्षाद्को देवता मानिन्छ । वेदहरूमा इन्द्र बारे धेरै चर्चा गरिएको पाइन्छ । अथर्ववेदमा उनलाई एक लडाकू राजाका साथै एक छली स्वभाव भएका व्यक्तिका रूपमा चित्रण गरिएको छ ।[2] वेदहरूमा इन्द्रको बयान गरिएता पनि इन्द्रजात्रा बारे भने चर्चा गरिएको पाइँदैन ।

ऋग्वेदमा इन्द्रको चर्चा धेरै गरिएको पाइन्छ । आर्यहरूले प्राकृतिक शक्तिका प्रतीकका रूपमा वायु, वरुण, अग्नि, पृथ्वी, इन्द्र आदि विभिन्न देवताहरूको कल्पना गरेको छ । त्यस मध्ये इन्द्रको स्थान सबैभन्दा अघि आउँदछ । उनीहरूले इन्द्रलाई वर्षादको देवता मानेर पूजा गरे भने पछि युद्धका देवता समेत मान्न थाले । दर्जनौं उपनाम भएका इन्द्रकी धर्मपत्नी इन्द्राणी हुन् भने छोराको नाम जयन्त हो । उनको घोडाको नाम उच्चैःश्रवा र सारथीको नाम मातलि हो भने हात्तीको नाम ऐरावत हो । उनको हतियारको नाम वज्र हो । उनको कोषाध्यक्षको नाम कुवेर हो । उनको देशको नाम अमरावती अथवा इन्द्रपुरी अथवा स्वर्ग हो भने दरवारको नाम वैजयन्त, सिंहासनको नाम इन्द्रासन र बगैंचाको नाम नन्दनवन हो ।[3]

वेदमा ३३ वटा देवताको उल्लेख छ । पृथ्वीका ११, अन्तरिक्षका ११ र स्वर्गका ११ । यी मध्ये इन्द्र अन्तरिक्षका देवता हुन् । वेद र पुराणमा

---

१ सत्यमोहन जोशी, *नेपाली चाडपर्व*, काठमाडौं: साझा प्रकाशन, वि.सं. २०६७ (दोश्रो), पृ. ६ ।

२ जनश्रुति अनुसार ।

३ जोशी पूर्ववत् १, पृ. ५ ।

भएको इन्द्रको वर्णन अनुसार इन्द्रलाई वर्षाका देवता, उर्वरा शक्तिका देवता, युद्धका देवता र दिक्पालको रुपमा पूर्व दिशाका मालिकका रुपमा वर्णन गरिएको छ ।[४]

वेदहरूमा इन्द्रका १४ वटा नाम रहेका छन् : १) विश्वमुक, २) विपश्चित, ३) विभु, ४) प्रभु, ५) शिखी, ६) मनोजव, ७) तेजस्वी, ८) वलि, ९) अद्‌भुत, १०) त्रिदिव, ११) सुशांति, १२) सुकीर्ति, १३) ऋतधाता र १४) दिवस्पति ।[५]

वेदका विभिन्न ठाउँमा इन्द्रको वृत्रासुर र अन्य राक्षससँग युद्ध भएको प्रशंग आउँछ । विद्वान तिलकले इन्द्र र वृत्रको लडाईंलाई सूर्य र हिउँसँग दाँजेका छन् । इन्द्र हिंसारहित छन् । वृत्रलाई मार्दा उनी (इन्द्र) सँग मरुद्‌गा पनि थिए । जब आकाशबाट पृथ्वीमा पानी परेन, धन दिने भूमि ब्वालीले ढाकिएन, त्यसबेला इन्द्रले वज्रको सहायताले बादलबाट तल झर्ने जल निकाले । इन्द्रको स्वधामन्त्रका अनुसार पानी पऱ्यो । जब वृत्रले नदीलाई बग्नबाट रोक्यो, इन्द्रले उसको वध गरे ।[६]

इन्द्रले समाउने बज्र हिन्दूहरूको चिन्ह हो तर यसलाई बौद्ध धर्मावलम्बीहरूले पनि सर्वश्रेष्ठ वस्तुको प्रतिकका रुपमा लिन्छन् । हिन्दूहरूका श्रेष्ठ देवता इन्द्र यसका मालिक हुन र यसलाई इन्द्रले शक्तिशाली हतियारको रुपमा उपयोग गर्थे । इन्द्र आफ्ना शत्रु आसुरहरूलाई नष्ट गर्न यसले प्रहार गर्थे ।[७]

वैदिककालदेखिकै इन्द्र पुजाको अविरल परम्परा आर्य राजाले चलाउँदै आएकोले यो चाड सर्वत्र व्यापक भएको मानिन्छ ।[८] वैदिककालमा इन्द्रलाई वर्षादका देवता र युद्धका देवताको रुपमा लिने गरिएता पनि उत्तर वैदिककालसम्म आउँदा इन्द्रलाई उच्चस्थानमा राखिएको देखिन्छ ।

## पौराणिक काल

पौराणिक कालका संस्कृत ग्रन्थ र धार्मिक-साहित्यिक कृतिहरूमा

४ बीणा पौड्याल, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १)*, कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी, पृ. ७७ ।

५ राणा प्रसाद शर्मा, *पौराणिक कोश, ज्ञानमण्डल लि;* सन् १९८६, पृ. ५०

६ बीणा पूर्ववत् ४, पृ.७२ ।

७ सिल्भाँ लेभी, *नेपालः हिन्दू अधिराज्यको इतिहास (दोश्रो खण्ड)*, काठमाडौंः हिमाल किताब प्रा.लि., सन् २००७, पृ. १२

८ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा*, गुठी संस्थान, रामशाह पथ, काठमाडौंः वि.सं. २०४२, पृ. ८

ती नगरका निवासीहरूले बनाएका ढुङ्गाका शिश्न अर्थात् लिङ्गाका भग्नावशेषहरू पनि प्राप्त भए । यस परिप्रेक्ष्यमा लिङ्गो गाडी उत्सव मनाउने चलन त्यहाँका वासिन्दाहरूमा थियो होला भन्ने अनुमान हुन्छ ।"[1]

यसरी लिङ्गो उठाउने कार्य सिन्धुघाटीको सभ्यतादेखि नै प्रचलनमा रहेको र पछि वैदिककाल हुँदै वर्तमान समयसम्मै चलिरहेको देखिन्छ । तर सिन्धुघाटीको सभ्यतामा प्रचलित लिङ्गो ठड्याउने कार्य इन्द्रको नाममा गरिएको इन्द्रध्वजोत्थान नै हो वा अरु नै कुनै कार्य हो भन्ने विषयमा भने अनुसन्धान गर्नु आवश्यक छ ।

## वैदिककाल

इन्द्रजात्राका मुख्य पात्र देवराज इन्द्र हुन् । इन्द्र स्वर्गका राजा हुन् । इन्द्रलाई वर्षाद्को देवता मानिन्छ । वेदहरूमा इन्द्र बारे धेरै चर्चा गरिएको पाइन्छ । अथर्ववेदमा उनलाई एक लडाकू राजाका साथै एक छली स्वभाव भएका व्यक्तिका रूपमा चित्रण गरिएको छ ।[2] वेदहरूमा इन्द्रको बयान गरिएता पनि इन्द्रजात्रा बारे भने चर्चा गरिएको पाइँदैन ।

ऋग्वेदमा इन्द्रको चर्चा धेरै गरिएको पाइन्छ । आर्यहरूले प्राकृतिक शक्तिका प्रतीकका रूपमा वायु, वरुण, अग्नि, पृथ्वी, इन्द्र आदि विभिन्न देवताहरूको कल्पना गरेको छ । त्यस मध्ये इन्द्रको स्थान सबैभन्दा अघि आउँदछ । उनीहरूले इन्द्रलाई वर्षादको देवता मानेर पूजा गरे भने पछि युद्धका देवता समेत मान्न थाले । दर्जनौं उपनाम भएका इन्द्रकी धर्मपत्नी इन्द्राणी हुन् भने छोराको नाम जयन्त हो । उनको घोडाको नाम उच्चैःश्रवा र सारथीको नाम मातलि हो भने हात्तीको नाम ऐरावत हो । उनको हतियारको नाम वज्र हो । उनको कोषाध्यक्षको नाम कुवेर हो । उनको देशको नाम अमरावती अथवा इन्द्रपुरी अथवा स्वर्ग हो भने दरवारको नाम वैजयन्त, सिंहासनको नाम इन्द्रासन र बगैंचाको नाम नन्दनवन हो ।[3]

वेदमा ३३ वटा देवताको उल्लेख छ । पृथ्वीका ११, अन्तरिक्षका ११ र स्वर्गका ११ । यी मध्ये इन्द्र अन्तरिक्षका देवता हुन् । वेद र पुराणमा

१ सत्यमोहन जोशी, *नेपाली चाडपर्व*, काठमाडौं: साझा प्रकाशन, वि.सं. २०६७ (दोश्रो), पृ. ६ ।

२ जनश्रुति अनुसार ।

३ जोशी पूर्ववत् १, पृ. ५ ।

भएको इन्द्रको वर्णन अनुसार इन्द्रलाई वर्षाका देवता, उर्वरा शक्तिका देवता, युद्धका देवता र दिक्पालको रुपमा पूर्व दिशाका मालिकका रुपमा वर्णन गरिएको छ ।[४]

वेदहरूमा इन्द्रका १४ वटा नाम रहेका छन् : १) विश्वमुक, २) विपश्चित, ३) विभु, ४) प्रभु, ५) शिखी, ६) मनोजव, ७) तेजस्वी, ८) वलि, ९) अद्‌भुत, १०) त्रिदिव, ११) सुशांति, १२) सुकीर्ति, १३) ऋतधाता र १४) दिवस्पति ।[५]

वेदका विभिन्न ठाउँमा इन्द्रको वृत्रासुर र अन्य राक्षससँग युद्ध भएको प्रशंग आउँछ । विद्वान तिलकले इन्द्र र वृत्रको लडाईंलाई सूर्य र हिउँसँग दाँजेका छन् । इन्द्र हिंसारहित छन् । वृत्रलाई मार्दा उनी (इन्द्र) सँग मरुद्‌गा पनि थिए । जब आकाशबाट पृथ्वीमा पानी परेन, धन दिने भूमि ब्वालीले ढाकिएन, त्यसबेला इन्द्रले वज्रको सहायताले बादलबाट तल झर्ने जल निकाले । इन्द्रको स्वधामन्त्रका अनुसार पानी पर्‍यो । जब वृत्रले नदीलाई बग्नबाट रोक्यो, इन्द्रले उसको वध गरे ।[६]

इन्द्रले समाउने बज्र हिन्दूहरूको चिन्ह हो तर यसलाई बौद्ध धर्माबलम्बीहरूले पनि सर्वश्रेष्ठ वस्तुको प्रतिकका रुपमा लिन्छन् । हिन्दूहरूका श्रेष्ठ देवता इन्द्र यसका मालिक हुन र यसलाई इन्द्रले शक्तिशाली हतियारको रुपमा उपयोग गर्थे । इन्द्र आफ्ना शत्रु आसुरहरूलाई नष्ट गर्न यसले प्रहार गर्थे ।[७]

वैदिककालदेखिकै इन्द्र पुजाको अविरल परम्परा आर्य राजाले चलाउँदै आएकोले यो चाड सर्वत्र व्यापक भएको मानिन्छ ।[८] वैदिककालमा इन्द्रलाई वर्षादका देवता र युद्धका देवताको रुपमा लिने गरिएता पनि उत्तर वैदिककालसम्म आउँदा इन्द्रलाई उच्चस्थानमा राखिएको देखिन्छ ।

## पौराणिक काल

पौराणिक कालका संस्कृत ग्रन्थ र धार्मिक-साहित्यिक कृतिहरूमा

---

४ बीणा पौड्याल, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १)*, कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी, पृ. ७७ ।

५ राणा प्रसाद शर्मा, *पौराणिक कोश, ज्ञानमण्डल लि;* सन् १९८६, पृ. ५०

६ बीणा पूर्ववत् ४, पृ.७२ ।

७ सिल्भाँ लेभी, *नेपालः हिन्दू अधिराज्यको इतिहास (दोश्रो खण्ड)*, काठमाडौंः हिमाल किताब प्रा.लि., सन् २००७, पृ. १२

८ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा*, गुठी संस्थान, रामशाह पथ, काठमाडौंः वि.सं. २०४२, पृ. ८

ती नगरका निवासीहरूले बनाएका ढुङ्गाका शिश्न अर्थात् लिङ्गाका भग्नावशेषहरू पनि प्राप्त भए। यस परिप्रेक्ष्यमा लिङ्गो गाडी उत्सव मनाउने चलन त्यहाँका वासिन्दाहरूमा थियो होला भन्ने अनुमान हुन्छ।"[१]

यसरी लिङ्गो उठाउने कार्य सिन्धुघाटीको सभ्यतादेखि नै प्रचलनमा रहेको र पछि वैदिककाल हुँदै वर्तमान समयसम्मै चलिरहेको देखिन्छ। तर सिन्धुघाटीको सभ्यतामा प्रचलित लिङ्गो ठड्याउने कार्य इन्द्रको नाममा गरिएको इन्द्रध्वजोत्थान नै हो वा अरु नै कुनै कार्य हो भन्ने विषयमा भने अनुसन्धान गर्नु आवश्यक छ।

## वैदिककाल

इन्द्रजात्राका मुख्य पात्र देवराज इन्द्र हुन्। इन्द्र स्वर्गका राजा हुन्। इन्द्रलाई वर्षाद्को देवता मानिन्छ। वेदहरूमा इन्द्र बारे धैरै चर्चा गरिएको पाइन्छ। अथर्ववेदमा उनलाई एक लडाकू राजाका साथै एक छली स्वभाव भएका व्यक्तिका रूपमा चित्रण गरिएको छ।[२] वेदहरूमा इन्द्रको बयान गरिएता पनि इन्द्रजात्रा बारे भने चर्चा गरिएको पाइँदैन।

ऋग्वेदमा इन्द्रको चर्चा धैरै गरिएको पाइन्छ। आर्यहरूले प्राकृतिक शक्तिका प्रतीकका रूपमा वायु, वरुण, अग्नि, पृथ्वी, इन्द्र आदि विभिन्न देवताहरूको कल्पना गरेको छ। त्यस मध्ये इन्द्रको स्थान सबैभन्दा अघि आउँदछ। उनीहरूले इन्द्रलाई वर्षादको देवता मानेर पूजा गरे भने पछि युद्धका देवता समेत मान्न थाले। दर्जनौं उपनाम भएका इन्द्रकी धर्मपत्नी इन्द्राणी हुन् भने छोराको नाम जयन्त हो। उनको घोडाको नाम उच्चैःश्रवा र सारथीको नाम मातलि हो भने हात्तीको नाम ऐरावत हो। उनको हतियारको नाम वज्र हो। उनको कोषाध्यक्षको नाम कुवेर हो। उनको देशको नाम अमरावती अथवा इन्द्रपुरी अथवा स्वर्ग हो भने दरवारको नाम वैजयन्त, सिंहासनको नाम इन्द्रासन र बगैंचाको नाम नन्दनवन हो।[३]

वेदमा ३३ वटा देवताको उल्लेख छ। पृथ्वीका ११, अन्तरिक्षका ११ र स्वर्गका ११। यी मध्ये इन्द्र अन्तरिक्षका देवता हुन्। वेद र पुराणमा

१ सत्यमोहन जोशी, *नेपाली चाडपर्व*, काठमाडौंः साझा प्रकाशन, वि.सं. २०६७ (दोश्रो), पृ. ६।

२ जनश्रुति अनुसार।

३ जोशी पूर्ववत् १, पृ. ५।

भएको इन्द्रको वर्णन अनुसार इन्द्रलाई वर्षाका देवता, उर्बरा शक्तिका देवता, युद्धका देवता र दिक्पालको रुपमा पूर्व दिशाका मालिकका रुपमा वर्णन गरिएको छ ।[४]

वेदहरूमा इन्द्रका १४ वटा नाम रहेका छन् : १) विश्वमुक, २) विपश्चित, ३) विभु, ४) प्रभु, ५) शिखी, ६) मनोजव, ७) तेजस्वी, ८) वलि, ९) अद्‌भुत, १०) त्रिदिव, ११) सुशांति, १२) सुकीर्ति, १३) ऋतधाता र १४) दिवस्पति ।[५]

वेदका विभिन्न ठाउँमा इन्द्रको वृत्रासुर र अन्य राक्षससँग युद्ध भएको प्रशंग आउँछ । विद्वान तिलकले इन्द्र र वृत्रको लडाईंलाई सूर्य र हिउँसँग दाँजेका छन् । इन्द्र हिंसारहित छन् । वृत्रलाई मार्दा उनी (इन्द्र) सँग मरुद्‌गा पनि थिए । जब आकाशबाट पृथ्वीमा पानी परेन, धन दिने भूमि ब्वालीले ढाकिएन, त्यसबेला इन्द्रले वज्रको सहायताले बादलबाट तल झर्ने जल निकाले । इन्द्रको स्वधामन्त्रका अनुसार पानी पऱ्यो । जब वृत्रले नदीलाई बग्नबाट रोक्यो, इन्द्रले उसको वध गरे ।[६]

इन्द्रले समाउने बज्र हिन्दूहरूको चिन्ह हो तर यसलाई बौद्ध धर्माबलम्बीहरूले पनि सर्वश्रेष्ठ वस्तुको प्रतिकका रुपमा लिन्छन् । हिन्दूहरूका श्रेष्ठ देवता इन्द्र यसका मालिक हुन र यसलाई इन्द्रले शक्तिशाली हतियारको रुपमा उपयोग गर्थे । इन्द्र आफ्ना शत्रु आसुरहरूलाई नष्ट गर्न यसले प्रहार गर्थे ।[७]

वैदिककालदेखिकै इन्द्र पुजाको अविरल परम्परा आर्य राजाले चलाउँदै आएकोले यो चाड सर्वत्र व्यापक भएको मानिन्छ ।[८] वैदिककालमा इन्द्रलाई वर्षादका देवता र युद्धका देवताको रुपमा लिने गरिएता पनि उत्तर वैदिककालसम्म आउँदा इन्द्रलाई उच्चस्थानमा राखिएको देखिन्छ ।

## पौराणिक काल

पौराणिक कालका संस्कृत ग्रन्थ र धार्मिक-साहित्यिक कृतिहरूमा

४ बीणा पौड्याल, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १)*, कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी, पृ. ७७ ।

५ राणा प्रसाद शर्मा, *पौराणिक कोश, ज्ञानमण्डल लि;* सन् १९८६, पृ. ५०

६ बीणा पूर्ववत् ४, पृ.७२ ।

७ सिल्भाँ लेभी, *नेपालः हिन्दू अधिराज्यको इतिहास (दोश्रो खण्ड)*, काठमाडौंः हिमाल किताब प्रा.लि., सन् २००७, पृ. १२

८ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा*, गुठी संस्थान, रामशाह पथ, काठमाडौंः वि.सं. २०४२, पृ. ८

इन्द्रको ध्वजा उठाई इन्द्रजात्रा पर्व मनाइने कुरा उल्लेख गरिएको छ। वेदमा इन्द्रसँग सम्बन्धित धेरै गाथाहरू उल्लेख भए पनि इन्द्रजात्रा मनाउने चलन भने पुराणकालमा आएर मात्रै शुरु भएको देखिन्छ। पौराणिककालमा इन्द्रको जात्रा मनाउने चलन शुरु भएको भएता पनि उनको जात्रा चलाउनुको आधार भने वेदहरूमा उनको बारे गरिएको प्रशंसा नै हो भन्ने मान्न सकिन्छ।

इतिहास शिरोमणि बाबुराम आचार्यले लेख्नुभएको छ, "पुराणहरूमा इन्द्रध्वजलाई इन्द्रको प्रतीक मानिएको पाइन्छ । इन्द्रदेव अन्तरिक्षभन्दा पनि माथि 'दि्व'मा रहने देवता हुनाले इन्द्रध्वजालाई पनि सम्भव भएसम्म माथि पुऱ्याउनु पर्ने बिचार उत्पन्न भएर इन्द्रध्वजा टाँगिने लिङ्गो भरसक अग्लो बनाइन्थ्यो । पुराणकालसम्ममा मूर्तिकलाको राम्रो विकास भैसकेको हुनाले इन्द्र र इन्द्राणी (शची) का सुवर्ण-मूर्तिहरू बनाई लिङ्गोको फेदमा राखेर पूजा आराधना र नाच-गान आदिले उनको गुणगान पनि गरिन थालिएको थियो ।"[९]

वैदिककालमा इन्द्रको धेरै चर्चा गरिएको पाइन्छ भने पौराणिककालमा इन्द्रको सँगसँगै इन्द्रध्वज पर्व बारे पनि चर्चा भएको पाइन्छ । उपवेद, उपनिषद् लगायत त्यतिबेलाका धार्मिक कृतिहरू रामायण, महाभारतमा पनि इन्द्रध्वजको वर्णन पाइन्छ । वाल्मिकी रामायणको 'किष्किन्धा काण्ड' मा 'रामचन्द्रको वाणले पीडित वाली समरभूमिमा आकाशमा उभिएको इन्द्रध्वजा ढले जस्तै ढले' भनेर वर्णन गरिएको पाइन्छ।[१०]

इन्द्रजात्रा बारे अरु पनि धेरै हिन्दू धार्मिक ग्रन्थहरूमा उल्लेख गरिएको पाइन्छ। खास गरी महाभारतको आदि पर्व, वाल्मिकी रामायण, हरिवंश पुराण, कालिका पुराण, देवी पुराण बिष्णु धर्मोत्तर पुराण र वृहत्संहिता आदि ग्रन्थमा इन्द्रध्वजोत्थानको विषयमा चर्चा भएको छ। इन्द्रध्वजोत्थान अर्थात यःसिं उठाउने बारे 'बिष्णुधर्मोत्तर पुराण' मा असुरहरूसँग युद्ध लड्न भगवान बिष्णुले एउटा ध्वजा दिएको र युद्ध जितिसके पछि इन्द्रले उक्त ध्वजा राजा वसुलाई दिएको एवं राजा वसुले पछि त्यही ध्वजा फहराई इन्द्रध्वजोत्सव मनाउन थालेको वर्णन गरिएको छ। यस सन्दर्भमा लेखक कुलचन्द्र कोइरालाले लेख्नुभएको छ,

---

९ बाबुराम आचार्य, *नेपालको सांस्कृतिक परम्परा*, काठमाडौंः श्रीकृष्ण आचार्य (सम्पादक/प्रकाशक), २०५४, पृ. १११।

१० कोइराला, पूर्ववत् ८, पृ. ८।

"ऐतिहासिक अन्वेषण गर्दा, विक्रम संवत् भन्दा पूर्व ३००० वर्षतिर राजा युधिष्ठिरको काल मानिन्छ । युधिष्ठिर भन्दा चार पुस्ता अगाडिका राजा शान्तनुकी पत्नी सत्यवती (मत्स्य गन्ध) को जन्म राजा उपरिचर वसुको वीर्यबाट भएको कथा महाभारत आदि पर्वमा उल्लेख छ । यसकारण युधिष्ठिर भन्दा लगभग १५० वर्ष अगाडि राजा उपरिचर भएका थिए । यिनकै पालामा चेदि जनपदको राज्य कायम भएको थियो । यसरी पौराणिक कथाको डोरोबाट काल निर्धारण गर्दा आजभन्दा लगभग पाँच हजार वर्ष अगाडिदेखि आर्य सभ्यतामा इन्द्रध्वजोत्थानको परम्परा शुरु भएको थियो भनेर मान्नुपर्ने हुन्छ । महाभारतको दक्षिणत्य पाठ (नीलकण्ठी संस्करण) मा इन्द्रध्वजाको उचाई ३२ हात (४८ फिट) अग्लो, पाँचरंगी कपडाले बेरिएको भनी उल्लेख गरिएको छ ।"[११]

वराहसंहितामा दैत्यहरूसँगको युद्ध जित्ने इन्द्रलाई बिष्णुले एउटा ध्वजा दिएको र पछि त्यही ध्वजा इन्द्रध्वजाको नामले प्रसिद्ध भएको प्रशंग उल्लेख गरिएको छ । कालिका पुराणमा विमान चढेर हिँड्ने वसु राजाले इन्द्रध्वज पर्व चलाएको कुरा लेखिएको छ । ब्रह्म पुराणमा इन्द्रध्वजोत्सव गर्दा नाचगानको ठूलो महत्व रहने व्यहोरा उल्लेख गरिएको छ । राज मार्तण्ड (ज्योतिष) मा नौ दिनसम्म इन्द्रध्वज फरफराए भयकारी हुने कुरा लेखिएको छ । कवि शक्तिबल्लभद्वारा सम्पादित 'इन्द्रध्वजोत्सव कथनम्' मा विभिन्न पुराणमा वर्णित इन्द्रध्वजोत्सव सम्बन्धी लक्षण र विचार प्रस्तुत गरिएको छ ।[१२]

वृहत्संहितामा देवता र दैत्यको लडाइँ हुँदा देवताहरूलाई दैत्यहरूले हराए पछि देवताहरूका गुरु बृहस्पतीले आफ्नो नक्षत्रमा इन्द्रको अभिषेक गरे र त्यसपछि शक्तिशाली भई इन्द्रले दैत्यहरूलाई हराएको कुरा लेखिएको छ ।[१३]

'विष्णुधर्मोत्तर पुराण' मा इन्द्रध्वजोत्थान बारे अझ विस्तृत चर्चा गरिएको छ । उक्त पुराणमा इन्द्रध्वजोत्थान गर्नाले शत्रु नाश हुने र राजालाई विजय प्राप्त हुनुका साथै उन्नति ल्याउने व्यहोरा उल्लेख छ । साथै त्यसमा जात्राका बेला शहरलाई सजाउने, सार्वजनिक मनोरञ्जनका कार्यहरू गर्ने,

११ कोइराला पूर्ववत् ८, पृ. ८-१० ।

१२ जोशी पूर्ववत् १, पृ. ६-७ ।

१३ महेशराज पन्त, *पुष्याभिषेक पूर्णिमा* वर्ष ९ अंक १ पृ. १३ ।

इन्द्रध्वजामा बास बस्न आएका देवताको पूजा र आराधना गर्ने विधि सम्बन्धी कुराहरूको पनि वर्णन गरिएको छ । त्यस्तै अथर्ववेदमा आधारित ग्रन्थ 'कौशिकशुत्र' मा पनि इन्द्रध्वजारोहणका लागि रूख कटान, त्यसको ढुवानी, ध्वजारोहण, जात्रामा पुजाआजा, सार्वजनिक मनोरञ्जन आदि जस्ता कार्यहरू गर्नुपर्ने कुरा उल्लेख गरिएको छ ।[१४]

इतिहास शिरोमणि आचार्यले 'बिष्णुधर्मोत्तर पुराण'लाई उद्घृत गर्दै लेख्नुभएको छ, "असुरहरूद्वारा पराजित भएका देवताहरूले इन्द्रदेवको नेतृत्वमा क्षीर सागरमा रहेका बिष्णुकहाँ गई सहयोगको निमित्त प्रार्थना गरे । त्यस समयमा एक ध्वजा अर्पण गर्दै बिष्णुले इन्द्र देवतालाई अनुरोध गरे - यो ध्वजा लिएर युद्ध क्षेत्रमा जानुहोस्, यसको प्रभावबाट असुरहरू अवश्य पनि पराजित हुनेछन् । हुन पनि बिष्णु भगवानकै आदेशानुसार ध्वजा लिई इन्द्रको नेतृत्वमा देवताहरू युद्ध गर्न जाँदा असुरहरूको हार भयो । यसैले युद्ध समाप्त भए पछि इन्द्रले प्रशन्न भएर यस ध्वजाको धूमधामसँग पूजा गरी चेदी देशका राजा वसुलाई यो ध्वजा अर्पण गरे । ध्वजालाई अर्पण गर्दै इन्द्रदेवले पनि अनुरोध गरे - जो राजाहरू इन्द्रध्वजोत्सव मनाउँछन्, तिनीहरूको राज्यमा दुर्भिक्ष तथा शत्रुहरूको भय रहने छैन र सबै किसिमबाट राज्यको बडिबढाउ समेत हुनेछ । इन्द्र देवकै परामर्श अनुसार राजा वसुले पनि यस ध्वजाको भव्यतापूर्वक पूजा आराधना गरेका थिए र यसबाट धनधान्यले परिपूर्ण भई शत्रुहरूमाथि विजय प्राप्त गरेर लामो समयसम्म राज्य गर्न उनी समर्थ भएका थिए । यसैले यो परम्परा पछि पनि चल्दै आएको हो ।"[१५]

पौराणिककाल पछि भने धार्मिक रुपमा इन्द्रको महिमा कम हुँदै जान थाल्यो । शुङ्गकालको प्रारम्भ भएपछि भारतमा स्मार्त-सम्प्रदायको उत्थान हुँदा इन्द्र, वरुण, यम र रुद्र आदि वैदिक-देवताहरूको महत्व क्षीण हुँदै आएर ब्रम्हा, विष्णु र महेश्वरको आदि स्मार्त-देवताहरू नै आर्यहरूका प्रधान देवताका रूपमा स्थापित हुन आइपुगेका थिए ।...... वैदिककालका प्रधान-देवता इन्द्र, अब प्रतिष्ठापित नयाँ मान्यता अनुसार देवताहरूको मर्यादाक्रममा

१४ J. Gonda, *The Indra Festival According to the Atharvavedins*, India : Journal of the American Oriental Society (Vol. 87, No. 4), 1967, p. 414.

१५ आचार्य, पूर्ववत् ९, पृ. १११ ।

चौथो स्थानमा पुगिसकेका थिए ।[१६]

वैदिक ग्रन्थहरूमा गरिएको इन्द्रको चर्चा र विभिन्न पुराणहरूमा गरिएको इन्द्रजात्राको वर्णन अनुसार प्राचीनकालमा भारतका विभिन्न ठाउँमा इन्द्रजात्रा मनाउने गरिएको पाइन्छ । तर हाल भारतमा इन्द्रजात्रा मनाउने चलन भने लोप भइसकेको छ । नेपालमा शासन गर्न विभिन्न वंशका शासकहरू भारतबाटै आएका कारण उनीहरूसँगै इन्द्रजात्रा पनि नेपाल भित्रिएको देखिन्छ जो हालसम्म पनि धुमधामकासाथ मनाइने गरिन्छ । खास गरी काठमाडौं उपत्यका अत्यन्त उर्वर भूमि भएका कारण यहाँ कृषिकर्मका लागि वर्षाद्का देवता इन्द्रलाई सम्मान प्रकट गर्न यो जात्रा मनाएको देखिन्छ ।

## किरातकाल

नेपालको किरातकालीन इतिहास स्पष्ट छैन । इतिहासकारहरूले ई.पू. ८०० देखि इस्वीको प्रारम्भसम्मको समयलाई किरातकाल भनी व्याख्या गरेको छ । यसका प्रथम राजा यलम्बर थिए । 'नेपालको संक्षिप्त इतिहास' प्रेमबहादुर मावोबाङ र ढुंगेलका अनुसार यिनी पूर्वी सिमाङगढको सन्देईन्बाका जेठा छोरा थिए । त्यहाँबाट खाल्डोमा आएर गोपालवंशी राजा भुवनसिंहलाई युद्धमा पराजित गरी सुप्रभा दरवार निर्माण गरी थानकोटबाट कान्छी नगरमा राजधानी सारेका थिए । यिनले ९० वर्ष राज्य गरे ।[१७]

हर्कराज चोडबाङले किरात वंशका ३२ पुस्ताले काठमाडौं खाल्डोमा शासन गरेको लेख्नुभएको छ भने भाषा वंशावलीमा २२ पुस्ताले शासन गरेको उल्लेख छ । त्यसमा दिइएका नामहरू पनि फरक फरक छन् ।

बौद्ध ग्रन्थ मूलसर्वास्तिवाद विनयसंग्रहमा उल्लेख भए अनुसार भगवान बुद्धका दूतका रुपमा भिक्षु आनन्द काठमाडौं उपत्यका आएका थिए । बुद्धको पालामा भिक्षु आनन्द जस्तो भिक्षु स्वयं नेपाल उपत्यकामा आई बुद्ध धर्म प्रचार गरेबाट नेपाल उपत्यकामा बुद्धकालीन समयमा नै बुद्ध धर्म व्यापक रुपमा प्रचार प्रसार र शाक्यहरू यहाँ आई बसोबास गरिसकेको तथ्य अवगत

१६ आचार्य, पूर्ववत् ९, पृ. २७ ।

१७ हर्कराज चोडबाङ, *किरात वंशावली र सांस्कृतिक खोजीको संक्षिप्त विश्वकोष,* ललितपुरः आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, वि.सं. २०६६, पृ. ३६ ।

हुन आउँछ ।[१८]

बुद्धकालीन समयमा नेपाल उपत्यकामा किराती राजाहरूले शासन गरिरहेका थिए । राइट वंशावलीमा उल्लेख भए अनुसार -"चौधौँ किराँती राजा स्थुंकोको पालामा पाटलीपुत्रका सम्राट् अशोक, उनका परिवार र गुरु उपगुप्तका साथ काठमाडौंमा आएर विभिन्न धार्मिकस्थलको दर्शन गरे, तीर्थस्थलहरूमा गई स्नान गरे अनि स्वयम्भु, गुह्येश्वरी र आठ बुद्धवितराग अर्थात् चैत्यहरूको पनि दर्शन गरेका थिए । उनले यहाँ धेरै चैत्यहरू पनि बनाए ।"[१९]

नेपाल उपत्यका भित्र किरातकालमा बुद्ध धर्मको प्रभाव भर्खर पर्न शुरु भएको देखिन्छ । बुद्ध धर्मको प्रचार प्रसार भर्खर शुरु हुँदै गरेको अवस्थामा यहाँ विहार परम्पराको प्रारम्भ भएको अनुमान गर्न सकिन्छ । तर यो बेलासम्म वज्रयानी बौद्ध सम्प्रदाय छुट्टै अस्तित्वमा आइसकेको भने देखिँदैन । नेवार बौद्ध संस्कृतिहरू वज्रयानी बौद्ध परम्परामा आधारित छन् । यसर्थ किरातकालमा विभिन्न नेवार बौद्ध संस्कृतिमा आधारित चाडपर्व तथा परम्पराहरू प्रारम्भ भएको मान्न सकिँदैन । काठमाडौंमा मनाइने इन्द्रजात्रा पनि नेवार संस्कृतिमा आधारित पर्व भएको हुनाले यो समयसम्म इन्द्रजात्रा पर्व जस्ता अनेकन जात्रापर्वहरू प्रारम्भ भइसकेको मान्न सकिँदैन ।

तर इन्द्रजात्रामा प्रदर्शन गरिने काठमाडौंको इन्द्रचोकस्थित आकाश भैरवको मूर्तिलाई भने प्रथम किराती राजा यलम्बरको शिर भन्ने गरिन्छ । इन्द्रचोकका स्थानीय ज्यापू समुदायले आकाश भैरवलाई आफ्नो पूर्खा मान्दै 'आजुद्यः' भनेर सम्बोधन गर्दछन् । आकाश भैरवको मन्दिर रहेको उक्त ठाउँलाई इन्द्रचोक भनिन्छ । इन्द्रजात्राका बेला आकाश भैरवको उक्त मूर्तिलाई मन्दिरबाट बाहिर ल्याई त्यहाँ बनाइएको काठको मञ्चमा आसिन गराइन्छ । इन्द्रजात्राको आठैदिन उक्त मूर्तिलाई फूलहरूले सजाएर प्रदर्शित गरिन्छ भने पूर्णिमाका दिन श्री कुमारीको रथयात्रा गरी रथलाई इन्द्रचोक पुऱ्याए पछि आकाश भैरवको मुखबाट हाथु हायेके गर्ने गरिन्छ । आकाश भैरवको मूर्तिलाई प्रथम किराती राजाको शिर भन्ने किंवदन्ती प्रचलनमा

---

१८ अजय क्रान्ति शाक्य, *कान्तिपुरका वही शाक्यहरूको संस्कृति : एक अध्ययन*, काठमाडौं: वि.सं. २०७१, पृ. ३१ ।

१९ ऐजन, पृ. ४९ ।

भएता पनि यथार्थमा यस तथ्यलाई पुष्टि गर्ने कुनै ऐतिहासिक प्रामाणिक अभिलेखहरू भने भेटिएको छैन ।

इन्द्रचोकसँगै रहेको वटु टोलमा पनि इन्द्रजात्राका बेला बाकादे आजुको मूर्ति प्रदर्शन गरिन्छ । बाकादे आजुलाई किंवदन्ती अनुसार आकाश भैरवको साथी भन्ने गरिन्छ । तर त्यसको पनि कुनै प्रामाणिक अभिलेख भेटिएको छैन ।

हिन्दू धर्मशास्त्र अनुसार आकाश भैरवलाई महाभारतको कथासँग जोडेर यलम्बरको टाउको मानिएको पाइन्छ । तर वज्रयानी बुद्ध धर्ममा भैरव सम्बन्धी छुट्टै अवधारणा रहेको पाइन्छ जसले आकाश भैरवलाई यलम्बरको टाउको भन्ने किंवदन्तीलाई स्वीकार गर्दैन ।

बौद्ध ग्रन्थहरूका अनुसार आठ दिक्पालहरू मध्ये इन्द्र पनि एक हुन् । देवताका राजा इन्द्र त्रयत्रिम्स स्वर्गमा बस्दछन् । त्रयत्रिम्स स्वर्ग प्राकृतिक सौन्दर्य र सुन्दर अप्सराहरूले भरिएको छ । स्वर्गमा एउटै दुःख छ, त्यो हो बेलाबेलामा राक्षससँग युद्ध गर्नु पर्दछ ।[२०]

किरातकालमा नेपाल उपत्यकामा बाक्लो वस्ती पनि विकसित भइसकेको थिएन । थोरै मानिस र थोरै मानिसहरूको वस्ती थियो भने व्यवस्थित शहरको रुपमा विकसित भइसकेको थिएन । काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्तीमा वर्णित सामाजिक वस्तुस्थितिलाई अध्ययन गर्दा समेत किरातकालमा त्यस्तो सामाजिक अवस्था थियो भन्ने देखिँदैन । त्यो बेला सुस्पष्ट दर्शनमा आधारित कुनै संस्कृतिहरू प्रचलनमा थिए भन्ने कुनै आधार भेटिँदैन । त्यसैले किरातकालमा इन्द्रजात्रा मनाउने परम्परा रहेको पाइँदैन ।

## लिच्छविकाल

धार्मिक ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्रा बारे विभिन्न कुराहरू लेखिएको भएता पनि नेपालको सन्दर्भमा भने लिच्छविकालमै इन्द्रध्वजोत्थान पर्व मनाउन थालिसकेको पाइन्छ । यही इन्द्रध्वजोत्थानलाई इन्द्रजात्राको पूर्व स्वरुपको रुपमा लिने गरिएको छ ।

लिच्छविकालीन अभिलेखहरूमा इन्द्र एक परिचित नाम रहेको छ तर लिच्छविकालमा इन्द्रको कुनै मूर्ति भने बनेको पाइँदैन । तर एउटा अनौठो

२० Min Bahadur Shakya, *The Iconography of Nepalese Buddhism*, Kathmandu: Handicraft Association on Nepal, 1994, p. 63.

कुरा के देखिन्छ भने काठमाडौं उपत्यकामा इन्द्रको धातु र काठका मूर्ति एवं चित्रहरू पाइन्छन् तर शिलामूर्ति भने एउटा पनि पाइँदैन । सूर्य जस्तै इन्द्र सम्प्रदायको विकास पनि नेपालमा अन्तरिम कालमा भएको पाइन्छ । भारतको धार्मिक इतिहासमा इन्द्र सम्प्रदाय दशौं शताब्दीसम्म मात्रै चलेको पाइन्छ । नेपालमा भने त्यही समयदेखि इन्द्रका मूर्तिहरू देखा पर्न थालेको पाइन्छ ।[२१]

लिच्छवि राजा शिवदेव अंशुवर्माको पाटन लेलेमा भेटिएको संवत् ५२६ (वि. सं. ६६१) अंकित अभिलेखमा इन्द्रजात्रा मनाउने गुठीको लागि खर्च छुट्याएको व्यहोरा छ ।[२२] तर इतिहास शिरोमणि बाबुराम आचार्यले भने यो भन्दा पनि धेरै अघि लिच्छविकाल आरम्भ हुँदै गर्दा नै नेपालमा इन्द्रध्वजोत्थान गर्ने चलन शुरु भइसकेको दावी गर्नुभएको छ । लिच्छविकालका प्रसिद्ध राजा मानदेवका हजुरबुबा शंकरदेवले इन्द्रजात्रा आरम्भ गरेको उहाँको दावी छ । उहाँले लेख्नुभएको छ - '(भारतमा) गुप्तकालमा रचना भएको कालिदासको रघुवंश महाकाव्यमा इन्द्रध्वजोत्थानको मनमोहक वर्णन पाइन्छ। यसबाट तिनताक त्यहाँ इन्द्रध्वजोत्थान गर्ने उत्सव हर्षोल्लासपूर्वक मनाउने परम्परा व्यापक रूपमा प्रचलित रहेको प्रमाणित हुन्छ । यसैको प्रभाव परी नेपालमा पनि शंकरदेवकै राज्यकालमा दक्षिणकोलिग्राममा 'इन्द्रगृह' नामक नयाँ राजभवनको निर्माण भएको र यस राजभवनको आसपासमा यसै समयदेखि इन्द्रध्वजोत्थान गराउने परम्परा शुरु भएको संकेत प्राप्त भएको छ । विदेशी तथा विधर्मी आक्रान्ताहरूको आक्रमणको प्रभावमा परी इन्द्रध्वजोत्थापन गर्ने प्रचलन आजसम्ममा भारतबाट पूर्णरूपमा विदा भैसकेको छ तापनि नेपालमा भने यो परम्परा अझै पनि अविछिन्न रूपमा चलिरहेको पाइन्छ ।'[२३]

बाबुराम आचार्यको यो तर्कलाई पुष्टि गर्ने कुनै प्रामाणिक अभिलेख भने पाइएको छैन । साथै उहाँले बताउनुभएको 'इन्द्र-गृह' को अस्तित्व उक्त ठाउँमा हुनसक्ने कुनै ठोस आधार पनि पाइँदैन । बरु बि.सं. ६६१ अर्थात्

२१ Mary Shepherd Slusser, *Nepal Mandala (v. 1)*, Kathmandu: Mandala Book Point, 1998. p. 267.

२२ धनवज्र वज्राचार्य, *लिच्छविकालका अभिलेख*, काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, बि.सं. २०५३, पृ. २८४ ।

२३ आचार्य, पूर्ववत् ९, पृ. २८-२९ ।

आजभन्दा १४१६ वर्ष अघि इन्द्रजात्रा चलाउन गुठीको व्यवस्था गरिएको बारे लेलेको शिवदेव अंशुवर्माको अभिलेख नै भेटिएको छ -

## लेलेको शिवदेव अंशुवर्माको अभिलेख[२४]

### मूलपाठ

....ध्वजगोष्ठिकानाम्मा १७ प्र- - गौष्ठिकानाम्मा २० प्रणालीगौष्ठिकानाम्मा ८ ब्राम्हणसा -

१३. नात्थ्यगौष्ठिकानाम्मा १० हिद्धिमशालाया मा...प्रदीपगौष्ठिकानाम्मा ८ प्रवहणनौ-

१४. ष्ठिकानाम्मा २० उत्तरलाशायाः मा २० पूर्व्वशालाया मा १० ध्वजगौ ष्ठिकानाम्मा ११ भूयो ध्वजगौ-

१५. ष्ठिकानाम्मा १० मल्लयुद्धगौष्ठिकानाम्मा ३ अर्च्चनीयगौष्ठिकानाम्मा ४ इन्द्रगौष्ठिकानाम्मा ६

१६. पूर्व्वशालायाः मा १० भगवतश्चूडिकेश्वरस्य पाञ्चालिकै..मानङ्ग्रामस्य पूर्व्वतःमा ४० पश्चिमतश्च

१७. मा ४० तदेतेषां क्षेत्त्राणान्न केनचिदाक्षेपः पीडा वा कायूर्यो यस्त्वतामाज्ञामति-

### व्याख्या

संवत् ५२६ (वि.सं. ६६१) आश्विन शुक्ल मिति लेखिएको उक्त अभिलेखमा त्यसबेला प्रचलित विभिन्न गुठी (गोष्ठी) हरू सञ्चालनको लागि खर्च छुट्याइएको वर्णन छ। मानगृह (दरवार) बाट जारी गरिएको उक्त अभिले खमा कुन कुन गुठीलाई के कति खर्च व्यवस्था गरिएको छ भन्ने व्यहोरा उल्लेख गरिएको छ। आश्विन शुक्ल मिति अंकित उक्त अभिलेखमा ब्राम्हण गोष्ठीका गुठियारलाई १० मानिका, प्रदीप गोष्ठीका गुठियारलाई १० मानिका, पौलम्को पानीय (पानी) गोष्ठीका गुठियारलाई १० मानिका, मल्लयुद्धगोष्ठिका गुठियार लाई ६८ मानिका, धूपगोष्ठीका गुठियारलाई २ मानिका, 'इन्द्रगोष्ठी'का गुठीयारहरूका लागि ४ मानिका, उत्तरशालालाई १२ मानिका, वादित्त्र

२४ वज्राचार्य, पूर्ववत् २२, पृ. २८३।

(बाजा) गोष्ठीका गुठियारलाई १० (मानिका)...... खर्च उपलब्ध गराउने व्यहोरा लेखिएको छ। त्यस समयमा प्रचलित विभिन्न धार्मिक कार्यहरूका लागि राज्यबाट दिइने खर्चहरूको विवरणमा 'इन्द्रगोष्ठी' का गुठियारलाई पनि खर्च छुट्याइएको व्यहोरा त्यस अभिलेखमा उल्लेख छ। यसबाट त्यतिबेला इन्द्रजात्रा कसरी मनाइन्थ्यो भन्ने कुरा स्पष्ट नभए पनि इन्द्रजात्राको प्रचलन लिच्छविकालदेखि नै देखिइसकेको कुरा थाहा पाउन सकिन्छ।

प्राचीन भारतमा इन्द्रजात्रा पर्वलाई एक नाट्य प्रस्तुतीका रूपमा पनि मनाइने गरिन्थ्यो। उक्त नाटक भरतमुनिको नाट्यशास्त्रमा आधारित थियो। भरतमुनिको नाट्यशास्त्र ई. पू. दोस्रो शताब्दीदेखि ई. पहिलो शताब्दीको बीचमा रचना गरिएको मानिन्छ। इन्द्रजात्राको नाटक मञ्चन पनि यही बेलादेखि शुरु भएको विश्वास गरिन्छ। संस्कृतिविद् डा. चुन्दा वज्राचार्य पनि भरतमुनिको नाट्यशास्त्रको मञ्चनबाटै इन्द्रजात्रा शुरु भएको मान्नुहुन्छ। भरतको नाटक मञ्चनकै लागि पनि इन्द्रध्वज उठाउनु जरुरी थियो। नाट्यशास्त्र बनेपछि त्यसलाई मञ्चित गरी इन्द्रध्वज उठाउने, विजय जुलुस जस्तै उत्सव मनाउने चलन शुरु भएको देखिन्छ।

## मल्लकाल

मल्लकालीन समयमा इन्द्रजात्रा सबैभन्दा विकसित भएको पाइन्छ। मल्लकालका धेरै शिलालेखहरूमा इन्द्रजात्रा बारे उल्लेख गरिएको छ। तत्कालीन अभिलेखहरूको अध्ययन गर्दा मल्लकालमा तत्कालीन राजा मात्र होइन सर्वसाधारण जनता पनि इन्द्रजात्रालाई अत्यन्त श्रद्धापूर्वक मान्दथे भन्ने देखिन्छ। उपत्यकाका विभिन्न स्थानहरूमा इन्द्रजात्रा मनाउन जग्गा सहित छुट्टै गुठी बनाई आयस्ता व्यवस्था गरिएको बारे पनि शिलापत्रहरू राखिएको पाइएका छन्।

भक्तपुर तौमढी टोलमा प्राप्त ने. सं. ५६० को अभिलेखमा इन्द्रजात्राको नाम भक्तपुरकै प्रमुख जात्रा बिस्केट जात्रासँग जोडेर उल्लेख गरिएको छ। त्यस्तै ललितपुरमा भेटिएको वि. सं. १६४५ को भण्डारखाल देवीस्थानको पुरन्दरसिंहको अभिलेखमा पाटनको सबैभन्दा ठूलो जात्रा बुंगद्यः (रातो मछिन्द्रनाथ) को जात्रासँग इन्द्रजात्रालाई जोडिएको छ भने कीर्तिपुरको गुलफु पुखुधिटोल पाटीमा भेटिएको शिलापत्रमा बाघभैरव मन्दिरसँग इन्द्रजात्रालाई

जोडिएको छ । इन्द्रजात्राका बेला कतै बत्ती बाल्न, कतै समयूर्वाजि बाँड्न त कतै हाथ्वँ (जाँड) अर्पण गर्न गुठीको व्यवस्था गरिएको सम्बन्धी शिलालेखहरू राखिएको पाइन्छ ।

लेखक जेराँ तोफाँका अनुसार नेपालमा ११ औं शताब्दीका राजा गुणकामदेवले काठमाडौं नगर निर्माण गरे पछि त्यसैको उपलक्ष्यमा इन्द्रजात्रा मनाएको भन्ने वंशावलीमा लेखिएको पाइए पनि सबैभन्दा पुरानो प्रामाणिक अभिलेख भने भक्तपुरमा पाइएको शिलालेख नै हो जसमा १५ औं शताब्दीमा पनि इन्द्रजात्रा मनाइएको व्यहोरा परेको छ । मध्यकालमा नेवार जातिको नियन्त्रणमा यहाँका नेवाः जातिको हात रहेको बेला इन्द्रजात्रा यहाँको प्रमुख सामुहिक जात्रा (मू जात्रा वा प्रमुख जात्रा) थियो । काठमाडौंमा यो जात्राको महत्व भनेको भक्तपुरमा बिस्केट जात्रा र ललितपुरमा बुंगद्यः (रातो मछिन्द्रनाथ) को जात्रा जतिकै रहेको देखिन्छ। उपत्यकाको तीन शहरमा विभिन्न समयमा मनाइने यी तीन जात्राहरू यहाँको शहरी जनजीवन र गौरवको रुपमा लिइन्छ । यी जात्राहरूले यहाँको नेवाः राज्यको प्रतिनिधित्व पनि गर्दछ ।[२५]

मल्लकालमा तत्कालीन शासकहरू जुनसुकै कठिन अवस्थामा पनि इन्द्रजात्रा मनाउने गर्दथे भन्ने कुरा प्रताप मल्लसँग सम्बन्धित एउटा घटनाले देखाउँछ। सत्रौं शताब्दीका मल्ल राजा प्रताप मल्ल एकपटक हनुमानढोकामा बनाउन लागिएको पोखरीका लागि पानी खोज्दै जाँदा रानीवनमा अलि धेरै समय बस्नुपर्ने भएछ । त्यो बेला उनले हनुमानढोका दरवार क्षेत्रमा मनाइने इन्द्रजात्रा समेत रानीवनमा आफू भएकै ठाउँमा मनाएको कुरा इतिहासमा उल्लेख छ ।[२६]

त्यस्तै ने.सं. ८०८ को भदौ महिनातिर काठमाडौं र ललितपुरका काजीहरू मिली भक्तपुरमा आक्रमण गर्न गएका रहेछन् । त्यही बेला काठमाडौंमा इन्द्रजात्रा पर्व शुरु हुन लागेको रहेछ । आक्रमण गर्न गएका काजीहरू काठमाडौं फर्की इन्द्रजात्रा पर्व मनाए । इन्द्रजात्रा सकिए पछि फेरि भक्तपुर गई आक्रमण गरे । भागिराम काजी भन्ने एकजना भारदार भक्तपुरमा लुक्न

२५ Gerard Toffi, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present*, Kirtipur: Contributions To Nepalese Studies (Volume 19), TU, 1992, p. 74.

२६ Daniel Wright, *History of Nepal*, Cambridge: 1877, p. 214.

गएको र उनलाई आफू समक्ष समर्पण नगरेको भनी काठमाडौं र ललितपुरका काजीहरू भक्तपुर चढाई गर्न गएका रहेछन् । पछि यही भागिराम काजीका कारण आफूले दुःख पायौं भनी भक्तपुरे आफैले उनलाई लखेटेर पठाए ।[२७]

नेपालको इतिहासमा अत्यन्त महत्वपूर्ण स्रोत सामग्री मानिएको ग्रन्थ 'गोपालराज वंशावली' मा पनि इन्द्रजात्राको चर्चा गरिएको छ । गोपालराज वंशावलीमा वि.सं. १३५१ र वि.सं. १४३६ मितिमा इन्द्रजात्राको नाम उल्लेख गरिएको छ -

### एन्देयात (इन्द्रजात्रा) सम्बन्धी अभिलेख[२८]

**मूलपाठ (२७ पत्र)**

१. एन्द्रकुट सम्वच्छर चारि सय चवुद्रह । वेशाखमासः तस्य पुत्र श्रीजयशक्तिदेवेनः
एन्द्रकुटध्वजमारोहनम् । तत्रेव पनालिका व कृतम् । राजा

२. श्रीअनन्तमलदेवेनः कर्त्तव्यं मुनेन्दुःवेदशकसम्वच्छ्र आषाढशुक्ल पञ्चमी बुधवासरेः श्रीपशुपतिभाटारिकाय, स्ववर्ण्णशंखलीशं-

३. च्छादन कृते ।

**अनुवाद**

(ने.सं. ४१४ (वि.सं. १३५१) वैशाख महीनामा युवराजिनी श्रीविरमदेवीले इन्द्रकुट बनाइन् । तिनका छोरा श्रीजयशक्तिदेवले इन्द्रकूटध्वजको आरोहण गरे । त्यहीं धारा बनाए ।

राजा श्रीअनन्तमल्लदेवले ने.सं. ४१७ (वि.सं. १३५४) आषाढ शुक्ल पञ्चमि बुधवारको दिन श्रीपशुपति भट्टारकलाई सुनको छाना हाले ।)

---

२७ पं. देवीप्रसाद लंसाल, (सं), *भाषा वंशावली (द्वितीय भाग)*, काठमाडौंः नेपाल राष्ट्रिय पुस्तकालय, बि.सं. २०२३, पृ. ९९ ।

२८ धनवज्र वज्राचार्य, कमल पी. मल्ल, *द गोपालराज वंशावली*, काठमाडौंः नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स्, सन् १९८५, पृ. ३५ र ३७ ।

**मूलपाठ (२९ 'क' पत्र)**[२९]

४. .....आचीर्ण्णं स्थितिराजमलविभु-

५. ना राजल्लदेव्या समम्, श्रीक्ष्मीव्रतमुत्तमम् स्थिरधिया सव्वार्थकामप्रदं: ॥ थ्व सम्वच्छलवु श्रीद्विजराजजुस्यं यहं पुलचोया तोरण हस्यं एन्देयात

(२९ 'ख' पत्र)

१. याङा गाक्व दुराखनः ॥

**अनुवाद**

ने.सं. ४९९ (वि.सं. १४३६) भाद्र कृष्ण चतुर्थी आदित्यवारको दिन, स्थिर बुद्धि भएका स्थितिराज मल्लदेवले राजलदेवीसँग उत्तम, चिताएको सबै कुरा पुऱ्याउने श्रीलक्ष्मीव्रत बस्नुभयो ।
यस साल भाद्र कृष्ण द्वितीयाको दिन, श्रीद्विजराजजुले पाटन पुल्चोकको तोरण ल्याई एन्देयात (इन्द्रजात्रा) गरे ।)

गोपालराज वंशावलीमा इन्द्रजात्रा बाहेक अर्को कुनै जात्राहरूको नाम उल्लेख गरिएको छैन । त्यसबाट पनि इन्द्रजात्राको महत्व उजागर हुन्छ ।

यस बाहेक मध्यकालका धेरै अभिलेखहरूमा इन्द्रजात्रा बारे उल्लेख गरिएको पाइन्छ । ऐतिहासिक स्रोत सामग्रीहरू मध्ये अभिलेखलाई सबै भन्दा आधिकारिक मान्ने गरिन्छ । इन्द्रजात्रा बारे उल्लेख गरिएका केही मल्लकालीन अभिलेखहरू यस प्रकार रहेका छन् :

## १) भक्तपुर तौमढी टोलको ने.सं. ५६० को अभिलेख[३०]

..भुय सतछि ॥ इन्द्रजात्रास च्यान्हु ॥ महाअष्टमि कोन्हु विश्वजात्रा नीन्हु थ्वते दिन मभीसं कोथु फलेया बजि पु...थ्व मिपु प्रति चिकन हने अष्टाछी हाने ॥

२९ वज्राचार्य, मल्ल, पूर्ववत् २८ पृ. ३५ र ३७ ।

३० धनवज्र वज्राचार्य, *पूर्वमध्यकालका अभिलेख,* काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिविव, वि.सं. २०६८, पृ. २९६ ।

भक्तपुरको तौमढी टोलमा भेटिएको यो अभिलेख मल्लकालको धेरै अघिको अभिलेख हो । यसलाई पूर्वमध्यकालको अभिलेख भनिएको छ । यसमा इन्द्रजात्रा शब्द स्पष्ट रुपमा उल्लेख गरिएको छ । साथै यो जात्रा च्यान्हु अर्थात आठ दिन मनाउने कुरा पनि यसमा उल्लेख छ । यसमा इन्द्रजात्राको नाम भक्तपुरको प्रख्यात 'विश्वजात्रा' अर्थात बिस्काः (बिस्केट) जात्रासँग जोडेर उल्लेख गरिएको छ । यो इन्द्रजात्रा, महाअष्टमि (सम्भवतः बडा दशैँको) र बिस्काः जात्राका लागि च्यूरा र तेलको व्यवस्था गर्ने सम्बन्धी व्यहोरा उल्लेख गरिएको अभिलेख हो । हाल काठमाडौंमा जस्तो भक्तपुरमा आठ दिनसम्म इन्द्रजात्रा मनाउने चलन रहेको पाइँदैन । तर पहिले पहिले भक्तपुरमा पनि आठै दिन इन्द्रजात्रा मनाइन्थ्यो भन्ने कुरा यसबाट थाहा पाउन सकिन्छ ।

## २) भण्डारखाल देवीस्थानको पुरन्दरसिंहको अभिलेख[३१]

### मूलपाठ

'....विशेषन बुंगयात इन्द्रयातन रङनयात मनिग्लयातन मत घ्न विङ प्वाठ ५० धारे छोयके माल रङनयात कुन्हु दान बिय, सियाफलके फ ४ जिव थ्वं फ ४ ला दन ४ धरिपाट १२, थ्वते चाछि फलके, पा-चयि भुति....कलगुडि फोया, थ्वते दान बियमाल ॥'

### अनुवाद

(विशेष गरी बुंगयात्रा (रातो मछिन्द्रनाथको जात्रा) लगन जात्रा, मानिगल जात्राको दिन र इन्द्रजात्राको दिन, ५० बत्ती बाल्नु । लगनजात्राको दिन सियाफलके (भुटेको च्यूरा) ४ पाथी, जिव जाँड चार पाथी, मासु....चार, १२ कहतारा दही, यतिलाई चाहिने जति च्यूरा....बोरी, भिजाएको केराउ यति दान दिनु ।)

---

३१ धनवज्र वज्राचार्य, *मध्यकालका अभिलेख,* काठमाडौंः नेपाल एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, वि.सं. २०५६, पृ. ३८-४०

> ने.सं. ७०९ (वि.सं. १६४५) मार्गकृष्ण नवमिका दिन यो शिलापत्र राखिएको हो । यसमा पाटनमा एकछत्र राज चलाएका बिष्णुसिंहका छोरा पुरन्दरसिंहले परलोक भएका आफ्ना पत्नी ललितलक्ष्मीको नाममा 'भेरु चलु' को १४ रोपनी जग्गाको एउटा गुठी बनाई त्यसबाट (ललितपुरको ठूलो जात्रा मछिन्द्रनाथको जात्रा र इन्द्रजात्राका बेला) यी कामहरू चलाउनू भनी यो शिलापत्र राखेको थियो ।

यो अभिलेखमा इन्द्रजात्राको नाम ललितपुरको सबैभन्दा ठूलो बुंगद्यः (रातो मछिन्द्रनाथ) को जात्रासँग जोडिएको छ । ललितपुरमा पनि हाल काठमाडौंमा जस्तो आठै दिन धुमधामपूर्वक इन्द्रजात्रा मनाउने गरिँदैन । तर बुंगद्यःलाई जस्तै इन्द्रजात्राका लागि पनि भनेर जग्गा सहितको छुट्टै गुठी बनाइएकोले ललितपुरमा पनि मल्लकालमा इन्द्रजात्रा धुमधामपूर्वक मनाउने गरिन्थ्यो भनी बुझ्न सकिन्छ ।

### ३) पाटन क्वाछेटोल बालकुमारीका देवलदेखि पूर्वपट्टि पर्खालको शिलालेख[३२]

#### मूलपाठ

> '....भूय थ्व सवत्सलसं श्री ३ क्वाथछेंस मण्डल जात्रा दयेका फागुणि, कृष्णचतुर्दशी कुन्हु श्रीश्रीश्रीवाल-कौमारी देवी भट्टारकासके दुगुम्ह २ पोसोक दयेकं पूजा याङन चाक्रमतं प्वाथ १२० छोयके हाथ्वं हायेके माल थ्वन सन्ति मत कोकायस दुगु म्हं १ पोसोक दयकं पूजा द्योङ प्रताय पु १ धुकु ३ हाकयं छास्यं मंते लुयमाल थ्वतेयातं वरमाल दुंता वमदोल वु रोव ३ थ्वतेया वरसानन चाक्रमत छोयके, मूय वंमदोल वु रोव ३ थ्वतेया वरसानन हाथ्वं हायके भूय अफल वु रोव १ पयि ३ थ्वतेया वरसानन गुथिन पूजा सामग्रीस

३२ वज्राचार्य, पूर्ववत् ३१, पृ. ७१-७३ ।

हने भूय वदल वु रोव १ पथि २ देवलया स्यल्हो यातं
भूय ।'

**अनुवाद**

(ने.सं. ७४२ (वि.सं. १६७८) वैशाख कृष्ण दुतिया बुधवार....फेरि संवत्सरमा श्री ३ क्वाथछेंमा मण्डल जात्रा गरी फाल्गुण कृष्ण चतुर्दशीका दिने श्रीश्रीश्रीबाल-कौमारी देवी भट्टारिकालाई दुइटा बोका बलि दिई पूजा गर्नु, चाक्रमत १२० वटा बाल्नू, 'हाथ्व हायके' गर्नू । यसको भोलिपल्ट बत्ती लिने बेला एउटा बोका बलि दिई पूजा गरी 'प्रताप' एक धुकू तीन चढाई 'रोटी' वर्षा गर्नू । यसको लागि आयस्ता चढाइयो - वमडोलको तीन रोपनी । यस खेतको आयस्ता चाक्रमत बाल्नू । फेरि वंमडोकलो तीन रोपनी खेतको आयस्ताले 'हाथ्वं हायेके' गर्नू ।

यो अभिलेखमा इन्द्रजात्राको नाम आएको छैन । तर इन्द्रजात्रामा जस्तै हाथ्वँ हायेकेगु अर्थात जाँड अर्पण गर्ने कार्य गर्नू भनी भनिएको छ । यो हाथ्वँ हायकेगु कार्य पनि श्रीश्रीश्रीबालकौमारी देवीलाई गर्ने भनिएको छ । काठमाडौंमा मनाइने इन्द्रजात्रामा पनि श्वेत भैरव, आकाश भैरव र वटु टोलको बाकादे आजुले श्री कुमारीको रथयात्रा चलाउँदा हाथु हायेके गर्ने गर्दछन् । तर ललितपुरमा यो अभिलेख राख्दासम्म काठमाडौंमा कुमारीको रथयात्रा चलाउने परम्परा नै शुरु भइसकेको थिएन । ललितपुरको यो अभिलेखले हाथु हायेकेगु परम्परा काठमाडौंमा 'हाथुद्यः' अर्थात श्वेत भैरव स्थापना गर्नुभन्दा पहिलेदेखि नै प्रचलित थियो भन्ने देखाउँछ ।

## ४) पाटन चापागाउँ थपाछे भंसारटोलको चैत्यको शिलालेख[३३]

### मूलपाठ

'....विशेषन बुंग
दिवंगत ववु नुंगु भावो पुत्र काय द्रण्डराज छ्य वीस्वराज मान्हरखन मयि थ्वो पनि पेम्हस्त नाम्न नाय मगुलन्यन्ता फरे दयका थ्वो स यत फरेस विमान ईन्द्रराजा म्हं २ वोय थ्वो स यत फरे सेलूहो ॥

### अनुवाद

यही पाटीमा विमान ईन्द्र राजा २ प्रदर्सन गर्नु । यस पाटिको जिर्णोद्वार गर्नु पऱ्यो भने हाथ्वो गुठीले जिर्णोद्वार गर्नु । यो विमान पहिले हाथ्वो गुठी भित्र पारी बनाइएको हो ।

यो अभिलेखमा इन्द्रको नाम उल्लेख छ । अभिलेख राखिएको पाटीमा राखेर इन्द्र प्रदर्शन गर्न र केही गरी पाटी बिग्रे-भत्केमा बनाउन भनी हाथ्वँ गुठी राखिएको व्यहोरा यसमा उल्लेख छ । अभिलेखमा मिति छैन । तत्कालीन समयमा इन्द्रजात्रा प्रति जनमानसमा धेरै आस्था रहेको यसबाट जनाउँछ ।

## ५) पाटन कुनिम्ह टोल पाटीको शिलालेख[३४]

### मूलपाठ

थ्वोयात दुन्ता, वोद्धदीप वातिका कर्ष छि १ जवा स्व ३ आहो मोहर टंका इलंगुत्या १९ थ्वो वलया ङा दा मया प्यबोस स्व वोया वरसानना श्रीवुगयात यालङ नयात कुन्हु वो इन्द्रयातया लूहुतग्वयात कुन्हु वो स एव फलेस चेन प्र १ अष्टा २ मेंट प्वाथ ४ छोयकं दानपिन्ते सियाफ्रके कु ६ कटाथ्वो फं १ रा कुड २

३३ वज्राचार्य, पूर्ववत् ३१, पृ. ९४ ।
३४ ऐजन, पृ. १०५-१०६ ।

धरियात ४ वजि कु २ म्वात प्र १ भुति प्र १ कगूडि
प्र २ फेटा, पालव दं २ ॥

ललितपुरको कुनिम्ह टोल भन्ने ठाउँमा राखिएको यो शिलालेख बारे संकलक धनवज्र वज्राचार्यले कुनै व्याख्या वा शिलालेखको अनुवाद राख्नुभएको छैन । यसको भाषा हेर्दा यो शिलापत्र मूलतः बुंगद्यः (रातो मछिन्द्रनाथ) को रथ तान्दा र इन्द्रजात्राका बेला चाहिने जाँड, मासु, च्यूरा, गेडागुडी आदिको व्यवस्था गर्न राखिएको भन्ने बुझिन्छ । यसमा पनि इन्द्रजात्रालाई रातो मछिन्द्रनाथको रथयात्रासँग जोडेर राखिएकोले ललितपुरमा इन्द्रजात्राको महत्व ठूलो थियो भन्ने थाहा हुन्छ ।

## ६) पाटन ज्याबहाल बाहिर पाटीको शिलालेख[३५]

### मूलपाठ

थ्वो फरेस, ईन्द्रजात्रा स्वानछा कुन्हु श्रिरोकेश्वोर तारा पूजा याङ्न दानपिते थुते प्र १ चेक्न, मत छोयके बा २ सियाफके डे १ जिप थ्वो कुड १ रा पारु, म्वात, सन्हान, पात २ ध रि कुड १ वजि कुड १ कगुरि थुते दयकेमा थुते चिन्ता याक ग्वहस्ति गुनसिंह भावो, संदु राम भावो, दथराछे मधु भावो जजमान पुत्र सिवराम भावो थुतेसेन रोप मयास्य चिन्ता यायमार रोपया कारे पांचमाहापातक राक जुरो ॥

### अनुवाद

यस पाटिमा ईन्द्रजात्रा स्वानछाको दिन श्री लोकेश्वोर र ताराको पूजा गर्नूस यती दान दिनू । एक प्रतेलले बत्ती बालुनुस दुइ पाथी भुटेको चिउरा, जिपथ्वं (जाँड विशेष) एक घडा ९० भप कुरुवा मासु अदुवा भटमास सन्हाघासा, दुइ कहतारा दही, एक कुरुवा चिउरा, केराऊ, यति पारी दान दिनू ।

३५ वज्राचार्य, पूर्ववत् ३१, पृ. १५४-१५५ ।

यो शिलापत्रमा पनि इन्द्रजात्रालाई श्री लोकेश्वर अर्थात रातो मछिन्द्रनाथसँग जोडेर व्यहोरा लेखिएको छ । इन्द्रजात्रामा लोकश्वर र तारा पूजा गर्न बत्ती बाल्न तेल, दही, च्यूरा, केराउ आदिको व्यवस्था गर्ने बारे उल्लेख गरी यो शिलापत्र राखिएको पाइन्छ ।

### ७) थानकोत सीम्हछेटोल नारायण स्थानको शिलालेख[३६]

**मूलपाठ**

> थ्वो परमेश्वोर पूजा नित्य कर्म श्री व्राम्हनजु सन
> पुजादि वु रोवाषु ६ जुरो सालीङा दुलिसि कुन्हु
> वोसाधनया वु दीप दोल वु रो वो न्ह सत्या ७
> व्यावसह थ्वो क्षेत्रया वरसानन वर्षप्रति व्राह्मन पूजा
> विधि विधान दको याङ दानधरि वजि म्वाच दकली
> दको नां पदार्थ याङ नों ईन्द्रजात्रा दुलिसि कुन्हु प्वात
> स्वं ३ मतं ४ पुनिसि कुन्हु घलेदीवा प्वात छि १ थ्वते
> चिन्ता निस्त्रपं जजमान जुगि भारो प्रमुखन, चोछें
> गोपालिक मानसिंह, सुर्ययराम राम ।।।। भागिराम थ्वो
> तेसन्त पापमयस्य गुथीसन चिन्ता याय मार ॥

हाल काठमाडौं अन्तर्गत रहेको थानकोट मल्लकालमा ललितपुर अन्तर्गत थियो । मल्लकालमा त्यहाँ पनि इन्द्रजात्रा धुमधामपूर्वक मनाइन्थ्यो भन्ने कुरा यो अभिलेखबाट थाहा पाइन्छ । अभिलेख संकलक धनवज्र वज्राचार्यले यो अभिलेखको व्याख्या गर्नुभएको छैन । यो अभिलेखमा इन्द्रजात्राका अवसरमा द्वादशी र पुर्णिमाका दिन घिउको बत्ती बाल्न गुठी व्यवस्था गरिएको व्यहोरा उल्लेख छ । साथै गुठी राख्ने व्यक्तिहरूको नाम पनि यसमा उल्लेख गरिएको छ ।

---

३६ वज्राचार्य, पूर्ववत् ३१, पृ. १६१-१६२ ।

## ८) मंगलबजार भाईदेवलको अभिलेख[३७]

### मूलपाठ

भुयबुंग लगन यात कुन्हु वो ईन्द्रजात्राया मणिग्लयात कुन्हु वो नेच धातसं चेक्न कुड ६ धाले तोचकं चाक्रमत छोयकेमाल ।

### अनुवाद

फेरी मत्स्यन्द्रनाथको लगनजात्राको दिन र ईन्द्रजात्राको मणिग्लजात्राको दिन ६/६ कुरुवा तेल राखी दुबैतिरा चाकमत बालुनु ।

पाटन मंगलबजारको भाईदेवल एक छुट्टै इतिहास भएको महत्वपूर्ण सम्पदा हो । त्यहाँ राखिएको यो अभिलेखमा बुंगद्यः (रातो मछिन्द्रनाथ) र इन्द्रजात्रालाई समान मान्यता दिएर उल्लेख गरिएको छ । बुंगद्यःको लगन यात्रा अर्थात रातो मछिन्द्रनाथको रथलाई लगनखेलमा तान्ने दिन र इन्द्रजात्राका दिन चाक्रमत अर्थात लहरै बत्ती बाल्ने व्यवस्थाका लागि यो अभिलेख राखिएको देखिन्छ । यो अभिलेखको विवरण छोटो भए पनि ललितपुरमा इन्द्रजात्रालाई पनि बुंगद्यः जात्रालाई जस्तै नै सम्मान दिइन्थ्यो भन्ने कुरा यस अभिलेखबाट थाहा पाउन सकिन्छ ।

## ९) थानकोट शिखछुटोल आदिनारायणको शिलालेख[३८]

### मूलपाठ

थ्वो परमेश्वर पुजा नित्यकम्म श्री ब्राह्मणजुन भाजन प्वास वु रोवा ङा ५ जुरो सलि ङादुलिसि कुन्हु वोसाधनयाँ प्रताप वु रोवा सरमछी ११ सहकन थ्व क्षेत्रया वरसानन बर्षप्रती ब्राह्मण पुजा विधि विधान दको याङ दान धरि बाज म्वाचन्हा दकोरी दको त्वं

---

३७ वज्राचार्य, पूर्ववत् ३१, पृ. १९८-१९९ ।

३८ ऐजन, पृ. २३५-२३६ ।

> पदार्थ यङ याङ्त्वं ईन्द्रजात्रा दुलिसी कुन्हु प्वात ङा ५ मत पुण्णमासी कुन्हु, घेर दिवा प्वात छी १ थ्वते चिन्ता निस्त्रपं जजमान हाकुदेव दुवार भारो प्रमुखन तस्य पत्र माधवजु वैज्यानाथजु, गोपिलिक शिवदास मुकुन्द राजा, आभयसिंह, सुषुरि, थ्वतेस्न रोभानी पापाणी मायास्य चिन्ता याय माल जुरो ।

थानकोटमा पाइएको इन्द्रजात्रा बारे उल्लेखित यो अर्को अभिलेख हो । अभिलेख संकलक धनवज्र वज्राचार्यले यो अभिलेख बारे पनि व्याख्या गर्नुभएको छैन । यो अभिलेख पनि इन्द्रजात्राका लागि बत्ती बाल्न र अरु पूजा गर्न सरसामानको व्यवस्था गरिएको सम्बन्धी नै हो । यसमा उक्त व्यवस्था गर्ने व्यक्तिहरूको नाम उल्लेख गरिएको छ । थानकोटको तत्कालीन समाजमा इन्द्रजात्रा अत्यन्तै सम्मानपूर्ण पर्व थियो भन्ने कुरा यसबाट थाहा पाउन सकिन्छ ।

### १०) पाटन कोबहालको लक्ष्मीनारायण मन्दिरको अभिलेख[३९]

**मूलपाठ**

> वुसाधना कुन्हु ब्रह्मन भोज बिज्याचके, भायके माल दान बि के माल वोसाधन कुन्हु, लगन यात कुन्हु हाथ्व हायक्यं दान बिके मार, लूहोगर यात कुन्हु दान नविकेमार स्व घातसं प्वात ३ मत छोयके मार, थ्व देवपुजायाक ब्रह्मन यात जाक्य फं १० केग्वल क्य फं प्वात क्य फं थ्वते पुजयाक, बियमार बपुकयात विय क्य फं ५ थ्वते पुजायाक, केशवराम भारो जयकृष्ण भारो स्वग्वत्र विस्व सिंह भारो, थ्व स्वह्मा स्यन निस्था प चिन्ता यायमाल जुरो ॥

**अनुवाद**

३९ वज्राचार्य, पूर्ववत् ३१, पृ. २५४-२५५ ।

> ने सं ८०५ वि सं १७४२ श्रावण कृष्ण प्रतिपदाको दिन यो बनाइ सिद्धियो । शुभ । बुसाधनको दिन ब्राह्मणलाई हाथ्व भोजन गराउनु पर्छ । ब्राह्णलाई बोलाई दान दिलाउनु पर्छ । लगन जात्राको दिन हाथ्व लगाउनु पर्छ दान दिलाउनु पर्छ । न्हुगलजात्राको दिन पनि दान दिलाउनु पर्छ । तीन पटक तीन बत्ती बाल्नु पर्छ । यि देवता पुजा गर्ने ब्राह्मण्लाई चामल १० पाथि, केराउ । पाथि, भटमास पाथी दिनु पर्छ ।

यसमा इन्द्रजात्राको नाम उल्लेख छैन । तर रातो मछिन्द्रनाथको रथयात्रा लगनखेलमा चलाउँदा त्यहाँ हाथ्वँ लगाउनु पर्छ भन्ने व्यहोरा यसमा उल्लेख गरिएको छ । इन्द्रजात्रामा काठमाडौंका विभिन्न ठाउँमा हाथ्वँ हायेके गरिए जस्तै ललितपुरमा पनि रातो मछिन्द्रनाथको लगनखेल यात्रामा हाथ्वँ लगाउनु पर्छ भन्ने व्यहोरा यसमा परेको छ ।

## ११) ल पु ई थानकोट शिखचुटोल आदिनारायणका परखालमा रहेको शिलालेख[४०]

### मूलपाठ

> न्हापा थ्व थ्व फलेस श्री बुंग यातया वोग्लयात कुन्हु वु ईन्द्र यातया नोग्लयात कुन्हु वडा थ्व हायक दानपिं तेमाल जुरो ।

थानकोटमा पाइएको यो अभिलेखमा इन्द्रजात्राको साथसाथै बुंगद्यः (रातो मछिन्द्रनाथ) को पनि वर्णन गरिएको छ । थानकोट हाल काठमाडौं अन्तर्गत रहे पनि मल्लकालमा यो क्षेत्र ललितपुर अन्तर्गत रहेकोले ललितपुरमा धुमधामपूर्वक मनाइने बुंगद्यः जात्राप्रति त्यहाँ पनि आस्था रहेको देखिन्छ । त्यसैले ललितपुरमा बुंगद्यःको रथयात्रा चलाउँदा त्यसको उपलक्ष्यमा पनि दान प्रदान गर्नुपर्ने कुरा यो अभिलेखमा उल्लेख छ । यसमा पनि रातो मछिन्द्रनाथको जात्रा र इन्द्रजात्रालाई समान श्रद्धा व्यक्त गरिएको छ ।

४० वज्राचार्य, पूर्ववत् ३१, पृ. २६९-२७० ।

## १२) पाटन क्वाछेटोल बालकुमारी देवल को अभिलेख[४१]

### मूलपाठ

संती कुन्हु सुथं श्री ३ वरकोमारिसके पुजा याङ्न तिसां स्वंत स मो शुकी २ तन्यमाल श्री ब्रम्हेद्र जु म्हं १ जगन्योहोन जोसी म्हं १ भिक्षारी आचार्यय म्हं १ बिज्याचके झायके माल चतुर्दशी कुन्हु पलिस चा चोनेमाल छेह वने चोङ फलेस ईन्द्र जात्रान दानपिंते माल ।

ललितपुरको क्वाछे टोलस्थित बालकुमारी मन्दिरको पाटीमा इन्द्रजात्राका दिन गर्नुपर्ने पूजाका लागि के के गर्ने र को को बोलाउने भन्ने व्यहोरा यो अभिलेखमा उल्लेख गरिएको छ । ललितपुरको भित्री शहरमा पनि त्यतिबेला इन्द्रजात्रा धुमधामपूर्वक मनाउने चलन रहेको कुरा यो अभिलेखबाट थाहा हुन्छ ।

## १३) पुल्चोक वैष्णावीदेविको शिलालेख[४२]

### मूलपाठ

खे २ थुती वरसानं प्वावस्यात कुहु प्वा १० मत छोयके फं ३ सिया वजी कुर १ राकु १ कयगुरी फोया फं ३ थ्व घासा ता ४ पा २ घरी थुती दान विय कु ३ चेकं मतं छोयकं ईन्द्रजात्रा कृपाजु थ्व सो पतक दानविय, मत छोयके मार थ्ववुया सयदको ॥

ललितपुरस्थित पुल्चोकको बैष्णवी देवीमा भेटिएको यो शिलालेखमा इन्द्रजात्रामा तीन पाथी स्याबजि (एक प्रकारको भुटेको च्यूरा), मासु, केराउ आदि राखेर दान दिने र तेलको बत्ती बाल्नुपर्ने कुरा उल्लेख गरिएको छ ।

---

४१ वज्राचार्य, पूर्ववत् ३१, पृ. २७५-२७६ ।

४२ ऐजन, पृ. ३३३-३३४ ।

## १४) पाटन च्यासल टोल धारामुनी गणेश देवलमा रहेको शिलालेख[४३]

### मूलपाठ

सएव भागिराय न दुन्तातवदोल चतुर्दशी गुथिसमुहन
दुन्ता, मो टं ४ वोहो थ्वतेयाव र सानन ईन्द्र यात
कुन्हु मुच वोयाव चेकन प्र १ मतप्वात छी १ ने जो
दानपिंते शियाफलके फं ला प्र २ म्वात प्र २ १
थ्वते चोस्यंतको वर्ष प्रतिं आविछिन्न याङ देनिस्त्रायं
यंज माल पुन भाषा गवह नन जुलसंन थ्वमुखया देव
यास्यं मुच म थ्व मुच आदिन गुथिस रोभ मोह याङन
सनसा पंचमहापातक लक जुरो ॥

ललितपुरको च्यासल टोलस्थित गणेश देवलमा भेटिएको यो शिलापत्रमा इन्द्रजात्राका दिन बत्ती बाल्ने, दान दिने कामको लागि व्यवस्था गरिएको र त्यसो नगरिए पञ्च महापाप लाग्ने व्यहोरा उल्लेख गरिएको छ ।

## १५) पाटन यकछेटोल दगुबहालभित्र दक्षिणपट्टिको घरको भित्तामा रहेको अभिलेख[४४]

### मूलपाठ

श्रीदुशर गलयात ङाओ कुन्हु अ ३ चेकन देवया कदुव
पिकायाय धर्मसारा सत्रस छोयके माक दानपिते थ्वते
ईन्द्रजात्रामा गर यात कुन्हु न्हापाया थे दान पिते मत
छोयके ओयं जुरो ॥

ललितपुरको यकछेटोल भन्ने ठाउँमा अवस्थित दगुबहाल भित्र घरको भित्तामा राखिएको यो शिलापत्रमा इन्द्रजात्राका दिन दान दिने कार्यका बारे वर्णन गरिएको छ । ललितपुरमा इन्द्रजात्रा महत्वका साथ मनाइन्छ भन्ने कुराको यो अर्को प्रमाण हो ।

---

४३ वज्राचार्य, पूर्ववत् ३१, पृ. ३६७-३६८ ।

४४ ऐजन, पृ. ४६५ ।

## १६) कीर्तिपुर दरबार गणेशका पाटिमा रहेको शिलालेख[४५]

### मूलपाठ

पुनस्थ्री भैरव मुर्ती सत्ती सही त दायकं, ईन्द्रयात मत प्वाठ १३ देवायात प्वात १ सादरु थि २ छोयके जाकें फं २४ प्यन्हुयात हायके, दुरी सि प्वरि सिन दान्पिन्त वजी फं ४ रा कुड ४ धरिदं ४ ऋगुरी फं १ आयिराक कुड ४ थ्वते ।

### अनुवाद

ईन्द्रजात्राको दिन १३ वटा बत्ती बाल्नु, देवतालाई एक बत्ती र खादलुथी दुइ बाल्नु । २४ पाथी चामल चार दिन्सम्म, ४ पाथी चामल, चार कुडव मासु, चार दम्मको दही एक पाथी केराउ, चार कुरोवा रक्सी दान दिनु ॥

कीर्तिपुरमा भेटिएको यो शिलालेखमा इन्द्रजात्राका दिन बत्ती बाल्न, दान दिन चामल, तेल, केराउ, मासु आदिको व्यवस्था गरिएको बारे उल्लेख गरिएको छ । मल्लकालमा कीर्तिपुर पनि ललितपुर अन्तर्गत नै रहेको कारणले यो शिलालेखलाई ललितपुरको अभिलेख मानिएको छ । यसमा भैरवको पनि उल्लेख छ। यो सम्भवतः कीर्तिपुरमा अत्यन्त सम्मानपूर्वक पूजा गरिने बाघ भैरवलाई भनिएको हुनुपर्दछ । ललितपुरमा रातो मछिन्द्रनाथलाई सम्मान गरिए जस्तै कीर्तिपुरमा बाघ भैरवलाई सम्मान गरिन्छ ।

## १७) कीर्तिपुर इताछेटोलको पाटीको अभिलेख[४६]

### मूलपाठ

श्री ईन्द्रजात्रान द्वादशी कुन्हुनिसे पुन्हिसितो देवस्के मत प्वाठ ४ छोयके फलेस मेलव मुर्ति बोस्यं खादरुथी

४५ वज्राचार्य, पूर्ववत् ३१, पृ. ५३०-५३१ ।

४६ ऐजन, पृष्ठ ५३७-५३८ ।

प्वाठ २ १ पलेस प्वाठ ५ छोयकं देवपुजा यास्यं दाअन्पिन्त्रे के फं शुय ३० थ्वतेन पुथे छाग हायके मार ॥

**अनुवाद**

श्री ईन्द्रजात्राको दिन द्वादशिदेखी पुर्णिमा सम्म दसवलमा चारवटा बत्ती बाल्नु । पाटिमा भैरवमा मुर्ति प्रदर्शन गरी खादरुथी (बत्ती विशेष) दुइ, देवतालाई एक, पाटिमा पाँच बालुनु । देवताको पुजा गरी ३० पाथी चामल दानको लागि दिनु । यसले भ्याउने जति गर्नु । भुटेको चेउरा चार पाथि, भटमास १ कुरुवा, सनानघासा, मासु ४ कुरुवा चार दिनका लागि यो हो । केराउ २ कुरुवा, चेउरा दुइ कुरुवा, दही आठ कहतारो यती दान दिनु ।

इन्द्रजात्राको लागि राखिएको कुनै गुठीले इन्द्रजात्राको आठैदिन (द्वादशीदेखि पुर्णिमासम्म) बत्ती बाल्नुपर्ने सम्बन्धी व्यहोरा यो अभिलेखमा उल्लेख गरिएको छ । त्यस्तै दान दिन चामल, भुटेको चिउरा, भटमास, मासु, केराउ आदि जस्ता विभिन्न सामग्रीको व्यवस्था गर्नुपर्ने कुरा पनि यसमा उल्लेख छ । मल्लकालमा ललितपुरमा पनि आठ दिन नै इन्द्रजात्रा मनाइने कुरा यो अभिलेखबाट थाहा हुन्छ ।

## १८) कीर्तिपुर गुल्फु पुखुधिटोल पाटिको शिलालेख[४७]

**मूलपाठ**

भाषा थ्वते वुया टंका त्व वर्षप्रती वलसानना श्रीईन्द्रयातन थ्व फलेस मत प्वाठ ५ छोयके चेक्न कुड १ दुथो । । स्वपुत्रया नाम्न श्री ३ व्याघ्र मुती भिमेश्वरस्के प्र १ घेरन चाछी न्हु ४ धेतिवा छोयके, पुजा जो १ दुली कुन्हु दान पिते शियाफलुके फं

४७ वज्राचार्य, पूर्ववत् ३१, पृ. ५४०-५४१ ।

१ रा प्र २ जिपंद्ध थ्वं, ता ४ घासा भुय पुन्हिसी कुन्हु दुली स्वथे दान पिके पुजावारी व्राम्हणजु म्हं १ मोपयके द २ दक्षिणा थ्वते पिन्तान प्रशेष मक्षा भो (ज) न डायके । । स्वदत्तं परदत्त म्वा यो हरेत्सुर विप्रायो षष्टिवर्षसहस्त्राणी विष्टायां जायते कृमी ॥

### अनुवाद

यी खेत र रुपैयाँको आयस्ताले प्रतिवर्ष ईन्द्रजात्राको दिन यस पाटिमा एक कुरुवा तेलले पुगे जती पाँच बत्ती बाल्नु । आफ्नो छोराको नाउँले श्री ३ व्याघ्रमुर्ती भिमेश्वोरलाई एक पाउ घिउले पुगे जती चार दिन बत्ती बाल्नु । पुजा सामग्री एक जोर । दुलिको दिन यती दान दिनु भुटेको चेउरा एकपाथी, मासु २ पाउ, जिपथ्वर (जाँड विशेष), चार थरी घासा । फेरी पुर्णिमाको दिन पनि दुलिको जस्तै दान दिनु । पुजारी ब्राह्मण एकजनालाई भोज खुवाउनु । दुइ दाम दक्षिणा दिनु । यति दान दिएर बाँकी रहेको भक्ष्यभोजन गर्नु ।

इन्द्रजात्रा बारे उल्लेख गरिएको कीर्तिपुरको यो अर्को अभिलेख हो । कीर्तिपुरको पुखुधि टोलको पाटीमा राखिएको यो अभिलेखमा हरेक वर्ष इन्द्रजात्राका दिन पाटीमै बत्ती बाल्नुपर्ने कुरा यसमा उल्लेख गरिएको छ । यसमा कीर्तिपुरको अति सम्मानित व्याघ्रमुर्ति अर्थात बाघ भैरवको पनि उल्लेख गरी इन्द्रजात्रा र बाघ भैरवलाई एकै ठाउँमा राखिएको छ। वर्तमान कालमा कीर्तिपुरमा त्यति उल्लासपूर्वक इन्द्रजात्रा मनाउने गरिँदैन। तर मल्लकालमा भने त्यहाँ इन्द्रजात्रालाई जनस्तरमा समेत ठूलो श्रद्धापूर्वक मनाउने गरिन्थ्यो भन्ने कुरा यो अभिलेखबाट थाहा हुन्छ ।

## १९) किर्तिपुर तवचटोलको पाटीको शिलालेख[४८]

### मूलपाठ

मतरिवका दान पिते द्वादसी कुन्हु पुजा भण्डिजु १ सियाफके कु २ रा प्र जिप थ्व कुड २ सनान घासा पाता भुय पुणर्मासी कुन्हु सियाफके फं १ रा प्र २ जिप थ्व कुड २ क्षुजु ग्व २ थ्वते ईन्द्रत्यात जुरो ।।

### अनुवाद

फेरी भाद्र शुलूक द्वादशिको दिन यसपाटिमा बत्ती ५ वटा दुइपाथी तेलूले भ्याउने जती तीन रात चार दिन सम्म बालुनु । बत्ती कुर्नेलाई दिनुपर्ने दिनु । द्वादशिको दिन पुजा सामग्री एक जोर भुटेको चेउरा दुइ कुरुवा, दुइ पाउ मासु, जिपथ्व (जाँड बिसेष) दुइ कुरुवा सनान घासा, फेरी पुर्णिमाको दिन भुटेको चेउरा एक पाथी मासु दुइ पाउ, जिप्थ्व दुइ कुरुवा फुल २ वटा यती ईन्द्रजात्राको लागि हो ।

इन्द्रजात्रामा बत्ती बाल्ने र दान दिने चलन कीर्तिपुरको अर्को ठाउँमा पनि रहेछ । त्यहाँको तवच टोलको पाटीमा भेटिएको यो शिलापत्रमा इन्द्रजात्रा शुरु भएकै दिन अर्थात भाद्रशुक्ल द्वादशीका दिन इन्द्रलाई बत्ती बाल्ने लगायत भुटेको चिउरा, मासु, जाँड आदि चढाउने व्यहोरा उल्लेख गरिएको छ । कीर्तिपुरको विभिन्न ठाउँमा भाद्रशुक्ल द्वादशीकै दिनदेखि इन्द्रजात्रा मनाउने चलन रहेको कुरा यो अभिलेखबाट थाहा पाउन सकिन्छ । त्यसको लागि स्थानीयस्तरबाट गुठीको समेत व्यवस्था गरिएकोले त्यहाँ इन्द्रजात्रा जनस्तरमा अत्यन्तै भिजेको अनुमान गर्न सकिन्छ ।

---

४८ वज्राचार्य, पूर्ववत् ३१, पृ. ५६५-५६७ ।

## जयप्रकाश मल्लले कौमारीको वर्षबन्धन जात्रामा बत्ती बाल्ने प्रबन्ध गरी राखेको ताम्रपत्र[४९]

हरेक वर्ष इन्द्रजात्राकै बेला हुने कुमारी यात्राका लागि बत्ती बाल्न आवश्यक पर्ने तेलको व्यवस्था तत्कालीन राजा जयप्रकाश मल्लले गरेको थियो । उक्त व्यवस्थासम्बन्धी विवरण यो ताम्रपत्रमा उल्लेख छ । यसको सकल पत्र हाल काठमाडौं भन्द्रकालीमा रहेको गुठी लगत तथा अभिलेख शाखा कार्यालयमा राखिएको छ । नेपाल-जर्मन हस्तलिखित ग्रन्थ संरक्षण परियोजनाको रोल सङ्ख्या के ६४२/३० रहेको यस पत्रको बायाँपट्टि छेउमा जयप्रकाश मल्लको छाप पनि रहेको छ ।

जयप्रकाश मल्लले कुमारी जात्रा चलाएको केही वर्ष पछि तेलको लागि यो व्यवस्था गरेको देखिन्छ । ताम्रपत्र अनुसार तेलको लागि लायकूसाःका मानन्धर (सालमि) हरूलाई तेलको व्यवस्था गर्ने जिम्मा दिएको देखिन्छ ।

ताम्रपत्रको मूल पाठ यस प्रकार रहेको छ ।

### मूलपाठ

१) ॐ अद्य ब्रह्मणो द्वितियपरोद्ध स्वयेत वराहकल्पे वैवस्वतमन्वंतरे अष्टाविंसति तमे चतु

२) युगस्य करे प्रथम पादे जांबुदीपे भरतखंडे भारतवर्षे हिमदक्षिनपादे नेपालमण्डले

३) श्री ३ पशुपतिन्निधाने श्रीवाग्मत्याः पश्चिमकुले श्रीविष्णुमत्याः पूर्व्वकुले श्रीगागुंलपट्टने

४) आर्थ्यावट्टदे श्रीमत्कान्तिपुरीमहानगरे काष्ठमण्डपस्थाने इहीव पुण्यभुमौं ॥ भाद्रवमासे शुक्लपक्ष

५) पूर्णमास्यां तिथौ उत्तरभद्रनक्षेते वृद्धियोगे यथाकर्ण्डामुहुर्त्ते बृहस्पतिवारसरे कंन्यारासिगेत सवित

६) रि मीनरासिगते चन्द्रमशि ॥ एतस्मि दिने ॥ श्री २ कौमारीदेव्यां । प्रीत्यर्थ ॥ श्रीश्रीजयजय प्रकाश मलदे

७) वसन श्री ३ कौमारी माजुया वर्षबन्धन जात्रायात स्वत गोय ग्वडाल

---

४९ महेशराज पन्त, *पूर्णिमा,* पूर्णाङ्क ९५, काठमाडौं: बि.सं. २०५५, कार्तिक, पृ. ४६-४७ ।

ग्वय देवया छेस मालको सेवा यातके

८) यात थ्य राजकुलसालस सालज्या याको सालमियात आओनलि श्री ३ तलेजु माजुया चाक्रमतया फं १ ह्न बाहि

९) कन हितिचुक प्रमुखन ग्वगुलिन पुनं धिसा बिथन दुःख बियाओस नेम दयकं दन्ता जुरो ॥ कदाचितोपि

१०) राजाया तओधङज्या मालाओङ कुह्ट देवयाके विमति याङाओ ङा कायदु थ्वते भाखाया दृष्टसाक्षि यावत्

११) चन्द्राकमेदिनी ॥ सम्बत् ८८३ भादवसुदि १५ जुरो ॥ शुभ ॥

## ताडपत्रहरूमा इन्द्रजात्रा

इन्द्रजात्रा बारे विभिन्न ताडपत्रहरूमा पनि उल्लेख भएको पाइन्छ । ती मध्ये नेपाल-जर्मन हस्तलिखित ग्रन्थ संरक्षण परियोजनाबाट माइक्रोफिल्म बनाइएको दुइटा ताडपत्रहरूमा इन्द्रजात्रा र भक्तपुरमा हर्षोल्लासपूर्वक मनाइने विश्वजात्रा (बिस्केट जात्रा) को नाम उल्लेख गरिएको छ ।

### १) ने. सं. ६८४ (वि.सं. १६२१) भाद्रपूर्णिमा शतभिषनक्षत्र ध्रुवयोग मंगलवार

(माइक्रोफिल्मको रील संख्या ई. १८७७/११)

**मूलपाठ**

शैभ ॥ श्रीयोऽस्तु ॥ सम्बत ६८४ भाद्रप्दमास्य शुक्लपक्ष॒ पुणमावास्याया॒ तिथौ श्रीथेमि मध्येष्ठाने॒ वेस्यादिवाशिनां॒ थतोल॒ कै वास्त्रयं॒ यबुकछे दुदु यता छे गृहवास्त्रव्यं॒ सगतिमयि भरिस नाम॒ मृतंगुथि चिनक तया॒ मृत छोयकेघात॒ एदजात्रान॒ च्यान्हुतो॒ बिसकजात्रान॒ नेन्हुतो॒ मृत छोयके॒ थाय स्वतोल श्री ३ भैलवी माहा॒ लाछ योता फरेस॒ देवतिदेवतास॒ अग्रस छोयके॒ मृतं ।

यसमा इन्द्रजात्राको आठ दिन र बिस्केटजात्रा (बिस्काः जात्रा) को दुई दिन तेलको बत्ती बाल्नुपर्ने र त्यसको लागि गुठीको व्यवस्था गरिएको व्यहोरा उल्लेख गरिएको छ ।

## २) ने.सं. ७३२ (वि.सं. १६६९) भाद्रकृष्ण प्रतिपदा

(माइक्रोफिल्मको रील संख्या ई. १८७७/११)

**मूलपाठ**

१. ण्णनं भाषा, जोजोमान, रावनसिं दुवालन, थव
बबु, चंन्द्रसिं दुवार, माम नुकलिमयि, किज, शुजसिं
दुवाल, बिष्णुसिं दुवाल, थ्वतेस्ता नामन विमान देव
म्हं ४ थ्वयाता बु, कापरा बु रोव २ इदेवर बु रोव १
छि, थुनेत जको, दान याय देव बिज्याक थायस दान
याय बजि फं १ कु १ माल्ही कुर ९, थ्व कुद ९,
रा प्र ३ धलि पात ५ वन चाछि बजि
२. थ्वते दान याये एन्द्रजात्रानं, विस्वजात्रानं, दान
याय जुरो, किन्हसिं थ्वपनि निम्हा गुठिस थ्याक जुरो
शुभ ॥ सम्बत ७३२ भादपद्रबद्धि १ शुभ ॥

**(पछाडि)**

१. गोजामाधि गुठि
२. कामला बुरा, एदओ बुया

यो ताडपत्रमा पनि इन्द्रजात्रा र विश्वजात्रा दुवैका लागि दान गर्नुपर्ने र त्यसको लागि गुठीको व्यवस्था गरिएको व्यहोरा उल्लेख छ । ताडपत्रको पछाडि 'गोजामाधि गुठी' उल्लेख गरिएकोले यो भक्तपुरकै गुठी हो भन्ने स्पष्ट छ ।

ने.सं. ७९८ देखि ने.सं. ८२६ सम्मका घटना टिपिएका ठिमीमा भेटिएको एउटा थ्यासफूमा इन्द्रजात्रालाई 'एनकिरिं', 'एन्दकिरि', 'एन्द्रकिरिलृ'

भनेर लेखिएको छ ।[५०]

मल्लकालमा नेपालमा इन्द्रजात्रा अत्यन्त धुमधामपूर्वक मनाउने गरिएता पनि इन्द्रजात्रा बाहेक अन्य समयमा पूजाआजा गर्न देवराज इन्द्रको मूर्ति वा मन्दिर भने राखिएको पाइँदैन ।

हनुमानढोका दरवार क्षेत्रमा जगन्नाथ मन्दिरको उत्तरपट्टि कालभैरवको नजीकै इन्द्रपुर बनाइएको छ । राइट वंशावलीका अनुसार यस इन्द्रपुरको निर्माण राजा प्रताप मल्लले गराएका थिए । परन्तु यस मन्दिरसम्बन्धी कुनै अभिलेख प्राप्त भएको छैन । यस मन्दिर भित्र सानो शिवलिङ्ग रहेको छ । तर यस मन्दिरको नाम भने इन्द्रपुर भन्ने रहन गएको छ । सो शिवलिङ्ग इन्द्रेश्वर महादेव हुन् । पनौतीमा रहेको प्रसिद्ध इन्द्रेश्वर महादेव साधन गरी सो शिवलिंग स्थापना गरिएको हो भन्ने अनुश्रुति छ । इन्द्रले तपस्या गर्दा आविर्भाव भएका हुनाले त्यस महादेवको नाम इन्द्रेश्वर रहन गएको थियो । यसैले पनौतीको इन्द्रेश्वरको मन्दिरलाई कतै कतै ऐन्द्रकूट भनी लेखिएको पाइन्छ (गोपालराज वंशावली २६ ख-२७ क पत्र) । हनुमान-ढोकाको यो मन्दिर पनि इन्द्रेश्वर महादेवको मन्दिर भएको हुनाले नै इन्द्रपुर भनिएको देखिन्छ ।[५१]

तर ऐतिहासिक नगर पनौतीमा रहेको इन्द्रेश्वरको त्यो मन्दिर देवराज इन्द्रको नभई तत्कालीन शैव राजा इन्द्रदेवले आफ्नै नामबाट बनाएको मन्दिर हो । पन्ध्रौं शताब्दी पूर्व नै सो समय अघिका परम शैव राजा इन्द्रदेव (वि.सं. ११८१-८३) ले आफ्नै नामबाट उक्त मन्दिर निर्माण गरेको देखिन्छ । कुनै उत्कृष्ट कृति निर्माण गर्दा त्यसको नामाकरण आफ्नो नामबाट गर्न रुचाउने यी राजा इन्द्रदेवले सोही अनुरुप पनौतीमा शिव मन्दिर राख्न लगाएका थिए ।[५२]

---

५० महेशराज पन्त, *सबभन्दा पहिले प्रचारमा आएको द्यासफू*, पूर्णिमा, पूर्णांक १४३, वि.सं. २०७३ पृ. १४२ ।

५१ गौतमवज्र वज्राचार्य, *हनुमान्‌ढोका राजदरवार*, कीर्तिपुरः नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, बि.सं. २०३३, पृ. ७६ ।

५२ डा. पुरुषोत्तमलोचन श्रेष्ठ, '*पनौती इन्द्रेश्वर मन्दिरस्थानको ने.सं. ७५९ को नरेश मल्लको पालाको स्वर्णपत्र*', अभिलेख, काठमाडौंः राष्ट्रिय अभिलेखालय, वर्ष १८, पूर्णांक १८, बि.सं. २०५७, पृ. ३१-३२ ।

## शाहकाल

इन्द्रजात्रासँग जोडिएको नेपालको इतिहासमै सर्वाधिक महत्वपूर्ण घटना हो, गोर्खाका राजा पृथ्वीनारायण शाहले गरेको काठमाडौं हमला । वि.सं. १८२५ को इन्द्रजात्राकै राति पृथ्वीनारायण शाहले तीनतिरबाट घेरा हालेर आक्रमण गरी काठमाडौंमाथि विजय हासिल गरेका थिए । शाहवंशीय राजाहरूका लागि इन्द्रजात्रा एक सांस्कृतिक पर्व मात्र होइन एउटा ऐतिहासिक दिन पनि हो किनभने नेपालमा इन्द्रजात्राकै दिनदेखि शाहकाल शुरु भएको थियो ।

वि.सं. १८२५ को इन्द्रजात्राका दिन पृथ्वीनारायण शाहका सेनाले काठमाडौं घेरिसकेको जानकारी तत्कालीन मल्ल राजा जयप्रकाश मल्ललाई भइसकेको थियो । तर पनि उनी इन्द्रजात्रा सकाएर मात्रै शत्रुसँग भिड्न जाने मनस्थितिमा थिए जसले गर्दा उनी युद्ध भन्दा पनि जात्राको तयारीमा केन्द्रित भए । वि.सं. १८२५ साल (शाके १६९०) भाद्र शुक्ल चतुर्दसीउप्रान्त पूर्णिमा तिथि अर्थात सौरमान अनुसार आश्विन १३ गते आइतबार राति श्री पृथ्वीनारायण शाह कान्तिपुर प्रवेश गरेको थियो । सो दिन भनेको ई.सं. १७६८ सेप्टेम्बर २५ तारिख पर्दछ भने ने.सं. ८८८ यंलाथ्व चतुर्दशी पर्दछ । समय रातिको घडी २६ र पला १९ थियो । पूरा जून लागिरहेको समय थियो । अर्थात पूर्णिमाको नगीच थियो ।[५३]

काठमाडौं मात्र होइन उपत्यकाका अन्य देशहरू जित्न पनि पृथ्वीनारायण शाहले त्यतिबेला इन्द्रजात्राकै दिनलाई रोजेको देखिन्छ । पृथ्वीनारायण शाहले नुवाकोट पनि इन्द्रजात्राकै दिन आक्रमण गरी जितेका थिए । काठमाडौंमा इन्द्रजात्रा ताका  राजा र जनता जात्रामै व्यस्त हुने कुरा बारे राम्ररी थाहा पाएका पृथ्वीनारायणले वि.सं. १८०१ को इन्द्रजात्राकै दिन नुवाकोट आक्रमण गरेका थिए । त्यसको केही वर्ष पछि बनेपाको सातगाउँ र नालदुम (नाला) पनि उनले इन्द्रजात्राकै दिन आक्रमण गरी विजय हासिल गरेका थिए ।[५४]

---

५३ *एतिहासिक शिरोमणि श्री बाबुराम आचार्यज्यूसँग प्रार्थना, पूर्णाङ्क ९, पूर्णिमा,* वर्ष ३, अङ्क १, २०२३, पृ. ८६ ।

५४ योगन्द्रमान श्रेष्ठ, *नेपाःया इतिहासय् यैंयाः,* शुक्रवाःया तँसापौ (नेपालभाषा टाइम्स), काठमाडौंः सन्ध्या टाइम्स पिथना प्रा.लि., बि.सं. २०७६, पृ. ३ ।

काठमाडौं जितिसके पछि पृथ्वीनारायण शाहले इन्द्रजात्रा लगायत उपत्यकाका कुनै पनि जात्रा पर्वहरू सञ्चालनमा अवरोध गरेन। इन्द्रजात्रालाई पनि पहिले जसरी मनाउँदै आइरहेको थियो त्यसरी नै मनाउन दिए। मल्ल राजाहरू इन्द्रजात्रामा जसरी सहभागी हुने गर्दथे पृथ्वीनारायण शाह पनि त्यसरी नै सहभागी हुन थाले।

पृथ्वीनारायण शाह पछि उनका सन्तानहरूले पनि इन्द्रजात्रालाई कुनै अवरोध गरेन बरु यो जात्रालाई अझ उन्नत बनाउन विभिन्न समयमा विभिन्न कार्यहरू गर्दै आएको देखिन्छ। पृथ्वीनारायण शाह जीवित रहुन्जे-लसम्म उपत्यकाको तीनै शहरमा अलग अलग इन्द्रजात्रा मनाउने चलन रहेको थियो। सन् १७७५ मा उनका छोरा प्रताप सिंह शाहको शासनकालमा आएर मात्रै तीन शहरको इन्द्रजात्रालाई समायोजन गरी काठमाडौंको राजदरवार अगाडि एक ठाउँ मात्रै इन्द्रध्वजोत्थान गर्ने चलन शुरु भएको थियो। मल्लकालमा गोर्खा, लमजुङ जस्ता पहाडी राज्यहरूमा पनि इन्द्रध्वजोत्थानको चलन थियो। प्रताप सिंह शाहले आफ्नो पुर्खौली राज्य गोर्खाको विधिविधानलाई अनुशरण गरी राजा बस्ने राजदरवारको छेउमै इन्द्रध्वजोत्थान गर्ने प्रथा बनाई काठमाडौंमा मात्र इन्द्रजात्रा मान्न थाले पछि अरुतिरको जात्रा बन्द हुन पुगेको थियो। नेपालको राजधानी शहरमा मात्रै इन्द्रजात्रा मान्ने चलन भए पछि नेपाल एकीकरण हुनुभन्दा अघिका राज्यहरूमा प्रचलित इन्द्रजात्राको परम्परा हट्न गएको देखिन्छ।[५५]

प्रताप सिंह शाहले इन्द्रजात्रासँग सम्बन्धित अरु पनि विभिन्न धार्मिक सांस्कृतिक कार्यहरूलाई सुचारु गर्न विभिन्न समयमा लाल मोहरहरू जारी गरेको पाइन्छ। उनले वि.सं. १८३२ माघ सुदि ५ रोज ५ का दिन एउटा लालमोहर जारी गरी श्री तलेजु भवानीको लागि मल्लकालदेखि नै व्यवस्था भैरहेका सबै गुठी एवं पूजाआजालाई कायम गरिदिए। त्यस्तै वि.सं. १८३३ साल श्रावणसुदी १५ रोज ४ का दिन अर्को लालमोहर जारी गरी इन्द्रजात्राका अवसरमा नुवाकोटबाट कान्तिपुर ल्याइने भगवतीको पूजाआजा गर्न आवश्यक सबै बन्दोवस्त गरिदिए।[५६]

---

५५ आचार्य, पूर्ववत्, ९, पृ. ११५।

५६ 'कौशी तोषाखानाबाट प्राप्त लालमोहर', (लालमोहर नं. २८२ र २८१), अभिलेख, *राष्ट्रिय अभिलेखालय*, काठमाडौं: वर्ष १८, पूर्णांक १८, वि.सं. २०५७, पृ. ७७ र ८१।

प्रताप सिंह शाह पछि गद्दीसिन भएका उनका छोरा रणबहादुर शाहले हनुमानढोका दरवार सँगै श्वेत भैरवको ठूलो मूर्ति बनाई प्रतिष्ठापन गरेका थिए । वि.सं. १८५२ मा रणबहादुर शाहले उक्त भैरव बनाउन लगाएका थिए । भैरवको घाँटीमा कुँदिएको अभिलेखमा यो उल्लेख गरिएको छ ।[५७]

शाहकालमा मनाइने इन्द्रजात्रा बारे विदेशी लेखक सिल्भाँ लेभीले लेख्नुभएको छ, "राती घर घरमा दीपावली पनि हुन्छ । दरवार अगाडि हुलका हुल मानिसहरू थरीथरीका हाँस उठ्दो लुगा लगाएर यो जात्रामा भाग लिन आउँछन् । नर्तकहरू राक्षस, जनावर, महिला, इत्यादि विभिन्न भेषमा जम्मा भई अबेरसम्म नाच्छन् । नाचको बीच-बीचमा हँसाउने कार्यक्रमहरू पनि हुने हुँदा मानिसहरू खुब रमाउँछन् । नर्तकहरूलाई सरकारबाट थोरै खर्च पनि दिइन्छ । सहरका विभिन्न ठाउँमा तिलक लगाइएका इन्द्रका मूर्तिहरू सिँगारिएका हुन्छन् । क्यापुचिनहरूले यस्तो मेलामा क्राइष्ट्को चिह्नलाई उल्टाएर राखेको देखेकाले यो प्रागैतिहासिक धर्मको चिह्न हुनु पर्छ भने । यसलाई एउटा बोर्डमा लेखेर एक कुनामा राखिएको हुन्छ र यो पितृहरूको सम्झनाको एउटा चिह्न हो । यस जात्राका जात्रुहरू उपत्यकाको पश्चिमपट्टी रहेको ईन्द्रको मन्दिर - ईन्द्रस्थानबाट बाटामा पर्ने मन्दिरहरू घुम्दै, काठमाडौं र भातगाउँको बिचको शहर ठिमीको बालकुमारी मन्दिरमा जान्छन् ।"[५८]

लेखक लेभीले वर्णन गर्नुभएको इन्द्रजात्राको यो दृश्यलाई अरु कुनै इतिहासकारहरूले भने पुष्टि गरेको पाइँदैन ।

राणाकाल शुरु हुनु भन्दा पहिले शाह राजाहरू सुनको मोलम्बा गरेको हौदा भएको हात्ती चढी इन्द्रजात्रामा सहभागी हुने गर्दथे । राजा राजेन्द्र वीर विक्रम शाह सुनको मोलम्बा गरेको हौदा कसेको हात्तीमा जाँदा प्रधानमन्त्री माथवरसिंह थापा चाँडीको हौदा कसेको हात्तीमा र अन्य भाइ भारदारहरू २०-२२ वटा हात्तीमा बसेर लहरै इन्द्रजात्रामा सहभागी हुने गर्दथे ।[५९]

शाहकालकै बेला जंगबहादुरले राजालाई एकातिर पन्छाएर शासनसत्ता आफ्नो हातमा लिएका थिए । जंगबहादुर त झन् प्रधानमन्त्री हुनु भन्दा अघि नै इन्द्रजात्राका बेला हात्ती चढेर कुमारीको रथ सँगै नगर परिक्रमा गर्दथे ।

---

५७ त्रिरत्नसौन्दर्यगाथा, पृ. १४८ ।

५८ लेभी, पूर्ववत् ७, पृ.३५-३६

५९ पुरुषोत्तम शमशेर जबरा, *श्री ३ हरूको तथ्य वृत्तान्त* (भाग १), काठमाडौं: विद्यार्थी पुस्तक भण्डार, बि.सं. २०६२, पृ. १८

दरवारमा कुनै महत्वपूर्ण पदमा नभएका व्यक्ति पनि राजा सँगसँगै हात्ती चढेर जात्रामा सहभागी भए भनेर त्यतिबेला प्रधानमन्त्री माथवरसिंह थापा जंगबहादुरसँग रिसाएका थिए ।[६०]

जंगबहादुर प्रधानमन्त्री हुँदासम्म पनि इन्द्रजात्राका बेला हनुमानढोकामा धेरै नाचहरू प्रदर्शन गर्ने चलन रहेको थियो भने ती सबैको लागि चाहिँदो बन्दोवस्त राज्यबाटै हुँदै आइरहेको थियो ।[६१]

जंगबहादुरको निधन पछि प्रधानमन्त्री बन्नेहरूको रोलक्रममा विवाद भएपछि उनका भाइहरू बीच ठूलै मनमुताव भयो । यसै क्रममा जंगबहादुर पछि प्रधानमन्त्री बनेका श्री ३ रणोद्दीपको हत्या गर्ने योजना जंगबहादुरका अरु भाइहरूले बनाए । उनीहरूले श्री ३ रणोद्दीपको हत्या गर्ने दिन पनि इन्द्रजात्रा नै रोजेका थिए । तर त्यो दिन स्थिति अनुकुल नदेखे पछि अर्को दिन हत्या गरे ।[६२]

राणा प्रधानमन्त्री जुद्ध शमशेरको पालासम्म सरकारले इन्द्रजात्रा चलाउन सरकारी कर्मचारीहरूको तलबबाट 'कर' कट्टा गरेर लिने गर्दथे । वाङ्मय शताब्दीपुरुष सत्यमोहन जोशीले आफ्नो जीवनी पुस्तकमा यस बारे उल्लेख गर्नुभएको छ ।[६३]

इन्द्रजात्राको कुमारी यात्रामा राणा प्रधानमन्त्री एवं दरवारका भाइ-भारदारहरू हात्ती चढेर नगर परिक्रमा गर्ने चलन धेरै पछिसम्म पनि जारी रहेको थियो। इन्द्रजात्रामा राणा प्रधानमन्त्री लगायत धेरै उच्चपदस्थ व्यक्तिहरू एकै ठाउँमा भेला हुने भएकोले राणा शासन विरुद्ध क्रान्ति गरिरहेका नेपाली कांग्रेस पार्टीले एक पटक इन्द्रजात्राकै दिन बसन्तपुरमा बम हान्ने योजना समेत बनाएका थिए ।

इन्द्रजात्राको समय श्री कुमारीको रथयात्रा चलाउन राणा प्रधानमन्त्री लगायत सबैजसो उच्चपदस्थ राणाजीहरू बसन्तपुरमा उपस्थित हुने गर्दथे । त्यही बेला बसन्तपुरको डबलीमै बम आक्रमण गरी सबै राणाजीहरूलाई एकै चिहान बनाउने त्यो योजनाको नेतृत्व गणेशमान सिंहले लिएका थिए । तर त्यस बारे राणाहरूलाई पहिल्यै थाहा भइसकेकोले योजना सफल हुन पाएन ।

---

६० जबरा, पूर्ववत् ५९, पृ. १८ ।

६१ वज्राचार्य, पूर्ववत् ५१, पृ. १७५ ।

६२ काशिनाथ दीक्षित, *भएको कुरा*, नरेन्द्रमणि आदि, काठमाडौँः बि.सं. २०३१, पृ. ८ ।

६३ नरेन्द्रराज प्रसाईं, *शताब्दी पुरुष सत्यमोहन जोशी*, त्रिमूर्ति निकेतन, काठमाडौँः बि.सं. २०७२, पृ. ७२ ।

कांग्रेसका धेरै नेताहरू पक्राउ परे ।[६४]

शाह-राणाकालमा इन्द्रजात्राको कुमारी यात्रा हुँदा प्रधानमन्त्री लगायत दरवारका सबैजसो उच्चपदस्थ व्यक्तिहरू हात्तीमा सवार भई त्यसरी लहरै नगर परिक्रमा गर्न आउनुको अर्थ भने जात्रालाई भव्य बनाउनुभन्दा पनि पृथ्वीनारायण शाहले काठमाडौं जितेको खुशियाली मनाउनु थियो। इतिहासकार प्रा.डा. त्रिरत्न मानन्धरका अनुसार सरकारले इन्द्रजात्रामा पूर्णिमाका दिन सार्वजनिक बिदा दिनुको सट्टा त्यसको एकदिन अघि विदा गर्नुको खास कारण पनि यही नै हो । पृथ्वीनारायण शाहले पूर्णिमाको अघिल्लो दिन काठमाडौं विजय हासिल गरेको कारणले सरकारले सार्वजनिक बिदा पनि पूर्णिमाको एकदिन अघि नै दिन थालेको हो ।[६५]

वि.सं. २००७ सालको क्रान्ति सफल भई राणा शासन हटे पछि इन्द्रजात्रामा प्रदर्शन गरिने त्यस्तो विजयोत्सवलाई पनि सरकारबाटै रोकिदियो। २००७ सालको राजनीतिक परिवर्तन पछि देशमा बनेको पहिलो प्रजातान्त्रिक सरकारले प्रकाशित गरेको पहिलो गजेट पनि इन्द्रजात्रा सम्बन्धी नै थियो । पृथ्वीनारायण शाहले काठमाडौं जितिसके पछि इन्द्रजात्रालाई धार्मिक-सांस्कृतिक जात्रा भन्दा पनि गोर्खालीहरूले काठमाडौंमाथि विजय हासिल गरेको विजययात्राका रूपमा मनाउँदै आइरहेको थियो । त्यसैले इन्द्रजात्राका दिन श्री कुमारीको रथको पछि पछि पूरा बन्दूक सहितको सेनालाई दायाबायाँ राखी हात्तीमा सवार भई स्वयम् राजा पनि परिक्रमा गर्ने गर्दथे । प्रजातन्त्र स्थापना पछि आएको पहिलो सरकारले इन्द्रजात्रालाई अब उप्रान्त विजय उत्सवको रूपमा नमनाई धार्मिक जात्राका रूपमा मात्र सम्पन्न गर्ने निर्णय गरेको थियो। वि.सं. २००८ भदौ २७ गते तत्कालीन गृह विभागले जारी गरेको गजेटमा यस्तो लेखिएको थियो, '...इन्द्रजात्रा बारेमा परापूर्वकालदेखि चलिआएको धर्म सम्बन्धी जात्राहरू साबिक बमोजिम गर्ने र विजय परेडको हकमा साम्प्रदायिक भावना जति सक्यो उति हटाउन श्रेय हुनाले सो अबदेखि बन्द गर्ने मन्त्रिमण्डलमा निर्णय भएको ।'[६६]

इन्द्रजात्रालाई विजयोत्सवको रूपमा नमनाउने निर्णय सात साल पछिको

---

६४ श्रेष्ठ, पूर्ववत् ५४, पृ. ३ ।

६५ पूर्ववत् २१ ।

६६ गृष्मबहादुर देवकाटा, *नेपालको राजनीतिक दर्पण (प्रथम भाग)*, काठमाडौं: ध्रुवबहादुर देवकाटा, वि.सं. २०१६, पृ. १०७ ।

प्रजातान्त्रिक सरकारले गरेता पनि पञ्चायतकालमा आएर पुनः एकपटक विजयोत्सव मनाउने कार्य भने भएको थियो । वि.सं. २०२५ सालमा यो जात्रालाई पृथ्वीनारायण शाहले काठमाडौं विजय गरेको २०० औं वर्षको विजयोत्सवका रूपमा मनाउने कार्य भएको थियो ।[६७]

## वर्तमान अवस्था

इन्द्रजात्रासँग शुरुदेखि नै विभिन्न कालखण्डका राजाहरूको प्रशंग जोडिँदै आइरहेको छ । इन्द्र स्वर्गका राजा भएको र उनलाई पृथ्वीलोकका राजाहरूले पनि उतिकै सम्मान गर्ने भएकोले वैदिककालदेखि नै राजाहरू समेत सहभागी भई इन्द्रजात्रा मनाउने चलन रहँदै आएको छ । नेपालमा पनि मल्लकालदेखि नै तत्कालीन राजाहरू समेत सहभागी भई इन्द्रजात्रा मनाउने चलन चल्दै आइरहेकोमा शाहकालसम्म पनि त्यो चलन निरन्तर चलिरहेको थियो । वि.सं. २०६५ जेष्ठ १५ गतेदेखि नेपालमा औपचारिक रुपले राजतन्त्र अन्त्य भई गणतान्त्रिक शासन व्यवस्था स्थापना भयो । तर गणतन्त्र स्थापना भए पनि इन्द्रजात्रा मनाउने परम्परा र यो जात्रालाई राज्यका तर्फबाट प्रदान गरिने सम्मानमा भने कुनै कमी आएन ।

इन्द्रजात्रा मनाउँदा पहिले राजाका तर्फबाट गरिने सबै धार्मिक-सांस्कृतिक अनुष्ठानहरू अहिले राष्ट्रप्रमुखका हैसियतले राष्ट्रपतिबाट सम्पन्न हुँदै आइरहेको छ । इन्द्रजात्रामा श्री कुमारीको रथयात्रा हुँदा गद्दी बैठकमा बसी जात्रा अवलोकन गर्ने, कुमारीको प्रसाद ग्रहण गर्ने र नानीचायाःका दिन कुमारीघर गई श्री कुमारी, श्री गणेश र श्री भैरवबाट टीका ग्रहण गर्ने कार्य पनि अहिले राष्ट्रपतिबाटै वहन हुँदै आइरहेको छ । कुमारीको रथयात्रा चलाउँदा, यःसिं लिन जाँदा र ल्याउँदा राज्यबाट प्रदान गरिने सम्मान स्वरुप गुर्जुको पल्टन पठाउने कार्य अहिले पनि जारी नै छ ।

त्यस्तै नयाँ कुमारी चयन गर्दा पहिले पहिले हुनेवाला नयाँ कुमारीलाई राजदरवार लगी राजासँग परिचय गराउने चलन रहेकोमा अहिले राष्ट्रपतिसँग परिचय गराउने चलन भएको छ ।

वि.सं. २०७२ असोज ३ गते मुलुकको नयाँ संविधान जारी भयो ।

६७ डा. महेशराज पन्त, '*नायक, प्रतिनायक, नायकदेशीय*', काठमाडौंः कान्तिपुर कोशेली, बि.सं. २०७६, माघ १८, पृ. घ ।

नयाँ संविधानमा संघीय प्रणालीलाई अंगीकार गर्दै तीन तहको सरकार परिकल्पना गरिएको छ । नयाँ संविधान अनुसार स्थानीय तह पहिले भन्दा अधिकारसम्पन्न र श्रोतसम्पन्न भएको छ । संविधानमा गरिएको व्यवस्था अनुसार वि.सं. २०७४ वैशाख ३१, असार १४ र असोज २ गते गरी तीन चरणमा स्थानीय तहको पहिलो निर्वाचन सम्पन्न भयो । उक्त निर्वाचनमा वैशाख ३१ गते भएको पहिलो चरणको मतदानमा काठमाडौं महानगर-पालिकाको मेयरमा विद्यासुन्दर शाक्य निर्वाचित हुनुभयो । नयाँ संविधानले जात्रापर्व जस्ता सांस्कृतिक कार्यहरू सञ्चालनको अभिभारा स्थानीय तहलाई दिएको छ । त्यसै अनुरुप काठमाडौं महानगरपालिकाले काठमाडौं महानगर भित्र प्रचलित विभिन्न परम्परागत जात्रापर्वहरू सञ्चालनका लागिं सहयोग पुऱ्याउँदै आइरहेको छ । यसै क्रममा इन्द्रजात्रा पर्वलाई व्यवस्थित गर्न पनि काठमाडौं महानगरपालिकाबाट धेरै सहयोग भएको छ । स्थानीय सरकारको सहयोग प्राप्त भए पछि इन्द्रजात्राको सम्वर्द्धन र प्रवर्द्धन अझ सुदृढ भएको छ । जसले गर्दा इन्द्रजात्रा पहिलेभन्दा भव्य र आकर्षक बन्न पुगेको छ ।

इन्द्रजात्रा सञ्चालन गर्न अहिले इन्द्रजात्रा व्यवस्थापन समिति समेत गठन गर्ने प्रचलन शुरु भएको छ । इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच, पर्व, बाजागाजा, गुठीहरू सबै यही समितिमा आवद्ध रहेका छन् । काठमाडौं महानगरपालिकासँग इन्द्रजात्रा सञ्चालन सम्बन्धी सहकार्यहरू यही समिति मार्फत समन्वय हुँदै आइरहेको छ । अहिले इन्द्रजात्रासँग आवद्ध आर्थिक, प्रशासनिक कार्य काठमाडौं महानगरपालिकाबाट र व्यवस्थापकीय कार्यहरू इन्द्रजात्रा व्यवस्थापन समितिबाट सम्पन्न हुँदै आइरहेको छ ।

इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच एवं गुठीहरूलाई नेपाल सरकारको संस्कृति मन्त्रालय, गुठी संस्थान, निवृत्तभरण व्यवस्थापन कार्यालय (पुरानो कौशी तोषाखाना) बाट प्राप्त हुँदै आइरहेको आर्थिक अनुदान पनि जारी नै रहेको छ । तथापि यी निकायहरूबाट परम्परादेखि प्राप्त हुँदै आइरहेको रकम प्रयाप्त नभएको गुनासो सम्बन्धित गुठीहरूको रहेको छ ।

इन्द्रजात्राको एउटा प्रमुख अंग रहँदै आएको श्री कुमारी, श्री गणेश र श्री भैरवका लागि विशेष भत्ताको व्यवस्थाका साथै पूर्व कुमारी र पूर्व गणेश एवं पूर्व भैरवका लागि पनि निवृत्तिभत्ताको व्यवस्था का.म.पा.बाट गरिँदै आइरहेको छ । श्री कुमारी, श्री गणेश र श्री भैरवका लागि पहिलेदेखि

कायम रहेको भत्तालाई पनि कामपाले वृद्धि गरिदिएको छ । साथै पहिले आर्थिक सहयोगको व्यवस्था नभएका किलागल कुमारी र मखन कुमारीको लागि समेत गत वर्षदेखि कामपाले आर्थिक सहयोगको व्यवस्था गरिदिएको छ ।

इन्द्रजात्रालाई अझ व्यवस्थित गर्न नेपाल सरकारको तर्फबाट ५ करोडको कोष स्थापना गर्ने घोषणा समेत भएको छ । यसमा संघीय सरकार, प्रदेश सरकार र स्थानीय सरकारले रकम जम्मा गर्ने निर्णय भएको छ ।

इन्द्रजात्रालाई अन्तर्राष्ट्रिय रुपमा समेत प्रचार प्रसार गरी यसलाई पर्यटकीय रुपले पनि विकसित गर्दै जाने उद्देश्यले काठमाडौं महानगर-पालिकाले गत वर्ष विभिन्न देशका मेयर, उपमेयर तथा स्थानीय सरकारका प्रतिनिधिहरूलाई काठमाडौं नगरमा निमन्त्रणा गरी इन्द्रजात्रा अवलोकन गर्ने व्यवस्था गरेको थियो । यसबाट देशविदेशमा इन्द्रजात्रा बारे प्रचार प्रसार भई विदेशी पर्यटकलाई आकर्षित गर्न सहयोग पुग्ने विश्वास लिइएको छ ।

## इन्द्रजात्रा मनाइने तिथि बारे

इन्द्रजात्रा हाल काठमाडौंमा भाद्र शुक्लपक्ष द्वादशीका दिन मनाइने गरिन्छ । तर विभिन्न धार्मिक एवं ऐतिहासिक ग्रन्थहरूमा यो जात्रा मनाइने तिथि भने फरक रहेको पाइन्छ । यसरी कालान्तरमा इन्द्रजात्रा मनाउने तिथिमा समेत फेरबदल आएको देखिन्छ ।

भारतीय प्राचीन इतिहासका वरिष्ठ विद्वान डा.वासुदेवशरण अग्रवालले दक्षिण भारतको परम्परालाई इंगित गर्दै तामिल भाषाको अति प्रसिद्ध काव्य 'शिलप्पाधिकारम्' का अनुसार इन्द्रध्वज पूजनको उत्सव दक्षिण भारतमा चैत्र पूर्णिमाको दिनमा मनाइने व्यहोरा उल्लेख गर्नुभएको छ ।[६८]

कसै कसैले इन्द्रजात्रा पनि दशैं ताका नै मनाइने दावी गरेका छन् । वर्षा हटेर आकाश स्वच्छ भएको बेला, हिलो धूलो नभएको, सर्वत्र धानको वाली पसाएर किसानहरूका मनमा हर्षोल्लास भरिएको तथा विशेष कामकाज पनि नभएको समय हेरेर नै असोजमा इन्द्रजात्राको व्यवस्था गरिएको उनीहरूको अनुमान छ । तर आश्विन शुक्ल प्रतिपदादेखि नवदुर्गा भवानीको उपासना गर्ने परम्पराले व्यापकता पाए पछि इन्द्रध्वजोत्थानको जात्रा भाद्र शुक्लमा गर्न

६८ कोइराला, पूर्ववत् ८, पृ. २४ ।

थालिएको अनुमान गर्न सकिन्छ ।[६९]

कर्कपेट्रिकले सन् १७९३ तिरको नेपाल बारे चित्रण गरी लेख्नुभएको पुस्तकमा भने इन्द्रजात्रा श्रावण महिनामा मनाइने भनेर उल्लेख गर्नुभएको छ।

प्रताप सिंह शाहले इन्द्रध्वजोत्थानको व्यवस्थापन गर्नु अघि भाद्रशुक्ल एकादशीका दिन लिङ्गो उठाउने गरिन्थ्यो । लिङ्गो उठाउने साइत भने एक महिना अघि नै ज्योतिषहरू बसी निकाल्ने गरिन्थ्यो । लिङ्गोलाई एकदिन अघि ल्याएर हनुमानढोकामा छोड्ने र त्यसको भालिपल्ट उठाउने त्यतिबेलाको चलन थियो । प्रताप सिंह शाहको शासनकालमा आएर द्वादशीका दिन मात्रै लिङ्गो उठाउने गरियो ।[७०]

६९ कोइराला, पूर्ववत् ८, पृ. १२ ।

७० तोफाँ, पूर्ववत् २५, पृ. ७३ ।

# इन्द्रजात्राका सांस्कृतिक पर्वहरू

इन्द्रजात्रा नेपालकै सर्वाधिक भव्य र धूमधामपूर्वक मनाइने सांस्कृतिक पर्व हो । सर्वसाधारण जनता मात्र होइन, तत्कालीन राजा महाराजाहरू समेत आफै सहभागी भई मनाइने भएकोले इन्द्रजात्राको महत्व अरु जात्रा एवं पर्वहरू भन्दा उच्च रहेको पाइन्छ ।

इन्द्रजात्रा कुनै एउटा मात्र जात्रा नभई विभिन्न देवीदेवताहरूको नाच एवं पर्वहरूको एकीकृत रूप हो । इन्द्रजात्रामा अहिले पनि करिब दुई दर्जन हाराहारी अलग अलग धार्मिक-सांस्कृतिक गतिविधिहरू हुने गर्दछन् । ती नाच एवं पर्वहरू हनुमानढोका दरवारलाई केन्द्र बनाएर काठमाडौं शहर का विभिन्न भागहरूमा सम्पन्न हुन्छन् । विभिन्न कालखण्डमा प्रचलनमा रहेका कतिपय नाच एवं पर्वहरू अहिले लोप भइसकेको पनि पाइन्छ । तथापि अहिले बाँकी रहेका ती नाच-पर्वहरूले इन्द्रजात्राको गौरवलाई अझै उँचो राखेका छन् । इन्द्रजात्रा आठ दिन मनाइने गरिन्छ, तर त्यो आठ दिन दिनगन्तीको हिसाबले होइन कि चान्द्रमासको भाद्रशुक्ल द्वादशीका दिनदेखि आश्विनकृष्ण चौथीका दिनसम्म सञ्चालन हुने गर्दछ। यदि बीचमा तिथि टुट वा दोहरियो भने जात्रा पनि सोही बमोजिम लामो वा छोटो पनि हुन सक्दछ। सामान्यतया आठ दिनसम्म चल्ने यो जात्राको दैनिकी यस प्रकार रहेको छ :[१]

**पहिलो दिन** : भाद्रशुक्ल द्वादशीका दिनदेखि इन्द्रजात्रा आरम्भ हुन्छ । द्वादशीका दिन बिहान हनुमानढोकास्थित कागेश्वर मन्दिर अगाडि यःसिं (इन्द्रध्वजा) उठाए पछि यो जात्रा आरम्भ भएको मानिन्छ । यःसिं उठाउँदा हनुमानढोकामै दीप्याखं (देवीनाच) प्रदर्शन गरिन्छ । सोही दिन हनुमान-ढोकामा रहेको हाथुद्यः (श्वेत भैरव) सर्वसाधारणका लागि खुल्ला गरिन्छ भने

१ कुमारी घरका चिताइदार एवं लेखक अ.व. ५५ का दुर्गा शाक्यसँग अन्तर्वार्ता ।

इन्द्रचोकमा आकाश भैरव र वटु टोलमा बाकादे आजुको मूर्ति पनि प्रदर्शन गरिन्छ । साथै टोल टोलमा भैरवका काठको मूर्ति पनि प्रदर्शन गरिन्छ । त्यही दिन लाखे, पुलुकिसि, सवःद्यः (हल्चोक आकाश भैरव), महाकाली नाचहरू पनि प्रदर्शनका लागि बाहिर निकालिन्छ । सोही दिन साँझ उपाकु परिक्रमा गर्ने कार्य हुन्छ । साथै काठमाडौंका विभिन्न ठाउँमा उज्यालो हुने गरी ग्वरामत बालिन्छ भने ह्यूमत टोलमा ह्यूमत बालिन्छ । बेलुकी बसन्तपुरको त्रैलोक्यमोहन मन्दिरमा दश अवतार प्रदर्शन गरिन्छ ।

**दोश्रो दिन** : भाद्रशुक्ल त्रियोदशीको साँझ कुमारीको रथ तान्ने सहयोगीहरू-लाई कुमारीघरमा राखी भोज खुवाउने गरिन्छ । गुठी संस्थानले खुवाउने उक्त भोजलाई 'बलंभ्वय्' भनिन्छ । यस दिन पनि नगरका विभिन्न ठाउँमा लाखे, पुलुकिसि, सवःभक्कु, महाकाली नाचहरू प्रदर्शन गरिन्छ भने बसन्तपुरमा दशअवतार देखाइन्छ ।

**तेश्रो दिन** : भाद्रशुक्ल चतुर्दशीका दिन श्री कुमारीको रथयात्रा हुन्छ । उक्त दिन श्री कुमारी, श्री गणेश र श्री भैरवको रथलाई काठमाडौंको क्वःने (तल्लो भेग) मा तान्ने गरिन्छ । उक्त दिन पनि लाखे, पुलुकिसि, सवःभक्कु, महाकाली नाच प्रदर्शन हुन्छ भने कुमारीको रथयात्रा चलाइने जैशीदेवलस्थित डबलीमा दीप्याखं प्रदर्शन हुन्छ । सोही दिन बेलुकी मरु टोलको छ्वासपाखाबाट दागिं निकाली थःने र क्वःनेको कुमारी तान्ने मार्गमा परिक्रमा गरी सोही ठाउँमा आई विसर्जन हुन्छ भने काष्ठमण्डप पछाडिबाट बौमत निकाली यो पनि थःने र क्वःने मार्गमा परिक्रमा गरी काष्ठमण्डप अगाडि नै आई विसर्जन हुन्छ ।

**चौथौ दिन** : भाद्रशुक्ल पूर्णिमा इन्द्रजात्राको प्रमुख दिन हो । यही दिनलाई 'यँयाः पुन्हि' भनिन्छ । यो दिन घर घरमा समयबजि खाने र टोल टोलमा बाँड्ने चलन छ । घर घरमा खाने र टोलछिमेकमा समयबजि बाँडेर मनाइने पूर्णिमा भएकोले यो दिनलाई 'समय् पुन्हि' पनि भनिन्छ । यो दिन श्री कुमारीको रथलाई काठमाडौंको थःने अर्थात माथिल्लो भेगमा तानेर जात्रा गरिन्छ । सो दिन पनि बाजागाजा सहित लाखे, पुलुकिसि, सवःद्यः, महाकाली नाच निकालिन्छ भने थःने भेगको बांगेमुढा र इन्द्रचोकस्थित डबलीमा दीप्याखं प्रदर्शन गरिन्छ ।

**पाँचौ दिन** : आश्विनकृष्ण परेवाको यो दिन कुमारीको रथ तान्ने कार्य

हुँदैन । लाखे, पुलुकिसि, सवःभक्कु, महाकाली नाच, दशअवतार देखाउने कार्यहरू भने चलिरहेकै हुन्छ । यही दिनदेखि पितृलाई सम्भने सोह्र श्राद्ध शुरु हुन्छ ।

**छैठौं दिन** : आश्विनकृष्ण दुतियाको दिन कुमारीको रथ तान्ने कार्य हुँदैन । वि.सं. २०४६ सालभन्दा अघि यही दिन हल्चोक आकाश भैरवलाई हनुमानढोकाको नासःचुकमा राँगा चढाउने गरिन्थ्यो । उक्त राँगोलाई आकाश भैरवले आफ्नो खड्गले हानी मार्ने चलन थियो । अहिले यो चलन हराइसकेको छ । यस दिन पनि लाखे, पुलुकिसि, सवःभक्कु, महाकाली नाच, दशअवतार देखाउने कार्यहरू भने चलिरहेकै हुन्छ ।

**सातौं दिन** : आश्विनकृष्ण तृतियाको दिन पनि कुमारीको रथयात्रा हुँदैन । पुलुकिसि, लाखे, सवःभक्कु, महाकाली नाच भने टोल टोलमा नचाइरहेको हुन्छ । यो दिनलाई 'गातिला' भनी बसुन्धरादेवीको व्रत बस्ने तथा पूजाआजा गर्ने परम्परा रहेको छ । यो व्रत बसे घरमा धनधान्यको कमी हुँदैन भन्ने विश्वास गरिन्छ । इन्द्रजात्रा सम्बन्धी किंवदन्ती अनुसार स्वर्गमा इन्द्रकी आमाले आयोजना गर्न लागेको व्रत यही बसुन्धराको व्रत हो । यही व्रतका लागि पारिजातको फूल टिप्न आउँदा काठमाडौंमा इन्द्र पक्राउ परेको जनश्रुति पाइन्छ ।

**आठौं दिन** : आश्विनकृष्ण चौथीका दिन श्री कुमारीको रथलाई काठमाडौंको माथिल्लो भेगमा रहेको किलागल टोलबाट तानेर जात्रा गरिन्छ । यस दिनलाई नानीचायाः भनिन्छ । उक्त दिनको जात्रा सकिए पछि कुमारीघरमा राष्ट्र प्रमुख सवारी भई श्री कुमारी, श्री गणेश र श्री भैरवको हातबाट टीका ग्रहण गरिन्छ । सोही राति हनुमानढोकामा यःसिं ढालेर टेकु दोभानसम्म तानेर ल्याई त्यहीं सेलाउने गरिन्छ । यसरी उक्त वर्षको इन्द्रजात्रा समापन हुन्छ ।

यसरी समग्र इन्द्रजात्रा आठ दिन सञ्चालन हुने भए पनि त्यसको लागि आवश्यक तयारी भने धेरै अघिदेखि नै चलिरहेको हुन्छ । नालास्थित यःसिंख्यः गई यःसिं (इन्द्रध्वज) उठाउन रूख खोज्ने काम, दीप्याखं, लाखे, पुलुकिसि, हल्चोक आकाश भैरव आदि देवताका नाचहरू निकाल्ने तयारी पनि इन्द्रजात्राभन्दा धेरै अघिदेखि नै चलिरहेको हुन्छ ।

# य:सिं थने

इन्द्रजात्रामा सबैभन्दा पहिले सम्पन्न गरिने कार्य इन्द्रध्वजोत्थान हो। यसलाई स्थानीय नेपालभाषामा 'य:सिं थनेगु' भनिन्छ भने अहिले नेपालीमा लिङ्गो उठाउने पनि भन्न थालिएको छ। भाद्र शुक्लपक्ष द्वादशीको दिन हनुमानढोका दरवार क्षेत्रको कागेश्वरी मन्दिर सँगै रहेको खाल्डोमा य:सिं ठड्याए पछि इन्द्रजात्रा आरम्भ भएको मानिन्छ। इन्द्रजात्रामा इन्द्रलाई नै प्रतीक बनाएर इन्द्रध्वजोत्थान गर्ने हो। त्यसैले य:सिं थनेगु अर्थात् इन्द्रध्वजोत्थान इन्द्रजात्राकै सबैभन्दा महत्वपूर्ण अंग हो।

काठमाडौंमा इन्द्रध्वजोत्थान कहिलेदेखि शुरु भयो, त्यसको यकिन इतिहास फेला पार्न सकिएको छैन। तर वेद, पुराण जस्ता धार्मिक ग्रन्थहरूमा भने इन्द्रध्वजोत्थान बारे प्रशस्त उल्लेख गरिएका छन्।

इन्द्रध्वजोत्थान गर्ने विधि बारे कालिका पुराणको ४८ औं अध्याय र देवी पुराणको २१ औं अध्यायमा विस्तारपूर्वक वर्णन गरिएको छ। यी दुई पुराणका कुराहरू एक आपसमा केही भिन्न देखिए पनि नेपाली सन्दर्भमा भने दुवैलाई मिलाएर काम चलाएको पाइएको छ। त्यसमा लेखिए अनुसार इन्द्रध्वजोत्थानका लागि भाद्र महिनाको शुक्ल पक्षमा शुभ-लग्न, मुहुर्त नक्षत्र करण भएको बेला पारेर शुभ-मंगल वाचन सहित न्हयूसः नायः (मानन्धर समुदायका नाइके) केन्द्रीय मानन्धर संघको संयोजनमा प्रतिनिधि लगायत दैवज्ञ र ज्योतिषी सूत्रधार (नाप साइज लिने व्यक्ति) र अन्य सहायक साथमा लिएर वन जानु पर्दछ। वन जानु भन्दा अगाडि विधिपूर्वक देवीको पूजा गर्नुपर्छ। वनमा पुगेर इन्द्रध्वजा प्रस्थापन गर्ने लिंगोको निम्ति वृक्ष छान्नुपर्छ। ध्वजको लागि सेतो शाल वृक्षहरू उत्तम हुन्छन्। त्यस्तो वृक्ष नपाइएमा शाल सल्लो, शाक (सागवान) वृक्ष पनि हुन्छ। ध्वजाको निम्ति बाटाको, देवताका बगैंचाको, कीरा लागेको, चिता (श्मशान) को र धेरै पंक्षीले गुँड लगाएका वृक्ष काट्नु हुँदैन। धमीराको देवल भएको, वज्र परेको, धेरै टोड्को भएको, नराम्रो नाउँ रहेको र स्त्रीवाचक वृक्ष पनि लिङ्गोको लागि शुभ हुँदैन। उपयुक्त वृक्ष नपाइएमा चन्दन, आँप पनि हुन्छ। असल जमीनमा उम्रेको, सफा पानीका नजीकको, टुप्पो भएको, सग्लो र सोझो रुख छानेर

पूर्व वा उत्तर फर्केर वृक्षको पूजा गर्नुपर्छ ।[२] त्यसमा लिङ्गो बाइस हात भन्दा माथि, बत्तिस हात अथवा बयालिस हातको उत्तम र त्यो भन्दा बढी बाउन्न हातसम्मको लिङ्गो अत्युत्तम हुने कुरा पनि लेखिएको छ ।[३]

'वृहत्संहिता'मा स्वर्गका राजा असुरहरूको आक्रमणको सामना गर्न नसकी ब्रम्हाकोमा शरण लिन पठाएको, ब्रम्हाले बिष्णुकोमा पठाएको, बिष्णुले ध्वजा दिएको, इन्द्रले त्यही ध्वजा उठाएर युद्ध लड्दा जितेको, पछि इन्द्रले त्यो ध्वजा चेदी देशका नरेश उपरिचरलाई दिएको र उपरिचरले इन्द्रध्वज उठाई जात्रा चलाउन थालेको भन्ने कथा लेखिएको छ । इन्द्रजात्राको आरम्भ सम्बन्धी यही कथा अरु पनि पुराणहरूमा उल्लेख छ ।

लेखक गौतमवज्र वज्राचार्यका अनुसार, "इन्द्रध्वज उठाएर उत्सव गर्ने परम्परा हाम्रो यता निकै समयदेखि चलेर आएको देखिन्छ । महाभारत, विष्णु धर्मोत्तर पुराण, वृहत्संहिता आदि प्राचीन ग्रन्थमा यसको वर्णन पाइन्छ । कालिदासको रघुवंश र अश्वघोषको सौन्दरानन्दमा पनि प्रशंगवश इन्द्रध्वजको चर्चा गरिएको छ । यताबाट त्यसबेला भारतवर्षमा इन्द्रध्वजोत्थान गर्ने चलन खूपै चलेको देखिन्छ । इस्लामको प्रवेश भएपछि हिन्दु राजाहरूको चेतना हराउँदै गएको हुनाले भारतमा यो महोत्सव घट्दै गयो र अब लोप नै भइसकेको छ । प्राचीन भारतमा भाद्रशुक्ल एकादशीको दिन इन्द्रध्वज उभ्याइन्थ्यो । वृहत्संहितामा यस कुराको चर्चा गरिएको छ । परन्तु आजभोलि हाम्रो यहाँ भाद्रशुक्ल द्वादशीको दिन लिङ्गो गाड्ने काम हुन्छ । काठमाडौं उपत्यकाका मल्ल राजाहरू चाहिँ भाद्रशुक्ल एकादशीकै दिन इन्द्रध्वजोत्थान गर्दथे । यो कुरा तात्कालिक ग्रन्थ र ठ्यासफुहरूबाट ज्ञात हुन्छ । अट्को नारायणस्थान अगाडि आजभोलि पनि भाद्रशुल्क एकादशीको दिन लिङ्गो गाड्ने काम विविधपूर्वक सम्पन्न गरिन्छ । मल्लकालिक परम्पराको अवशेषको रुपमा यो देखिएको छ । हनूमानढोकाको प्राक्रुप यतातिरसम्म फैलिएको देखिनाले मल्लकालको लिङ्गो गाड्ने ठाउँ पनि यहीं नै थियो कि भन्ने अनुमान यताबाट हुन्छ । आजभोलि हनूमान्ढोकाको प्रांगणमा काकेश्वरको मन्दिरनिर लिंगो गाडिन्छ । यो चलन श्री ५ प्रतापसिंह शाहको पालादेखि मात्र चलेर आएको देखिन्छ । भाषा वंशावली अनुसार श्री ५ प्रताप सिंहले नुवाकोटमा

२ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा*, काठमाडौंः गुठी संस्थान, रामशाह पथ, बि.सं. २०४२, पृ. ३२ ।
३ ऐजन, पृ. ३२ ।

लिंगो गाडे जस्तै काठमाडौंको पनि आफ्नो दरवार सामुन्ने लिंगो खडा गरी इन्द्रजात्रापछि लिंगो ढाल्ने नियम बनाई गुठी राखी प्रतिवर्ष यो जात्रा चलाएका थिए । उनैका दरवारिया पण्डित शक्तिवल्लभ भट्टाचार्यले लेखेको इन्द्रध्वजोत्सव नामक विस्तृत ग्रन्थ पनि पाइन्छ । त्यस ग्रन्थमा लेखिएको विधि आजभोलि गरिने इन्द्रध्वजोत्थानपनको परिपाटीसँग धेरै मिल्दोजुल्दो छ । लेखक गौतमवज्र वज्राचार्यले मोहननाथ पाँडे (उर्फ द्वीपेन्द्रकुमार पाँडे) को संग्रहमा रहेको अप्रकाशित भाषा वंशावली २४ पृ. लाई उद्घृत गर्दै उल्लेख गर्नुभएको छ - 'यिन माहाराजा (प्रतापसिंह) का पालामा अघि नेपालमा नभयाको नुवाकोट्का लिंगको उपमाले कांतिपुर सहरमा प्रतिवर्ष लिंग उभ्याईन्या इन्द्र थापना गरी इन्द्रयात्रा सोभा गराया ।'[४]

यस्तै इन्द्रध्वजका बारेमा गोपालराज वंशावलीमा पनि उल्लेख गरिएको छ । उक्त वंशावलीमा उल्लेख भए अनुसार

२६ ख) जौराजिनी श्री विश्मदेवी ना वृ (त्य)
२७ क) ऐन्द्र कूट सम्बच्छर चारिसय चबुद्रह
वैशाख मास तस्य पुत्र श्री जयशक्ति देवनः
एन्द्रकूट ध्वज मारोहनम् ॥

यसको व्याख्या यसरी गरिएको छ -

*ने.सं. ४१४ (वि.सं. १३५१) वैशाखमा युवराज्ञीनी श्री विश्मदेवीले इन्द्रकूट बनाइन् । तिनका छोरा श्री जयशक्तिदेवले इन्द्रकूट ध्वज आरोहण गरे । यो भनाइले युवराज्ञीले 'इन्द्रकूट' भन्ने इन्द्रको नामबाट एउटा थुम्को वैशाखमा बनाइन् र तिनका छोरा जयशक्तिदेवले 'इन्द्रकूट ध्वज' अर्थात् 'इन्द्र थुम्को' मा इन्द्रध्वज गाडे भन्ने बुझाएको छ ।*[५]

नेपालमै पनि इन्द्रध्वजोत्थान अत्यन्त पुरानो परम्परा हो भन्ने कुरा यसबाट प्रस्ट हुन्छ । प्राचीन भारतको बंगालमा यसरी इन्द्रध्वजोत्सव गर्ने चलन थियो, अहिले त्यो संस्कृति नै त्यहाँ लोप भइसकेको छ ।

४ गौतमवज्र वज्राचार्य, *हनुमानृढोका राजदरवार,* काठमाडौंः नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, बि.सं. २०३३, पृ. १७० ।

५ धनवज्र वज्राचार्य र कमल पी. मल्ल, द *गोपालराज वंशावली,* काठमाडौंः नेपाल रिसर्च सेन्टर पब्लिकेन्स, सन् १९८५, पृ. ८२-८३ ।

इन्द्रजात्रामा यस्तो यःसिं उठाउने काम काठमाडौंका स्थानीय मानन्धरहरूले गर्दै आइरहेको छ। हाल सूर्यविनायक नगरपालिका वडा नं. ८ नाला यःसिंगुँको लिङ्गो गुठी सामुदायिक वनमा गएर यःसिंको लागि उपयुक्त रूख काट्नेदेखि लिएर त्यसलाई तानेर काठमाडौं ल्याउने, उठाउने, इन्द्रजात्रा सकिए पछि ढाल्ने र टेकू दोभानमा लगेर सेलाउनेसम्मको काम मानन्धरहरूले गर्दै आएको छ। मूलतः यो काम गर्ने सम्पूर्ण जिम्मेवारी मानन्धर जातिको नाइके 'न्हयसः नायः' को काँधमा हुन्छ। न्हयूसः नायःको नेतृत्वमा चसाढ्वँ टोलका मानन्धरहरूको अनिवार्य उपस्थिति र केन्द्रीय मानन्धरको संघको व्यवस्थापनमा लिङ्गो उठाउने र ढाल्ने कार्य हुन्छ।

यःसिं उठाउने विधि र त्यसको लागि काठ लिन जाने प्रक्रियाबारे केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरले बताउनुभए अनुसार -[६]

"यःसिंको लागि काठ लिन काभ्रेको नालास्थित वनमा जानु पर्छ। त्यो वनलाई 'यःसिंगुँ' भनिन्छ। 'यःसिंगुँ' इन्द्रजात्राको लिङ्गोकै लागि राज्यले छुट्याइदिएको वन हो। श्री ५ प्रतापसिंह शाहले नेपालका विभिन्न ठाउँमा प्रचलनमा रहेको यःसिं उठाउने कार्यलाई बन्द गरी काठमाडौंको हनुमानढोका दरवार अगाडि मात्रै यःसिं उठाउने गरी नयाँ व्यवस्था गर्दा यःसिंको लागि नालाको यो वनमा रूख काट्ने प्रवन्ध मिलाइदिएको थियो। तर अहिले यो राष्ट्रियकरण भई सामुदायिक वन अन्तर्गत पर्न गएको छ। त्यहाँ सामुदायिक वन उपभोक्ता समितिले रूख काट्न नदिए पछि बीचमा एकपटक मानन्धरहरूले यःसिंको लागि लिङ्गो लिन जाने काम छोडिसकेको थियो। पछि पुनः मानन्धरहरूलाई नै यसको जिम्मा दिइयो। यःसिं लिनको लागि भाद्रकृष्ण दुतिया (यंलाथ्व २) का दिन साइत गरी काठमाडौंबाट प्रस्थान हुन्छ। हनुमानढोका दरवारको नासल चोकमा वन जाने मानन्धर संघका पदाधिकारीहरूलाई दरवारका गुर्जुले टीका लगाई साइत गरी पठाइन्छ। त्यसमा गुर्जुको पल्टन समेत सहभागी हुन्छन्। यसलाई 'वन प्रस्थान' भनिन्छ। यःसिं लिन वन प्रस्थान गर्ने, यःसिं उठाउने र ढाल्ने सबै साइत कृष्णाष्टमि सकिने बित्तिकै नै निकालि सकेको हुन्छ।

वन प्रस्थान गर्दा एउटा कालो बोका पनि साथै लगिन्छ। पहिले पहिले वनमा उक्त कालो बोकालाई छोड्ने र उसले सबैभन्दा पहिले जुन रूखलाई

६ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता।

सिडले हान्छ त्यही रूख काट्ने भन्ने चलन थियो। तर अहिले त्यसो नगरी लिङ्गोको लागि उपयुक्त रूख पहिल्यै छान्ने र पछि त्यही रूखमा बोका बलि दिई रूख काट्ने गरिन्छ। रूख काट्नु अघि वन देवीलाई पुजा गरिन्छ, अनि काटिन्छ। रूखलाई बलि दिइएको बोकाको मासु फिर्ता ल्याउनु हुन्न भनिन्छ, त्यसैले त्यही राति मासु पकाएर सबै खाइवरि सक्याउने चलन छ। जंगलको बीचमै एउटा सानो सत्तल बनाइएको छ। त्यहीं रात काट्ने हो।

साइत अनुसार लिङ्गोको रुख काट्न अघि सेनाको टुकडीले सलामी दिन्छ। सलामी दिइसकेपछि लुँपा (सुनको बञ्चरो) र वहःपा (चाँदीको बञ्चरो) ले सांकेतिक रुपमा रुखमा घाउ गरिन्छ। भोलिपल्ट बिहान झिसमिसेमै रूख काट्न शुरु हुन्छ। काट्नु अघि रूखलाई सेनाको टुकडीले सलामी गर्छ। र, काटिसके पछि तोप पड्काएर बढाइँ पनि गरिन्छ। देशमा माओवादी जनयुद्धको जगजगी चलिरहेको बेला एक पटक त्यसरी बढाइँ गर्दा जंगलमा लुकिरहेका माओवादीले सेनाको फायरिङ ठानेर उताबाट पनि जवाफी फायर गरेका थिए। त्यसपछि भने जंगलको बीचमा रहेको सत्तलमा बस्न छोडियो। अहिले अलि माथितिर फैढोका भन्ने ठाउँमा बस्ने गरिएको छ। बढाइँ गर्ने भने छोडिएको छैन।[७]

रूख काटिसके पछि त्यसको हाँगाबिङ्गा सफा गरी काठमाडौंतिर ल्याउन तान्न थालिन्छ। यःसिं तान्न काठमाडौंको मानन्धर समुदायका विभिन्न टोलका मानन्धरहरू आउने गर्छन्। यो यःसिंलाई तानेरै मात्र काठमाडौंसम्म ल्याइ पुऱ्याउने परम्परा रहँदै आएको छ। पहिले पहिले यसरी यःसिं तानेर ल्याउँदा बाटोमा पर्ने खेतबाट समेत घिसार्नुपर्ने हुन्थ्यो। त्यहाँ एउटा खोला थियो। त्यो ज्यादै घुमाउरो पनि थियो। त्यसैले लिङ्गोलाई घुमाउँदै ल्याउँदा अर्काको खेतमा समेत घिस्रिन पुग्थ्यो। त्यो बेला खेतमा धान लागिरहेको हुन्थ्यो। वाली जम्मै कुल्चिने भएकाले स्थानीय मानिसहरू झगडा गर्न आउथे। तर साथमा गुर्जुको पल्टन र सेनाका जवानहरू पनि हुने भएकाले झगडा चर्किन भने पाउँदैनथ्यो। ल्याउँदा बाटो पनि एकदमै सुनसान हुन्थ्यो।

पहिले पहिले यःसिं ल्याउँदा यो नालाबाट भक्तपुर-सानो ठिमी-पुरानो वानेश्वर-डिल्लीबजार-बागबजार हुँदै भोटाहिटी पुऱ्याइन्थ्यो। अहिले नयाँ बाटो बनेपछि नालाबाट भक्तपुरको च्याम्हसिंह-जगाती-सूर्यविनायक-

---

७ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता।

वानेश्वर-भद्रकाली हुँदै भोटाहिटी पुऱ्याइन्छ। नालादेखि भक्तपुरसम्म भक्तपुरका मानन्धरहरूले तान्ने, त्यसपछि एअरपोर्ट क्षेत्रसम्म ठिमिका मानन्धरहरूले तान्ने र त्यहाँबाट भोताहिटीसम्म अरूले तानेर ल्याउने गरिन्छ।[८]

भोटाहिटीमा लिङ्गोलाई तँलाछीका मानन्धरहरूले स्वागत गर्दछ। भोटाहिटीमा लिङ्गोको सिरानी रहने ठाउँमै एउटा ढुंगाको मन्दः (मन्डला) पनि राखिएको छ। सडक पीच गर्दा त्यो मन्डला हराइ सकेको थियो तर पछि फेरि त्यसलाई यथास्थानमा राखियो। भोटाहिटीको यो ठाउँ मल्लकालमा नगरको बाहिरी भाग थियो। नगर प्रवेशको लागि यहाँ एउटा ढोका पनि राखिएको थियो। यो ठाउँमा चार दिनसम्म लिङ्गोलाई त्यसै सुताएर राखिन्छ। त्यतिबेला पनि यसलाई पूजाआजा भने गरिन्छ। लिङ्गोलाई कसैले कुल्चिने वा नाघेर जाने गर्दैन।[९]

चार दिन पछि कायाअष्टमिका दिन लिङ्गोलाई त्यहाँबाट तानेर सिधा हनुमानढोका पुऱ्याइन्छ। यसलाई 'नगर प्रवेश' भनिन्छ। यो कार्य पनि साइत अनुसार नै गरिन्छ। त्यति बेला पनि गुर्जुको पल्टन र राज खड्ग साथै आएको हुन्छ। त्यसरी तानेर लगेको यःसिंलाई हनुमानढोका दरवार परिसरको यःसिं उठाउने खाल्डोको छेउमा लगेर राखिन्छ। एकादशीका दिन चसांद्वँ टोलका मानन्धरहरू गएर यःसिंमा डोरी बाँध्ने काम गरिन्छ जसलाई 'वलः घायेगु' भनिन्छ। 'वलः घायेगु' यःसिंमा डोरी बाँध्ने एउटा त्यस्तो जटिल विधि हो जसलाई तानेर यःसिं उठाइसके पछि यःसिंको सिरानीमा बाँधिएको गाँठो तलै बसेर फुकाल्न सकिन्छ। यःसिं उठाइसके पछि त्यो देवता सरह हुने भएकोले गाँठो फुकाल्न माथि चढ्न मिल्दैन। त्यसैले तलैबाट गाँठो फुकाल्नु पर्ने हुन्छ।[१०]

द्वादशीका दिन बिहानीको साइतमा यःसिं उठाइन्छ। यो कार्यमा पनि न्हयूसः नायः, चसांद्वँ टोलका मानन्धरहरू अनिवार्य रुपमा उपस्थित हुनु पर्छ। यःसिं कुनै पनि मेशिन वा नयाँ प्रविधि प्रयोग नगरी पुरानै परम्परागत विधिले उठाउने गरिन्छ। यःसिं उठाइसके पछि त्यसको माथिबाट ध्वजा फहराइन्छ, जसलाई 'हलिंपताः'[११] भनिन्छ। यसमा इन्द्रसँग सम्बन्धित चिन्हहरू

८ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता।

९ ऐजन।

१० ऐजन।

११ इन्द्रध्वजामा फहराइने झण्डालाई 'हलिंपताः' भन्निछ।

अंकित गरिएको हुन्छ। हलिंपताः फहराउने कार्य दैसाः टोलका मानन्धरहरूले गर्ने गर्छन् । हलिंपताः फहिराइसकेपछि सबैभन्दा पहिला मानन्धर समुदायबाट नै लिङ्गोमा पूजा गर्नु पर्दछ। यो पूजा दैसाः टोलका मानन्धरहरूले गर्दछ। यो पूजा भने गुर्जु राखेर गरिन्छ। यःसिंको माथि गजुर जस्तै देखिने एउटा भोगते राखिन्छ। फेदमा इन्द्रको सानो आकारको सुवर्ण मूर्ति राखिन्छ। इन्द्रजात्राको आठ दिन यहाँ प्रदर्शन गरिसके पछि हलिंपताः र इन्द्रको मूर्ति दुवै गुठी संस्थानमा सुरक्षित राख्न लगिन्छ।

यःसिं ठड्याइसके पछि त्यसलाई आठ टुक्रा काठले घेरेर राखिन्छ। यो सम्भवतः अष्टमातृकाले प्रतिकात्मक रुपमा सुरक्षा दिएको हुन सक्छ। यो काठलाई 'लाकासिँ' भनिन्छ। यःसिंलाई सुरक्षा दिने काम भने पुरानो गुह्येश्वरीका स्थानीय पुतुवारहरूले गर्ने गर्दछ। यःसिं उठाएको दिनदेखि पुतुवारहरू दिनरात त्यहीं बसेर यःसिंको सुरक्षामा खटिन्छन् । यःसिं उठाए पछि इन्द्रजात्रा आरम्भ भएको मानिन्छ।"

लेखक डेनियल राइटका अनुसार पहिले पहिले यःसिं उठाउँदा इन्द्रजात्रामा नचाउनुपर्ने सबै सांस्कृतिक नाचहरू हनुमानढोकामा भेला भई प्रदर्शन गर्ने चलन थियो।[१२] अहिले किलागलको दीप्याखं एउटा मात्रै प्रदर्शन गर्ने गरिएको छ।

लेखक जेराँ तोफाँका अनुसार यःसिंको कुरुवा बस्न आउने ती पुतुवारहरू नै आठ दिनका लागि द्यःपाःलाः हुन्छन् । यःसिंमा पुजा गरे वापत चढाइने सबै सामानहरू र पैसा उनीहरू नै लिने गर्छन् । उनीहरूले दिनको दुई पटक इन्द्रको मूर्तिमा तेलको बत्ती बाल्नुपर्ने हुन्छ। यति गरे वापत उनीहरूलाई गुठी संस्थानले केही दाल, चामल र तेल दिने गरेको छ। उहाँका अनुसार यःसिं उठाइसके पछि हरेक दिन जोगीहरू आई यःसिंको सामुन्ने बाजा बजाउनु पर्ने चलन पनि थियो तर अहिले त्यो हराइसकेको छ।[१३]

यःसिं उठाउने बेला हनुमानढोकामा किलागलको दीप्याखं (देवीनाच) पनि नचाउने गरिन्छ। दीप्याखं इन्द्रजात्रामा निकालिने पहिलो नाच हो। यस्तै यःसिं उठाउँदा राजाको प्रतीक स्वरुप खड्ग र तलेजु भवानीको प्रतीक स्वरुप सेतो रंगको घोडा पनि उपस्थित गराउने चलन छ।

---

१२ Daniel Wright, *History of Nepal*, Cambridge: 1877, p. 38.

१३ Gerard Toffi, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present*, Kirtipur: Contributions To Nepalese Studies (Volume 19), TU, 1992, p. 84.

इतिहास शिरोमणि बाबुराम आचार्यका अनुसार इन्द्रध्वजलाई इन्द्रको प्रतीकका रूपमा पुराणहरूमा वर्णन गरिएको पाइन्छ । इन्द्रदेव अन्तरिक्षभन्दा पनि माथि दि्वमा रहने देवता हुनाले इन्द्रध्वजालाई पनि सम्भव भएसम्म माथि पुऱ्याउनुपर्ने विचार उत्पन्न भएर इन्द्रध्वजा टाँगिने लिङ्गो भरसक अग्लो बनाइन्थ्यो ।[१४]

इन्द्रजात्राको अन्तिम दिन साइत अनुसार यःसिं ढालिन्छ । यःसिं ढाल्नु पनि न्हयूसः नायः र चसाद्वँ टोलका मानन्धरहरू अनिवार्य उपस्थित हुनु पर्दछ । अघि इन्द्रको ध्वजा अर्थात 'हलिंपताः' निकालिन्छ र त्यसलाई शिलबन्दी गरी गुठी संस्थानलाई बुझाइन्छ । त्यसपछि ढालिएको यःसिंलाई तान्दै कोहिटी, ह्यूमतको बाटो हुँदै टेकू दोभानमा लगेर सेलाइन्छ । टेकूमा छोडिएको यःसिं पहिले पहिले त त्यहीं बस्ने साधुहरूले लगेर धुनी बाल्ने गर्थे । अहिले जोकोहीले पनि काटेर लाने गरेको पाइन्छ ।

यति गरिसके पछि इन्द्रजात्राको सम्पूर्ण काम त सकिन्छ तर यःसिंको काम भने सकिएको हुँदैन । रूख काटेर ल्याए वापत वनैमा गएर फेरि एउटा क्षमा पूजा गर्नुपर्ने हुन्छ । शिवरात्रि सकिने बित्तिकै एउटा राम्रो साइत निकालेर नालाको वनमै गएर उक्त पूजा गरिन्छ । पहिले राजतन्त्र हुँदा राजदरवारबाटै पूजाको लागि आवश्यक सबै व्यवस्था गरिन्थ्यो । ५० वटाभन्दा बढी टपरीमा पूजाका सरजाम राखिन्थ्यो । पूजा पनि मूल पुरोहितबाटै गरिन्थ्यो । अहिले भने हनुमानढोकाको पुजारीबाटै यो काम सम्पन्न भइरहेको छ । यसमा गत वर्ष काटिएको रूखको एक टुक्रा राखेर होम गर्ने गरिन्छ । यसैको लागि भनेर पहिले रूख काटेकै बेला एक टुक्रा छुट्र्याएर राखिएको हुन्छ । यस वर्षको इन्द्रजात्रा विघ्न वाधा बिना सम्पन्न भयो, यसको लागि वन देवीलाई धन्यवाद भन्दै अब अर्को वर्षको लागि फेरि लिङ्गो लिन आउने छौं भन्ने संकल्पका साथ उक्त पूजा गर्ने गरिन्छ ।[१५]

यःसिं थनेगु इन्द्रजात्राकै एक महत्वपूर्ण र प्रमुख कार्य हो । इतिहास र धार्मिक ग्रन्थहरूमा यसको महिमा र विधि बारे धेरै कुराहरू उल्लेख गरिएको पाइन्छ । 'अथर्वपरिशिष्ट' भन्ने उत्तर वैदिककालीन ग्रन्थमा ध्वजा उठाइसके

१४ बाबुराम आचार्य, *नेपालको सांस्कृतिक परम्परा*, काठमाडौंः श्रीकृष्ण आचार्य (सम्पादक/प्रकाशक), बि.सं. २०५४, पृ. १११ ।

१५ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

पछि त्यसमा गृद्ध, काक, कपोत (परेवा) आदि पक्षीहरू बसे भने अनिष्ट हुने भएकोले शान्ति गर्नु पर्छ भनिएको छ । लिङ्गो ढाल्दा भाँचिएमा, लिङ्गो उठाउने डोरी छिनेमा, पताका झरेमा पनि अशुभ मानिन्छ । लिङ्गोलाई बाजागाजासहित ल्याएर शहरको बाहिर राख्ने र (केही दिन पछि) त्यहाँबाट त्यसरी नै उठाउने ठाउँसम्म पुऱ्याउने भनेर कालिका पुराण र देवी पुराणमा लेखिएको छ ।[१६]

कालिका पुराणमा इन्द्रको मूर्ति तल फेदमा राखेर पुजा गर्ने, इन्द्रकी धर्मपत्नी इन्द्रायणी, सारथी, पुत्र जयन्त, वज्र, बाहन ऐरावत हात्तीलाई पूजा गर्नुपर्ने कुरा पनि उल्लेख छ । लिङ्गो उठाउँदा बाजागाजा सहित हल्ला गरेर उठाउने र ढाल्दा चाहिँ भरणी नक्षत्रको चौथो पाउ पारेर रात्रिमा राजाले नदेख्ने गरी हल्ला नगरी नटुट्ने गरी ढाल्नु पर्छ भनेर पनि लेखिएको छ । 'इन्द्रध्वजाको विसर्जन गर्दा मंगलवार, शनिवार पऱ्यो भने भूकम्प आदि उत्पात भएको बेला विसर्जन नगर्नू । ढालेर गहिरो पानीमा विसर्जन गर्नू' त्यसमा लेखिएको छ ।[१७]

इन्द्रध्वज अर्थात यःसिं विसर्जन गर्दा शाह राजाका राजपुरोहित आफै उपस्थित हुने र लिङ्गोलाई सेलाउनु अघि त्यसमा चामल, टीका र फूल चढाई पूजा गर्ने चलन समेत रहेको कुरा लेखक जेराँ तोफाँले लेख्नुभएको छ ।[१८] उहाँका अनुसार खोलामा सेलाइएको उक्त यःसिं खास गरी पचली भैरवका द्यःपाःलाःहरूले लाने गर्दथे । उक्त यःसिंको एक टुक्रा बालेर त्यसको खरानी पचली भैरवको मन्दिरमा छर्कने चलन पनि थियो । पछि स्थानीय द्यःपाःलाः (पोडे) हरूसँग मानन्धरहरूले यःसिंको काठ किनेर लगी आफ्नो तेल पेल्ने सालमा तोरी पकाउन बाल्ने पनि गरेका थिए ।[१९]

यःसिं सेलाइसके पछि उक्त काठलाई के गरिन्छ भन्ने विषयमा विभिन्न लेखकहरूको फरक मत रहेको देखिन्छ । लेखक कुलचन्द्र कोइरालाले यःसिंको काठलाई त्यहीं बस्ने साधुहरूले लिई धुनी बाल्ने गरिन्छ भनी लेख्नुभएको छ भने अर्का लेखक जेराँ तोफाँले त्यहाँ बस्ने द्यःपाःलाःहरूसँग मानन्धरहरूले किनेर आफ्नो तेल पेल्ने सालमा बाल्ने गरिन्छ भनी

१६ कोइराला, पूर्ववत्, २, पृ. १७ ।

१७ ऐजन ।

१८ तोफाँ, पूर्ववत् १३, पृ. ७८ ।

१९ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

लेख्नुभएको छ । यस सम्बन्धमा बुझ्दा काठमाडौंमा तेल पेल्ने सालहरू त्यति धेरै सञ्चालनमा नभएकोले हाल उक्त यःसिंको काठ किनेर लाने गरेको देखिएन । बरु टेकुमा सेलाइएको यःसिंको काठलाई स्थानीय द्यःपाःलाः र अरु स्थानीयहरूले नै लिएर आफूखुशी उपयोग गरिरहेको पाइयो । यःसिंको काठ पुनर्प्रयोग सम्बन्धमा भक्तपुर लगायत काठमाडौंका अरु विभिन्न स्थानमा उठाउने यःसिंलाई ढालिसके पछि पुनः अर्को वर्ष पनि प्रयोगमा ल्याइन्छ भने इन्द्रजात्रामा उठाइने यःसिं भने जात्रा सकेपछि सेलाउने र अर्को वर्षको लागि नयाँ नै रुख काटेर ल्याउने गरिन्छ ।

शास्त्रीय विधि अनुसार इन्द्रध्वजा राजदरवारको मूल ढोका अगाडि खडा गरिने भएकोले राजमहल पनि प्राचीन वास्तुशास्त्रानुसार शहरको मध्य भागमा नै निर्माण गरिन्थ्यो । शास्त्रानुसार शहर निर्माण गर्ने गुणकामदेवले शहरको मध्य भाग अर्थात् दक्षिण कोलिग्रामको उत्तर तथा उत्तरकोलिग्रामको दक्षिणमा खाली रहेको चौरमा इन्द्रध्वजोत्थान गरी शुभाशुभ विचार गरेर त्यसको दक्षिण पूर्वमा आफ्नो राजप्रसाद बनाए । यस पछि इन्द्रजात्राको पर्व पनि व्यवस्थित रूपमा चल्यो । पाटन र भक्तपुरमा इन्द्रजात्राको पर्व चले पनि इन्द्रध्वजोत्थानको ठाउँ शास्त्रसम्मत थिएन भन्ने कुरा थाहा हुन्छ ।[२०]

पहिले पहिलेको यःसिं उठाउने पर्व बारे गौतमवज्र वज्राचार्यका अनुसार - "उहिले रानीपोखरी काठमाडौं शहरको ठीक बाहिर पर्दथ्यो । मल्ल राजाहरू पाहुनाको रुपमा आएका मित्र राष्ट्रका राजाहरूको स्वागत गर्न रानीपोखरीको कुनासम्म आई सत्कार गर्दथे । भोटाहिटीसम्म आई इन्द्रध्वजको स्वागत गर्ने चलनले यस कुराको सम्झना गराउँछ । शक्ति बल्लभको 'इन्द्रध्वजोत्सव' मा पनि शहरको छेउसम्म गएर राजा र भारदारहरूले इन्द्रध्वजलाई सत्कार गरी ल्याउने कुरो लेखिएको छ । मल्लकालमा मल्ल राजाहरू आफै गई इन्द्रध्वजको स्वागत गरी ल्याउँथे । यसरी राजकीय सत्कारपूर्वक शहर भित्र्याइ सो लिंगो हनुमानढोकाको काकेश्वरको मन्दिर नगीचै लिंगो गाड्ने ठाउँनिर राखिन्छ । भाद्रशुक्ल एकादशीको दिन सरकारी अधिकारीहरू रातभरी जाग्राम बस्नुपर्ने नियम छ । भोलिपल्ट भाद्रशुक्ल द्वादशीको दिन शुभमुहूर्तमा राजपुरोहितको निर्देशनअनुसार शास्त्रोक्त विधिपूर्वक लिंगो उभ्याइन्छ । यसै दिनेदेखि इन्द्रजात्रा शुरु हुन्छ । लिंगो उभ्याउने काम मानन्धरहरूबाट हुन्छ ।

२० कोइराला, पूर्ववत्, २, पृ. ५२ ।

यो बाहेक बिस्केटको लिंग आदि उभ्याउने काम पनि मानन्धरहरूबाटै सम्पन्न गर्ने चलन छ । इन्द्रध्वजको मुनि हात्ती चढेको इन्द्रको सुनको सानो प्रतिमा राखिन्छ । मूर्तिकलाको दृष्टिले सो मूर्ति प्रतापसिंहकै समयतिर बनेको प्रतीत हुन्छ । इन्द्रजात्रा सिद्धिसकेपछि आश्विनकृष्ण चतुर्थीको दिन सो लिंगो ढाली बागमतीमा होलाइदिने रीति छ । उहिले यो उत्सव बडो धूमधामसँग सम्पन्न गरिन्थ्यो । इन्द्रध्वज उभ्याउने एक दिन अगाडि भाद्रशुक्ल एकादशीदेखि इन्द्रध्वज नढालेसम्म हरेक रात प्रधानमन्त्री तथा सबै ठूलठूला भारदारहरू हनुमानढोकाको प्रांगणमा हाजिर भएर रातभर जाग्राम बस्नु पर्दथ्यो । यस उत्सवमा उपस्थित भएका भारदारहरूको नाम लेखिएका तात्कालिक कागतबाट यो कुरो ज्ञात हुन्छ । रातभरि प्रांगणमा विभिन्न नाच नचाइन्थे । श्रृंगाररसले भरिपूर्ण भंडिणीको नाच सबभन्दा प्रसिद्ध थियो । लिंगो उभ्याउने बखत श्री ५ को पनि सवारी हुन्थ्यो तथा सरकारी उच्च पदाधिकारीहरूद्वारा हनुमानढोकाको प्रांगण खचिखचाउ हुन्थ्यो ।[२१]

## विभिन्न यःसिंहरू

यँयाः अर्थात इन्द्रजात्रामा जुन 'यःसिं' उठाइन्छ त्यसलाई 'इन्द्रध्वज' मान्न नसकिने तर्क संस्कृतिविद् यज्ञमानपति वज्राचार्यको रहेको छ । उहाँका अनुसार यःसिंको अर्थ 'यःगु सिँ' अर्थात 'मन परेको काठ' हो । जनतालाई मन परेको सिँ भएको कारणले त्यसलाई ठड्याइएको हो । 'यःसिं' लाई जबर्जस्ती खसकरण गरी 'इन्द्रध्वज' बनाइएको भन्ने उहाँको दावी छ । उहाँका अनुसार काठमाडौंमा इन्द्रजात्रा मात्र होइन पाहाँचःऱ्हे जस्तो जात्रामा पनि कंग, भद्रकाली, इन्द्रचोकमा लिङ्गो उठाउने गरिन्छ, त्यसलाई पनि यःसिं नै भनिन्छ, तर 'इन्द्रध्वज' भनिँदैन । ठूला जात्रा पर्वमा जनतालाई त्यसको जानकारी दिन यःसिं उठाउने काठमाडौंको परम्परा नै हो ।[२२]

काठमाडौंको हाँडीगाउँमा पनि हरेक वर्ष इन्द्रजात्रा पर्वकै ताका भाद्रकृष्ण द्वादशीका दिन भुतेश्वरमा लिङ्गो उठाउने परम्परा थियो । हाल यो परम्परा बन्द भइसकेको छ । हाँडीगाउँमा पाहाँचह्रे पर्वमा लिङ्गो उठाउने चलन भने अझै कायम छ ।

२१ वज्राचार्य, पूर्ववत् ४, पृ १७०-१७२ ।

२२ केन्द्रीय मानन्धर संघका सचिव अ.व. ६० का गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

उपत्यकामा लिङ्गो नै उठाएर मनाइने एउटा अर्को महत्वपूर्ण जात्रा भक्तपुरको बिस्केट जात्रा पनि हो । बिस्केट जात्राको लिङ्गोलाई पनि नेपालभाषामा 'यःसिं' नै भनिन्छ । तर संस्कृतमा 'विश्वध्वज' भनिन्छ, 'इन्द्रध्वज' भनिँदैन । 'विश्वध्वज' शब्द नै अपभ्रंश हुँदै 'बिस्काः' बनेको र त्यही बिस्काः नेपालीमा फेरि 'बिस्केट' बन्न पुगेको अनुमान गर्न सकिन्छ । तथापि 'बिस्काः' शब्द कसरी निर्माण हुन गयो भन्ने सन्दर्भमा स्थानीय लोककथा छुट्टै छ । इन्द्रजात्रा र बिस्केट जात्रामा एउटा समानता के पाइन्छ भने यी दुवै जात्राका लागि लिङ्गो लिन जाने चाहिँ एकै ठाउँमा हो । साथै यःसिंको लागि रूख काट्न अपनाउनु पर्ने विधिहरू पनि एउटै हो । इन्द्रजात्राको यःसिं हरेक वर्ष नयाँ ल्याउनु पर्छ भने बिस्केट जात्राको यःसिं पुनः प्रयोग गर्ने गरिन्छ ।[२३]

कोही कोही संस्कृतिविद्हरू बिस्केट जात्रा नै कुनै बेलाको भक्तपुरे इन्द्रजात्रा हो पनि भन्दछन् । भक्तपुरको लिङ्गोलाई पनि 'इन्द्रकूटध्वज' भनी सम्बोधन गरेको पाइन्छ ।[२४]

काठमाडौंको यःसिंलाई इन्द्रध्वज र भक्तपुरको यःसिंलाई विश्वध्वज भनिएतापनि विभिन्न ठाउँका इन्द्रध्वजहरूको अध्ययन गर्दा भक्तपुरको विश्वध्वज पनि इन्द्रध्वज नै हो भन्ने तथ्य तर्कयुक्त देखिन्छ । उपत्यकामा कुनै पनि ठूलो जात्रापर्व सञ्चालन गर्दा इन्द्रध्वजा उठाएर मात्र जात्रापर्व आरम्भ गर्ने प्रचलन रहँदै आएको छ । देवराज इन्द्र स्वर्गका राजा भएका कारणले अरु राजाहरूले प्रतीकका रुपमा इन्द्रलाई नै लिने गर्दछन् । यही कारणले राजाहरूले आफ्नो ध्वजा फहराउँदा त्यसमा इन्द्रकै चिन्ह अंकित गरिएको पाइन्छ । कुनै पनि ठूलो जात्रा पर्वमा राजाले आफ्नो उपस्थिति जनाउन र जनताले राजाप्रति सम्मान प्रकट गर्न प्रतिकात्मक रुपमा इन्द्रकै ध्वजा ठड्याउने गरेको पाइन्छ । 'यःसिं' शब्द इन्द्रध्वज शब्दबाटै निर्माण हुन गएको बारे माथि पनि उल्लेख भइसकेको छ । तसर्थ संस्कृतिविद् यज्ञमानपति वज्राचार्यले यःसिंलाई इन्द्रध्वज होइन यःगुसिँ अर्थात मन परेको काठको रुपमा लिँदै जात्रापर्वहरूमा ठड्याइने यःसिं इन्द्रध्वजको रुपमा होइन

---

२३ अनुसन्धानका क्रममा अवलोकन र स्थानीयहरूको कथन अनुसार ।

२४ तीर्थलाल नःघःभनी (राजभण्डारी), *'भक्तपुरको लिङ्गो जात्रा'*, काठमाडौंः अभिलेख, राष्ट्रिय अभिलेखालय, वर्ष १६, पूर्णांक १६, बि.सं. २०५५, पृ. ४३ ।

कि 'यःगु सिँ'को रुपमा उठाउने गरिन्छ भनी राख्नुभएको तर्क युक्तिसंगत देखिँदैन ।

काठमाडौंको यःसिंमा फहराउने ध्वजालाई नेपालभाषामा 'हलिंपताः' भनिन्छ । 'हलिं' को अर्थ 'विश्व' हो भने 'पताः' को अर्थ 'ध्वजा' । अतः 'विश्वध्वज' को अर्को अर्थ 'हलिंपताः' पनि हुन आउँदछ । विश्वमा फहराउने ध्वजा भएको अर्थमा त्यसलाई विश्वध्वजा भनिएको हो । तर त्यो विश्वध्वजा भने राजाको ध्वजा हो । दुवै ध्वजामा इन्द्रकै चिन्हहरू अंकित गरिएका छन् । त्यसैले 'इन्द्रध्वज' र 'विश्वध्वज' नामले फरक भएता पनि दुवै ध्वजामा इन्द्रकै चिन्ह अंकित हुने भएकोले पनि बिस्केट जात्रा र इन्द्रजात्रा बीच कुनै सम्बन्ध छैन भनेर मान्न सकिँदैन ।[२५]

## उपाकु वने

इन्द्रजात्रामा यःसिं उठाएकै दिन अपरान्हदेखि बेलुकीसम्म काठमाडौंको भित्री शहरमा दिवंगतहरूको सम्झनामा नेवार वज्रयानी बौद्ध समुदायको एक प्रकारको धार्मिक पदयात्रा हुन्छ । यसलाई 'उपाकु वनेगु' भनिन्छ । यो यात्रालाई कतै 'उपाउ वनेगु' भनिएको छ भने कतै 'उपाखा वनेगु'[२६] पनि भनिएको छ । यहाँको संस्कृति नबुझेर केही विद्वानहरूले नेपालीमा 'देश घुम्ने' भनिएता पनि उक्त कथनले गलत अर्थ जनाउने भएकोले यसलाई यसको प्रचलित नाम 'उपाकु वनेगु' नै भन्नु उपयुक्त देखिन्छ ।

त्यही वर्ष दिवंगत भएका व्यक्तिको सम्झनामा उनका आफन्तहरू यो उपाकु जाने कार्यमा सहभागी हुने गर्दछ । उपाकु जाँदा बाटोभरि च्युरीघ्यू राखिएको काँचो माटोको पाल्चा बालेर राख्दै जाने गरिन्छ । यसमा प्रतिदिन एउटाको दरले ३६५ दिनको ३६५ वटै पाल्चा राख्ने गरिन्छ । बाटोमा जति पनि मन्दिर, चैत्यहरू आउँछ ती सबै ठाउँमा पनि पाल्चा राख्दै यो यात्रा अघि बढ्छ । दिवंगतका आफन्तहरू पाल्चा राख्दै जान्छन् भने परिवारका अरु सदस्य तथा नातेदार, साथीभाइहरू धूप बाल्दै स्तोत्र पाठ गर्दै उपाकु जाने चलन छ । विभिन्न बहाःबहीका सदस्यहरू छुट्टै समूह-समूह बनाई स्तोत्र पाठ गर्दै धुपबत्ती बाल्दै उपाकु जाने चलन रहेको पाइन्छ । यस्तै बहाःबहीमा

२५ अनुसन्धानका क्रममा अवलोकन र स्थानीयहरूको कथन अनुसार ।

२६ लुम्बिनी बौद्ध विश्व विद्यालयका पूर्व उपकुलपति प्रा.डा. त्रिरत्न मानन्धरसँग अन्तर्वार्ता ।

बस्ने बौद्ध समुदायका मानिसहरू उपाकु जाने मार्गका टोल टोलमा भेला भई स्तोत्र पाठ गरी बस्ने चलन पनि रहेको पाइन्छ ।

उपाकु जहाँबाट शुरु गर्दा पनि हुन्छ । तर पनि सामान्यतया हनुमानढोका दरवार क्षेत्रबाटै यो आरम्भ गरिन्छ । काठमाडौंको थःने र क्वःने क्षेत्रको कुना काप्चा समेत घुम्ने यसको आफ्नै मार्ग रहेको छ *(नक्सा नं. १)* ।

उक्त वर्ष दिवंगत भएका आफन्तलाई सुखावती भुवनमा वास होस् र राम्रो ठाउँमा पुनर्जन्म होस् भन्ने कामना गरी उपाकु जाने गरिन्छ । नेवार हिन्दूहरू आफ्ना दिवंगत आफन्तलाई बैकुण्ठबास होस् भन्ने कामना गरी गाइजात्रा जाने गर्दछन् भने नेवार बौद्धहरू दिवंगत आफन्तको सुखावती भुवनमा बास होस् भन्ने कामना गरी इन्द्रजात्रामा उपाकु जाने गरेको पाइन्छ ।

इतिहासकार प्रा. डा. त्रिरत्न मानन्धरका अनुसार 'उपाकु' को खास अर्थ 'उपाखा उले' हो । 'उपाखा' अर्थात बाहिरी क्षेत्र, 'उले' अर्थात घुम्ने । 'उपाखा उले' नै अपभ्रंश भएर 'उपाकु वने' हुनगएको हो । यसमा नगरको बाहिरी क्षेत्र घुम्ने काम हुन्छ । गाइजात्रामा नगरको भित्री क्षेत्र परिक्रमा गरिन्छ भने इन्द्रजात्रामा बाहिरी क्षेत्र परिक्रमा गरिन्छ । गाइजात्रामा थःने र क्वःने भनी नगरको भित्री क्षेत्र मात्र घुम्ने गरिन्छ । इन्द्रजात्रामा भित्री र बाहिरी दुवै क्षेत्र घुम्ने काम हुन्छ । इन्द्रजात्राको चतुर्दशीका दिन भित्री शहर घुम्ने काम हुन्छ भने द्वादशिका दिन बाहिरी नगर घुम्ने काम हुन्छ । उपाकु त्यही बाहिरी शहर घुम्ने कार्य हो ।[२७]

इतिहासकार त्रिरत्न मानन्धर उपाकुको मार्गलाई पुरानो काठमाडौंको सिमाना नै मान्नुहुन्छ ।[२८] इतिहासकार महेशराज पन्त पनि उपाकुलाई पुरानो काठमाडौंको सीमा मान्नुहुन्छ । उहाँले आफ्नो एउटा लेखमा लेख्नुभएको छ - '....मरेको वर्ष दिन नपुगेका आफ्ना नातेदारहरूको सम्झनामा काठमाडौं शहरका वासिन्दाहरू नेवारीमा उपाउ वनेगु र नेपालीमा देश घुम्ने भनी वामनद्वादशीका दिन अर्थात् भाद्रशुक्ल द्वादशीको दिन जहाँ जहाँ जान्छन्, त्यहाँ त्यहाँसम्म काठमाडौं शहर मल्लकालमा फैलिएको थियो भन्ने बुझिने भएकोले यो देश घुम्ने चलन कति पुरानो हो भनी निर्क्यौल्न म लागेको

२७ पूर्ववत् २६ ।
२८ ऐजन ।

थिएँ ।'[२९] लेखक पन्तका अनुसार उपाकु जाने चलन कति पुरानो हो र यसको शुरुवात कहिले भयो भन्ने पनि अस्पष्ट नै छ ।

संस्कृतिविद् डा. चुन्दा वज्राचार्य भने उपाकु जाने मार्गलाई पुरानो काठमाडौंको सिमाना मान्नुहुन्न । उहाँका अनुसार उपाकु घुम्ने मार्गले एउटा बौद्ध चैत्यको आकार ग्रहण गरेको छ । जहाँबाट उपाकु घुम्न शुरु गरिएको हो घुमेर त्यहीँ समापन गरी हेर्‍यो भने त्यहाँ एउटा चैत्यको रूप निस्कन्छ । डा. वज्राचार्यका अनुसार अहिले विभिन्न ठाउँका स्थानीय वासिन्दाले आफू बसेको टोलतिर पनि रुटलाई तान्दै-घुमाउँदै लगेका कारण यसले ग्रहण गर्ने चैत्याकार बिटुलिन गएको हो । अहिले यो मार्ग विकृत भइसकेको छ ।[३०]

तर प्रा. सुवर्ण शाक्यका भनाईमा उपाकुको रुट चैत्य आकारमा घुम्ने होइन, यो घुमे पछि चैत्य घुमे जत्तिकै पुण्य मिल्छ भनेको मात्रै हो । उहाँ पनि उपाकुको रुटलाई पुरानो काठमाडौं नगरको सिमाना नै मान्नुहुन्छ ।[३१]

अर्का संस्कृतिविद् यज्ञमानपति वज्राचार्यका अनुसार पनि उपाकुको बाटो पुरानो काठमाडौंकै सिमाना नै हो । पुरानो काठमाडौंको सिमाना खड्गाकार भएकोले उपाकु पनि खड्गाकार भएरै घुम्ने गरिन्छ ।[३२]

उहाँको भनाईमा यही बेला ३६५ लोकेश्वर र भैरवहरू निस्किने भएकोले दिवंगतहरूका नाममा बत्ती दिन (मत बीगु) उपाकु घुम्ने हो । यो गाइजात्रा भन्दा पनि पुरानो संस्कृति हो । भैरवहरू निस्किने भएकोले देश पूरै घुमे पछि सबै भैरवलाई घुमिने भयो । त्यसैले ती देवदेवीहरूलाई बत्ती दिन उपाकु घुम्ने गरिएको हो ।[३३]

लेखक मेरी स्लसरले उपाकु घुम्ने यो रुट पुरानो काठमाडौंको सिमाना हुँदै परिक्रमा गर्ने दावी आफ्नो पुस्तक 'नेपाल मण्डल' मा गर्नुभएको छ । उहाँका अनुसार पुरानो काठमाडौंलाई मल्ल राजाहरूले सुरक्षाका लागि पूरै पर्खालले घेरेर राखेका थिए । ओल्डफिल्डका अनुसार ती पर्खालका बीच बीचमा सबै ठाउँ गरी ३२ वटा ढोकाहरू बनाइएका छन् । इन्द्रजात्राका

---

२९ महेशराज पन्त, 'पिशाचचतुर्दशी/घोडेजात्राको विषयमा', पूर्णिमा, संशोधन मण्डल, काठमाडौं: वर्ष २२, अंक ३, वि.सं. २०५१, माग, पृ. २६ ।

३० संस्कृतिविद् डा. चुन्दा वज्राचार्यसँग अन्तर्वार्ता ।

३१ ऐजन ।

३२ काठमाडौं वडा नं. २३ सिख्वंमू बहाःका बौद्ध विद्वान यज्ञमानपति वज्राचार्यसँग अन्तर्वार्ता ।

३३ ऐजन ।

बेला उपाकु घुम्ने भनेको त्यही पर्खालको सँगसँगै घुम्ने हो । मल्ल राजाहरूले बनाएको त्यो पर्खाललाई गोर्खाली राजा पृथ्वीनारायण शाहले काठमाडौं आफै एउटा किल्ला जस्तो नगर हो भनी पछि भत्काएर पठाएको देखिन्छ । तथापि त्यसको कुनै अवशेष भने अहिले पाइएको छैन तर पनि ती पर्खालका बीच बीचमा बनाएका ३२ मध्ये १९ वटा ढोकाको अवशेष मैले भेट्टाएको छु । मल्लकालमा ती ढोकाभन्दा भित्रको क्षेत्रलाई 'ध्वाखा दुने' र बाहिरी क्षेत्रलाई 'ध्वाखा पिने' भन्ने चलन थियो । मल्लकालमा अछूत मानिएको पोडे जातिको वस्ती 'ध्वाखा पिने' नै रहने गर्दथ्यो । अहिले भने यस्तो बन्देज हटिसकेको छ । त्यसैले उपाकु घुम्न जाँदा यसको धेरै बाटो पुरानो पोडे टोलहरूबाटै जाने गर्दछ । राणा शासकहरूले धेरै वस्ती उठाएका कारण उपाकुको रुट अहिले धेरै ठाउँमा बिग्रिसकेको पाइन्छ । पूरा एक चक्कर उपाकु घुम्न करिब दुई घन्टा जति लाग्छ । पुरानो काठमाडौंको आकार उत्तर-दक्षिण एकदेखि डेढ माइल र पूर्व-पश्चिम आधा माइल भन्दा कम मात्र रहेको छ । केन्द्रमा रहेको दरवार स्क्वायरबाट यसको सबैभन्दा टाढाको सीमासम्म पुग्न पनि पैदल १० मिनेट भन्दा बढी लाग्दैन । यसरी नगरको सीमा क्षेत्र हुँदै उपाकु जानुको अर्थ दिवंगतको आत्मालाई मानव वस्ती रहेको लोक छोडेर अर्को लोक जाने बाटो देखाउनु हो । वेदमा यस्तो कार्यको लागि 'प्रदक्षिणा मार्ग' घुम्ने भनेर लेखिएको छ ।[३४]

उपाकुमा विशेष गरी बौद्ध धर्मावलम्बी नेवार समुदाय मात्रै सहभागी हुने गर्छन् । अहिले भने यसमा हिन्दू नेवार पनि उतिकै श्रद्धापूर्वक सहभागी हुन थालेका छन् । यदि हनुमानढोका दरवार क्षेत्रबाट उपाकु घुम्न शुरु गरेको हो भने टेबहाल पुग्दा यसको आधाउधी यात्रा सकिन्छ । त्यसैले टेबहाल भित्र एकछिन आराम लिई 'पालं यायेगु' भनी आफूसँग ल्याएको केही खानेकुरा खाने गरिन्छ । तर अहिले बाटोमा खाँदै जाँदा पनि हुने भएकोले टेबहालमा रोकेर खाने चलन हराएको छ । उपाकु यात्रा आफूले जहाँबाट शुरु गरेको हो त्यही ठाउँमा पुगे पछि समाप्त हुन्छ ।

उपाकु परिक्रमा गर्ने मार्गका बारे विभिन्न लेखकहरूले प्रस्तुत गरेका अवधारणाहरू एक आपसमा विरोधाभास देखिन्छ । लेखक मेरी स्लसरले

---

३४ Mary Shepherd Slusser, *Nepal Mandala (v. 1)*, Kathmandu: Mandala Book Point, 1998, p. 92-93.

काठमाडौंको पुरानो सीमामा पर्खाल लगाइएको र त्यसैको छेउछाउबाट उपाकु घुम्ने कुरा लेख्नुभएको छ । तर काठमाडौंमा त्यस्ता सीमा पर्खालहरूको अवशेषहरूको पुरातात्विक प्रमाणहरू भेटिँदैन । काठमाडौंका विभिन्न स्थानहरूमा ढोकाहरू थिए तर पर्खाल रहेको भने पाइँदैन । यदि थियो भने अहिले पनि त्यसको अवशेष कहीं न कहीं भेटिनु पर्ने हो । केवल २५० वर्षको अवधिमा त्यत्रो पर्खालको अवशेष समेत नभेटिने गरी नष्ट हुने सम्भावना कम हुन्छ । लेखक स्लसरले किल्ला वास्तुकलाको परिकल्पना गरी सो आधारमा काठमाडौं शहरको सीमा निर्माण भएको अनुमान गर्नुभएको देखिन्छ । तर काठमाडौंमा उहाँले परिकल्पना गर्नुभए जस्तो किल्ला वास्तुकलामा आधारित सीमा पाइँदैन । अहिले उपाकु घुम्ने गरिएको मार्गले स्लसरले भन्नुभए जस्तो पुरानो काठमाडौं राज्यको सीमा क्षेत्रलाई पूर्ण रुपमा समेटेको पनि पाइँदैन । पृथ्वीनारायण शाहले काठमाडौंमा शासन गरिसकेपछि उपाकु जाने सांस्कृतिक मार्गलाई व्यापकै परिवर्तन गरेको पनि पुष्टि हुँदैन । स्लसरको यही मान्यताका आधारमा नेपालका धेरै संस्कृतिविद्हरूले पनि उपाकु भनेको काठमाडौंको पुरानो सीमा नै हो भनी मानेका छन् । तर उहाँहरूले भन्नुभए जस्तै उपाकु यात्रामा काठमाडौंको पुरानो सीमा घुम्ने भन्ने तर्क युक्तिसंगत देखिँदैन ।

त्यस्तै उपाकु जाने अहिलेको मार्गलाई नक्सा बनाएर हेर्दा त्यहाँ कुनै चैत्य आकार आएको पनि देखिँदैन, खड्ग आकार लिएको पनि देखिँदैन । त्यसैले उपाकु मार्गले चैत्य आकार लिने भन्ने डा. चुन्दा वज्राचार्यको तर्क र खड्ग आकार लिने भन्ने यज्ञमानपति वज्राचार्यको तर्कको पनि उपयुक्त आधार देखिँदैन ।

उपाकु जाने मार्ग वास्तवमा कुमारी यात्रा चलाइने काठमाडौंको थःने र क्वःने क्षेत्र मात्रै हो भन्ने देखिन्छ । कालान्तरमा विभिन्न क्षेत्रका स्थानीय प्रभावशाली मानिसहरूले यो यात्रालाई आफूतिर पनि तान्दै लगेकोले यो मार्ग परिवर्तन हुँदै गएको हुनुपर्दछ । अहिले पनि उपाकु मार्ग परिक्रमा गर्न जाँदा टेबहालबाट सिधा गणबहाल जाने मार्गलाई केही दशक अघि मात्रै परिवर्तन गरी बागदरवार भित्र पनि घुमाउन थालिएको देखिन्छ । त्यस्तै भोटेबहाल क्षेत्रमा पनि स्थानीयहरू मिली उपाकु मार्गलाई आफ्नो टोल भित्रका अन्य स्थानमा लगेको पाइन्छ । श्री कुमारीको रथयात्रालाई समेत आफ्नो एकजना प्रेमिकालाई देखाउन मल्ल राजा जयप्रकाश मल्लले एक

दिन थपेर नानीचायाःको नयाँ मार्ग बनाएको दृष्टान्तलाई हेर्ने हो भने उपाकु मार्गलाई स्थानीय प्रभावशाली व्यक्तिहरू तथा भाइभारदारहरूले आफूखुशी आफ्ना ठाउँमा घुमाउन मार्ग परिवर्तन गर्नु कुनै गाऱ्हो कार्य होइन भन्ने प्रस्टै बुझिन्छ।

यी तथ्यहरूको अध्ययन गर्दा प्रारम्भमा उपाकु जाने भनेको काठमाडौंको थःने-क्वःने र लायूकू क्षेत्रमा मात्रै हो तर कालान्तरमा यो मार्ग परिवर्तन हुँदै गइरहेको अनुमान गर्न सकिन्छ। थप ऐतिहासिक प्रमाणहरूको लागि भने यस बारे अझै विस्तृत अध्ययन अनुसन्धान गर्न आवश्यक देखिन्छ। यदि उपाकु परिक्रमा भिमसेनस्थानबाट शुरु गऱ्यो भने यसको घुम्ने मार्ग यस प्रकार हुन्छ : भिमसेनस्थान – भिंद्यः हिटी – कोप्राक्यब – सुन्तागल्ली – पाछै गल्ली – तुंछे गल्ली – कुलांभलु (रक्तकाली) – छत्रपाटी – स्वांछ्पु गणेश – थँहिटी – ज्याठा – छुस्याबहाः – इनबहाः – भोटाहिटी – तूक्यब – महाबौद्ध – भोंसिको – दुगंबही – न्यूरोड गेट – टेबहाल – सुन्धारा – धरहरा – बागदरवार – भोटेबहाल – गणबहाल – लगन – नायूपाचो – सबलबहाल – इनाखा – चल्खु – वन्दे – ह्यूमत – जैशी देवल – कोहिटी – भिमसेनस्थानमा पुगी समापन।

यस्तै काठमाडौंमा इन्द्रजात्रामा उपाकु घुम्ने चलन काठमाडौंको पुरानो शहर हाँडीगाउँ र ग्वल (देवपतन) मा पनि रहेको पाइन्छ।

## कुमारी सालेगु (श्री कुमारी रथयात्रा)

इन्द्रजात्राको सबैभन्दा महत्वपूर्ण पक्ष श्री कुमारीको रथयात्रा हो। आठ दिनसम्म चल्ने इन्द्रजात्रामा तीन दिन भने श्री कुमारीको रथ यात्रा गरिन्छ। यी तीन दिन जति रौनक र उल्लासमय हुन्छ त्यो अरु दिनमा भएको देखिँदैन। श्री कुमारीको रथयात्रा हनुमानढोका दरवार परिसरको कुमारी घर अगाडिबाट आरम्भ हुन्छ।

नेपालमा अरु देवीदेवताको पनि रथयात्रा हुन्छ तर श्री कुमारीको रथयात्रा भने अरु भन्दा फरक र राष्ट्रिय महत्वको छ। कुमारी एक जीवित देवी हुनुहुन्छ। इन्द्रजात्रामा रथयात्रा गर्दा जीवित देवीलाई नै रथमा विराजमान गराई यात्रा चलाउने गरिन्छ। यसका साथसाथै श्री कुमारीसँग नै जीवित देवताका रुपमा श्री गणेश र श्री भैरवलाई पनि अलग अलग नै रथमा

विराजमान गराई यात्रा चलाइन्छ । गणेश कुनै पनि शुभकार्यमा सबैभन्दा पहिले पूजा गर्नुपर्ने देवता हुन् भने भैरवलाई रक्षकका रुपमा पनि लिइने गरिन्छ ।

इन्द्रजात्रामा तीन दिन मात्रै श्री कुमारीको रथयात्रा गरिने भए पनि त्यसको तयारी भने केही दिन अगाडिदेखि नै भइरहेको हुन्छ । श्री कुमारीको चिताइदार सदस्य एवं कुमारी संस्कृति बारे अध्ययन गर्नुभएकी दुर्गा शाक्यका अनुसार इन्द्रजात्रा आउनुभन्दा ११ दिन अघिदेखि नै बसन्तपुरको कुमारी घरमा यसको विधि शुरु भइसकेको हुन्छ । चथाः पर्वका दिन कुमारी घरमा रहेको गजूर र पताःको बुसादँ[३५] गरिन्छ । त्यसको भोलिपल्टदेखि कुमारी घरमा गुठी संस्थानको एउटा कार्यालय नै खडा गरी लाखामरि, अँयूथा मरि[३६] लगायतका मिठाईहरू पकाउन शुरु हुन्छ । भाद्रशुक्ल एकादशीका दिन सरकारका तर्फबाट श्री कुमारी लगायत श्री गणेश र श्री भैरवलाई इन्द्रजात्रा पर्वका लागि निमन्त्रणा पठाउने कार्य हुन्छ । यसको लागि श्री कुमारीका लागि कुमारी घरमै र श्री गणेश तथा श्री भैरवका लागि उहाँहरूको घर घरमै गई पूजा गरिन्छ । द्वादशी अर्थात यःसिं उठाउने दिन कुमारी घरमा पकाइएका कलात्मक एवं सांस्कृतिक महत्व भएका सबै मिठाईहरू प्रदर्शन गरिन्छ । साँझ श्री गणेश र श्री भैरवलाई पनि कुमारी घरमा ल्याई अघि प्रदर्शन गरिएका मिठाईहरू राखी वज्राचार्य गुर्जुद्वारा पुजा गरिन्छ । बेलुकी तीनैजना जीवित देवीदेवताहरूलाई खटमा राखी तलेजु मन्दिर लगिन्छ र मन्दिर भित्रै लगी तलेजुका आचार्यबाट सामूहिक पूजा गरिन्छ ।[३७]

त्रियोदशीको दिन बसन्तपुरमा कुमारी तान्न सहयोग गर्नेहरू सबैलाई भोज ख्वाउने गरिन्छ जसलाई 'बलंभ्वय्' भनिन्छ । यसलाई कुमारी जात्रामा सहयोग गर्ने रकमीहरूलाई ख्वाउने भोज पनि भनिन्छ ।[३८]

चतुर्दशीका दिन कुमारी रथयात्राको पहिलो दिन भएको र स्वयम् राष्ट्रप्रमुख उपस्थित भई पूजा अर्पण समेत गर्ने भएकोले उक्त दिनलाई मुख्य दिनको रुपमा लिइन्छ । उक्त दिन कुमारी घरमा बिहानै राजगुर्जु सहित पञ्चबुद्धका प्रतीकका रुपमा अन्य पाँच जना वज्राचार्य गुर्जुहरूद्वारा श्री

३५ वार्षिक उत्सव ।

३६ लाखामरी जस्तै एक प्रकारको मीठाइ ।

३७ पूर्ववत् १ ।

३८ ऐजन ।

कुमारीको गोप्य पुजा हुन्छ । त्यसपछि जात्राका लागि श्री कुमारीलाई तयार गर्ने कार्य हुन्छ । त्यतिन्जेलसम्म श्री गणेश र श्री भैरवलाई पनि उहाँहरूको घर घरदेखि नै खटमा राखी कुमारी घर पुऱ्याइसकेको हुन्छ । दिउँसो रथमा विराजमान हुनु अघि आचाजुबाट तीनै जना देवीदेवताको पूजा हुन्छ । यो नेपाल सरकारका तर्फबाट दिइने पूजा हो ।[३९]

इन्द्रजात्रा भाद्रशुक्ल द्वादशीका दिन शुरु हुन्छ भने भाद्रशुक्ल चतुर्दशीका दिन श्री कुमारीको रथयात्रा चलाइन्छ । बसन्तपुरमा रथयात्रा आरम्भ गर्दा राष्ट्रप्रमुख लगायत सरकारका विशिष्ट पदाधिकारीहरू र विदेशी कुटनीतिक नियोगका पदाधिकारीहरू पनि जात्रामा उपस्थित हुन्छन् । उहाँहरूबाट बसन्तपुरमै रहेको गद्दी बैठकमा बसी जात्रा अवलोकन गरिन्छ । कुमारी यात्रा शुरु हुनुभन्दा अघि गद्दी बैठकबाटै राष्टप्रमुखले श्री कुमारीलाई पूजा पठाउने गरिन्छ । उक्त पूजा श्री कुमारीलाई चढाइसके पछि गद्दी बैठकमै राष्ट्रप्रमुखलाई कुमारीको प्रसाद लगिन्छ । त्यस पछि गुर्जुको पल्टनले भरुवा बन्दुक पड्काउँछ र कुमारीको रथयात्रा आरम्भ हुन्छ ।[४०] रथयात्रा शुरु हुने बित्तिकै गद्दी बैठकमा बसी जात्रा अवलोकन गरिरहेका राष्ट्रप्रमुख लगायत अन्य विशिष्ट व्यक्तिहरूले सिक्का चढाउने गर्दछन् ।

पहिले पहिले भने कुमारीको रथयात्राको पहिलो दिन राजा जयप्रकाश मल्ल घोडा चढेर रथयात्राको पछि पछि हिँड्ने गर्दथे भने राणाकालमा राणा प्रधानमन्त्री एवं अरु विशिष्ट व्यक्तिहरू पनि हात्ती चढेर रथको पछि पछि परिक्रमा गर्दथे ।[४१] वि.सं. २००७ को राजनीतिक परिवर्तन पछि यो चलन हटेको देखिन्छ ।

उक्त दिन काठमाडौंको क्वःने लागा अर्थात तल्लो क्षेत्रमा रहेका टोलहरू भुतिसः, चिंकमुगल, अट्कोनारायण, मजिपाट, न्हूघः, ज्याबहाः, लगन, गोफल, ब्रह्मटोल, ह्यूमत, तुकंबहाः, जैसी देवल, कोहिटी, भिमसेनथान, बिच्छेबहाः, क्वपुंतुं र सिंहसत्तल हुँदै पुनः बसन्तपुरमै ल्याई समापन गरिन्छ *(नक्सा नं. २)*। रथयात्रा समापन भए पछि गुर्जुको पल्टनले तोप पड्काई बढाइँ गरिन्छ । रथयात्रामा सरकारको गुर्जु पल्टन लगायत नायूखिं, धिमे, खिं

३९ पूर्ववत् १ ।

४० ऐजन ।

४१ बद्रीलाल श्रेष्ठ, *'नेपालय् कुमारी जात्राया परम्परा'*, कुमारी, अंक २९९, काठमाडौंः कुमारी प्रकाशन, ने.सं. ११२१, पृ. १३३ ।

आदि विभिन्न बाजागाजाहरू समावेश हुन्छन् । त्यसैमा लाखे र पुलुकिसिको आकर्षक तथा उत्तेजक नाचले जात्रालाई अझ उल्लासमय बनाइदिएको हुन्छ। तल्लो भेगमा रथ तान्ने दिनलाई 'क्वःनेयाः' भनिन्छ । यो दिन किलागलबाट निकालिने दीप्याखं जैशी देवल अगाडिको डबलीमा नचाइन्छ ।[४२]

रथ तान्दा रथको माथि बसेर एकजनाले ह्‌स्ते....भन्दै जोड लगाउँछन् भने डोरी समाएर बसिरहेका सर्वसाधारणले हाँइ्‌स्ते....भन्दै रथ तानेर अघि बढाउँछन् । रथमा बसेर ह्‌स्ते...भन्ने व्यक्तिलाई महाने भनिन्छ । रथ अघि बढेपछि श्री कुमारीको रथ अगाडि मन्त्रोच्चारण गर्दै पञ्चबुद्धको प्रतीकको रूपमा पाँच जना वज्राचार्य गुर्जुहरू पनि सहभागी हुन्छन् । वज्राचार्य गुर्जुहरूले कुमारीको रथयात्रा हुँदा बाटोमा कुनै किसिमको विघ्न वाधा नहोस् र कुनै खराब तत्व आई बसेको छ भने त्यो पनि हटेर जाओस् भन्ने कामना सहित स्तोत्र पाठ गरिन्छ ।[४३]

रथयात्रा अघि बढ्दै जाँदा विभिन्न टोलमा भक्तजनहरूले पूजा अर्पण गर्ने गर्दछन् र उक्त पूजा ग्रहण गर्दै रथयात्रा अघि बढाउने गरिन्छ । कुमारीको रथ तान्ने दिनमा कुमारीको रथ परिक्रमा गरिने क्षेत्रहरू थःने र क्वःनेतिर दिवंगत व्यक्तिका आफन्तहरूले च्यूरीघ्यू राखिएको पाल्चा बालेर ठाउँ ठाउँमा भुइँमा राख्दै उपाकु जाने गर्दछ ।[४४] रथयात्रा समापन गरी कुमारी घर फिर्ती भए पछि कुमारी घरमा राजगुर्जुबाट सगं (सगुन) दिने गरिन्छ ।[४५]

रथयात्रा सकिने बित्तिकै मरुटोलको छ्वासपाखाबाट दागिं निकालिन्छ । दागिं पछि बौमत निकालिन्छ । दागिं र बौमत बारे अर्को अध्यायमा छुट्टाछुट्टै चर्चा गरिएको छ ।

भोलिपल्ट भाद्रशुक्ल पूर्णिमाको दिन काठमाडौंको थःने लागा अर्थात माथिल्लो क्षेत्रका टोलहरूमा श्री कुमारी लगायत तीन वटै रथको यात्रा चलाइन्छ । वसन्तपुरबाट प्याफल, यट्खा, नरदेवी, टेंगल, न्ह्यःखा, थायूमरु (बांगेमुढा), न्हैंकन्तला, असन, किसिध्वाका, बालकुमारी, केल, इन्द्रचोक, मखन, हनुमानढोका हुँदै पुनः वसन्तपुरमै पुऱ्याई उक्त दिनको रथयात्रा समापन गरिन्छ *(नक्सा नं. ३)* । यस दिन पनि रथयात्रा अघि बढ्दै जाँदा विभिन्न

४२ अवलोकन ।

४३ ऐजन ।

४४ ऐजन ।

४५ ऐजन ।

टोलमा भक्तजनहरूले पूजा अर्पण गर्ने गर्दछन् र उक्त पूजा ग्रहण गर्दै रथयात्रा अघि बढाउने गरिन्छ। माथिल्लो भेगमा रथयात्रा गरिने यो दिनलाई 'थःनेयाः' भनिन्छ। यस दिनको रथयात्रामा भने राष्ट्रप्रमुख तथा कुटनीतिक नियोगका पदाधिकारीहरू सहभागी हुनु पर्दैन।

श्री कुमारीको रथयात्रा हुँदा रथको अगाडि पछाडि लाखे र पुलुकिसि नाचिरहेका हुन्छन्। श्री कुमारीको रथयात्रा शुरु हुने बित्तिकै दशअवतार प्रदर्शन गरिन्छ। उक्त दिन बांगेमुढा र त्यसपछि इन्द्रचोकको डबलीमा दीप्याखं नचाइन्छ।[४६]

थःनेयाः सकिएको भोलिपल्ट श्री कुमारीको हातबाट गौदान गरिन्छ। यसको लागि बसन्तपुरमा कुमारी घरको सामुन्ने रहेको डबलीको मन्डपमा आचाजुद्वारा पूजा हुन्छ। गौदानको लागि त्यहाँ ल्याइएको गाईलाई डोरीले बाँधेर त्यसको टुप्पो कुमारी घरको झ्यालबाट माथि लगी भित्र बिराजमान श्री कुमारीको हातमा थमाइएको हुन्छ। श्री कुमारी बाहिर आउन नमिल्ने भएकोले त्यसरी डोरीको सहायताले घर भित्रैबाट गौदान गरिएको हो। जात्राका क्रममा कुनै खालको तलबितल परेको भए त्यसको कुनै असर नहोस् भनी गौदान गरिएको मानिन्छ।[४७] गौदान गर्ने परम्परा हिन्दू धर्ममा आधारित परम्परा हो।

त्यसको पनि भोलिपल्ट बसन्तपुरमा रोकिराखिएको खाली रथमा कानफट्टा जोगीहरू आई गणचक्र पूजा गरिन्छ। रथको सामुन्ने रहेको घःमाः (लामो काठ) मा अगाडि नै राखिएको भैरवको मुकुण्डोलाई बोका बलि दिई उक्त पूजा गरिने हो।[४८]

थःनेयाःको चार दिन पछि अर्थात भाद्रकृष्ण चौथीका दिन श्री कुमारीको 'नानीचायाः' गरिन्छ। यस दिन नानीचायाः हुँदा पनि गुह्य पूजा र सरकारी पूजा दुवै गरिन्छ। यो दिन श्री कुमारी लगायत तीन वटै रथलाई माथिल्लो भेगको बीच बाटोमा पर्ने नरदेवी-किलागल टोलबाट परिक्रमा गराइन्छ *(नक्सा नं. ४)*। किलागल टोलनिर राजा जयप्रकाश मल्ललाई अत्यन्त मन पर्ने कुनै एकजना नानी (अघोषित रानी) बस्ने भएकोले उनैलाई देखाउन

---

४६ अवलोकन।
४७ पूर्ववत् १।
४८ अवलोकन।

इन्द्रजात्राको अन्तिम दिन रथयात्रा नै थपेर यो जात्रा चलाएको विश्वास गरिन्छ । राजाकी नानीको घरतिरबाट यात्रा चलाउने भएकोले यो यात्रालाई नै 'नानीचायाः' भनिएको हो ।

नानीचायाःसँग सम्बन्धित यी 'नानीचा' वास्तवमा जयप्रकाश मल्लले दरवार बाहिर राखिएकी दयावती नामक रखौटी हुन् भन्ने अनुमान इतिहास शिरोमणि बाबुराम आचार्यले गर्नुभएको छ । जयप्रकाश मल्लकी रानी जयलक्ष्मीको पतन पछि यिनलाई बाहिर राखिएको अनुमान छ । दयावती नामकी यी रखौटीले पनि वास्तवमा जयप्रकाश मल्ललाई धोका दिएको कुरा इतिहासमा उल्लेख छ । जयप्रकाशका शत्रु काजी गरुडसिं भडेलसँग यिनी मिलेकी थिइन् । जयप्रकाश मल्लले आफ्ना दुश्मनहरू सफाया गर्ने क्रममा दयावतीलाई पनि दुष्टिनी ठहराई आफ्ना स्वामीलाई त्याग गरी दुष्ट काजीसँग सुखक्रीडा गरी सत्य छाडी परपुरुष तुल्याएको भनी बन्धनमै राखी मारेका थिए ।[४९]

उक्त दिन बसन्तपुरबाट रथ तानी यट्खा, त्यंघः, किलाघः, वंघः (इन्द्रचोक), मखन हुँदै पुनः बसन्तपुरमै ल्याई जात्रा समापन गरिन्छ । यो दिन श्री कुमारी, श्री गणेश र श्री भैरव तीन वटै रथ महिलाहरूले मात्रै तान्ने चलन केही वर्ष अघिदेखि शुरु भएको छ । केही वर्ष अघि यो चलन शुरु गर्दा नरदेवीदेखि किलागल टोलसम्म मात्रै महिलाहरूले रथ तान्ने गरिएको थियो । त्यति बेला श्री कुमारीको रथ मात्रै महिलाहरूले तान्ने गरिएकोमा हालैका वर्षमा भने बसन्तपुरदेखि तीन वटै रथ महिलाहरूले मात्रै तानेर जात्रा सम्पन्न गर्दै आइरहेको छ ।[५०] तर केही संस्कृतिविद्हरूले भने यसलाई नयाँ परम्पराभन्दा पनि संस्कृतिमा आएको विकृतिका रूपमा पनि लिने गरेको पाइन्छ ।

जात्रा समापन भए पछि बेलुका राष्ट्राध्यक्ष कुमारी घरमा सवारी भई श्री कुमारीको हातबाट टीका ग्रहण हुन्छ । साथै कुमारी घरमै श्री गणेश र श्री भैरवबाट पनि टीका ग्रहण हुन्छ । राष्ट्रपतिबाट टीका ग्रहण भइसके पछि मर्यादाक्रम अनुसार अन्य विशिष्ट व्यक्तिहरूबाट पनि टीका ग्रहण हुन्छ ।[५१]

पहिले पहिले नानीचायाःको दिन टीका ग्रहण गर्न राजा आउँदा कुमारीलाई

४९ बाबुराम आचार्य, *श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी*, ललितपुरः साझा प्रकाशन, वि.सं. २०६१ (दोश्रो संस्करण), पृ. २२० ।

५० अवलोकन ।

५१ पूर्ववत् १ ।

एक रुपैयाँको असर्फी प्रदान गर्ने गर्दथे (जुन कुमारीको ढुकुटीमा दाखिला हुन्थ्यो) । त्यसपछि कुमारीले राजालाई देब्रे हातबाट टीका लगाइदिने गर्दथे । दाहिने हातबाट सर्वसाधारणलाई टीका लगाउने भएकाले राजालाई देब्रे हातबाट लगाउने गरिन्थ्यो । टीका ग्रहण गर्न राजासँगै रानी आउने चलन भने थिएन ।[५२]

टीका ग्रहण गरी राष्ट्राध्यक्ष फर्किसके पछि तोकिएको साइतमै हनुमानढाको दरवार क्षेत्रमा ठड्याइएको यःसिं ढालेर टेकू दोभानमा लगी सेलाइन्छ । त्यसपछि त्यो वर्षको इन्द्रजात्रा विधिवत् रूपमा समाप्त हुन्छ ।[५३]

कुमारीको रथ देवयानको रूपमा बनाइएको हुन्छ । रथमा ठूला चारवटा पाँग्राहरू हुन्छन् । ती पाँग्राहरूलाई भैरवका रूपमा लिइन्छ । त्यसैले हरेक पाँग्रामा भैरवका प्रतीकका रुपमा तीन वटा ठूला आँखा लेखिएका हुन्छन् । रथको अगाडि एउटा लामो काठको सत्तरी राखिएको हुन्छ जसलाई द्यःमासिँ भनिन्छ । उक्त द्यःमासिँको अगाडि भैरवको मुकुण्डो राखिएको हुन्छ । रथको माथि देवता विराजमान गराउने गजुर सहितको प्यागोडा मन्दिर शैलीको देवकक्ष हुन्छ, त्यसको चारैतिर बरण्डा जस्तो बनाइएको हुन्छ । गणेश र भैरवको रथ एकतल्लेको हुन्छ भने कुमारीको रथ दुई तल्ले हुन्छ । बसन्तपुरमा रथ राख्दा रथको माथि एउटा कपडाको झल्लर जस्तो राखिएको हुन्छ जसलाई इलां भनिन्छ । त्यो इलां लायकूसाःका मानन्धरहरूले राख्ने चलन छ ।

इन्द्रजात्रा चलिरहँदा बीचमा ठूलो भूकम्प आयो भने जात्रा रोकी पुनः शुरुदेखि नै चलाउनु पर्ने परम्परा छ । जात्राका बेला भूकम्प आउनुलाई अपशकुन मानिन्छ । त्यसैले भूकम्प आएको दिनलाई पहिलो दिन मानी पुनः शुरुदेखि नै जात्रा चलाउनु पर्ने हुन्छ । जात्रा चलिरहँदा भूकम्प गएकोले पुनः शुरुदेखि नै जात्रा सञ्चालन गरिएको एउटा घटना देवमाला वंशावलीमा उल्लेख छ - "वि.सं. १९९६ साल आश्विन १५ गते रोज १ मा दिनको १२ बज्नलाई ७ मिनेट बाँकीमा भुकम्प भएकोले जात्रा ७ दिन पछि हटियाको आश्विन २२ गते १ मा नरदेवीबाट भेडासिंबाट इन्द्रचोक ल्याई दर्वार पुऱ्याउने दिन भेडासिंको दोबाटोमा

५२ Rashmila Shakya, (as told to Scott Berry), *From Goddess to Mortal*, Kathmandu: Vajra Publication, 2005, p. 53.

५३ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

श्री कुमारीको रथ पुग्नासाथ कुमारीको रथको बायाँ पट्टिको अगाडिको पाँग्रा बंखा जम्मै भाची बिग्रि रथ अड्कदा ईन्जीनको हलुका पाँग्रा राखी रथ यात्रा चलाउँदा दरवार पुग्नासाथ बेलुकाको तोप चलेको थियो ।"[५४]

इन्द्रजात्रा पर्वमा मात्रै श्री कुमारीको चार पटक कुमारी घरबाट बाहिर यात्रा चलाउनु पर्ने हुन्छ । यस्तै वर्षको १३ पटक श्री कुमारीको विभिन्न सास्कृतिक पर्वमा कुमारी घरबाट बाहिर यात्रा चलाउने परम्परा रहेको छ भने अरु बेला श्री कुमारी कुमारी घरमा विराजमान रहनुहुन्छ । कुमारी घर बाहिर यात्रा चलाउनु पर्ने ती पर्वहरू यस प्रकार रहेको छ : जनबहाःद्यः (सेतो मछिन्द्रनाथ) को न्हवं (स्नान), जनबहाःद्यःको रथारोहण, जनबहाःद्यःको लगन टोलमा गरिने जात्रा, वर्षको दुई पटक हुने चाँगु नारायणको काठमाडौं यात्रा, पचली भैरवको जात्रा, बहिद्यः अवलोकनका लागि विभिन्न बहाःबही भ्रमण, घोडेजात्रा अवलोकन र दशैंमा अष्टमिको रात तलेजु भवानीमा गरिने पूजा ।[५५]

श्री कुमारीको रथयात्रा अहिले इन्द्रजात्राकै पर्याय जस्तो बनिसकेको छ । काठमाडौंमा श्री कुमारीको यो रथयात्रा अन्तिम मल्ल राजा जयप्रकाश मल्लले चलाएको इतिहास पाइन्छ । लेखक लीलाभक्त मुनंकर्मीले लेखेको 'मल्लकालीन नेपाल' पुस्तकको १३५ पानामा "यिनी कुमारीका परमभक्त थिए । यिनले कुमारीको मन्दिर बनाउन लगाए । यिनले इन्द्रजात्राको दिनमा कुमारी रथमा हाली देश घुमाउने गरी कुमारी यात्रा चलाए । कुमारी बस्ने रथमा पांग्रा हाली बनाउन लगाए ।" भनी जयप्रकाश मल्लको प्रकरणमा लेखेको छ ।[५६]

जयप्रकाश मल्लले कुमारी जात्रा चलाएको मानिँदै आएता पनि अहिलेसम्म यसको कुनै प्रामाणिक अभिलेख नभेटिनुलाई भने इतिहासकार-हरूले अनौठो घटनाका रूपमा लिएका छन् । त्यसो त जयप्रकाश मल्लले गरेका अरु पनि कतिपय कामको अभिलेख पाइँदैन । कुमारी यात्रा जस्तो ऐतिहासिक कार्यको समेत अभिलेख नभेटिनु चाहिँ अनौठै कुरा हो ।[५७]

---

५४ श्री देवीनाथ योगी, *देवमाला (वंशावली)*, नारायणहिटीः श्री ज. सूरजशम्सेर ज.ब.रा., बि.सं. २०१३, पृ. १०२-१०३ ।

५५ पूर्ववत् १ ।

५६ तिर्थलाल नःघःभनी (राजभण्डारी), '*कुमारी र कुमारी यात्रा,*' काठमाडौंः प्राचीन नेपाल पुरातत्व विभाग, सन् १९८८/१९८९, पृ. २ ।

५७ ऐजन, पृ. ४ ।

इन्द्रजात्रामै कुमारी यात्रा गर्ने चलन रहेको भएता पनि जयप्रकाश मल्लले त्यो यात्रालाई रथमा राखेर सञ्चालन गर्ने थिति मात्रै बसालेको हुन सक्छ। संस्कृतिविद् नःघःभनीका अनुसार कुमारी जात्रा इन्द्रजात्राको बीचमा गरिन्छ, तर यो छुट्टै अस्तित्व भएको जात्रा हो। इन्द्रजात्रा र कुमारी यात्राको महत्व, प्रविधि र विशेषता बेग्लाबेग्लै छन्। कुमारी यात्रासँग इन्द्रजात्राको सम्बन्ध छैन, न इन्द्रजात्रासँग कुमारीको नै सम्बन्ध छ।[५८]

तर वरिष्ठ संस्कृतिविद् सत्यमोहन जोशीले भने इन्द्रजात्रा र कुमारी जात्रा बीच सम्बन्ध रहेको देखाउनुभएको छ। उहाँका अनुसार इन्द्रले दैत्यको संहार गर्दा उनको नाम 'शक्र' हुने गर्दछ। तर इन्द्रले दैत्यको संहार गर्न जाँदा शक्तिस्वरुपिणी कुमारीको उपासना गर्दथे र कुमारीकै बलप्रसाद पाई दुष्टलाई दमन गर्न समर्थ हुन्थे। सम्भवतः यसै परिप्रेक्ष्यमा राजा जयप्रकाश मल्लले इन्द्रजात्रा महोत्सवकै बेलामा कुमारी जात्राको प्रथा चलाएको हुन सक्छ। [५९]

त्यस्तै लेखक गौतमवज्र वज्राचार्यले लेख्नुभएको छ, "विक्रमको छैटौं शताब्दीका प्रशिद्ध विद्वान् वराहमिहिरको वृहत्संहितामा इन्द्रध्वजोत्सव गर्दा शक्रकुमारीको पूजा गर्ने कुरा उल्लेख छ। इन्द्रध्वजोत्सव गर्दा शक्रकुमारीलाई पूजा गर्ने यो परम्परासँग इन्द्रजात्राको समयमा कुमारीको पूजा गर्ने रीतिसँग अवश्यै पनि केही सामञ्जस्य हुनुपर्छ भन्ने देखिन्छ।"[६०]

यसरी इन्द्रजात्राका अवसरमा श्री कुमारीको रथयात्रा किन चलाइन्छ भन्ने विषयमा विभिन्न विद्वानहरूले विभिन्न धारणाहरू प्रस्तुत गरेको पाइन्छ। वार्षिक रूपमा गरिने श्री कुमारीको सांस्कृतिक गतिविधिहरू हेर्दा श्री कुमारीलाई वर्षको १३ पटक विभिन्न सास्कृतिक पर्वहरूका क्रममा कुमारी घरबाट बाहिर ल्याई नगरको विभिन्न ठाउँमा यात्रा चलाउने परम्परा रहेको देखिन्छ। त्यसरी नै इन्द्रजात्रा पनि काठमाडौंमा मनाइने एक प्रमुख जात्रा हो। इन्द्रजात्रामा दागिं, बौमत, दीप्याखं, सवःभक्कु, महाकाली नाच जस्ता सहायक जात्राहरू पनि चलाउने गरिन्छ। यी सबै जात्रा पर्वहरूका कारण इन्द्रजात्राका बेला काठमाडौंमा विशेष चहलपहल चलिरहेको हुन्छ। काठमाडौंमा मनाइने यी जात्रा पर्वहरू अवलोकन गराउनकै लागि श्री कुमारीलाई इन्द्रजात्राका

५८ नःघःभनी (राजभण्डारी), पूर्ववत् ५६, पृ. ४।

५९ सत्यमोहन जोशी, *नेपाली चाडबाड*, काठमाडौं: साझा प्रकाशन, वि.सं. २०६७, पृ. २६।

६० वज्राचार्य, मल्ल, पूर्ववत् ५, पृ. १७६।

बेला नगर परिक्रमा गराउने चलन शुरु भएको देखिन्छ । इन्द्रजात्रामा मात्रै श्री कुमारीको चार पटक कुमारी घरबाट बाहिर यात्रा चलाउने चलन छ ।

पहिले पहिले श्री कुमारीलाई खटमा राखी नगर परिक्रमा गराउने चलन भएको हुनुपर्दछ । राजा जयप्रकाश मल्लले खटको सट्टा रथमा राखेर नगर परिक्रमा गराउने चलन शुरु गरे । साथै उक्त रथयात्रामा आफू पनि सँगै नगर परिक्रमा गर्ने चलन पनि चलाए । राजा आफै सहभागी भई रथयात्रा चलाउने भएकोले श्री कुमारीको रथयात्रा अरु भन्दा विशेष देखिन थाले । मल्ल राजा पछि शुरु भएको शाहवंशीय राजाहरूको शासनकालमा पनि श्री कुमारी र इन्द्रजात्रामा गरिने कुमारीको रथयात्रालाई प्रदान गरिँदै आएको राजकीय सम्मानमा कुनै कमी गरिएन । यसरी राजा र राज्यशक्तिको समेत प्रत्यक्ष संलग्नता हुने भएकोले कुमारी यात्रा इन्द्रजात्राकै प्रमुख आकर्षणको केन्द्र बन्न थाल्यो । कुमारी यात्रा अहिले इन्द्रजात्राकै पर्यायवाची जात्रा जस्तो बनिसकेको पाइन्छ ।

जयप्रकाश मल्लले कुमारीको रथयात्रा चलाएको सम्बन्धमा प्रामाणिक अभिलेख नभए पनि कुमारी बस्नका लागि छुट्टै घर बनाइदिएको अभिलेख भने पाइएको छ । राष्ट्रिय अभिलेखालयमा भेटिएको एउटा बहीमा स्पष्ट लेखिएको छ -[६१]

### मूलपाठ

> *संवत् ८७७ भाद्रपद शुक्ल एकादशी पूर्व्वाषाढा वृहस्पतिवार थ्व कुन्हु यंया श्री श्री जयप्रकाश मल्ल जुजुन कौमालि देवस्ता छे दाङाव दुतरा यज्ञ याङ येंया राज्ये दको देवी बिज्याकव खप्वया आजाजु देव म्हं ५ बिज्यातकव ञलाया छम्हां मबिज्यातकव (बही प्र १६९६/७७०, बी ५१५/२४) ।*

---

६१ डा. जनकलाल वैद्य, *'राष्ट्रिय अभिलेखालयका अभिलेख ग्रन्थहरूमा छरिएका घटनावली - टिप्पणी अभिलेखांशहरू'*, काठमाडौं: अभिलेख, राष्ट्रिय अभिलेखालय, वर्ष १८, पूर्णांक १८, बि.सं. २०५७, पृ. २४-२५ ।

## अनुवाद

ने.सं. ८७७ तदनुसार वि.सं. १८१४ भाद्र शुक्ल एकादशी पूर्वाषाढा नक्षत्र वृहस्पतिवारका दिन कान्तिपुरका राजा श्रीश्री जयप्रकाश मल्लले कुमारी घर निर्माण गराई उपास्य कुमारी देवीलाई चढाइयो । जज्ञ गरियो । त्यस अवसरमा कान्तिपुरका सब देवदेवी निम्त्याइ स्वागत गरिए । भक्तपुर का ५ जना आजाजु देवताहरू मात्र निम्त्याइएका थिए । ललितपुरका एउटा पनि निम्त्याइएन ।

उपर्युक्त टिप्पणी अभिलेखांशहरूबाट दुई थरी भिन्नै तथ्य जान्न सकिन्छ - (क) कुमारी देवीका भक्त राजा जयप्रकाश मल्लले उपास्य देवी प्रीत्यार्थ कुमारी घर निर्माण गराई चढाएको औ त्यस कुमारी घर प्रतिष्ठा अनुष्ठानकृत्य उपलक्ष्यमा कान्तिपुरभरका सबै देवदेवी र भक्तपुरका ५ अजाजु देवहरू आमन्त्रित एवं आतिथ्य सत्कार गरिए । (ख) त्यस समय भक्तपुर र कान्तिपुर बीच मेल सम्बन्ध कायम रहेको औ ललितपुर एक्लिएको मात्र होइन ललितपुर र कान्तिपुर बीच परस्पर वैरभाव गर्दा ज्यादै नराम्रोसँग सम्बन्ध टुटिएको देखिन्छ ।

जयप्रकाश मल्लको राज्यकालभन्दा अघि कुमारी यात्रा चैत्रशुक्ल अमावस्या अर्थात चान्द्र महिनाको हिसाबले हुने वर्षको अन्तिम दिन हुने गर्दथ्यो । त्यतिबेला कुमारीलाई घोडामा राखेर नगर परिक्रमा गराउने र कुमारीको पछि पछि राजा र अन्य भाइ भारदारहरू पनि घोडा नै चढेर घुम्ने भएकोले कुमारी यात्राले क्रमिक रूपले घोडे जात्राको रूप ग्रहण गर्दै आएको थियो । कुमारी यात्रा इन्द्रजात्रामा गाभिएपछि चैत्रकृष्ण अमावस्यामा मनाइने गरिएको कुमारी यात्राले अश्वयात्रा अर्थात आजको घोडेजात्राको रूप लिन गएको हो । वर्तमानमा यसले टुँडिखेलमा घोडे दौड र सैनिक प्रदर्शनको रूप समेत ग्रहण गरिसकेको पाइन्छ ।[६२]

काठमाडौं उपत्यकामा श्री कुमारीलाई अत्यन्त आदरपूर्वक पूजाआजा गर्ने चलन छ । श्री कुमारीलाई राजाबाट समेत श्रद्धापूर्वक आदर गर्ने परम्परा रहिआएको छ । इन्द्रजात्राका बेला जात्रा अवलोकन गर्न श्री कुमारीलाई खटमा राखी नगर परिक्रमा गराउने पुरानै चलन रहेकोमा जयप्रकाश मल्लको असीम श्रद्धाले खटमा पाङ्ग्रा थपी रथ बनाई रथयात्रा गर्ने चलन चलाएका

६२ आचार्य, पूर्ववत् १४, पृ. ११३ ।

हुन् । कुमारी सानै उमेरकी हुने भएकोले घोडामा बसी नगर परिक्रमा गर्नु शारीरिक तथा व्यवहारिक रुपमा पनि सम्भव देखिँदैन । साथै काठमाडौं उपत्यकामा कुमारी मात्र होइन कुनै पनि देवीदेवतालाई घोडामा चढाएर जात्रा गर्ने चलन रहेको पाइँदैन । काठमाडौं उपत्यकामा विद्यमान जात्रापर्वहरू मध्ये घोडेजात्रा छुट्टै अस्तित्व भएको जात्रा हो भने इन्द्रजात्रा पनि छुट्टै अस्तित्व भएको जात्रा हो । कुमारीलाई घोडेजात्रा अवलोकन गराएकै आधारमा यी दुई जात्रा बीच इतिहास शिरोमणि आचार्यले भन्नुभएको जस्तो सम्बन्ध रहेको मान्न सकिँदैन । कुमारीलाई अवलोकन गराउनु पर्ने जात्राहरू काठमाडौंमा घोडेजात्रा बाहेक अरु पनि धेरै छन् । ती जात्राहरू कुमारीबाट अवलोकन गरेकै आधारमा ती सबै जात्राहरूसँग इन्द्रजात्राको सम्बन्ध रहेको भन्न मिल्दैन ।

जयप्रकाश मल्लको पालामा कुमारी यात्रा यति भव्यपूर्व मनाइन्थ्यो कि सबैतिर पूजा ग्रहण गर्दै यात्रा चलाउँदा जात्रा शुरु भई समापन हुँदा करिब २० घन्टा जति लाग्ने गर्दथ्यो । साँझ हिँडेको रथ पुनः हनुमानढोका फर्कंदा बिहानी भइसक्थ्यो ।[६३] त्यति बेला कुमारीको रथयात्रा हुँदा श्री कुमारीलाई पूजा चढाउने जनसमुदायको संख्या अधिक हुने गर्दथ्यो । जयप्रकाश मल्लको शासनकालमा काठमाडौंमा २२,००० (बाइस हजार) घरधुरी थिए ।[६४]

आरम्भमा यो चाड बडो उत्साहका साथ मनाइन्थ्यो । अचेलको गद्दी बैठक बनेको ठाउँमा भूपालेन्द्र मल्लका समयमा नयाँ राजदरवार बन्यो र यतिञ्जेलसम्म चालू रहेर आएको थियो र यस दरवारका अगाडि पश्चिमपट्टिका चौतारामा राजसभा बस्ने नियम थियो । इन्द्रजात्राका साताभर राजसिंहासन त्यसै चौतारामा सजिएको बैठकमा रहन्थ्यो । यात्रामा कुमारीका रथमा राजा जयप्रकाश मल्ल रहने गरेकाले राजाका चाकडीका निमित्त पनि रथका मार्गमा परेका बडादमीका घरबाट गहनाले झकिझकाउ भएका पत्नीहरूलाई लिएर उनीहरू पूजाको सामान लिई खडा रहने हुनाले रथ थाम्दै जानु पर्ने हुँदा रातभरको समय रथयात्रालाई लाग्दथ्यो ।[६५]

यसरी जयप्रकाश मल्लको पालामा इन्द्रजात्रा अत्यन्त भव्यपूर्वक मनाइने गरिन्थ्यो । श्री कुमारीको रथयात्रा हुँदा राजा र सम्पूर्ण जनसमुदाय नै

---

६३ आचार्य, पूर्ववत् १४, पृ. ११३ ।

६४ William J. Kirkpatrick, *An Account of the Kingdom of Nepaul*, Rupa & Co., New Delhi: 2007. Pp. 160

६५ आचार्य, पूर्ववत् १४, पृ. ३, ४, ९ ।

जात्रामा चुर्लुम्म डुबिरहेका हुन्थे । त्यतिबेला काठमाडौंवासी राजा र जनताले जात्राको भव्यता बाहेक अरुतिर ध्यानै दिन पाएका हुँदैन थिए । जात्राको यही उल्लासमय अवसरको मौका छोपेर गोर्खाका राजा पृथ्वीनारायण शाहले काठमाडौं आक्रमण गर्ने दिनको रुपमा इन्द्रजात्रालाई छानेका थिए ।

पृथ्वीनारायण शाहले कान्तिपुर आक्रमण गरी बसन्तपुरस्थित गद्दी कब्जा गर्दा त्यहाँ पहरा दिइरहेका केही नगरकोटी सैनिकहरूले प्रतिकार गरेका थिए । तर गोर्खाली सैनिक सामु टिक्न नसकी उनीहरू भागी रथयात्रा सँगै गएका राजा जयप्रकाश मल्ललाई गोर्खालीको आक्रमणको जानकारी दिन गए । त्यतिबेला कुमारीको रथ जैशी देवल पुगिसकेको थियो । नगरकोटी सैनिकबाट उक्त जानकारी पाउने बित्तिकै जयप्रकाश मल्ल रथबाट तल उत्रेर कोहिटीको गोपुरबाट आफ्ना तीन सय जति नगरकोटी अंगरक्षकहरू साथ लिई पचलितिरको बाटो गरी काठेसाँगुबाट बागमती तरी ललितपुरका ठकुराइमा शरण लिन गए । राजा भागे पछि बीचमा अड्केको जात्रा यथावत चलाउन पृथ्वीनारायण शाहले आफ्ना भाइ भारदार र गोर्खाली सैनिक पठाई कोहिटीबाट जात्रा चलाई बसन्तपुरमा ल्याई विधिवत जात्रा सम्पन्न गरे । कुमारी भित्रिएपछि उनको पाउमा ढोग दिएर दरवारमा जाने नियम जयप्रकाश मल्लले चलाएका थिए । पृथ्वीनारायण शाहले पनि कुमारीको दर्शन गरेर यो रश्म पूरा गरी प्रसाद पहिरेर फर्के ।[६६]

इन्द्रजात्राकै दिन पृथ्वीनारायण शाहले कान्तिपुर विजय गरेका कारण जात्राको पहिलो दिन शाह विजयको वार्षिक उत्सव पनि हुन गयो । त्यसैले शाहविजयको उत्सव स्वरुप यसमा सरकारी भव्यता पनि थपिँदै आयो । कुमारी, गणेश, भैरवका रथका साथसाथै श्री ५ महाराजाधिराज, जंगी र निजामती उच्च पदाधिकारीहरू, बायण्ड बाजा आदिको पनि सहभागिता थपियो । साथै खरखजानाहरूको आकर्षक प्रदर्शनी गर्दै लामा लामा सैनिक टोलीहरू पनि जात्राको सिलसिलामा नगर परिक्रमा गर्ने चलन बस्यो । यस्ता देखावटी तमासाहरू विजयोल्लासले भन्दा पनि पराजित पक्षमा सन्त्रास फैलाइराख्ने उद्देश्यले अभिप्रेरित भएका देखिन्थे । राणातन्त्रले यस दिनका सैनिक प्रदर्शनी र भड्किला तमासाहरूमा अरु वृद्धि गऱ्यो । श्री ३

६६ आचार्य, पूर्ववत् १४, पृ. ३५१ ।

महाराजहरू त यस अवसरमा बाटाबाटामा र महिलाहरू बस्ने झ्याल झ्यालमा हात्तीको हौदाबाट रुपियाँ छर्दै नगर परिक्रमा गर्दथे ।[६७]

राणाकाल शुरु हुनु भन्दा पहिले राजा सुनको मोलम्बा गरेको हौदा भएको हात्ती चढी इन्द्रजात्रामा सहभागी हुने गर्दथे । एकपटक राजा राजेन्द्र वीर विक्रम शाह सुनको मोलम्बा गरेको हौदा कसेको हात्तीमा, प्रधानमन्त्री माथवरसिंह थापा चाँडीको हौदा कसेको हात्तीमा र अन्य भाइ भारदारहरू २०-२२ वटा हात्तीमा बसेर लहरै इन्द्रजात्रामा सहभागी भइरहँदा काजी जंगबहादुर पनि हात्तीमै चढेर जात्रामा सामेल भएको देखेर प्रधानमन्त्री माथवरसिंह थापा रिसाएका थिए ।[६८]

## कुमारी : एक परिचय

नेपाली समाजमा अति पूजनीय जीवित देवी कुमारीलाई मूलतः एक तान्त्रिक देवीका रुपमा लिइन्छ । नेपालमा कुमारीलाई हिन्दू र बौद्ध दुवै धर्मावलम्बीहरूले श्रद्धापूर्वक पुजा गर्छन् । कुमारीलाई तलेजुका कर्माचार्यहरू शाक्त पूजाविधिअनुसार शक्तिस्वरुपिणी भगवतीको रुपमा पूजाआजा गर्दछन्, बौद्ध आचार्य (बज्राचार्य) हरू चाहिँ तान्त्रिक देवी जोगिनीको बाह्य रूपमा सद्दे कुमारी (जीवित कुमारी) को रूपमा आफ्नै विधिअनुसार पूजाआजा गर्दछन् । साधारणतया बहुसंख्यक जनता चाहिँ कुमारीलाई नेपालकै सतत सुरक्षा प्रदान गर्ने साक्षात् इष्टदेवीकै रूपमा मान्यता प्रदान गर्दछन् ।[६९]

यस्तै कुमारीलाई पारिवारिक सुख, सन्तान सुख, महिलाहरूको सन्तान प्राप्ती र रजस्वला सम्बन्धी समस्याबाट मुक्तिका लागि पूजा गरिन्छ भने पुरुषहरू आफ्नो गुमेको शक्ति पुनर्प्राप्तीको लागि पूजा गर्दछन् । शक्ति प्राप्तीको लागि पुजिने देवी भएकोले राजा महाराजाहरू समेत कुमारीका अनन्य भक्त भएका छन् ।[७०]

---

६७ भुवनलाल प्रधान, *काठमाडौं उपत्यकाका केही सांस्कृतिक छिर्का-मिर्का*, काठमाडौंः डा. सुमित्रा मानन्धर गुरुङ्ग, सन् २००७, पृ. ६२ ।

६८ पुरुषोत्तमशमशेर जबरा, *श्री ३ हरूको तथ्य वृत्तान्त* (भाग १), काठमाडौंः विद्यार्थी पुस्तक भण्डार, वि.सं. २०६२, पृ. १८ ।

६९ जोशी, पूर्ववत् ५९, पृ. २३ ।

७० Indra Majupuria, Petrika Roborts, *Living Virgin Goddess Kumari*, India, M. Gupta, 2007, p. 82

कुमारी बारे वृहत् पुरश्चर्यार्णव कालीविद्या प्रकरणमा दक्षिणकालीका यन्त्रको आवर्ण पूजामा यसरी लेखिएको छ ।[७१] -

*पद्माष्ट दलमध्ये तु ब्राम्ही नारायणी तथा ॥*
*माहेश्वरी च चामुण्डा कौमारी च अपराजिता ॥*
*वाहाहीं नारसिंही च पुन पत्राग्रमण्डले ॥*

यी श्लोकहरूबाट अष्टमातृका जुनबेला उत्पत्ति भयो त्यसै बेलादेखि कुमारीको पनि उत्पत्ति भएको देखिन्छ । साथै उक्त यन्त्रोधारमा लेखिएका तार, भैरवी, बंगला र काली दश महाविद्याका गण हुन् । त्यसैले दशमहाविद्या प्रादुर्भाव भएको बेलादेखि नै कुमारीको पनि प्रादुर्भाव भएको हो भन्न सकिन्छ ।

कुमारी पूजाको सम्बन्धमा मार्कण्डेय पुराणको आधारमा चण्डीमा यसरी लेखिएको छ ।[७२] -

*जगत पूज्ये जगद्द्ये सर्वशक्ति स्वरुपिणी ॥*
*पूजा ग्रहण कौमारी जगमन्त्रे नमोऽस्तुते ॥*

यसरी धार्मिक ग्रन्थहरूमा उल्लेख भएको तथ्यहरूलाई लिई बिचार गर्दा कुमारी पूजा मार्कण्डेय ऋषिका पालादेखि चलिआएको देखिन्छ । हुन त मार्कण्डेय पुराण वेदव्यास ऋषिले रचना गरेका हुन । वेदव्यास महाभारत पर्वका समकालीन थिए । महाभारत काण्ड भएको ५०८९ वर्ष व्यतित भइसकेको छ । व्यासको पालादेखि लिए गन्ती गरे पनि ५०८९ वर्ष पुरानो देखिन्छ । अझ मार्कण्डेय ऋषिको पालादेखि कुमारी पूजा गर्ने गरी आएको हो भन्न सकिन्छ ।[७३]

भारतमा पनि कन्या बालिकालाई देवी कुमारीका रुपमा पूजा गर्ने चलन छ । नेपालमा इस्वीको पाँचौ शताब्दीतिर कुमारीको पूजा गर्ने चलन शुरु भएको देखिन्छ । त्यतिबेला नेपालमा शिवदेव द्वितीय (ई.सं. ५४५-५८२)

---

७१ नःघःभनी, पूर्ववत् ५६, पृ. ४ ।
७२ ऐजन, पृ. ४ ।
७३ ऐजन, पृ. ३-४ ।

को शासनकाल थियो । लिच्छवि राजा मानदेवले मानेश्वरीलाई आफ्नो कुलदेवताका रूपमा पूजा गर्ने गर्दथे । ने.सं. ४४४ मा सिम्रौनगढका राजा हरसिंहदेव आफ्नो कुलदेवता तुलजा भवानीको श्रीयन्त्र समेत लिएर नेपाल आए पछि इस्वीको ११-१२ औं शताब्दीदेखि यहाँका राजाहरूले तुलजा भवानीलाई नै आफ्नो कुलदेवता मान्न थाले । तुलजा भवानीकै प्रतिरुप कुमारी भएकाले तुलजा भवानी र कुमारीको इतिहास पनि सँगसँगै आएको देखिन्छ ।[७४]

दुर्गालाई कन्या कुमारीको रूपमा पूजा गर्ने यो अभ्यास काठमाडौं उपत्यकाको स्थानीय परम्परा होइन । भारत लगायत विभिन्न ठाउँमा कन्या कुमारीलाई पूजा गर्ने प्रचलन रहेको पाइन्छ । कन्या कुमारी वैदिक दर्शन अनुसार नै अस्तित्वमा आएको हो ।

प्राचीन भारतमा नेपालमा जस्तै कुनै जीवित कन्याको शरीरमा कुमारीलाई पूजा गर्ने चलन छ वा छैन भन्ने स्पष्ट छैन । तर अहिले प्रचलित अभ्यासहरूले त्यस्तो चलनको केही झल्को भने दिन्छ । नेपालमा प्रचलित यस्ता अभ्यासहरूले पनि यिनीहरू वास्तवमा भारतमा लोप भइसकेका यस्ता चलनहरूको अवशेष हुन् भनी देखाउँदछ । यसरी हेर्दा थाहा हुन्छ, भारतमा पनि प्राचीन अभ्यासहरूसँग पूरै सम्बन्ध टुटिसकेको छैन । जीवित कुमारीलाई पूजा गर्ने चलन अहिले पनि भारतको कार्मोरिन भन्ने ठाउँमा प्रचलित छ । सन् १९२० तिर पंजाबस्थित कांगडा उपत्यकाको उत्तरी क्षेत्रमा यस्तो परम्परा फस्टाएको थियो । बंगालमा सरस्वतीको रूपमा जीवित बालिकालाई पूजा गर्ने चलन छ । तर भारतमा यस्ता हिन्दू देवीहरूलाई एक बौद्ध बालिकाको शरीरमा पूजा गर्ने चलन भने छ जस्तो लाग्दैन । यो नेपालको मौलिक चलन हो जस्तो कि पशुपतिमा वर्षको  एक दिन बोधिसत्वको मुकुट लगाउने चलन मौलिक हो ।[७५]

नेपालमा कुमारीको पूजा गर्ने चलन पुरानै भए पनि जीवित कन्यालाई नै देवी कुमारीको रुपमा पूजा गर्ने चलन कहिलेदेखि शुरु भयो भन्ने विषयमा भने विभिन्न मत पाइन्छ । कान्तिपुर एउटै राज्य हुँदा राजा लक्ष्मीकामदेव (सन् १०२४-१०४०) ले पाटन दरवार नजिकै रहेको विहारमा बस्ने शाक्यकुलकी

७४ Michael Allen, *The Cult of Kumari*, Kathmandu: Mandala Book Point, 1976, p. 15.
७५ स्लसर, पूर्ववत् ३४, पृ. ३१२ ।

एक कन्यालाई कुमारीका रुपमा प्रतिष्ठापन गरेको र कुमारीको मूर्ति पनि स्थापना गरेको कुरा डेनियल राइटले लेखेका छन् ।[७६]

लेखकद्वय रोबर्टस् र मजुपुरियाका अनुसार माथिल्लो तथ्यलाई मान्ने हो भने जीवित कन्यालाई कुमारीका रुपमा स्थापना गर्ने चलन काठमाडौंभन्दा पहिले पाटनमा भएको देखिन्छ । उनले वज्रयानी बुद्धधर्मका भारतीय गुरु अतिशाबाट प्रभावित भई कुमारी स्थापना गरी पूजा गर्ने परम्परा शुरु गरे ।[७७]

काठमाडौंमा जीवित बालिकालाई नै कुमारीको रूपमा स्थापना गरिएको १३ औं शताब्दीका राजा अनन्त मल्ल (ई.सं. १२७८-१३१०) को पालामा हो । अर्थात आजभन्दा लगभग ७०० वर्ष अघि यो संस्कृति स्थापना भएको देखिन्छ ।[७८]

भक्तपुरमा राजा त्रैलोक्य मल्लले वि.सं. १६६० ताका जीवित देवी कुमारी स्थापना गरेको देखिन्छ । काठमाडौंमा वि.सं. १६९४-९५ (सन् १६३८) सालको दशैंमा हनुमानढोका दरवारभित्र मूल ढोकामा बलि दिंइदा राज्य कुमारीको उपस्थिति रहेको भनी मेरी स्लसरलाई उद्घृत गर्दै लेखक भुवनलाल प्रधानले लेख्नुभएको छ ।[७९]

लेखक माइकल एलेनले पाटनमा कुमारी स्थापनाको श्रेय १७ औं शताब्दीका राजा सिद्धिनरसिंह मल्ललाई दिनुभएको छ । सिद्धिनरसिंह मल्लले नै पाटनमा तुलजा भवानीको मन्दिर बनाउनुका साथै जीवित देवी कुमारीको स्थापना गरेका थिए ।[८०]

उपत्यकामा १३ औं शताब्दी भन्दा अघि कुमारी प्रथा शुरु भएको कुनै प्रमाण हामी पाउँदैनौं । तर राइट वंशावलीमा बाह्रौं शताब्दीमा राजा गुणकामदेवले कुमारीको मूर्ति खडा गरी इन्द्रजात्रा चलाएको भनी बताइएको छ । हाल प्रचलित इन्द्र र कुमारी जात्राको सम्बन्धलाई हेर्ने हो भने यसमा अरु केही थप आधारहरू आवश्यक पर्न सक्दछ । लक्ष्मीकामदेव (सन् ११९२-११९७) ले आफ्ना हजुरबा गुणकामदेवले कुमारीको आशिर्वाद पाई

७६ राईट, पूर्ववत् १२, पृ. १५७ ।

७७ मजुपुरिया, पूर्ववत् ७०, पृ. १०-११ ।

७८ नःघःभनी, पूर्ववत् ५६, पृ. ७ ।

७९ भुवनलाल प्रधान, *काठमाडौं उपत्यकाका केही सांस्कृतिक छिर्कामिर्का*, काठमाडौंः डा. सुमित्रा मानन्धर गुरुंग, वि.सं. २०६४, पृ. ६० ।

८० माईकल, पूर्ववत् ७४, पृ. ४० ।

विश्वको एक चौथाई भूमि जितेको र प्रशस्त सम्पत्ति आर्जन गरेकोले त्यसैको सम्मान स्वरुप पाटनको दरवार सँगै रहेको लक्ष्मी वर्मन नाम भएको एक विहारकी शाक्य कन्यालाई कुमारीको रुपमा पूजा गरे । अहिले हःखा बहाल नाम गरेको यो विहार (लक्ष्मी 'कामदेव' संस्कारित-रत्नाकर-महाविहार) लाई पाटन दरवार विस्तार गर्ने क्रममा हालको स्थानमा सारिएको थियो । पाटनमा अहिले पनि यही विहारबाट कुमारी छनौट गर्ने भएकोले परापूर्वकालदेखि नै यही विहार पाटन कुमारीको विहार हो भन्न सकिन्छ ।

लिच्छवि अभिलेखहरू कुमारी पूजाका सन्दर्भमा मौन देखिन्छन् । जब कि शिवदेव प्रथम (सन् ५९०-६०४) ले नौबाली अर्थात देवपाटन नगर बनाउँदा यहाँको दोबाटोमा चार वटा कुमारी स्थापना गरेका थिए ।[८१]

हिन्दू मान्यता अनुसार कुमारी देवी दुर्गाका रुप हुन् । काठमाडौं उपत्यकामा भने जीवित देवी कुमारी एउटी शाक्य जातिकी बौद्ध बालिका हुन् । बौद्धहरूले भने उनलाई तान्त्रिक शक्ति भएकी वज्रदेवीका रुपमा मान्दछन् ।

उपत्यकामा बौद्ध बालिकालाई जीवित देवी कुमारीका रुपमा पुजिने बारे विभिन्न किंवदन्तीहरू पाइन्छन् । त्यस मध्ये धेरै चलेको किंवदन्ती अनुसार राजा जयप्रकाश मल्लको पालामा एकपटक एउटी शाक्य बालिकालाई भगवती चढेको रहेछ । जयप्रकाश मल्लले उनलाई नक्कल गरेको ठानी भगाइदिए । तर त्यसको असर उनकी रानीलाई देखा पर्न थाल्यो । त्यसपछि जयप्रकाशले आफूले गल्ती गरेको रहेछु भन्ने महसुस गरी पुनः उक्त शाक्यकी छोरीलाई बोलाएर उनलाई दुर्गाको रूपमा पुज्ने प्रथा शुरु गरे । अर्को किंवदन्ती अनुसार राजाको यौन दुर्व्यवहारको शिकार भई कुनै शाक्य कन्याको मृत्यु भएकोले त्यसैको क्षतिपूर्ति स्वरुप राजाले शाक्य कन्यालाई कुमारीको रूपमा पूजा गर्ने चलन चलाएको हुनुपर्छ । त्यस्तै अर्को प्रचलित किंवदन्ती अनुसार दुर्गालाई कुमारीको रूपमा पूजा गरी छुट्टै बस्ने घर बनाउने र वर्षेनी रथयात्रा चलाउने प्रथा शुरु गरेकोले दुर्गाले पनि राजाको शासन १२ वर्ष बढाइदिएका थिए । त्यस्तै भक्तपुरका राजा त्रिलोक्य मल्ल (सन् १५६१-१६१०) ले दुर्गालाई प्रत्यक्ष भेट्न पाउने वरदार प्राप्त गरे पछि उनले दुर्गालाई कुमारीका रुपमा एक बौद्ध बालिकाको शरीरमा दर्शन पाउन थालेका

८१ स्लसर, पूर्ववत् ३४, पृ. ३१२ ।

हुन् ।[८२]

अर्को किंवदन्ती अनुसार तुलजा भवानीले तत्कालीन राजालाई अब आफू कुनै बालिकामा प्रवेश भई अस्तित्वमा आउने भनी सपनामा देखाएकाले राजाले क्षेत्री वर्णमा उच्च मानिएको शाक्य जातिका बालिकालाई जीवित देवीका रूपमा कुमारी स्थापना गरिएको मानिन्छ । त्यसैले जुन जीवित देवीलाई हामी कुमारी भनेर पूजा गर्छौं तिनी बालिका कुमारी मात्र नभई खासमा तिनी तुलजा भवानीको प्रतिक हुन् भन्ने विश्वास गरिन्छ ।

काठमाडौंका कुमारीलाई राजकीय सम्मान प्रदान गरी रथयात्रा समेत गर्ने परम्परा अन्तिम मल्ल राजा जयप्रकाश मल्लले चलाएका थिए । किंवदन्ती अनुसार राजा जयप्रकाश मल्ल त्यतिबेला तुलजा भवानीसँग एकान्तमा पासा खेल्ने र राजकाज बारे सरसल्लाह लिने गर्दथे । पासा खेल्दा तुलजा भवानी पर्दा भित्र रहने र बाहिर हात मात्र देखाई पासा हान्ने गर्दथे । खेल्दाखेल्दै एकदिन जयप्रकाश मल्लको मनमा यी तुलजा भवानीको हात त यति सुन्दर छ भने शरीर झन् कति सुन्दर होला भन्ने लागेछ । देवीप्रति जयप्रकाश मल्लको मनमा आएको यो कुमती बारे देवी तुलजालाई ज्ञात भइहाल्यो । त्यसपछि उनले राजालाई आदेश दिइन् - 'हे राजन ! तिमीले मेरा बारेमा मनमा खराब चिताएछौ । अब उप्रान्त म तिमीसँग पासा खेल्न आउने छैन । तिम्रो शासन गर्ने आयु पनि अब समाप्त भयो ।' त्यसपछि राजाले पश्चाताप स्वरुप अब मैले के गर्नुपर्ला भनी सोध्दा देवीबाटै आदेश भयो, 'तिमीसँग म अब प्रत्यक्ष भेट्न आउँदिन । तिमीले एउटी शुद्र कन्या केटीलाई कुमारीका रुपमा स्थापना गरी छुट्टै बस्ने व्यवस्था पनि गर, म उसै को मार्फत तिमीलाई आवश्यक सल्लाह दिउँला ।'

त्यस पश्चात राजा जयप्रकाश मल्लले बसन्तपुरमै एक भव्य विहार बनाई त्यहाँ कुमारी स्थापित गरे । भनिन्छ, जयप्रकाश मल्लले वि.सं. १८१३ फागुनमा बनाउन शुरु गरी १८१४ को भाद्र महिना अर्थात ७ महिनामै उक्त कुमारी घर निर्माण सम्पन्न गरेका थिए । त्यसैको अर्को वर्षदेखि उनले विशेष रथ बनाई कुमारीको रथयात्रा समेत शुरु गरे । देवी तुलजाले उनलाई शुद्र कन्यालाई कुमारीको रुपमा स्थापना गर्न भनेको भएता पनि शुद्र केटीलाई राजाले पूजा गर्दा तत्कालीन समाजमा नराम्रो प्रभाव पर्न जाने भएकोले

८२ स्लसर, पूर्ववत् ३४, पृ. ३११ ।

हिन्दूहरूले नारायणका रूपमा मान्ने सुनलाई बिगार्ने जाति भएकाले शाक्यकुलकी छोरीलाई कुमारीका रुपमा छनौट गरिएको हो ।[८३]

कुमारीका बारेमा यसरी विभिन्न प्रकारका किंवदन्तीहरू पाइन्छन् । तर काठमाडौं उपत्यकाका प्रमुख विहारहरूमा भने सम्बन्धित विहारकै शाक्य कन्यालाई जीवित देवी कुमारीका रुपमा सोही विहारमा विराजमान गराउने प्रचलन रहेको छ । अहिले पनि उपत्यकाका विभिन्न प्रमुख विहारहरूमा जीवित देवी कुमारीहरू रहेको पाइन्छ । ती कुमारीहरूलाई बौद्ध विहारमा विराजमान गराइन्छ । त्यसैले बसन्तपुरका राज-कुमारी विराजमान हुने निवासलाई पनि बौद्ध विहारकै रुपमा निर्माण गरिएको हो ।

बसन्तपुरमा निर्माण गरिएको कुमारी घर श्री कुमारीको निवास भए पनि यसलाई कुमारी बहाः पनि भनिन्छ । बहाः भित्र प्रवेश गर्ने कुनै ठूलो द्वार बनाइएको छैन । एउटा कलात्मक काठको तोरण राखिएको द्वारबाट भित्र बहालमा प्रवेश गर्न सकिन्छ । तर त्यहाँ कुनै प्रमुख देवताको मूर्ति भने राखिएको छैन । किनभने त्यहाँ एक जीवित देवी नै बस्ने गर्दछन् । घरमा कलात्मक बुट्टा भएका झ्यालहरू रहेका छन् जहाँबाट कुमारीले चोक र बाहिरका दृश्य अवलोकन गर्न सक्छिन् ।[८४]

कुमारी छेँ अर्थात कुमारी घरको पहिलो तल्ला काठमाडौंको मौलिक बहाः वास्तुकला अनुसार निर्माण गरिएको छ जहाँ बुद्धका कलात्मक मूर्तिहरू राखिएका छन् । दोश्रो तल्लामा श्री कुमारीको शयन कक्ष रहेको छ । तेश्रो अर्थात सबैभन्दा माथिल्लो तल्लामा श्री कुमारीको आसन लगायत विशेष पूजा गर्ने कक्ष रहेको छ । कुमारी घरको भित्तामा विभिन्न देवदेवी लगायत स्वयम् जयप्रकाश मल्लका चित्रहरू लेखिएका छन् । कुमारी बहाःको सबैभन्दा मुनिको तल्लामा पाँचवटा बुद्धका मूर्ति राखिएको छ । त्यसको माथिल्लो तल्लामा आगंछेँ रहेको छ ।[८५]

राजा महेन्द्र वीर विक्रम शाहका पालामा कुमारी घरको जीर्णोद्धार गरिएको थियो । २०७२ सालको शक्तिशाली भूकम्पमा क्षति भएको कुमारी

---

८३ सृजना श्रेष्ठ, *जीवित देवी कुमारी : कथा र वास्तविकता*, काठमाडौं: सृजना श्रेष्ठ, बि.सं. २०६१, पृ. १५ ।

८४ Ronald M. Bernier, *The Temlpes of Nepal*, India: S. Chand & Company Ltd, 1978, p. 117.

८५ अवलोकन ।

घरलाई टेको लगाएर बचाइएको थियो । शाह-राणाकालमा राज्यको सम्पूर्ण आयव्यय श्री कुमारीलाई चढाउने चलन भएकोले सरकारी आयव्यय हेर्ने कार्यालय समेत कुमारी चोकमा राखिएको थियो जसलाई कुमारी अड्डा भनिन्थ्यो ।[८६]

राजा जयप्रकाश मल्लले कुमारी घर बनाउँदा त्यसलाई एउटा परम्परागत बहालको स्वरुपमा निर्माण गरेका थिए । बसन्तपुरमै रहेको ऐतिहासिक श्रीखण्ड तरुमुल महाविहार (सिख्वंमू बहाः) कै एक खण्डलाई कुमारी बस्नका लागि नयाँ विहारको रूपमा निर्माण गरेको व्यहोरा ठ्यासफूहरूमा उल्लेख छ। अहिले उक्त विहारलाई श्री राजकीर्ति मनोरम महाविहार भनिन्छ। सोही विहारमा कुमारी बस्ने घर (कुमारीछेँ) निर्माण गरिएको थियो । कुमारी बस्ने बहाल भएकोले बोलिचालीमा त्यसलाई कुमारी बहाः वा कुमारी छेँ (कुमारी घर) पनि भन्न थालियो । बहाः निर्माण गरिसके पछि उक्त बहाःमा पूजाआजा गर्ने जिम्मेवारी सिख्वंमू बहाःकै राजगुर्जुलाई दिइयो । अहिले पनि कुमारी घरमा सिख्वंमू बहाःकै राजगुर्जुबाट श्री कुमारी लगायत उक्त विहारको सम्पूर्ण पूजाआजा गर्ने चलन रहेको छ। काठमाडौंको कुनै पनि बहाः तथा बही संघ अन्तर्गत नरही यो बहाः आफ्नो छुट्टै अस्तित्वमा रहेको पाइन्छ।

काठमाडौं उपत्यकामा रहेका प्रमुख बहाःबहीहरूमा जीवित देवी कुमारी राख्ने प्रचलन रहेको पाइन्छ। साथै जयप्रकाश मल्लले कुमारीका लागि छुट्टै घर बनाएर राख्नुभन्दा पहिले नै काठमाडौंमा राज-कुमारीको पनि अस्तित्व थियो । जयप्रकाश मल्ल राज्यच्यूत भई यताउति भौंतारिरहेको बेला पनि उनले गोप्य रूपमा कुमारीको दर्शन गरेको र त्यसको चार दिन पछि नै काठमाडौंमा पुनः राज्य प्राप्त गरेका थिए ।[८७]

सिख्वंमू बहाःमा पनि पहिले पहिले कुमारी रहने गर्दथ्यो । सिख्वंमू बहाःमा रहेको उक्त कुमारीलाई नै कुमारीछेँ निर्माण पश्चात त्यहाँ विराजमान गरिएको थियो । किनभने कुमारी बहाः सिख्वंमू बहाःकै एउटा अंशमा निर्माण गरिएको हो भने श्री कुमारीको नित्यपूजाको जिम्मा पनि सिख्वंमू बहाःकै राजगुर्जुलाई दिइएको छ। त्यति मात्र होइन, श्री कुमारीलाई विभिन्न पर्वहरूमा कुमारी घरबाट बाहिर लानुपर्दा सिंख्वंमू बहाःकै बाटो भएर लाने चलन समेत

८६ पूर्ववत् १ ।

८७ प्रधान, पूर्ववत् ६७, पृ. ६० ।

अहिलेसम्म रहेको कारणले पनि यी कुमारी मूलतः सिख्वंमू बहाःकै कुमारी हुनु पर्दछ ।[८८]

विभिन्न विद्वानहरूले फरक फरक मत जाहेर गरेता पनि कुमारी बहालमा विराजमान गरिएको पहिलो कुमारी कुन बहाः संघका हुन् र त्यहाँ हाल प्रचलित १६ वटा बहाः संघबाट छानिएका कुमारीलाई विराजमान गर्ने चलन कहिलेदेखि शुरु भयो भन्ने विषयमा प्रामाणिक अभिलेखहरू नभेटिएको हुनाले यसै हो भन्न सकिँदैन । त्यसैले यस विषयमा थप अनुसन्धान गर्न आवश्यक देखिन्छ ।

लेखक स्लेसरका अनुसार जयप्रकाश मल्लले बनाएको कुमारी घर अर्थात कुमारी बहालको नाम राजालक्ष्मीकुल विहार हो । यो परम्परागत नेपाली विहार शैलीमा बनाइएको छ । यो विहारको चोकसम्म मात्र सर्वसाधारणलाई खुल्ला गरिएको छ । माथिल्लो तल्लामा विभिन्न देवी लगायत जयप्रकाश मल्लको पनि चित्र कोरिएको छ ।[८९]

राजा जयप्रकाश मल्लले श्री कुमारीको नाम राखी चाँदीको मोहर पनि निकालेका थिए । ने.सं. ८७० मा निकालिएको उक्त मोहरमा 'श्री २ जयप्रकाश मल्ल श्री तलेजुमाजु ८७०' र 'श्रीश्रीश्री करुणामय, श्रीश्रीश्री कुमारी माजु' लेखिएको थियो ।[९०]

मल्लकालको अन्तसम्ममा पनि उपत्यकाको कान्तिपुर, ललितपुर र भक्तपुर तीनवटै नगरमा अलग अलग राज-कुमारीहरू थिए । गोर्खालीहरूले उपत्यका विजय गरिसके पछि काठमाडौंलाई आफ्नो राजधानी बनाए । साथै काठमाडौंकै राज-कुमारीलाई राष्ट्रिय मान्यता प्रदान गरे । यसले गर्दा पाटन र भक्तपुरका कुमारीहरूको भन्दा काठमाडौंका कुमारीको मान्यता नगरस्तरबाट वृद्धि भई राष्ट्रियस्तरमा उक्लन गयो । पहिले यो कान्तिपुरको मात्रै कुमारी थियो, अहिले पूरा नेपालकै कुमारी बन्न पुग्यो ।[९१]

कुमारीलाई राज्य शक्तिसँग पनि जोडेर हेर्ने गरिन्छ । जयप्रकाश मल्लले कुमारीको रथयात्रा चलाएकै कारण उनको शासनकाल दश वर्ष लम्बिएको विश्वास गरिन्छ । गोर्खाका राजा पृथ्वीनारायण शाह युवराज हुँदा भक्तपुरमा

८८ काठमाडौं वडा नं. २३ का सिख्वंमू बहाःका राजगुर्जु मञ्जुश्री वज्राचार्यसँग अन्तर्वार्ता ।

८९ स्लसर, पूर्ववत् ३४, पृ. १९६ ।

९० आचार्य, पूर्ववत् १४, पृ. २०७ ।

९१ एलेन, पूर्ववत् ७४, पृ. १४ ।

आई बस्दा दशैँ ताका आफ्ना मित बा रणजीत मल्लसँग कुमारी घरमा टीका ग्रहणका लागि गएका गए । त्यहाँ कुमारीले भक्तपुरका राजा रणजीत मल्ल भन्दा पहिले पृथ्वीनारायण शाहलाई टीका लगाइदिएका थिए भन्ने किंवदन्ती पाइन्छ । त्यसलाई पृथ्वीनारायण शाह भक्तपुरको पनि राजा बन्ने पूर्व संकेतको रुपमा तत्कालीन जनमानसले लिने गरेको पाइन्छ ।

राजभोगमाला वंशावलीमा पृथ्वीनारायण शाहलाई 'बाल्यकालमा भक्तपुरका कौमारीको हातबाट प्रसाद पाएको प्रभावले भाग्य सहाय भई देवपत्तनमा प्रवेश गर्दा बडो जय शब्द भयो' लेखिएको छ ।[९२]

सन् १९५४ मा तत्कालीन राजा त्रिभुवन आफ्ना युवराज महेन्द्रकासाथ कुमारी घरमा टीका ग्रहणका लागि गएका थिए । सानै उमेरकी कुमारीले राजा त्रिभुवनको सट्टा युवराज महेन्द्रलाई टीका लगाइदिइन् । त्यही वर्ष राजा त्रिभुवन विरामी भई मृत्यु भयो । युवराज महेन्द्र नयाँ राजा बने ।[९३]

पृथ्वीनारायण शाहले काठमाडौं आक्रमण गर्दा पनि कुमारी जात्रा सकिनासाथ श्री कुमारीको हातबाट टीका ग्रहण गरिसके पछि मात्रै आफूलाई यहाँको राजा बन्ने वैधानिक मान्यता प्राप्त भएको मानेका थिए ।[९४]

पृथ्वीनारायण शाहले सन् १९६८ सेप्टेम्बर २५ तारिखको राति ११ घडी बितिसके पछि काठमाडौं हमला गरेका थिए । एक घडी बराबर २४ मिनेट हुन्छ । सेप्टेम्बर महिनामा काठमाडौंमा साँझ ६ बजेतिर रात शुरु हुन्छ । पृथ्वीनारायण शाहले काठमाडौं कब्जा गरेको समय रातको १०:३० बजे हुनु पर्दछ ।[९५]

तर बाबुराम आचार्यले पृथ्वीनारायण शाहले काठमाडौंको राजगद्दी कब्जा गरेको समय बिहानको ३ बजे भनी लेख्नुभएको छ । कुलानन्द ज्योतिषीले आक्रमण गर्ने साइत २६ सेप्टेम्बरका रातको आरम्भकाल बताएका थिए । साथै शहर भित्र पसी गद्दी कब्जा गर्ने समय रातको ३ बजे तोकेका थिए । पृथ्वीनारायण शाह साइतमै शहरभित्र पसेका र त्यतिबेला नाचगान

---

९२ रमेशजंग थापा, (सं.), *राजभोगमाला, प्राचीन नेपाल*, संख्या ७, काठमाडौं: पुरातत्व विभाग, शिक्षा मन्त्रालय, बि.सं. २०२६, वैशाख, पृ. १३ ।

९३ M.M. Anderson, *The Festivals of Nepal*, London: George Allen and Unwin, 1971, p. 135.

९४ प्रधान, पूर्ववत् ६७, पृ. ६२ ।

९५ स्लसर, पूर्ववत् ३४, पृ. ७६ ।

पनि बन्द रहेकाले सबैजना मस्त निद्रामा रहेको वर्णन आचार्यले गर्नुभएको छ । गोर्खाली राजा पृथ्वीनारायण शाहले कान्तिपुरलाई घेराबन्दीमा पारेकाले कान्तिपुर ठूलो आर्थिक संकटमा थियो । त्यसैले उक्त सालको इन्द्रजात्रा पर्व फिक्का भइरहेको थियो । कुमारी जात्रा पनि चलाउने कि नचलाउने भनेर नगरमा खलबल मच्चिरहेको थियो । तर जात्रा चलाउँदा श्री कुमारीको कृपाले दुश्मनलाई पराजित गर्न सहायता मिल्ला कि भनेर जयप्रकाशले जात्रा चलाउन आदेश दिएका थिए । जात्रा चलाए पनि नाचगानहरू भने बन्द थिए ।[९६]

भाषा वंशावलीमा आक्रमणको समय 'रातको १७ घडी जाँदा' भनी लेखिएको छ । त्यसमा लेखिएको छ - "कान्तिपुर शहरका राजा जयप्रकाश मल्लले कौमारी देवीको जात्रा गरिरहँदा गोर्खाका राजा पृथ्वीनारायण शाहले दर्वार कान्तिपुर प्रवेश गऱ्या पछि जयप्रकाशमल्ल २।४ घडिसम्म युद्ध गऱ्या । गोर्षालीहरूकन हटाउन नसक्दा फछिबाट देवालयका जगहरूमा बारुद बिछाई कान्तिपुर शहर छाडी पाटनका राजा तेजरनसिंहमल्ल छेउ गया । यहाँ पछि गोर्खालीहरू बारुदले पोली मऱ्या । यसमा तुलाराम पाँडे बारुदले पोली मऱ्या । विक्रम संवत् १८२५ शाके संवत् १६९० नेपाली संवत् ८८८ साल भाद्र सुदि १४ पूर्वाफाल्गुनी नक्षत्र गंडयोग आदित्यवारका दिन १७ घडी रात जादा बडाप्रतापी गोर्खाका राजा पृथ्वीनारायणशाह कान्तिपुर शहरमा प्रवेश गऱ्या ।"[९७]

राज-कुमारीका रुपमा बसन्तपुर कुमारीछेँकी कुमारीलाई मान्ने भएता पनि काठमाडौं उपत्यकामा विभिन्न बहाःबही तथा केही परम्परागत टोलहरूमा पनि छुट्टै कुमारी रहने परम्परा रहेको छ । यसै सन्दर्भमा कुमारीका बारे अध्ययन गर्नुभएका लेखक माइकल एलेनले आफ्नो पुस्तक 'द कल्ट अफ कुमारी' मा काठमाडौं उपत्यकामा ११ जना कुमारीहरूका बारेमा लेख्नुभएको छ ।

---

९६ आचार्य, पूर्ववत् ४९, पृ. ३५० ।

९७ पं. देवीप्रसाद लंसाल (सं), *भाषा वंशावली* (द्वितीय भाग), काठमाडौंः नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२३, पृ. ११९ ।

### काठमाडौं

१) लायकू कुमारी : शाक्य जाति लगायत राष्ट्र र राजपरिवारद्वारा पुजिने ।
२) चाबही कुमारी : चावहिलका शाक्यहरूबाट चुनिन्छ । पहिले पहिले देवपत्तनका राजाहरूले पनि पूजा गरिन्थ्यो । अहिले बहीका सदस्यहरूले पूजा गर्दछ ।
३) मू कुमारी : वज्राचार्य जातिद्वारा पुजिने ।
४) क्वाःबहाः कुमारी : थःने क्षेत्रका वज्राचार्य र ठमेल भगवानबहाःका प्रधानहरूद्वारा पुजिने ।
५) किलागः कुमारी : ज्यापू जाति र इटुम्बहाः क्षेत्रका प्रधानहरूद्वारा पुजिने ।

### ललितपुर

७) गाबहाल कुमारी : यो वज्राचार्य जातिबाट छनौट हुन्छ र पाटनवासीद्वारा पुजिन्छ ।
८) सोनिम्ह कुमारी : मिखाबहाःका ज्यापू जाति र त्यस स्थानका देव ब्राम्हणहरूद्वारा पुजिन्छ ।

### भक्तपुर

९) एकान्त कुमारी : भक्तपुरका कुनै पनि शाक्य-वज्राचार्यहरू रहने बहालबाट चुनिने र भक्तपुरवासीद्वारा पुजिने । उनी बस्ने कुमारी घर दिपंकर बहालमा रहेको छ ।
९) वालालखु कुमारी : एकान्त कुमारी जसरी नै चुनिन्छ र दशैंका बेला विशेष रूपमा पूजा हुन्छ ।
१०) टेबुक्छे कुमारी : शाक्य, वज्राचार्यबाट चुनिन्छ । दशैं ताका स्थानीय ज्यापू समुदायबाट पुजिने ।

### बुंगमती

११) बुंग कुमारी : बुंगद्यः (रातो मछिन्द्रनाथ) को मन्दिरमा पाःलाः बस्ने पाञ्जुहरूद्वारा चुनिने यी कुमारीको पूजा बुंगमतीका सबै स्थानीय

जनताले गर्दछन् ।[९८]

तर माथिको यो तथ्यांकलाई लेखक तीर्थलाल नःघःभनीले भने अपूर्ण मान्नुभएको छ । उहाँका अनुसार यसमा मुख्य मुख्य प्रचलित कुमारीहरूको मात्र अध्ययन गरेको देखिन्छ । अरु कतिपय कुमारीहरू यसमा समावेश गरेको देखिँदैन। भक्तपुरमा मात्र जम्मा २१ कुमारी छन् । त्यसमध्ये ३ कुमारीको मात्र उल्लेख गरेको देखिन्छ। यस्तै कान्तिपुरमा र ललितपुरमा कति होलान् । यस सम्बन्धी अध्ययन गर्न बाँकी नै छ ।[९९]

काठमाडौंमा शाक्य, वज्राचार्य बाहेक ज्यापू समुदायको पनि विभिन्न टोलमा आफ्नै कुमारी राख्ने परम्परा छ। प्रताप मल्लका बुबा लक्ष्मीनरसिंह मल्लले काठमाडौंको किलागल छुबिननी भन्ने चोकमा रोइरहेकी एक बालिकालाई कुमारी मानी पूजा गरेको र त्यस बेलादेखि छुबिननीका महर्जन परिवारकी एक कुमारीले निरन्तर पूजा पाइआएको छ। यहाँ पनि बडादशैँमा राजाबाट एउटा राँगा पठाउने र बलि पछि राँगाको मासु प्रसाद स्वरुप दरवार पठाउने चलन थियो । बसन्तपुरकी कुमारीलाई बिसञ्चो भएमा यही छुबिननीको कुमारी घरको आगमभित्र रहेको कलशको जल लगी खुवाउने चलन छ। अरु विरामीलाई पनि सो जल खुवाएमा रोगमुक्त हुन्छ भन्ने धारणा रहिआएको छ ।[१००]

यस्तै गरी लायकू कुमारीसँग काठमाडौंमा रहेका अन्य कुमारीहरूसँग पनि सम्बन्ध रहेको पाइन्छ । चाबहीमा पुस महिनामा सम्पूर्ण देवीदेवताको आह्वान गरी दिशीपूजा मनाउने गरिन्छ । दिशीपूजा गर्दा एकादशीका दिन चाबहीकै कुमारी राखी थकाली महिलाहरूले मात्र पूजा गर्ने चलन थियो । कुमारी राखिने कोठाको बाहिर थकाली महिलाहरूले पूजा गर्ने चलन बाँकी नै छ र उक्त दिन यस बहीको कुलदेवता गुप्त योगिनीलाई पनि पूजाआजा गरी संघसदस्यहरू सहित सबै परिवारहरू बसी प्रसाद एवं भोज खाने गर्दछन् । यहाँको कुमारीको सन्दर्भमा यदि काठमाडौं कुमारी घरमा बस्ने कुमारी दिवंगत भएर इन्द्रजात्रा मनाउन बाधा आयो भने यस चाबहीबाट यहाँको कुमारी लगी

---

९८ एलेन, पूर्ववत् ७४, पृ. १४ ।
९९ नःघःभनी, पूर्ववत् २४, पृ. ५ ।
१०० श्रेष्ठ, पूर्ववत् ८३, पृ. ८ ।

इन्द्रजात्रा मनाउने गरेको इतिहास पनि पाइन्छ ।[१०१]

राजा भास्कर मल्लको राज्यकालमा वि.सं. १७७३ सालताका काठमाडौंमा आएको महामारीको प्रकोपले काठमाडौं राजदरबारकी तत्कालीन कुमारीको समेत निधन भएको थियो । त्यस बेला देउपाटनको अर्थात् थतु चाबहिल (समाधिमण्डप महाविहार) की कुमारी ल्याई दुई महिनासम्म यहाँको कुमारी घरमा विराजमान गराई नित्यपूजा चलाइएको थियो ।[१०२]

उपत्यकामा शाक्य, वज्राचार्य, ज्यापू, द्यःब्रम्हू जातिका कुमारीहरू अस्तित्वमा छन् ।[१०३] बसन्तपुर बाहेक अन्य स्थानहरूमा पनि जीवित देवी कुमारी स्थापना गरी पूजा गर्ने चलन रहेको छ। काठमाडौंमा मखन, किलागल, मूलश्री महाविहार (मूबहा:) आदि लगायत ललितपुर, भक्तपुर, बुंगमति, टोखा, नुवाकोटमा समेत अलग अलग जीवित देवी कुमारी स्थापना गरिएको पाइन्छ। यस्तै मखं कुमारी स्थानीय मखं टोलका ज्यापू समुदायद्वारा चुनिने कुमारी हुन्। काठमाडौं महानगरपालिकाले गत वर्षदेखि किलागल कुमारी र मखं कुमारीलाई निरन्तरता दिन वार्षिक रुपमा आर्थिक अनुदान दिने व्यवस्था गरेको छ ।

काठमाडौंको क्वाबहा:, पाटनको ह:खा बहा: र भक्तपुरको चतुर्वर्ण महाविहारका कुमारीहरू पनि आआफ्नै महाविहारसँग सम्बन्धित रहेको छ तर उनीहरू त्यहीं बस्नुपर्ने आवश्यकता भने छैन ।[१०४]

यी सबै कुमारीहरू अलग अलग स्थानमा बस्ने भए पनि उनीहरूको वस्त्र, गरगहना र आकृतिमा भने एकरुपता पाइन्छ। ती वस्त्र आभुषणको महत्वका बारे पनि विभिन्न विद्वानहरूले प्रकाश पारेका छन् । शाङ्ख्य दर्शन अनुसार प्रकृतिका तीन गुण हुने गर्दछ - सत्व, रज र तम। कुमारीमा यी तीनै गुणहरू सामुहिक रुपमा प्रतिविम्बित भएको पाइन्छ। कुमारीले लगाउने सुनका गरगहनाहरूले सत्व गुणको प्रतिनिधित्व गर्दछ । कुमारीले लगाउने सुनका गरगहनाहरूबाट विवाहिता स्त्रीको पहिचान पनि झल्किन्छ। त्यस्तै कुमारीको निधार, हात र खुट्टामा समेत रातो लगाइएको हुन्छ । यसले रज गुणको

१०१ अजय क्रान्ति शाक्य, *कान्तिपुरका बही शाक्यहरूको संस्कृति : एक अध्ययन*, काठमाडौं: बि.सं. २०७१, पृ. १२९ ।

१०२ प्रधान, पूर्ववत् ६७, पृ. ६० ।

१०३ जोशी, पूर्ववत् ५९, पृ. ३४ ।

१०४ स्लसर, पूर्ववत् ३४, पृ. ३११ ।

प्रतिनिधित्व गर्दछ । रातो रंगको वस्त्रबाट पनि विवाहिता स्त्रीकै पहिचान झल्किन्छ । त्यस्तै कुमारीको निधारमा रहेको तेश्रो नेत्रको पनि विशेष महत्व छ। तान्त्रिक मान्यता अनुसार तेश्रो नेत्र खोलेमा यसले यो लोक भन्दा बाहिर अर्को लोकको समेत दर्शन गर्न सकिन्छ ।

केही विद्वानहरूले 'कुमारीतन्त्र' लगायतका ग्रन्थहरूको आधारमा जीवित देवी श्री कुमारीलाई कुमारित्व (भर्जिनिटी) सँग जोडेर पनि चर्चा गरेको पाइन्छ। कुमारी कन्या र कुमारित्वका विषयमा विभिन्न समुदायमा आआफ्नै धार्मिक सांस्कृतिक अवधारणाहरू रहेका छन् । विशेष गरी नेपाल तथा भारतमा रहेका विभिन्न समुदायहरूको धार्मिक सांस्कृतिक परम्परामा महत्वका साथ कुमारी कन्या र कुमारित्वका विषयमा वर्णन गरिएका विभिन्न ग्रन्थहरू समेत पाइन्छ। तर काठमाडौंमा जीवित देवीका रुपमा लिइने श्री कुमारी र महिलाको कुमारित्व सम्बन्धी रहेका परम्परा र मान्यताहरू बीच एक आपसमा कुनै सम्बन्ध छैन। यद्यपि महिलाको कुमारित्वका विषयमा लेखिएका त्यस्ता ग्रन्थहरू र त्यसमा वर्णित सन्दर्भहरूलाई जीवित देवी श्री कुमारीका प्रशंगमा समेत जोडेर केही विद्वानहरूले लेखेका लेखरचनाहरूले भने भ्रम उत्पन्न गराउन खोजेको अध्ययन अनुसन्धानका क्रममा पाइएको छ।

## कुमारी छनौट

कुमारी घरमा बस्ने कुमारी ११-१२ वर्षमा रजस्वला हुने उमेर पुगेपछि नयाँ कुमारी छानेर प्रतिष्ठापन गर्ने चलन छ। नयाँ कुमारी विशेष गरी दशैंको अष्टमीका दिन हेरफेर गर्ने चलन रहँदै आएको छ। शरीरमा कुनै घाउचोटको खट नभएकी, दाँत नझरेकी, ३२ लक्षणले युक्त, मुलुकको चिनासँग अनुकुल चिना भएकी २-३ वर्षकी बालिकालाई कुमारीका रूपमा चयन गरिन्छ।

नयाँ कुमारीको चयन कसरी गरिन्छ भन्ने विषयमा पनि अनेक भ्रमपूर्ण कुराहरू प्रचारमा आएका छन् । खास गरी फ्रेञ्च लेखक सिल्भाँ लेभीले आफ्नो पुस्तकमा कुमारी चयन गर्न प्रतिस्पर्धी बालिकाहरूलाई कठोर परीक्षण गरिने र त्यसपछि मात्रै कुमारी छनौट गरिन्छ भनी लेखेका कारण पनि समाजमा यस्तो भ्रमण सिर्जना भएको हो । लेभीले लेखेका छन्, "कुमारी हुन पाएमा धेरै सुविधा पनि पाइन्छ । इन्द्रजात्रामा देखिने कुमारीको लागि वर्षौंसम्मका लागि एक विशेष घर हुन्छ र उनले प्रशस्तै भेटी पनि पाउँछिन् ।

तर कुमारी हुन कठोर परीक्षाबाट पार हुनु पर्दछ। कुमारी हुने बाँडा परिवारकी छदेखि सात वर्षकी उम्मेदवारलाई दशैंमा मारिएका राँगाका टाउकाहरू राखिएको, रगतै रगत भएको एउटा अँध्यारो कोठामा बन्द गरेर राखिन्छ। केटीले के गर्छे भनी बाहिरबाट चेवा गरिन्छ। केटी अलिकति पनि डराएको जस्तो देखिइन् भने कुमारी हुन पाउँदिनन्। साँच्चैकै देवी कुमारी बाघमाथि चढेर चिहानहरू चहार्ने भएकीले उनलाई रगत र मुर्दाको डर लाग्नु हुँदैन। यसरी छानिएकी देवीकी अवतार भएकी कुमारीलाई राजखड्ग अघि लगाएर राजा दर्शन गर्न आउँछन्। त्यस बेला कुमारीले आफ्नो वरिपरिका मध्ये एक जनालाई आफ्नो इच्छा प्रकट गर्न लगाउँछिन्।"[१०५]

तर नयाँ कुमारी छनौट गर्दा भर्खर काटिएका राँगाका टाउकाहरूका बीचमा हिँडाउने, डरलाग्दो ठाउँमा लगिने र त्यहाँ निडर भएमा मात्रै छनौट गरिन्छ भनी लेखकहरूले लेखेको भएता पनि आफूलाई कुमारी छनौट गर्दा भने त्यस्तो कुनै कार्य नगरिएको कुरा पूर्व कुमारी रश्मिला शाक्यले बताउनुभएको छ।[१०६]

त्यस्तै कुमारी बारे पुस्तक लेखेका लेखक इजाबेला ट्रीले पनि कुमारी छनौट विधिलाई अत्यन्त रहस्यमयी भनी लेखेका छन्। उनले लेखेका छन्, "केहीले यसलाई दलाई लामा छनौट गरे जस्तो छनौट गर्छन् पनि भनेका छन्। कुमारी हुनलाई ३२ लक्षणले युक्त हुनु पर्छ भनिएको छ। उनको छाती सिंहको जस्तो, घाँटी शंखकिराको जस्तो, आँखा गाईको जस्तो, शरीर वरको रुख जस्तो, गोडा हिरणको जस्तो, यौनांग सानो आकार भएका, हाँसको जस्तो सानो स्वर भएका हुनु पर्छ भनिन्छ। साथै उनी गर्भमा हुँदा उनकी आमाले सपनामा ईश्वरलाई देखेको हुनु पर्छ पनि भनिएको छ। कुमारीको जन्म हुँदा त्यसको शुभसंकेत स्वरुप उनको घरमा नागले प्रवेश गरेको हुनु पर्दछ।"[१०७]

तर पूर्व कुमारी शाक्यका अनुसार कुमारी छनौट हुँदा मूल पुरोहितकी श्रीमती र उनकी छोरीले शाक्यकी आमाको उपस्थितिमा शारीरिक परीक्षण गरेका थिए। तर त्यो कुनै 'कडा' परीक्षण थिएन। उहाँको सबै कपडा

१०५ सिल्भाँ लेभी, *नेपाल : हिन्दू अधिराज्यको इतिहास* (दोश्रो खण्ड), काठमाडौं: हिमाल किताब प्रा.लि., सन् २००७, पृ. २८।

१०६ मजुपुरिया र पेट्रिसिया, पूर्ववत् ७०, पृ.७४।

१०७ Isabell Tree, *The Living Goddess*, India: Penguin Books, 2014, p. 6.

फुकालिएको पनि थिएन । शरीर जाँच हुँदा खास गरी आँखा, दाँत र शरीरमा कुनै खट थियो कि भनेर हेरिएको थियो । छनौट पछि तलेजु मन्दिरमा लगी पूजा गरिएको थियो ।[१०८]

कुमारीको छनौट कसरी गरिन्छ भन्ने विषयमा छुट्टै विधिहरू पनि रहेका छन् । तेह्रौं शताब्दीको अन्तिमतिर अर्थात सन् १२८० र १२८५ का दुई वटा ठ्यासफूहरूमा कुमारीको छनौट, गरगहना र पूजा विधि बारे लेखिएको पाइएको छ ।[१०९]

कुमारी घरमा रहने लायकू कुमारी छनौट गर्ने आफ्नै मौलिक विधि रहेको छ । काठमाडौंका विभिन्न महाविहारमा रहेका शाक्य कन्याहरूबाट लायकू कुमारी छनौट गरिन्छ । काठमाडौंमा नेवार बौद्धहरूको तीन प्रकारको महाविहार संघ परम्परा रहेको पाइन्छ । ती सबै विहारहरू एकै थरिका जस्तो लागेता पनि विहारहरूको भिन्नता ती विहारहरूमा भएका संघले छुट्टिन्छ । ती विहारहरूलाई र त्यहाँका संघलाई सांघिक दृष्टिकोणले तीन प्रकारका विहार र संघमा विभाजन गरेको पाइन्छ ।[११०]

क) अठार महाविहार (भिच्यागू) र अठार महाविहार वज्राचार्य संघ तथा शाक्यभिक्षु संघ
ख) दश महाविहार र शाक्यभिक्षु संघ
ग) सोह्र महाविहार (भिंखुगू) र शाक्यभिक्षु संघ

यी तीन प्रकारका महाविहारहरू मध्ये शाक्यहरू मात्र बस्ने १० वटा महाविहार र शाक्य तथा वज्राचार्य दुवै रहने १८ वटा महाविहार मध्ये ६ वटा महाविहार गरी जम्मा १६ वटा महाविहारमा रहेका शाक्य कन्याहरू मध्ये मात्र कुमारी छनौट गरिन्छ । शाक्य नै भए पनि भिंखुगू बही संघका शाक्य कन्याहरूबाट भने लायकू कुमारी छनौट गरिँदैन ।

लायकू कुमारी छनौट गरिने काठमाडौंका १६ वटा विहारहरू निम्न छन् :

दश महाविहार संघ यस प्रकार छन् :

---

१०८ शाक्य, पूर्ववत् ५२, पृ. १६ ।
१०९ स्लसर, पूर्ववत् ३४, पृ. ३१२ ।
११० शाक्य, पूर्ववत् १०१, पृ. ५७-५८ ।

१) श्री शान्तिघट वज्रधातु महाविहार, श्रीघःबहाः नःघः
२) रत्नमण्डल महाविहार, नःघः बहाः
३) अशोकचैत्य महाविहार, असं बहाः,
४) महाबौद्ध महाविहार, महाबुद्ध बहाः
५) धर्मचक्र महाविहार, तःधं बहाः
६) मञ्जुश्रीनक महाविहार, विश्वकर्म बहाः
७) धर्माकर महाविहार, स्वःबहाः, यंगाल
८) कीर्तिपुण्य भूवन सुन्दर राजकीर्ति महाविहार, यताबहाः, गोफल
९) रत्नाकर महाविहार, क्वँसाः बहाः, ह्यूमत
१०) कीर्तिपुण्य महाविहार, क्वहिटी बहाः

भिंच्यागू महाविहार संघ अन्तर्गत कुमारी छनौट गर्ने छवटा महाविहार यस प्रकार छन् :
११) कनकचैत्य महाविहार, जनबहाः
१२) केशचन्द्र पारावर्त महाविहार, इतुम्बहाः
१३) रत्नकीर्ति महाविहार, मखंबहाः
१४) ब्रम्हचक्र महाविहार, ओमबहाः
१५) श्रीखण्ड तरमूल महाविहार, सिकंमू बहाः
१६) कीर्तिपुण्य महाविहार, लगंबहाः ।

यी १६ वटा महाविहारमा बस्ने तीन पुस्तासम्म अन्तरजातीय विवाह नगरेका दम्पत्तिबाट जन्मिएका शाक्यपुत्री मात्रै कुमारी बन्न योग्य हुने परम्परा रहेको छ। कुमारी परिवर्तन गर्ने समय आए पछि कुमारी घरका चिताइदारबाट यी १६ वटा महाविहारमा कुमारी बन्न योग्य कन्या भएका अभिभावकहरूलाई आह्वान गर्ने गरिन्छ । इच्छुक अभिभावकहरूले आफ्ना छोरीको जातः (चिना) दिएर पठाउँछन् । पहिले पहिले उक्त चिनालाई राजदरवारका बडागुर्जुलाई दिने गरिन्थ्यो । अहिले गुठी संस्थानलाई दिने गरिन्छ । त्यसपछि गुठी संस्थानले नै कुमारी घरका चिताइदार, तलेजुका आचाजु, जोशी नाइके र वज्राचार्य पञ्चबुद्धको प्रतिनिधि समेतको बैठक बसी ती सबै जातःहरूका बारेमा छानबिन गरिन्छ । त्यसमा मापदण्ड पूरा भएका

कन्याहरूको जातः मात्र छनौट गरी राष्ट्रिय ज्योतिषलाई दिइन्छ । राष्ट्रिय ज्योतिषले नेपालको राष्ट्रिय योगसँग मिल्ने एकजना कन्याको जातःलाई छनौट गर्दछ । यो नै कुमारीको अन्तिम छनौट हो । त्यसपछि उक्त जातः भएकी कन्यालाई राष्ट्रप्रमुख समक्ष परिचय गराई नयाँ कुमारीको लागि वैधानिक मान्यता प्रदान गर्दछ । दशैंको अष्टमीका दिन नयाँ हुनेवाला कुमारीलाई उनको घरबाट ल्याई हनुमानढोका दरवार लगिन्छ । त्यहाँको मूलचोकमा उनलाई जट्टावाल नरिवल प्रदान गरी राज्यका तर्फबाट स्वागत गरिन्छ । त्यसपछि उनलाई हनुमानढोकाबाट कुमारीघर लगिन्छ । कुमारी घरमा नयाँ कुमारीलाई आसनमा राखी आवश्यक पूजा गरे पछि निवर्तमान कुमारी त्यहाँबाट बाहिर निस्कन्छन् र बाजागाजा सहित आफ्नो घर फर्कन्छन् ।[१११]

त्यसको भोलिपल्ट दशैंको नवमीका दिन नयाँ कुमारीलाई तलेजु लगिन्छ र त्यहाँको मूलचोकमा राखी आचाजुबाट पूजा गरिन्छ । यसरी निवर्तमान कुमारीलाई विदा गरी नयाँ कुमारी प्रतिस्थापन हुन्छ । सामान्यतया कुमारी रजस्वला हुने उमेर पुगेपछि नयाँ कुमारी छानेर प्रतिष्ठापन गर्ने चलन छ ।[११२]

नयाँ कुमारी चयन गर्दा नयाँ र निवर्तमान कुमारी दुवैलाई सँगै राखी आचाजुबाट तन्त्रविधिबाट निवर्तमान कुमारीमा विद्यमान रहेको आराध्यदेवी तुलजा भवानीको शक्तिलाई निकालेर नयाँ कुमारीमा प्रतिस्थापन गरिन्छ । वि.सं. १८१३ (ने.सं. ८७७) मा जयप्रकाश मल्लले कुमारीको रथयात्रा चलाउन थालेदेखि ने.सं. ११२१ सम्म २४५ वर्षको इतिहासमा कुल ४१ जना कुमारी फेरिइसकेका छन् ।[११३] यसमा ने.सं. ११२१ पछिका थप चार जना कुमारी पनि जोड्दा अहिलेसम्म कुल ४५ जना कुमारी भइसकेको देखिन्छ ।

नयाँ कुमारीहरू उनीहरूको आफ्नै महत्व र विधिका साथ चयन गरिन्छ । काठमाडौंको राज-कुमारीको लागि विभिन्न बहाःका शाक्यहरूबाट, ललितपुरको मू कुमारीको लागि हखा बहाःका वज्राचार्यहरूबाट, पाटनको सुलिम्ह टोलको कुमारीको लागि मिखा बहाः क्षेत्रका ज्यापुनीहरूबाट छान्ने गरिन्छ । काठमाडौंको राज-कुमारी छनौट गर्न बडा गुर्जु (गोर्खाली ब्राम्हण र प्रमुख राज पुरोहित), राज गुर्जु (वज्राचार्य) र अरु हिन्दू एवं बौद्ध अधिकारीहरू

---

१११ अवलोकन ।

११२ पूर्व कुमारी श्री मतिना शाक्यका पिता प्रतापमान शाक्यसँग अन्तर्वार्ता ।

११३ श्रेष्ठ, पूर्ववत् ४१, पृ. १०४ ।

रहेको समूह रहेको हुन्छ । यही समितिले मापदण्डहरूका आधारमा नयाँ कुमारीको छनौट गर्छ । कहिलेकाहीं गोला राखेर पनि कुमारी छान्ने गरिन्छ ।[११४]

बसन्तपुरको कुमारी घरमा कुमारीको हेरचाहका लागि विशेष व्यक्तिहरू खटिएका हुन्छन् जसलाई चिताइदार भनिन्छ । त्यहाँ उनको दैनिक नित्यपुजा हुन्छ भने खानपानको लागि छुट्टै पकाउने गरिन्छ । अहिले कुमारी माजुलाई शिक्षक शिक्षिकाहरू कुमारी घरमै आई दैनिक पढाउने गरिन्छ भने यो अवधिमा अन्य पूजा र दर्शन बन्द गरिएको छ ।[११५]

वर्तमान चिताइदार सदस्य दुर्गा शाक्यका अनुसार गएको केही वर्षदेखि कुमारी जात्राप्रति सर्वसाधारणको श्रद्धा बढ्दै गइरहेको पाइन्छ । पहिले पहिले जात्राका लागि राजाहरू सवारी हुँदा सबैजनाको ध्यान राजारानीप्रति मात्रै केन्द्रित हुन जाने गर्दथ्यो । देवीप्रति कमै मात्र ध्यान दिइन्थ्यो । तर अहिले त्यसमा सुधार भएको छ । पहिले पहिले बाजाको नाममा उही सेनाको एक टुकडी मात्रै आउने गर्थ्यो । समयक्रममा विभिन्न सांस्कृतिक बाजागाजाहरू थपिँदै आएको छ । अहिले अन्तर्राष्ट्रिय रुपमै कुमारी बारे चर्चा परिचर्चा हुन थालेको र राज्य लगायत स्थानीय सरकार तथा स्थानीय जनताबाट पनि श्री कुमारीप्रति असीम श्रद्धा बढेकोले यसको सांस्कृतिक महत्व झन चुलिएको छ ।[११६]

## चिताइदार

कुमारीछेँ (कुमारी घर) मा कुमारीको हेरचाह एवं स्याहारसुसार सम्बन्धी प्रयोजनको लागि अरू एक जना प्रौढ महिला पनि बसेका हुन्छन्, तिनलाई चिताइदार भनिन्छ । चिताइदारले श्री कुमारीको स्याहारसुसारका साथै कुमारीका सबै धार्मिक-सांस्कृतिक कार्यहरूका लागि आवश्यक बन्दोवस्त मिलाउने कार्य गर्दछ ।

कुमारी घरमा श्री कुमारीका लागि भोजन तयार गर्ने, स्नान गराइदिने, पूजाआजाको व्यवस्था गर्ने, स्वास्थ्य सम्बन्धी ध्यान दिने जस्ता सबै कार्यहरू

११४ स्लसर, पूर्ववत् ३४, पृ. ३१३ ।
११५ पूर्ववत् १ ।
११६ ऐजन ।

चिताइदारले गर्दछ। कुमारी घरमा श्री कुमारीको दिनचर्या सामान्यतया बिहान सबैरैदेखि शुरु हुन्छ। बिहान सबेरै कुमारी उठ्नु हुन्छ। उठेर उहाँको स्नान हुन्छ। त्यस पछि चियापान हुन्छ। चियापान पछि कुमारीको नित्यपूजा शुरु हुन्छ। कुमारीको नित्यपूजा वज्रयानी बुद्ध धर्म र हिन्दू धर्म दुवै संस्कारबाट सम्पन्न गरिन्छ। बुद्ध धर्म अनुसारको पूजा वज्राचार्य राजगुर्जुबाट सम्पन्न गरिन्छ भने हिन्दू धर्म अनुसारको पूजा तलेजु भवानीका पुजारी आचाजुबाट सम्पन्न गरिन्छ। हाल दैनिक ९ बजेतिर यो दुबै पूजा सम्पन्न गर्ने गरिन्छ। नित्यपूजा पछि भक्तजनहरूका लागि दर्शन खुल्ला हुन्छ।

त्यस पछि कुमारीको भोजन समय शुरु हन्छ। कुमारीको भोजन छुट्टै पकाउनुपर्ने हुन्छ। भोजनमा दालभात तरकारी लगायत कुमारीलाई मनपर्ने परिकारहरू पकाउने गरिन्छ। भोजनमा कुमारीलाई कुखुराको मासु र अण्डा चल्दैन।

भोजन पछि दिउँसो १२ बजेदेखि कुमारीको पढाई शुरु हुन्छ। उहाँ भर्ना हुनुभएको स्कूलबाटै शिक्षकहरू आई पढाउने गरिन्छ। यसमा स्कूलकै कोर्श अनुसारको पढाई हुन्छ। यो पढाई साँझ ४ बजेसम्म चल्छ। पढाई पछि उहाँको खेल्ने समय हुन्छ। साथै कोही दर्शनको लागि आए भने यही बेला दर्शन पनि गराइन्छ। त्यस पछिको समय स्कूलको गृहकार्य गर्नमा बित्छ। त्यसपछि बेलुकीको भोजन शुरु हुन्छ। भोजन पछि अलिबेर आराम गर्ने र अनि सुत्ने समय हुन्छ। सुत्नु अघि दैनिक आरती गरिन्छ। कुमारी घरमा श्री कुमारीलाई आदरपूर्वक 'कुमारी माजु' भनी सम्बोधन गर्ने गरिन्छ।

यसै बीच हरेक दशमीका दिन आगम कोठामा गोप्य पूजा हुन्छ। वज्राचार्य राजगुर्जुबाट कुमारी घरमै रहेको गोप्य आगम कोठामा कुमारीलाई विराजमान गरी उक्त पूजा गरिन्छ। त्यस्तै इन्द्रजात्रा, दशैं, बहिद्यः ब्वये, घोडेजात्रा आदि जस्ता विशेष पर्वमा कुमारीलाई कुमारी घरबाट बाहिर लानु पर्ने हुन्छ। यी अवसरमा अझ विशेष तयारी गर्नुपर्ने हुन्छ।

श्री कुमारीसँग सम्बन्धित यी सबै कार्यहरू गर्न चिताइदार एकजनाले मात्र सम्भव हुँदैन। यसको लागि चिताइदारलाई उनको पूरा परिवारले नै सहयोग गरिरहेको हुन्छ। साथै श्री कुमारीको स्याहारसुसार गर्दा चिताइदारले विभिन्न नियमहरू पनि पालना गर्नुपर्ने हुन्छ। कुमारी घरमा बस्ने चिताइदार र उनको परिवारले अरुको जुठो खान नहुने, बाहिर भोज गएमा फर्कंदा शुद्धी

गर्नुपर्ने, बुहारीहरू माइती गएमा फर्कंदा शुद्धी गर्नुपर्ने आदि जस्ता नियममा बस्नुपर्ने हुन्छ ।

कुमारीलाई स्याहार गर्ने चिताइदार पनि एक पुस्ताबाट अर्को पुस्तामा हस्तान्तरण हुँदै जाने परम्परा रहेको छ । चिताइदारको जिम्मेवारी सासुबाट जेठी बुहारीमा हस्तान्तरण हुँदै जाने परम्परा छ । वर्तमान चिताइदार श्रीमती ज्ञानदेवी शाक्य हुनुहुन्छ। हाल ७८ वर्षमा रहनुभएका शाक्य आफ्नो परिवारको ११ औं पुस्ताका चिताइदार हुनुहुन्छ ।

## श्री गणेश र श्री भैरव

इन्द्रजात्रामा गरिने श्री कुमारीको रथयात्रा बारे कुरा गर्दा श्री कुमारी सँगै रथयात्रा गरिने श्री गणेश र श्री भैरवको प्रशंग पनि आइहाल्छ । कुमारी जात्रा विशिष्ट जात्रा हुनुको प्रमुख कारण यो सँगै गणेश र भैरवको जात्रा पनि हुनु हो ।

इन्द्रजात्राका बेला इन्द्रचोकका आकाश भैरवलाई कुमारीको पूजा र कुमारीलाई आकाशभैरवको पूजा लानुपर्ने चलन पनि छ ।[११७] यसबाट कुमारी र भैरव बीच अन्तरसम्बन्ध रहेको देखिन्छ ।

काठमाडौंमा जस्तै ललितपुर र भक्तपुरमा पनि जीवित देवी कुमारी छनौट गरी प्रतिष्ठापन गर्ने चलन रहेता पनि त्यहाँ काठमाडौंमा जस्तो जीवित देवता गणेश र भैरव छनौट गरी प्रतिष्ठापन गर्ने परम्परा भने पाइँदैन । त्यसैले जीवित देवता गणेश र भैरवलाई काठमाडौंकै मौलिक संस्कृतिका रुपमा लिन सकिन्छ ।

कुमारी र कुमारी जात्राको इतिहास बारे धेरै कुरा सार्वजनिक भए पनि इन्द्रजात्रामा सँगै रथयात्रा गरिने श्री गणेश र श्री भैरव बारे भने धेरै कम मात्र चर्चा भएको पाइन्छ । कुमारी रथयात्रा सँगसँगै नै गणेश र भैरवको रथयात्रा पनि शुरु भएको देखिन्छ। तर वर्तमान तथा भु.पु. जीवित श्री गणेश-श्री भैरव संरक्षण समितिको कार्यालय सचिव विश्व शाक्यका अनुसार इन्द्रजात्रामा हुने कुमारी जात्रामा श्री कुमारीको रथ सँगैसँगै श्री गणेश र श्री भैरवको रथलाई पनि तानेर नगर परिक्रमा गराइन्छ । कुमारी जस्तै गणेश

११७ रास जोशी (राजनलाल), *'यँयाःलिसे स्वाना वयाच्वंगु कुमारी याः'*, ख्वपः स्वनिगःया संस्कृति, कुतः पिकाक, बि.सं. २०६६ ।

र भैरव पनि जीवित देवता नै हुन् । गणेश र भैरव इन्द्रजात्राका तीन दिन रथमा विराजमान भई जात्रामा सहभागी हुन्छन् । उहाँहरूलाई पनि वर्षभरि नै देवताका रुपमा पूजाआजा गर्ने चलन रहेको छ । कुमारीलाई जस्तै उहाँहरूलाई बस्नका लागि छुट्टै घरको व्यवस्था गरिएको छैन त्यसैले आफ्नै घरमा बस्नुपर्ने हुन्छ । तर आफ्नै घरमा बसे पनि उहाँहरू परम्परागत सांस्कृतिक पहिरनमै बस्नुपर्ने हुन्छ । अरु बालकहरूले जस्तो अन्य पोशाक लगाउन पाइँदैन । उहाँहरू आफूलाई मन लागेको स्कूलमा पढ्न जान त पाउनुहुन्छ तर स्कूलको पोशाक भने लगाउन पाइँदैन । बाहिर खान हुँदैन । अर्काको जुठो छुनु हुँदैन । भोज जानु हुँदैन । धार्मिक-सांस्कृतिक कार्यसम्बन्धी भोजमा छुट्टै कार्डमा निमन्त्रण गरिएको रहेछ भने जान मिल्छ तर त्यहाँ अलग्गै आसनमा बसी भोजन गर्नुपर्छ । कपाल काट्नु हुँदैन । यसरी वर्षभरि नै विभिन्न नियम पालना गरी बस्नुपर्ने हुन्छ ।

गणेश र भैरवलाई अलि उमेर पुगिसके पछि परिवर्तन गर्ने चलन रहँदै आएको छ । गणेश र भैरवको रुपबाट सामान्य जीवनमा फर्किसके पछि शाक्य परम्परा अनुसार सामुहिक चुडाकर्म (बरे छुयेगु) गरेर आफ्नो बहाःसंघमा आवद्ध हुने गर्दछ । यसरी चुडाकर्म गर्दा रोलक्रममा भने पहिलो स्थानमा राख्नुपर्ने हुन्छ । यस पछि भने उहाँहरूले देवताका रुपमा पालना गर्दै आइरहेको कुनै पनि नियम पालना गर्नु पर्दैन । आफू आवद्ध विहार संघकै सदस्यको भूमिकामा उहाँहरूले सामान्य जीवन यापन गर्न थाल्नुहुनेछ ।

## गणेश र भैरव छनौट विधि

गणेश र भैरव पनि काठमाडौंका शाक्य समुदायबाटै छनौट गर्नुपर्ने व्यवस्था छ । कुमारी छनौट गर्ने काठमाडौंका १६ वटा महाविहारका शाक्य कुलपुत्रहरूबाट नै गणेश र भैरव छनौट गरिन्छ । गणेश र भैरवको छनौट विधि भने कुमारी छनौट भन्दा सरल देखिन्छ । यी १६ वटा विहार संघका इच्छुक अभिभावकहरूबाट गुठी संस्थानले ३-४ वर्ष उमेर पुगेका आफ्ना बालकहरूको जातः (चिना) संकलन गर्दछ । ती जातःहरूलाई राष्ट्रिय ज्योतिषबाट अध्ययन गरी राष्ट्रिय योगसँग मिल्ने उत्कृष्ट जातः छनौट गरिन्छ । त्यसपछि उक्त जातः भएको शाक्य कुलपत्रलाई नै गणेश वा भैरवका रुपमा छनौट गरिन्छ । गणेश वा भैरवका रुपमा छनौट हुने शाक्य कुलपत्र

लक्षणले युक्त भएका, कुनै घाउ खोट नभएका, निडर, दाँत नझरेका हुनुपर्ने मापदण्ड रहेको छ ।

गणेश र भैरव हुने सबै बालकहरूको घरमा नियम पालना गरी बस्न मिल्ने वातावरण नहुन पनि सक्ने हुनाले श्री कुमारीलाई जस्तै श्री गणेश र श्री भैरवका लागि पनि छुट्टै घरको व्यवस्था हुनुपर्ने सचिव विश्व शाक्यको बिचार रहेको छ ।

## हाथु हायेके

इन्द्रजात्रामा अत्यन्त रमाइलो मान्ने र जात्राको रौनकलाई अझ बढाइदिने अर्को एउटा महत्वपूर्ण अंग हनुमानढोका दरवार बाहिर, देगुतलेजु मुनि स्थापना गरिएको श्वेत भैरवको मूर्तिमा गरिने हाथु हायेके परम्परा पनि हो । काठमाडौंमा रहेका आठ वटा भैरव मध्ये श्वेत भैरव पनि एक हो । श्वेत भैरवको मूर्ति मुखाकृति मात्रै भए पनि यो १४ फिट अग्लो र १२ फिट चौडा रहेको छ । यसलाई शिवको डरलाग्दो स्वरुपका रुपमा पनि लिने गरिन्छ ।

श्वेत भैरवको मूर्तिमा दाँतहरू र रातो जिब्रो देखिने गरी मुख खुल्ला गरिएको छ । दुई ठूला आँखा बाहेक माथि निधारमा अर्को एउटा आँखा पनि रहेको छ । निधारको माथि मुकुटमा ठूलो आकारका बहुमूल्य पत्थरहरू जडित छन् । दायाँबायाँ लामा लोटी भएका दुई कान रहेका छन् भने दुई आँखाको बीचमा एउटा रातो टीका पनि लगाइएको छ । यो मूर्ति पहेँलो रंगको धातुबाट निर्मित छ । यो मूर्तिलाई कुनै पनि फूलमाला चढाउने गरिँदैन । जात्राका बेला पनि यो मूर्तिलाई अरु देवीदेवताहरू सरह फूलमालाले सजाउने चलन छैन । काठमाडौंका अन्य भैरवहरूलाई फूलमाला चढाए पनि यो भैरवलाई नचढाउने भएकोले यो भैरव अन्य भैरवभन्दा फरक रहेको देखिन्छ ।[११८]

भैरवको वर्ण (रंग) नीलो हुन्छ । श्वेत भैरव, सवःभक्कु नाचका भैरव, इन्द्रचोकस्थित आकाश भैरव, न्यत अजिमा (नरदेवी) को नाचको भैरव, गथु प्याखंको भैरव, सिकाली नाचको भैरव र नवदुर्गा नाचको भैरव सबैको वर्ण नीलो नै हुन्छ । नीलो वर्ण भएकोले भैरवलाई आकाश तत्वको रुपमा पनि

११८ बर्नियर, पूर्ववत् ८४, पृ. १२७ ।

(श्रीरणबहादुर साहबाट स्वाराट्तुष्ट्यै भन्नु इंद्रयात्राको शोभा बढाउन निमित्त मत्स्य मांस मदिरा मुद्रा मैथुन मकारपंचका आलो रगत षान्या भयंकर रूप पनि नहुन्या सौम्यरुप पनि नहुन्या एस्ता मध्यमरूपका सुवर्णका शरभमुखनामा भैरवकन निर्माण गर्दा भया आफ्ना अमल्विषेका मज्जा मेद बोसो आंद्रा मासु इत्यादि षान्या प्राणीका जीउमा दुःख दिन्या डाकिनी शाकिनी भूतिनी पिशाचीहरूका मुक्ति गर्ना निमित्त योगमूर्ति भयाका शरभमुख भैरव स्थापित गर्दा भया ॥८६॥ (त्रिरत्नसौन्दर्यगाथा १४८ पृष्ठ) ।

भूतप्रेतको लागोबाट रोग लाग्छ भन्ने त्यस बेलाको लोकधारणा थियो । यताकोबाट यी भैरव स्थापना रणबहादुर शाहको रोगशान्तिको लागि गरिएको थियो कि भन्ने आभास पाइन्छ ।"[१२१]

हाल हनुमानढोकाको हाथुद्यः सञ्चालनको लागि राखिएको 'ठूला भैरव गुठी' का सञ्चालक सुनिल ताम्राकारका अनुसार शुरुमा यो गुठीमा ताम्राकार, तुलाधर र स्थापित समेत गरी जम्मा छ वटा जातीय समुदाय गुठियारका रूपमा थिए । तर गुठी र संस्कृति चलाउन कुनै ठोस स्रोत नभए पछि दुई गुठियारले छोडेर गए ।[१२२]

ताम्राकारका अनुसार श्वेत भैरवसम्बन्धी एउटा ताम्रपत्रमा यसै गुठीको लागि सतुंगलतिर १०४ रोपनी जग्गा आयस्ता राखिएको उल्लेख छ। २०२२ सालमा ७१ रोपनी रैतान गरियो। त्यसपछि ३५ रोपनी बाँकी देखिएको थियो। तर अहिले यथार्थमा २२ रोपनी कायम भएको छ, त्यो पनि गुठी संस्थान मातहत रहेको छ ।[१२३]

जात्रा चलाउन गुठी संस्थानले दिने खर्च पुग्दैन । गुठीले तेल र स्याःबजि दिन्छ । अनि १२ हजार खर्च दिन्छ । यति खर्चले भने अहिले जात्रा चलाउन सकिँदैन। हालै काठमाडौं महानगरपालिकाले जात्राका लागि ७५ हजार दिने व्यवस्था गरेको छ । यसबाट केही सजिलो भएको छ । इन्द्रजात्रामा यहाँ विभिन्न बलि दिनु पर्दछ। एकादशीका दिन बोका बलि हुन्छ। द्वादशीका दिन राँगा, बोका र हाँसको बलि हुन्छ। नानीचायाःको दिन फेरि राँगा, बोका र हाँसको बलि हुन्छ। बडादशैंको नवमि र चैतेदशैंमा पनि

---

१२१ शंकरमान राजवंशी, '*वि.सं. १८५२ को एउटा ऐतिहासिक कागत*', वर्ष ५, अंक २, काठमाडौं: पूर्णिमा, संशोधन मण्डल, वि.सं. २०२५, साउन-भदौ-असोज, पृ.१३१-१३२ ।

१२२ ठूलो भैरव गुठी (हाथुद्यः) का अध्यक्ष सुनिल ताम्राकारसँग अन्तर्वार्ता ।

१२३ ऐजन ।

राँगा र हाँसको बलि हुन्छ। यो सबै गुठी संस्थानले व्यवस्था गर्छ। जात्राका लागि चाहिने जाँड र स्याःबजिको व्यवस्था भने ताम्राकारहरू आफैले व्यहोर्दै आइरहेको छ।[१२४]

यो भैरवको आफ्नो थुप्रै गहनाहरू पनि छन्। श्वेत भैरवको मूर्ति सिंगार्नका लागि सुरक्षाका कारण ती गहनाहरू निकाल्न गाऱ्हो छ। त्यसको लागि विभिन्न ठाउँमा निवेदन हाल्नुपर्ने र ल्याउँदा पनि खासै सुरक्षा नभएको कारण मूर्तिलाई गहनाले नसजाएको पनि धेरै भइसक्यो। ताम्राकारका अनुसार पछिल्लो पटक वि.सं. २०६३ सालमा मूर्तिलाई सबै गहना राखेर सजाइएको थियो। यो भन्दा अघि २०४३ सालमा सजाइएको थियो। ०६३ पछि अहिले फेरि गहना लगाएको छैन।[१२५]

इन्द्रजात्राका बेला मूर्तिलाई सरसफाई र रंगरोगन पनि गर्नु पर्छ। मूर्ति धुनका लागि कीर्तिपुरमा एउटा पोखरी रहेको छ। त्यो पोखरीबाट कुसा लप्ते ल्याउनु पर्छ। त्यसपछि कर्कलोको पातलाई उसिनेर त्यसको झोलबाट मूर्ति सफा गर्नु पर्छ। पहिले पहिले त मूर्ति सफा गर्न पानीको समेत समस्या हुने गर्थ्यो, अहिले ट्यांकरबाट पानी ल्याउने व्यवस्था भएको छ। सरसफाइ पछि यःसिं उठाउने दिन कोहिटीका चित्रकारहरू आई रंगरोगनको कार्य गर्दछ जसलाई 'लंपुं छायेगु' भनिन्छ।[१२६]

इन्द्रजात्रा अवधिभरि इन्द्रचोकस्थित आकाश भैरवको बाजा टोली आएर श्वेत भैरवकोमा बाजा बजाउनुपर्ने नियम छ। बडादशैं र चैतदशैंमा पनि आकाश भैरवकै तर्फबाट बाजा बजाउने काम हुन्छ। नानीचायाःको भोलिपल्ट आकाश भैरवका १२ जना गुठियारहरूलाई बोलाई भोज ख्वाउनु पर्छ। जात्रा नभएको बेला श्वेत भैरवको नित्य पूजा भने सधैँ गर्नु पर्छ।[१२७]

श्वेत भैरवको मूर्ति हेर्दा अजङ्ग देखिए पनि यो मूर्ति रहेको ठाउँ भने अत्यन्तै साँघुरो छ। मूर्तिको पछाडि एउटा घ्याम्पो राखे पछि मान्छे बस्ने ठाउँ हुँदैन। स्वयम् भैरवकै पूजा गर्न पनि त्यहाँ पर्याप्त ठाउँ छैन। त्यसमाथि छत चुहिसकेको छ।[१२८]

---

१२४ पूर्ववत् १२२।

१२५ ऐजन।

१२६ ऐजन।

१२७ ऐजन।

१२८ ऐजन।

काठमाडौंमा भैरवको मूर्तिबाट 'हाथ्वँ हायेके' गरिने ठाउँ यही मात्र भने होइन । दशैं ताका ठहिटीमा स्थानीय मानन्धरहरूले पनि भैरवको मूर्ति राखी जाँड झार्ने कार्य गर्दछ । उक्त जाँड खानाले शरीर दुख्ने, पेट दुख्ने जस्ता रोगहरू निको हुने जनविश्वास छ ।[१२९]

काठमाडौं मात्र होइन पाटनमा बुंग्द्यः (रातो मछिन्द्रनाथ) को रथयात्रा हुंदा पनि हाथ्वँ हायेके गर्नुपर्ने चलन थियो जुन अहिले लोप भइसकेको छ । त्यहाँ हाथ्वँ हायेके गर्नका लागि एउटा गुठी बनाई आयस्ताको समेत व्यवस्था गरिएको एउटा पत्र फेला परेको छ । ने.सं. ७०३ कार्तिकमा लेखिएको उक्त पत्रमा दानपति ल.पु. कोबहालका उल्हासमैत्री भलीले ल.पु. तापाबहालमा मछिन्द्रनाथको रथ पुगेपछि तापाबाहाल लाछीको पाटीमा हाथोधारा लगाउन आफ्नो नाममा श्री रातो मछिन्द्रनाथको भैरवलाई छोडोल खेत ३ रोपनी र धुपेगाल खेत ३ रोपनीको गुठी राखेको कुरा उल्लेख छ ।

हाथ्वँ गुठीपत्रमा लेखिएको छ -[१३०]

**मूलपाठ**

> 'श्री बुंगया नुगलजात्रा षुनु त्यात्वा याबाल लाछी
> यताफलेस हाथो हायके माल थागोल नसी २ कायनफ
> नीयपेफा अजीथोगोल १ कीयन पेफा कलगु कीयनफ
> नसी २ स्यालबजी फं संन्या । १५ फं सान्हया कायगु ।'

**अनुवाद**

रातो मछिन्द्रनाथको नुगल जात्राको दिन तापावाहाल लाछीको पाटीमा हाथोधारा लगाउनुपर्छ । जाँड घडा २, किपनफ २४ पाथी, अजिथो जाँड घडा १, किपन ४ पाथी, केराउ किपन २ पाथी, स्याबजी १ पाथी, सिद्रा पाथी । १५, मासु ।२ दम्म, यति दान गरी काम चलाउनु अनि दाता तथा गुठियार सबैले भक्षाभोजन गर्नू ।

भैरवको मुखबाट जाँड झार्नु केवल मनोरञ्जन र सुस्वास्थ्यको विषय मात्र होइन । इन्द्रजात्रा चलिरहेकै बेला भाद्रकृष्ण परेवादेखि औंशी (यंलागा

---

१२९ कुंवर, पूर्ववत् १२०, पृ. १८ ।

१३० शंकरमान राजवंशी, *'गुठीसम्बन्धी ऐतिहासिक पत्र'*, प्राचीन नेपाल, संख्या ७९, काठमाडौं: पुरातत्व विभाग, बि.सं. २०४७, पृ. १-२ ।

पारुदेखि आमै) सम्मको समयलाई पितृपक्ष भनिन्छ । त्यसैले यही बेला पितृलाई सम्झिने सोह्रश्राद्ध शुरु हुन्छ । सोह्र श्राद्ध वैदिक परम्परा हो जस अनुसार पितृलाई तर्पण गर्न पिण्ड बनाई पञ्चामृत (घिउ, दूध, दही, मह र सख्खर) राखी पूजा गर्नु पर्छ । तान्त्रिक पद्धति अनुसार हाथु हायेके गर्नु पनि सोह्र श्राद्धकै एउटा अंगको रुपमा लिइन्छ । यसमा पञ्चतत्व रूपी समयबजि र भैरवको मुखबाट झार्ने हाथ्वँलाई दिवंगतहरूका नाममा सामुहिक रुपमा गरिने तर्पणको रुपमा पनि लिन सकिन्छ ।[१३१]

यति धेरै महत्व बोकेको श्वेत भैरवको जात्रा सञ्चालन हुँदा सम्पूर्ण जात्राको रौनक बढ्ने मात्र होइन देशवासीलाई आफ्नो अतुलनीय संस्कृतिप्रति गर्व पनि महसुस हुन्छ । तर यो संस्कृति चलाउने सम्बन्धित स्थानीय जनता भने जात्रा चलाउनुपर्ने कारणले नै गर्दा विभिन्न समस्याहरूसँग जुझ्नु परिरहेको छ । यस ठूला भैरव गुठीका गुठियार ताम्राकार आफै पनि अरु व्यवसायमा व्यस्त हुनुपर्ने व्यक्ति हुनुहुन्छ । आफ्नो पुर्खाले चलाइरहेको संस्कृति भनेर उहाँ यसलाई चटक्क छोड्न पनि सक्नुहुन्न । हरेक इन्द्रजात्राका बेला अरु काम छोडेर भए पनि यसमा लाग्नुपर्ने हुन्छ । त्यसैले उहाँ यो काम गर्ने गुठियारहरूका लागि पनि तलब वा पारिश्रमिकको व्यवस्था गर्नुपर्ने बिचार राख्नुहुन्छ ।[१३२]

यसै प्रशंगमा काठमाडौं महानगरपालिकाले काठमाडौंका मूर्त अमूर्त सम्पदाहरू संरक्षण गर्ने क्रममा केही समय अघिदेखि श्वेत भैरवको जात्रा सञ्चालनका लागि पनि आर्थिक अनुदान उपलब्ध गराउने व्यवस्था गर्दै आएकोले सम्बन्धित गुठियारहरूले जात्रा व्यवस्थापन गर्न केही सहजता अनुभव गरेका छन् ।

## दागिं

काठमाडौंमा मनाइने इन्द्रजात्राको एउटा अत्यन्त महत्वपूर्ण र मौलिक पर्व हो दागिं । यो एकै दिन मात्र प्रदर्शन हुन्छ । भाद्रकृष्ण चतुर्दशीका दिन श्री कुमारीको क्वःनेयाः समापन हुने बित्तिकै मरुटोलको छ्वासपाखा भन्ने ठाउँबाट दागिं निस्किन्छ । सेतो पहिरन र सेतै मुकुण्डो लगाएर निस्किने

१३१ पिया, पूर्ववत् ११९, पृ. ४२ ।
१३२ पूर्ववत् १२२ ।

दागिंलाई स्वर्गका राजा इन्द्रकी आमा भन्ने गरिन्छ । नेपालभरि नै इन्द्रकी आमाको जात्रा भनेको यही एउटा मात्र हो ।

जस्तो कि माथि पनि चर्चा भएको छ, इन्द्रजात्रा आरम्भ बारे वेद एवं पुराणहरूमा जुन कथा बताइएको छ काठमाडौंमा प्रचलित इन्द्रजात्राको कथा त्यो भन्दा भिन्नै छ । दागिं यात्रा यही काठमाडौंमा प्रचलित मौलिक किंवदन्तीमा आधारित छ ।

किंवदन्ती अनुसार स्वर्गमा इन्द्रकी आमाले आयोजना गर्न लागेको बसुन्धरा व्रतका लागि फूल टिप्न इन्द्र काठमाडौं झरेका थिए । तर उनलाई देवराज इन्द्र भनी नचिनेकाले स्थानीय जनताले समातेर राखे । समातिएका छोरालाई छुटाउन इन्द्रकी आमा पनि काठमाडौं आइन् । छोरालाई छुटाउने बारे कुराकानी हुँदा काठमाडौंवासीले आफूहरू पनि स्वर्ग आएर त्यही साल दिवंगत भएका आफन्तहरूलाई भेट्ने शर्त अघि सारे । आमाले त्यसलाई स्वीकारी दिवंगतका आफन्तहरू सबैलाई आफ्नो पछि आउन आग्रह गरे । त्यसपछि उक्त वर्ष दिवंगत भएका व्यक्तिका आफन्तहरू इन्द्रकी आमाको पछि लागे । इन्द्रकी आमा डाकिनीको रुपमा आएको हुनाले उनलाई स्थानीयहरूले दागिं भन्दछन् । इन्द्रकी आमाको प्रतिक दागिंका पछि पछि गएर दिवंगतका आफन्तहरूले गर्ने यो यात्रालाई नै 'दागिं वइगु' अर्थात दागिं आउनु भनिन्छ ।

यसमा सोही वर्ष दिवंगत भएका व्यक्तिका श्रीमती वा छोराहरू सहभागी हुन्छन् । त्यसैले यसमा विशेष गरी सेतो बर्खी पोशाक लगाएका मानिसहरू मात्रै देख्न सकिन्छ । यो यात्रा मरु टोलको छ्वासपाखाबाट शुरु भई कुमारी रथयात्रा गर्ने थःने र क्वःने क्षेत्र परिक्रमा गरी मरु टोलमै आई समापन हुन्छ *(नक्सा नं. ५)* । यात्रामा सहभागी सबै मानिसहरूले आफू भन्दा अगाडिको मानिसलाई छोएका हुन्छन् । सबैभन्दा अगाडि बस्नेले चाहिँ दागिंलाई छोइरहेको हुन्छ। हिँड्दा सबैजनाले बीबः (नौ प्रकारको सत्‌बिज) बाटोभरि छर्दै जान्छ । इन्द्रकी आमासँगै स्वर्ग पुगेर त्यहाँबाट फर्कंदा बाटो बिर्सेला भनेर बाटोको चिन्ह स्वरुप यो सत्‌बिज छर्दै जाने गर्छन् भन्ने विश्वास गरिन्छ । त्यसरी छर्दै जाने बीबःमा तोरी (ईका), सरसो (पःका), कालो तील (हाकु हाम्वः), विभिन्न फूल (स्वां), जौ (तछ्व), सानो केराउ (चिग्वः कयूगू), गेडा मास (ग्वःमाय्), गहत (क्वलं) र कालो भटमास (हाकु मुस्या)

रहेको हुन्छ ।[१३३]

दागिंको यो यात्रा काठमाडौंको थ:ने र क्वःने क्षेत्र घुमिसके पछि त्यहाँबाट सिधा थानकोट (दहचोक) स्थित यंकिदहमा पुग्नुपर्ने हो । त्यहाँ पुगिसकेपछि इन्द्रकी आमाले आफ्नो पछि पछि आएका सबैजनालाई अनुरोध गर्छिन् कि स्वर्ग जाने बाटो यहींबाट शुरु हुन्छ, तर स्वर्ग जानलाई सबैले एक पटक यो दहमा नुहाएर चोखो हुनुपर्छ । त्यसपछि सबैजना नुहाउन थाल्छन् । त्यही मौकामा दहभरि कुइरो छोडेर इन्द्रकी आमा-छोरा त्यहींबाट अलप हुन्छन् । इन्द्र र उनकी आमा स्वर्ग प्रस्थान गरेको ठाउँ भएको कारणले यंकिदहमा अहिले पनि हरेक वर्ष इन्द्रजात्राको भोलिपल्ट पूर्णिमाका दिन ठूलो मेला लाग्ने गर्दछ । उक्त मेलामा सोही वर्ष दिवंगत भएका व्यक्तिका आफन्तहरू आएर स्नान गर्ने चलन रहेको छ ।[१३४]

किंवदन्ती अनुसार दागिं यात्रा यंकिदह पुगेर समापन हुनु पर्ने भएता पनि अहिले भने दागिं त्यहाँसम्म जाने गरिएको छैन । मरुटोलबाट शुरु भई थ:ने-क्व:ने घुमेर पुनः मरुटोलमै आएर समापन हुन्छ । यात्रा समापन भए पछि आफूसँग बाँकी बचेको बीबः जम्मै काष्ठमण्डप अगाडि रहेको भुतिसःमा विर्सजन गरिन्छ । बाँकी रहेको अक्षता घर फिर्ता लानु हुँदैन भनिन्छ । त्यसपछि मरुहिटीमा गई धारोको पानीले हातगोडा र मुख धोई घर फर्किन्छन् । मरुहिटीमा पश्चिमबाट पानी झरिरहेको पूर्व फर्किरहेको धारोमा यंकिदहबाटै पानी आइरहेको भन्ने विश्वास गरिन्छ । दागिं यंकिदहसम्म पुग्ने कार्य धेरै अघि नै बन्द भएता पनि गत वि.सं. २०७६ सालको इन्द्रजात्रामा भने काठमाडौं महानगरपालिका र इन्द्रजात्रा व्यवस्थापन समितिको पहलमा दश वटा बसको व्यवस्था गरी यंकिदहमै जाने कार्यको थालनी भएको थियो । काठमाडौंबाट गएका दागिंका सम्पूर्ण सहभागीहरूलाई यंकिदहमा चन्द्रागिरि नगरपालिकाले स्वागत गरेको थियो ।[१३५]

काठमाडौंबाट करिब १५ कि.मि. टाढा रहेको यंकिदह समुद्र सतहबाट ८०१६ फिटको उचाईमा रहेको छ । यसलाई स्वर्गसोपान, इन्द्र दह, पद्मावती तीर्थ, इन्द्रकिल कुण्ड, दहचोक आदि नामबाट पनि जानिन्छ । यो इन्द्र दहमा

१३३ दागिं गुठीसँग आवद्ध दागिं मंगलमान डंगोलसँग अन्तर्वार्ता ।
१३४ ऐजन ।
१३५ अवलोकन ।

इन्द्रले आफ्नो पाप नाश गर्न स्नान गरी तपस्या गरेको मानिन्छ ।[१३६]

दागिं सम्बन्धी कार्य गर्न एउटा गुठी पनि राखिएको छ । यो मूलतः मरुटोलका ताम्राकार जातिको गुठी हो । यसलाई हाल 'दागिं गुथि' नाम दिइएको छ । यसमा १३ जना गुठियारहरू रहेका छन् । छ्वासपाखामा जुन घरबाट दागिं निकालिने हो त्यो यही गुठियारहरूकै घर हो । इन्द्रजात्रामा दागिं निकाल्न गर्नुपर्ने सबै कार्य यही घरबाट हुन्छ । जात्रा पछि दागिंको मुकुण्डो (ख्वाःपाः) र पोशाकहरू पनि सबै यही घरमा राखिन्छ ।[१३७]

जात्राका बेला जुन व्यक्ति दागिंको भेषमा निस्किने गर्दछ ती व्यक्ति भने ताम्राकार होइनन् । उहाँ त्यंगः टोलका कुम्हाः (डंगोल) हुनुहुन्छ । अहिले दागिंका रूपमा वर्षेनी जात्रा चलाउने व्यक्ति मंगलमान डंगोल हुनुहुन्छ । उहाँले वि.सं. २०५३ सालदेखि दागिंका रूपमा जात्रा चलाउँदै आउनुभएको छ । उहाँभन्दा अघि यो कार्य उहाँका बुबाले गर्नुभएको थियो । यसरी यो पुस्तान्तरण हुँदै जाने परम्परा रहेको छ ।[१३८]

इन्द्रजात्राका दिन दागिं निकालिसके पछि बाँकी दिनमा भने केही गर्नु पर्दैन । दागिंको मुकुण्डो तीन वर्षमा एक चोटी रंगरोगन गरिन्छ । अहिले मानिसहरू दागिंलाई पोशाक चढाउन पनि आउन थालेकोले पोशाकको खासै समस्या छैन । दागिं निकालिने दिन दागिं हुने व्यक्तिले नुहाईधुवाई गरी हातखुट्टाको नङ काटेर आफूलाई शुद्धीकरण गर्नुपर्छ र निराहार बस्नुपर्छ । विभिन्न कारणले दागिं आउन नसक्ने मानिसहरू बिहान उहाँको घरमै गएर पूजा चढाउने गर्छन् । त्यो पूजा उहाँ आफैले ग्रहण गर्नु पर्दछ । त्यस पछि दागिं निकालिने कार्यमा सहयोग गर्ने करिब ७०-८० जना मानिसलाई समय् बजि खुवाउने गरिन्छ । त्यसपछि मरु टोल (छ्वासपाखा) स्थित गुठियार हरूको घरमा गई दागिं निकाल्ने तयारी शुरु हुन्छ । श्री कुमारीको रथयात्रा सकिने बित्तिकै दागिं निकालिने गरिन्छ । दागिंमा सहभागी हुनेहरू जम्मै बर्खी पोशाकमा हुने र पहिले पहिले कुमारी यात्रामा राजा महाराजाहरू समेत पछि पछि आउने भएकोले जात्रामा सेतो पोशाक देखिनु राम्रो नहुने मानेर यसलाई कुमारीको रथयात्रा पछि मात्रै निकाल्ने व्यवस्था गरिएको जनश्रुति छ । श्री

१३६ हरिचरण शर्मा सुवेदी, *'पापनाशक इन्द्र दह'*, काठमाडौंः कान्तिपुर दैनिक, सन् १९९६, पृ. ६ ।
१३७ पूर्ववत् १३३ ।
१३८ ऐजन ।

कुमारीको रथ तान्न शुरु भए पछि दागिंलाई बेला बेला त्यसको खबर दिने गरिन्छ । त्यो खबर दिने काम मरु टोलका किसानहरूले गर्दछ । यसलाई 'च्वयेकेगु' भनिन्छ । पहिलो खबर श्री कुमारीको रथयात्रा शुरु भयो भनी दिइन्छ । दोश्रो खबर आए पछि दागिंले पोशाक लगाउन शुरु गर्छ । तेश्रो खबर आए पछि कम्मरमा घंघला बाँध्ने काम हुन्छ । यसलाई 'वायु' लगाउने भनिन्छ । 'वायु' लगाए पछि दागिंले बोल्नु हुँदैन । कुमारीको रथ मरु टोल कटेर गइ सकेपछि दागिं तल आई मुकुण्डो लगाउने काम हुन्छ । मुकुण्डो लगाए पछि गुठियारबाट पूजा हुन्छ । त्यो पूजा साकाहारी हुन्छ । गद्दी बैठक अगाडि कुमारी रथयात्रा समापन (याः न्यायेकेगु) भए पछि यता छ्वासपाखाबाट दागिंको यात्रा शुरु हुन्छ । यात्रा गर्दा दागिंले जुत्ता लगाउनु हुँदैन । दागिं सँगै जाने मानिसहरू पनि त्यो दिन पूरै निराहार बस्नु पर्दछ ।

दागिं निस्कँदा एउटा अनौठो खालको बाजा बजाएर जाने गरिन्छ । त्यो बाजा यही दागिंमा बाहेक अरु कुनै पनि अवसरमा बजाइँदैन । यो बाजा मरु टोलका किसानहरूले बजाउने गर्छन् । बाजा सँगै धुन्या पनि रहेको हुन्छ ।

थःने र क्वःने घुमेर आइसके पछि दागिंलाई गुठी घरमा ताम्राकारहरूले स्वागत गर्छ र माथि लगेर प्रसाद दिइन्छ । त्यसपछि पोशाक फुकालेर खाने गरिन्छ । पोशाक लगाउन्जेल दागिंले मांसाहारी खानेकुरा छुनु हुँदैन ।

जात्राका बेला त्यंगल टोलका स्थानीय कुम्हाःहरूको गुठी घरमा समयूबजि खाने काम पनि हुन्छ । तर दागिं निकाल्ने कार्यमा कुम्हाःहरूको गुठीको कुनै भूमिका भएको देखिँदैन । दागिं बन्नुहुने मंगलमान डंगोलका अनुसार अहिले दागिंको पछि लागेर आउने मानिसहरूको संख्या पहिले भन्दा बढ्दै नै आइरहेको देखिन्छ । हरेक साल दुई-तीन हजारको संख्यामा हुन्छन् । यसमा विशेष गरी काठमाडौंका बौद्ध नेवारहरू मात्रै सहभागी हुन्छन् ।

प्रामाणिक अभिलेखहरूको अभावमा 'दागिं' को शाब्दिक अर्थ के हो भन्ने अझै पनि प्रस्ट भइसकेको छैन । केहीले यसलाई पिशाचिनी वा डंकिनी अर्थ बुझाउने 'डाकिनी' शब्दबाट 'दागिं' बन्न गएको भनेका छन् । तर यो पर्व मनाउने तरिका र योसँग सम्बन्धित किंवदन्तीले दागिंलाई कहीं पनि नकारात्मक पात्रका रूपमा अघि सारेको पाइँदैन । इन्द्रजात्राको कथा भन्ने केही मानिसहरू काठमाडौंमा हराएका आफ्ना छोरालाई खोज्न इन्द्रकी आमा डाकिनीको रूप धारण गरी मर्त्यलोकमा झरेको बताउने गर्छन् । तर दागिंको

मुकुण्डो, पोशाक, हिँड्ने शैलीले भने उनी 'डाकिनी' जस्तो पटक्कै देखिँदैन । तै पनि दागिंलाई लाखे र पुलुकिसिले हेर्न हुँदैन भन्ने भनाई छ । त्यसैले केही गरी दागिं आइरहेकै बाटोमा लाखे वा पुलुकिसि पनि भेट हुने स्थिति आइपऱ्यो भने उनीहरू त्यहाँबाट अन्तै भाग्न पुग्छन् । यो पनि एउटा अनौठो परम्पराको रुपमा रहेको छ ।[१३९]

नेपालका बारे सबैभन्दा पहिलो पुस्तक लेख्ने बेलायती विद्वान कर्णेल कर्कपेट्रिकले भने आफ्नो पुस्तकमा इन्द्रजात्रा बारे एउटा अनौठो कुरा लेख्नुभएको छ । पहिलो कुरा त त्यसमा इन्द्रजात्रा श्रावणमा मनाइने भनेर लेखिएको छ । त्यस्तै इन्द्रजात्रामा दहचोकबाट एउटा प्रोसेसन (ऱ्याली) निस्कन्छ र त्यो ऱ्याली ठिमीमा गएर टुंगिन्छ भनी लेखिएको छ । साथै त्यसमा दहचोकदेखि ठिमीसम्म पुग्दा बीचमा जति पनि देवीदेवताका मन्दिरहरू हुन्छन्, ती सबैको पूजा गर्दै जान्छ भनेर पनि लेखिएको छ ।[१४०] प्रताप सिंह शाहका पालामा नेपाल र तिब्बत बीच उत्पन्न मनमुताव मिलाउन भारतको अंग्रेज सरकारले कर्णेल कर्कपेट्रिकलाई नेपाल पठाएका थिए । छोटो समयका लागि नेपाल बसेका कर्कपेट्रिकले इन्द्रजात्रा बारे गहन अध्ययन अनुसन्धान गर्न नपाएको कारणले सही तथ्य प्रस्तुत गर्न नसकेको हो वा काठमाडौंमा मनाइने इन्द्रजात्रा पहिले र अहिले धेरै फरक पो भइसकेको हो, यसै भन्न सक्ने अवस्था छैन ।

अन्य गुठीहरूमा जस्तै यस दागिं गुठीको सन्दर्भमा पनि दागिं बन्नुहुने डंगोलका अनुसार जात्रा सञ्चालनका लागि आर्थिक समस्या रहेको छ । जात्रामा प्रत्यक्ष देखिने मानिसहरू थोरै भए पनि जात्रा सञ्चालन गर्ने सहयोगीहरू धेरै हुने भएकोले उनीहरूको व्यवस्थापन र भोजमा बढी खर्च लाग्ने कुरा डंगोल बताउनुहुन्छ । दागिं गुठीको आफ्नै आयस्ता वा श्रोत पनि नभएकोले सम्पूर्ण खर्चको लागि सरकारप्रति नै आश्रित हुनुपर्ने अवस्था रहेको छ ।

## पंजरां दागिं

उपत्यकामा बौद्ध धर्मावलम्बी बीच मनाइने पञ्चदान नामक अर्को

१३९ पूर्ववत् १३३ ।

१४० William J Kirkpatrick, *An Account of the Kingdom of Nepaul*, India: Rupa & Co., 2007, p. 195.

एउटा महत्वपूर्ण पर्व छ । गाइजात्रा सकिने बित्तिकै भाद्रकृष्ण त्रियोदशीका दिन यो पर्व मनाइन्छ । यसमा खास गरी नेवार बौद्धहरू शाक्य र वज्राचार्य समुदायले विभिन्न टोल र बहाःबहीमा गई पञ्चदान ग्रहण गर्ने गर्दछ । यो पर्व वर्षेनी मनाइने भए पछि कुनै कुनै बेला कोही व्यक्ति एक्लैले पनि यो पर्वको आयोजना गर्ने गर्दछ। पञ्चदान आयोजना गर्ने व्यक्तिले पञ्चदान ग्रहणका लागि आउने सम्पूर्ण शाक्य वज्राचार्यहरूलाई पञ्चदानमा दिइने प्रमुख पाँच वस्तुहरू धान, चामल, गहुँ, नून र केराउका साथै खीर दान गर्ने परम्परा रहेको छ। यस अलावा अरु विभिन्न सामानहरू पनि दान गर्ने गरिन्छ । पञ्चदान ग्रहणका लागि हजारौंको संख्यामा शाक्य वज्राचार्यहरू आउने भएकोले पञ्चदान आयोजना गर्नु अत्यन्त कठिन हुन्छ । यदि कुनै व्यक्तिले यस्तो पञ्चदान आयोजना गऱ्यो भने सोही वर्षको इन्द्रजात्रामा पञ्चदान आयोजना गर्ने व्यक्ति पनि दागिं बनी नगर परिक्रमा गर्ने चलन रहेको छ। त्यस्तो दागिंलाई 'पंजरां (पञ्चदान) दागिं' भनिन्छ । यो दागिं कुमारी जात्रा शुरु हुनुभन्दा अघि नै निस्किन्छ । यो दागिंको पछि दिवंगत भएको व्यक्तिका आफन्तहरू जानु पर्दैन। तथापि आस्था भएका जो गए पनि हुन्छ। नगर घुम्दा बीबः छुर्नु पर्दैन। यसरी व्यक्तिगत रुपमा पञ्चदान आयोजना गरिएको साल काठमाडौंमा दुई जना दागिं निस्कने गर्दछ। पञ्चदान र दागिं पर्व बीच जोडिएको यो अनौठो संस्कृति हो । तर यी दुई दागिं बीचमा भने कुनै सम्बन्ध भएको देखिँदैन । आजभन्दा करिब १५ वर्ष अघि काठमाडौं बालाजु निवासी एक मानन्धर परिवारले पञ्चदान पर्व आयोजना गरी सोही वर्ष 'पंजरां दागिं' निकालेका थिए । त्यसपछि यस्तो दागिं हालसम्म निकालिएको छैन ।[१४१]

## बौमत

इन्द्रजात्राकै दिन दागिं पछि लगत्तै निकालिने अर्को परम्परा हो बौमत । यो पनि इन्द्रजात्राको एउटा महत्वपूर्ण सांस्कृतिक अंग हो । इन्द्रजात्राका दिन श्री कुमारीको रथयात्रा सकिने बित्तिकै छ्वासपाखाबाट दागिं निकालिन्छ । नगर परिक्रमा गर्ने क्रममा दागिं बाचाः पुलेगु (काष्ठमण्डप नाघेर क्वःने तर्फ लागेपछि) काष्ठमण्डप पछाडिबाट बौमत निकालिन्छ । यो बौमत पनि काठमाडौंका मानन्धरहरूले नै निकाल्ने गर्दछ । यसमा

१४१ पूर्ववत् १३३ ।

काठमाडौंका मानन्धर टोल भनी चिनिएका विभिन्न सात वटा परम्परागत टोलहरू मध्ये छ वटा टोलको सहभागिता रहेको हुन्छ ।[१४२]

धेरै बाँस/नर्कटहरू (पंकथि) जोडेर नागबेली आकारमा करिब ४० फिट जति लामो बौमत बनाइएको हुन्छ । नाग जस्तो घुमाउरो परेको त्यही बाँसमाथि गोबरले टाँसेर दर्जनौं पाल्चा (दियो) हरू राखिन्छ । ती पाल्चाहरू बालेर बौमतको यात्रा चलाइन्छ । बौमत थःने र क्वःने परिक्रमा गरी पुनः काष्ठमण्डपमै पुगे पछि समापन गरिन्छ । बौमत लामो हुने भएकोले यो अत्यन्तै होशियारीपूर्वक धेरै मान्छेहरूले बोकेर अगाडि बढाइन्छ ।

दागिं आधी बाटो पुगे पछि बौमत शुरु हुने भएकोले यसले दागिंलाई कहीं पनि भेट्दैन । दागिं र बौमत भेट हुनु हुँदैन भन्ने मान्यता छ । पहिला पहिला बौमत समाप्त भएपछि यो हेरेर मात्र दागिं जानेहरू इन्द्रदह जाने चलन थियो ।

किंवदन्ती अनुसार आफन्तलाई भेट्न स्वर्ग जानेहरू सबै दागिंको पछि लागेर परिक्रमा गर्न जान्छन् । त्यसरी दागिंको पछि लागेकाहरू बाटोमा कोही छुट्यो कि वा हरायो कि भनी बत्ती बालेर उनीहरूलाई खोज्न बौमत निकालिने गरिन्छ भन्ने जनश्रुति छ । छुटेकाहरूलाई बौमतले बाटो देखाउँदै पुनः स्वर्ग जाने बाटोसम्मै पुऱ्याइदिन्छ भन्ने मान्यता रहेको छ । तर दागिं र बौमत भेट गर्नु हुँदैन भन्ने परम्परा र किंवदन्तीको कुरा भने एक आपसमा विरोधाभाषपूर्ण देखिन्छ ।

केन्द्रीय मानन्धर संघका सचिव एवं बौमत पर्वमा सहभागी हुँदै आउनुभएका गजेन्द्र मानन्धरका अनुसार बौमत भनेको नाग आकारको मात्र होइन, नागकै प्रतीक हो । बौमत बनाउँदा मानन्धरहरूका पाँच वटा साः (तेल पेल्ने साल) ले यसको पाँच वटा छुट्टाछुट्टै अंगहरू बनाएर ल्याउँछन् । र, काष्ठमण्डप पछाडि सबै टुक्राहरू जोडेर एउटै बनाइन्छ । लायकुसाः टोलले टाउकोको भाग बनाउँछन्, न्हूसाः टोलले घाँटीको भाग बनाउँछन्, फल्चासाः टोलले शरीरको अगाडिको भाग बनाउँछन्, दैसाः टोलले शरीरको पछाडिको भाग बनाउँछन् भने चसाः (चस्वाँद्ब) टोलले पुच्छरको भाग बनाउँछन् । पाको पुखुद्यां टोलका मानन्धरहरूले चाहिँ बौमतमा राखिने गोबर र दियो उपलब्ध गराउँछन् । बौमत बनाउने यी पाँच वटा टोलहरूलाई भौगोलिक रूपले जोडेर

१४२ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

हेर्‍यौं भने त्यहाँ एउटा नागकै आकार बन्न आउँछ *(नक्सा नं. ६)* ।[१४३]

आआफ्नै टोलमा बनाएर ल्याएका विभिन्न अंगहरूलाई काष्ठमण्डप पछाडि राखेर जोड्ने काम हुन्छ । काष्ठमण्डपको दक्षिणतिर यही बौमतको टाउको अड्याउन एउटा मण्डप (मन्दः) पनि राखिएको छ । टाउकाको भाग त्यही मण्डपमा अड्याई त्यस पछि बाँकी अंगहरू जोड्दै लगिन्छ । पहिले पहिले सबै टोलहरूमा बौमतको अंग बनाउँदा एउटा मण्डपमा राखेर बनाउने गरिन्थ्यो । अहिले टोल टोलमा रहेका ती मण्डपहरू हराइसकेका छन् भने काष्ठमण्डप छेउको मुख्य मण्डप मात्रै बाँकी रहेको पाइन्छ । काष्ठमण्डप छेउको त्यही मण्डपमा टाउको राखी एउटा सिङ्गो नाग तयार भए पछि बौमतको यात्रा शुरु हुन्छ । इन्द्रजात्राको अन्तिम समयमा अत्यन्तै ढिलो निकालिने भएकोले बौमत अवलोकन गर्नेहरू स्थानीय टोलवासी मात्रै हुने गर्छन् ।[१४४]

संस्कृतिविद् यज्ञमानपति वज्राचार्य पनि बौमतलाई नागकै प्रतिक मान्नुहुन्छ । इन्द्रजात्रामा नागको यात्रा चलाइएको बारे उहाँ भन्नुहुन्छ- नेवाः संस्कृतिमा नागलाई पानीको देवता मानिन्छ । इन्द्र वर्षाका देवता हुन् । इन्द्र र नाग दुवैको सम्बन्ध पानीसँग छ । त्यसैले वर्षाका देवताका नाममा चलाइएको जात्रामा नागको पनि पर्व मनाइएको हुनुपर्छ । उहाँका अनुसार पहिले यो उपत्यका पूरै पोखरी थियो । यसलाई नागदह पनि भनिन्थ्यो । यो क्षेत्र मूलतः बासुकी नागराजाको क्षेत्र हो । हाम्रो संस्कृतिमा पनि नागको महत्व छ । अमोघसिद्धि बुद्धलाई नागले नै छोपेको छ । चीभाःद्यः पलिस्था गर्दा पनि नाग पुजा गर्नुपर्छ । बौमत ३२ फुटको नाग हो । यो सबैले हेर्नै पर्छ भनिन्छ । मृत्यु भएपछि यमराजले बौमत हेरेर आयौ कि आएनौ भनेर सोध्ने गरिन्छ भन्ने जनश्रुति पाइन्छ ।[१४५]

बौमतलाई 'बौमत' किन भनियो भन्ने बारेमा धेरै तर्कहरू छन् । जनश्रुति अनुसार नेपालभाषामा 'बौ' को अर्थ पितृका नाममा गरिने एउटा पूजा वा धार्मिक कार्य हो । दिवंगत कुनै पनि आत्मा प्रेत भई पृथ्वीमा भौंतारिरहेको छ भने उनीहरू यहाँबाट मुक्त भई अर्को लोकमा पुगुन् र मर्त्यलोकमा कसैलाई

---

१४३ पूर्ववत् १४२ ।

१४४ ऐजन ।

१४५ पूर्ववत् ३२ ।

पनि प्रदर्शन गरिन्छ । भाद्रशुक्ल एकादशीका दिन बिहान आकाश भैरव (आजुद्यः) गुठीको घरमा रहेको इन्द्रको मूर्तिलाई मन्दिर पछाडि रहेको बलंपू भन्ने चोकमा रहेको राजोपाध्यायहरूको घरमा राख्न लगिन्छ। मूर्तिलाई त्यही घरमा आवश्यक सरसफाई गरी तयार गरिन्छ । त्यसपछि बाजागाजा सहित मूर्तिलाई बाहिर ल्याई इन्द्रचोकमा ठड्याइएको सानो मञ्चमा विराजमान गरिन्छ ।[१४७]

त्यसपछि द्वादशीका राति आकाश भैरवलाई मन्दिरबाट बाहिर ल्याई मञ्चमा विराजमान गराइन्छ। आकाश भैरवमा यी सबै काम गर्न आफ्नै गुठी (आजुद्यः गुथि) रहे पनि त्यसको व्यवस्थापन भने जसको पालो परेको हो त्यही गुठियारले गर्नु पर्दछ। द्वादशीका दिन आकाश भैरवलाई मन्दिर बाहिरको मञ्चमा विराजमान गर्नु अघि मन्दिर भित्रै चित्रकारहरूबाट रंगरोगन गर्ने कार्य गरिन्छ। यसलाई 'लंपुं छायेगु' भनिन्छ। आकाश भैरव पनि अरु भैरवहरू जस्तै नीलो वर्णको छ। आजसम्म आकाश भैरवको मूर्तिलाई रंगरोगन मात्रै गरिएको छ, मूर्ति नै नयाँ बनाएको थाहा नभएको गुठियारहरू बताउँछन् । आकाश भैरवका आफ्नै गरगहनाहरू पनि छन् । ती गरगहनाहरू मध्ये कुनै कुनै गहना राजा नरेन्द्रदेवको पालामा बनाइएको भन्ने विश्वास गरिन्छ । यो भैरवको मुहारमा सबैभन्दा माथि अर्को एउटा सानो मूर्ति राखिएको छ। त्यो मूर्ति ब्रह्माका हो भन्ने विश्वास गरिन्छ ।[१४८]

आकाश भैरवलाई राति बाहिर निकाली त्रियोदशीका दिन मूर्तिलाई पूर्ण रूपले फूलले सजाई प्रदर्शन गरिन्छ । त्यही दिन असनबाट मुसः महारानी (एक दिनको लागि मात्र रानी भएकी एक ऐतिहासिक पात्र) सम्बन्धी गुठीका तर्फबाट पूजा ल्याइन्छ। उक्त पूजामा एउटा भेंडा पनि रहेको हुन्छ। त्रियोदशीको राति भैरवको मुखबाट जाँड अर्पण (हाथु हायेके) गरिन्छ। हाथु हायेके गर्दा बौपाःचामा सेतो चमेली फूल (दाफोस्वां) राखिन्छ। हाथु हायेके गरी त्यो फूललाई बगाइदिन्छ । चतुर्दशीका दिन लगन टोलतिर कुमारीको क्वःनेयाः हुन्छ। त्यसैले इन्द्रचोकमा केही गर्नु पर्दैन । बेलुकी साधारण पूजा मात्रै हुन्छ। आजुद्यः (आकाश भैरव) लाई इन्द्रजात्रा अवधिभरि सार्वजनिक प्रदर्शनीमा राख्दा हरेक दिन मूर्तिलाई विभिन्न फूलका मालाले सजाउने

---

१४७ अवलोकन ।

१४८ अन्तर्वार्ता तथा अवलोकन

गरिन्छ । यसको लागि प्रशस्तै फूल आवश्यक हुन्छ । इन्द्रजात्राका बेला आकाश भैरवलाई फूलले सजाउने पनि एउटा विशेष कला नै हो । यसको लागि आवश्यक फूल ल्याउने र त्यसलाई माला बनाउने काम गुठियारका परिवारहरूले गर्दछ । उक्त अवसरमा कुनै आफन्त घर आए भने उसले फूल नै लिएर आएको हुन्छ । इन्द्रजात्राको आठ दिनसम्म आकाश भैरवलाई पूजाआजा गर्ने दायित्व आठ जना पुजारीलाई दिइएको हुन्छ । उक्त अवधिभरि आकाश भैरवलाई चाहिने फूलमालको व्यवस्था गर्ने र सिंगारपटार गर्ने जिम्मेवारी ती नै आठजना पुजारीको हुन्छ । यो काममा उनीहरूलाई घर का परिवार मात्र होइन टाढा टाढाका आफन्तहरूले पनि सघाउने गर्दछन् ।[१४९]

पूर्णिमाका दिन कुमारीको रथ माथिल्लो भेगमा (थःनेयाः) तान्ने कार्य हुन्छ । त्यसैले इन्द्रचोक क्षेत्र त्यो दिन विशेष उल्लासमय हुन्छ । श्री कुमारीको रथ माथिल्लो भेगबाट तानेर ल्याई असनबाट फर्कंदा इन्द्रचोकको आकाश भैरव अगाडी एकछिन रोकिन्छ । त्यति बेला विशेष पूजा हुन्छ । उक्त पूजामा बौपाःमा दाफोस्वां लगायत पाँच वटा माछा समेत राखी 'हाथु हायेके' गरिन्छ । 'हाथु हायेके' गर्दा दाफोस्वां र माछा समेत बगाइन्छ । त्यो पूजाको लागि सरकारका तर्फबाट कौशी तोषाखानाले एउटा बोका पनि दिने गरिन्छ । कुमारीको सामु नै उक्त बोका बलि दिई कुमारीलाई प्रसाद चढाइन्छ । आकाश भैरवको सामु श्री कुमारीको रथ रोकेर आकाश भैरव र कुमारीका बीच प्रसाद आदानप्रदान पनि गरिन्छ ।[१५०]

इन्द्रजात्राको प्रमुख दिन पूर्णिमाको मध्यराति आकाश भैरवलाई एक गुह्य पुजा गर्ने चलन पनि थियो । आजभन्दा ८० वर्ष जति अघिसम्म यो पूजा गर्ने चलन थियो, अहिले यो बन्द भइसकेको छ । काठमाडौंकै ओलाछी टोलको प्यंगःथांनिवासी स्थानीय ज्यापूहरूले यो पूजा गर्ने चलन थियो । मध्य राति बाटो बन्द गरी ओलाछी टोलकै गुठियार बाहेक कसैलाई प्रवेश गर्न नदिई उक्त गुह्य पूजा गरिन्थ्यो । उक्त गुह्य पूजामा कुखुराको भाले बलि चढाई ओलाछी टोलका ज्यापूहरूले ल्याएकै जाँडलाई आकाश भैरवको घ्याम्पोमा खन्याई भैरवको मुखबाट हाथु हायेके गरिन्छ । उक्त हाथु हायेके कार्य असम्बन्धित मानिसहरू कसैले पनि हेर्नु हुँदैन भन्ने कथन छ । उक्त पूजा

१४९ अन्तर्वार्ता तथा अवलोकन ।

१५० आकाश भैरवनाथ (आजुद्यः) गुठीका सदस्य बाबुराजा महर्जनसँग अन्तर्वार्ता ।

हुँदा ओलाछी टोलकै ज्यापूहरूले मू धिमे र पोंगा बजाउनु पर्ने चलन छ। उक्त गुह्य पूजा गर्नका लागि ओलाछी टोलमा छुट्टै गुठीको व्यवस्था गरिएको थियो। पछि गुठीको आयस्ता नासिएर गएपछि उक्त गुह्य पूजा पनि बन्द हुन पुग्यो।[१५१]

आश्विन कृष्ण परेवा र दुतियाका दिन केही खास हुँदैन। तृतियाका दिन श्री कुमारीको रथलाई पुनः नानीचायाः गरी किलागलतिर तान्ने गरिन्छ। त्यो रथ यात्रा पनि फर्कंदा इन्द्रचोक भएरै जाने गर्दछ। त्यति बेला पनि श्री कुमारीको रथलाई आकाश भैरवको अगाडि रोकेर 'हाथु हायेके' गरिन्छ। त्यति बेला पनि सेतो चमेली फूल (दाफोस्वां) लाई जाँडको धारले बगाइन्छ। त्यो दिन माछा भने आवश्यक हुँदैन।[१५२]

हुन त हाथु हायेकेगु कार्य हनुमानढोकाको श्वेत भैरवमा पनि गरिन्छ। तर श्वेत भैरवमा जस्तो आकाश भैरवमा भने सर्वसाधारणको लागि 'हाथु हायेके' गरिँदैन। अर्थात यहाँको हाथु हायेके अरुलाई खुवाउने गरिँदैन। आकाश भैरव गुठीका सदस्य बाबुराजा महर्जनका अनुसार पूर्णिमाका दिन 'हाथु हायेके' गरी यहाँबाट बगाएर पठाएको माछा दशैंताका दोकाद्वः (ढोका टोल) निरबाट बग्ने सानो खोलामा आइपुग्छ रे भन्ने विश्वास गरिन्छ। कुनै बेला इन्द्रचोक बागमती र बिष्णुमती खोलाको दोभान थियो भनी भाषा वंशावलीमा लेखिएको छ। पछि खोला सर्दै गएर अहिले दोभान टेकूमा पुगेको छ। इन्द्रचोकमा इन्द्रजात्राका बेला बगाएको माछो तल ढोका टोलनिरको खोलामा भेटिन्छ भन्ने किंवदन्तीले माथिको कुरालाई बल प्रदान गर्दछ।[१५३]

वंशावलीमा उल्लेख भए अनुसार इन्द्रचोकमा पहिले पहिले बागमती र बिष्णुमती नदीको दोभान थियो। नेपालभाषामा दोभानलाई 'ह्वंगः' भनिन्छ। त्यही ह्वंगः शब्द अपभ्रंश हुँदै पछि 'वंघः' बन्न गएको हो।[१५४]

इन्द्रचोकलाई स्थानीय भाषामा 'वंघःत्वाः' भनिन्छ। अहिले इन्द्रचोक भनेको ठाउँमा अघि बागमती र बिष्णुमतीको संगम दोभान थियो। पछि सो दोभान सारी जाँदा कलिगत संवत् ३८२५ मा श्री राजा गुणकाम देवलाई ओं

१५१ ज्यापु पञ्च, *श्री आकाश भैरव (वंघः आजु) जिं न्यना थें, जिं स्यू थें*, काठमाडौं: श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, बि.सं. २०६०, पृ. १२।

१५२ पूर्ववत् १५०।

१५३ ऐजन।

१५४ लंसाल, पूर्ववत् ९७, पृ. १९।

श्री महालक्ष्मीबाट स्वप्नमा आज्ञा भए मुताविक सहर बनाएको हुँदा यी परमेश्वर सहरको मध्य इन्द्रचोक भन्ने ठाउँमा विराजमान भएको हुँदा कान्तिपुर भन्ने नाउँ रह्यो ।[१५५]

वंशावलीहरूमा इन्द्रचोकलाई बागमती र बिष्णुमती दुई नदीको दोभान भनी उल्लेख गरिए पनि हालसम्म प्राप्त कुनै पनि प्रामाणिक अभिलेख वा काठमाडौंको भौगोलिक संरचनाबाट त्यसलाई पुष्टि गर्न सकिने आधार भने देखिँदैन ।

काठमाडौं उपत्यका कुनै बेला पानीले भरिएको ठूलो ताल थियो । त्यतिबेला यहाँ स्वयम्भूको डाँडासम्म छुने गरी पानी भरिएको अवस्था थियो । त्यो समयमाताललाई घेरेर बसेको वरिपरिका डाँडाहरूमा मानव वस्ती प्रारम्भ भएको अनुमान गर्न सकिन्छ । पछि तालको पानी सुक्दै जान थाले । तालको पानी सुकेर जानुको कारण बारे बौद्ध धर्मावलम्बी र हिन्दू धर्मावलम्बीहरूका बीच प्रचलित किंवदन्ती भने थोरै भिन्न रहेको पाइन्छ । बौद्ध धर्मावलम्बीहरूका अनुसार चीनबाट आएका महामञ्जुश्रीले आफ्नो चन्द्रहाँस खड्गले चोभारको डाँडो काटेका कारण त्यहींबाट पानी बगी ताल सुक्न थालेको हो । त्यस्तै हिन्दू धर्मावलम्बीहरूका अनुसार भारतबाट आएका श्री कृष्णले आफ्नो चक्रबाट चोभारको डाँडो काटेका कारण त्यहींबाट पानी बगी ताल सुक्न थालेको हो ।

ताल सुकेर पानीको सतह घट्दै जान थालेपछि वरिपरि डाँडामा रहेको मानव वस्ती पनि क्रमशः तल तल झर्दै आउन थाल्यो । पहाडबाट झर्दै आएको यो मानव वस्ती हालको स्वयम्भू, बालाजु, नैकाप, बुंगमती, सुनाकोठी, कटुञ्जे, जगडोल, कपन, टोखा, महाकाल आदि जस्ता बेंसी क्षेत्रतिर विस्तार हुन थाल्यो । पानीको सतह त्यसपछि पनि घट्दै जान थाले पछि यो मानव वस्ती अझ तल झरी हालको कीर्तिपुर, चोभार, लगन, गोठाटार, वालुवाटार, मनमैंजु, देवपाटन, थिमि आदि जस्ता अलि थुम्कोमा रहेको टार क्षेत्रतिर विस्तार हुँदै जान थाल्यो । किरातकालको आरम्भतिर उपत्यकाको समथर भूमिमै मानव वस्ती बस्न थालेको पाइन्छ । नेपालमा किरातकाल रहेकै बेला ईशा पूर्व छैठौं शताब्दीतिर भगवान बुद्धका विशेष दूतका रुपमा नेपाल आएको भिक्षु आनन्दले यहाँ बौद्ध धर्म प्रचार गरिसकेका थिए ।

---

१५५ योगी, पूर्ववत् ५४, पृ. ६५ ।

बौद्धहरू विहारमा बस्ने भएको हुनाले बुद्धकालीन समयमा नै यहाँ बौद्ध विहारहरू बनिसकेको अनुमान गर्न सकिन्छ । लिच्छविकाल आरम्भ हुँदासम्म यहाँ राम्रै वस्ती विकास भइसकेको देखिन्छ । तत्कालीन दक्षिणकोलिग्राम र कोलिग्राम जस्ता नगर स्वरुपका वस्तीहरूको निर्माणले त्यतिबेला हालको लगन टोलदेखि ठमेल भगवान बहाल क्षेत्रसम्म नै व्यवस्थित मानव वस्ती शुरु भइसकेको मान्न सकिन्छ ।

उपत्यकामा भएको यो मानव वस्ती विस्तारका क्रममा बागमती, बिष्णुमती जस्ता नदीहरू इन्द्रचोक क्षेत्रबाट बगेको कुनै पनि भौगोलिक संकेत मिल्दैन । यी नदीहरू हाल जुन मार्ग भएर बग्ने हो पहिले पनि त्यही मार्गबाट बगेको हुनु पर्दछ । बरु यिनीहरूको आकार भने अहिलेभन्दा निक्कै ठूलो हुनु पर्दछ । बिष्णुमती नदी त्यतिबेला हालको बिजेश्वरी मन्दिर छेउछाउसम्मै छोएर बगेको हुनु पर्दछ । बागमती र बिष्णुमती नदीले आफ्नो नियमित क्षेत्र बाहेक अरुतिर कतै पनि आफ्नो मार्ग बद्लेको उल्लेख कहीं गरिएको पाइँदैन । त्यसैले हालको इन्द्रचोक अर्थात वंघः क्षेत्रबाट बागमती अथवा बिष्णुमती नदी बगेको मान्न सकिँदैन । अतः कुनै बेला बिष्णुमती र बागमती जोड्ने दोभान अर्थात स्थानीय भाषामा 'ह्वंगः' भएको कारणले इन्द्रचोकलाई 'वंघः' भनिएको भन्ने कुरा तर्कसंगत देखिँदैन ।

काठमाडौंका विभिन्न ठाउँहरूमा ढुंगाका कलात्मक घडाहरू स्थापना गरिएको पाइन्छ । ती ढुंगाका घडाहरू जहाँ जहाँ छन् ती टोलहरूको नाम पनि त्यसैबाट स्थापित हुन गएका उदाहरणहरू छन् । जस्तो त्यंघः, श्रीघः, न्हूघः आदि । घडालाई नेपालभाषामा 'घः' भनिन्छ । त्यस्तै ढुंगाबाट निर्मित घडा इन्द्रचोकमा पनि स्थापना गरिएको छ । इन्द्रचोकस्थित आकाश भैरव मन्दिरको ठिक सामुन्ने रहेको पसलको पछाडिपट्टि चोकमा त्यस्तो घडा राखिएको छ जुन अहिले पनि देख्न सकिन्छ । इन्द्रचोकमा राखिएको उक्त घडा जमिनभन्दा कम उचाईमा राखिएको कारणले ती घडाहरूमा अक्सर ओसिएर लेउ पर्ने गर्दथ्यो । यसरी लेउ पर्नुलाई नेपालभाषामा 'वथं गयेगु' भनिन्छ । सधैँ 'वथं गयेगु' भइरहने घडा भएको कारणले उक्त घडालाई 'वंघः' भनिएको भन्ने किंवदन्ती पनि पाइन्छ । सधैँ लेउ परिरहने उक्त घडा (वंघः) बाट सो टोलको नाम नै 'वंघः त्वाः' हुन गएको भन्ने किंवदन्ती बढी तर्कसंगत देखिन्छ । काठमाडौंमा विभिन्न टोलमा ढुंगाका घडाहरू रहने र ती

घडाबाटै टोलको नाम पनि रहन जाने उदाहरणहरू अन्त पनि पाइने भएकोले इन्द्रचोकस्थित 'वंघः' को सन्दर्भमा पनि यो उदाहरण लागू भएको मान्न सकिन्छ।

सोही इन्द्रचोकमा अवस्थित आकाश भैरवलाई स्थानीय जनता लगायत मुलुकको राजारजौटाहरूले समेत ऐतिहासिककालदेखि नै मान्दै आएको देखिन्छ। इन्द्रजात्राको अन्तिम दिन नानीचायाःको राति राष्ट्रप्रमुखको हैसियतले टीका ग्रहणको लागि राजा कुमारी घरमा सवारी हुँदा इन्द्रचोकस्थित आकाश भैरवको प्रसाद पनि ग्रहण गर्ने चलन थियो। इन्द्रजात्रा सकिएको भोलिपल्ट श्री आकाश भैरवनाथलाई तान्त्रिक विधिपूर्वक पूजा गरी मन्दिरमा भित्र्याइन्छ। यो तान्त्रिक पूजा सर्वसाधारणले हेर्न नहुने भएकोले पूजा गर्ने बेलामा बाहिरका मानिसहरू राखिँदैन। श्री भैरवनाथलाई आसनमा विराजमान गराएपछि सबै गुठियारहरू सगुन दिई 'जःसिबु पूजा' गरिन्छ। यसमा राँगो, भेंडा सहितको बलि चढाउनु पर्दछ। जःसिबु पूजाको भोलिपल्ट आठ जना द्यःपाःलाः (पुजारीहरू) को कार्यभार सकिने हुनाले नयाँ द्यःपाःलाःहरूलाई अब आउँदो वर्ष दिनको लागि पूजाआजा गर्ने जिम्मेवारी सुम्पिन्छ।[१५६]

बाहिर बनाइएको काठको बल्चा (मञ्च) भने तीन दिन पछि मात्रै निकालिन्छ। आजुद्यः आकाश भैरवलाई माथि पुऱ्याए पछि पूजा गरिन्छ। गुथिका ६३ जनै गुठियारहरूलाई सगं दिइन्छ। त्यसपछि इन्द्रजात्रामा गरिने आकाश भैरवको सबै कार्य समाप्त हुन्छ।[१५७]

इन्द्रजात्राभरि आकाश भैरवलाई तल मञ्चमा विराजमान गराउँदा मन्दिरभित्र रहेको आसन भने खाली नै हुन्छ। तर आसन खाली गर्न हुन्न भनी त्यसमा एउटा बाजा राखिदिएको हुन्छ। यो अवधिभरि इन्द्रचोकमै अर्को एउटा मञ्च बनाई त्यहाँ भजन गाउने गरिन्छ। सो ठाउँमा काठमाडौंका विभिन्न ठाउँबाट आएका भजन खलःहरूले आआफ्नो प्रस्तुती दिने गर्दछन्।

एकातिर आकाश भैरवको मूर्तिलाई बाहिरै प्रदर्शनमा राखिने, त्यसको सँगै मञ्च नै बनाई निरन्तर भजन चलिरहने र सँगै रहेको वटु टोलमा हेर्दा आकाश भैरवकै जस्तो अनुहार आउने बाकादे आजु पनि प्रदर्शनमा राखिने

१५६ शरदकुमार डंगोल, *श्री आकाश भैरवनाथको छोटो परिचय,* काठमाडौंः श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, बि.सं. २०६०, पृ. ४१।
१५७ पूर्ववत् १५०।

हुनाले इन्द्रजात्राभरि इन्द्रचोकमा अत्यन्तै भीडभाड भई वातावरण अत्यन्त उल्लासमय रहेको हुन्छ ।

इन्द्रजात्राकै बेला आकाश भैरवका अगाडि ज्याठा टोलबाट निकालिने खःप्याखं (अर्को देवी नाच) पनि देखाउने (द्यःल्हाये) गरिन्थ्यो । अहिले त्यो खःप्याखं नै बन्द भइसकेको छ । काठमाडौंको हनुमानढोका दरवार क्षेत्रमा विभिन्न स्थानका देवीदेवताहरूलाई तानेर विराजमान गराइएको देखिन्छ। त्यस्तै त्यहाँ स्थापना गरिएको श्वेत भैरव (हाथुद्यः) पनि इन्द्रचोकको आकाश भैरवलाई नै तानेर स्थापना गरिएको विश्वास गरिन्छ । त्यसैले इन्द्रजात्राका बेला श्वेत भैरवको मूर्ति अगाडि आकाश भैरवकै बाजं खलः गएर बाजा बजाउने चलन रहँदै आएको छ ।[१५८]

इन्द्रजात्राका बेला अरु पनि विभिन्न ठाउँमा भैरवको मूर्ति प्रदर्शन गर्ने चलन रहँदै आएको छ । बसन्तपुर माजुदेवलको अगाडि पनि सानो मञ्च बनाई त्यसमाथि धातुनिर्मित भैरवको मूर्ति सजाएर राखिन्छ । माटो, काठ र धातुबाट बनेका भैरवका यस्ता मूर्ति नेपाल उपत्यकामा विभिन्न ठाउँमा इन्द्रजात्राभरि प्रदर्शित गरिन्छन् । यिनमध्ये इन्द्रचोकमा प्रदर्शित गरिने आकाशभैरव प्रसिद्ध छन् ।

यसै बेला पुलिस गोश्वारा अगाडि राजा प्रताप मल्लले बनाएर गएको विश्वरुपको भव्य मूर्ति प्रदर्शित गरिन्छ। त्यसको पादपीठमा लेखिएको राजा प्रताप मल्लको वि.सं. १७१४ श्रावणको अभिलेखमा सद्धर्मयात्रा (श्रावणमा हुने नेवारीमा बहि ब्वये भनिने जात्रा) र इन्द्रजात्रामा सुनको सो मूर्ति बाहिर ल्याएर देखाउन बनाएको हो भनी लेखिएको छ। यसै गरी शिव पार्वतीको मन्दिरसँगै पूर्वपट्टि रहेको भगवतीको मन्दिरमुनि दलानमा आनन्दभैरव र आनन्दभैरवीको दुई मूर्ति ल्याएर प्रदर्शित गरिन्छन् । आनन्दभैरवको पादपीठमा रहेको वि.सं. १७५९ भाद्रको अभिलेखमा इन्द्रजात्रामा ती मूर्ति प्रदर्शन गर्नुपर्ने कुरो लेखिएको छ ।[१५९]

आकाश भैरवको मूर्ति प्रदर्शन गरिने इन्द्रचोक आफैमा पनि एक ऐतिहासिक एवं अध्ययनयोग्य स्थान हो । काठमाडौं नगरको निर्माण खड्गाकार रूपमा गरिएको कथन छ । नगरका विभिन्न आठ वटा कुनामा

१५८ पूर्ववत् १५० ।

१५९ वज्राचार्य, पूर्ववत् ५, पृ. १७३ ।

नगर रक्षाका लागि आठ वटा अजिमाहरू स्थापना गरिएको पाइन्छ । यदि काठमाडौंको निर्माण खड्गाकार रूपमा गरिएको मान्ने हो भने त्यो खड्गको ठीक बीचमा इन्द्रचोकको आकाश भैरव नै रहेको देखिन्छ । यही आकाश भैरवको सामुन्ने कान्तेश्वर महादेवको मूर्ति पनि रहेको छ जसको नामबाट यो नगरले 'कान्तिपुर' भन्ने नाम पाएको छ । अर्कोतिर आकाश भैरव स्वयम्-लाई पनि पहिलो किराती राजा यलम्बरको टाउकोको मूर्ति भनिन्छ । र, काठमाडौंको रैथाने नाम पनि यलम्बरबाटै उत्पत्ति भई पछि क्रमशः अपभ्रंश हुँदै 'यँ' शब्द निर्माण हुन गएको किंवदन्ती पाइन्छ ।[१६०]

इन्द्रचोकमा पहिले पहिले एउटा दरवार पनि थियो भन्ने इतिहास पाइन्छ । उक्त दरवारलाई 'वंघः लायूकू' भनिन्थ्यो । वि.सं. १८५८ साल लेखिएको तःछेँबहाःका देवहर्ष वज्राचार्यसँग रहेको एउटा टिपोट कागज र वि.सं. १८७५ लेखिएको एउटा लालमोहर कागजमा उक्त वंघः लायूकू बारे उल्लेख गरिएको पाइएको छ । वि.सं. १८७५ को लालमोहरमा उक्त वंघः लायूकूको चारकिल्ला समेत किटान गरिएको छ । त्यसमा उल्लेख गरिए अनुसार दक्षिणमा ल्वहं देगः, पूर्वमा तौधिक उदासको घर, उत्तरमा मूल गल्ली र पश्चिममा मैदानको सिमाना उक्त दरवारको चार किल्ला थियो । ऐतिहासिक स्रोतहरूबाट प्राप्त जानकारी अनुसार रत्न मल्लले काठमाडौंमा शासन गर्नु भन्दा अघिसम्म पनि उक्त थथु लायूकू काठमाडौंको प्रशासनिक केन्द्रको रुपमा विद्यमान थियो । काठमाडौंका तत्कालीन पात्र (थकू जुजु) हरूले काठमाडौंको बाह्र ठाउँमा केन्द्र बनाई शासन गरिरहेका थिए । ती बाह्र ठाउँ मध्ये एउटा इन्द्रचोक पनि थियो ।[१६१]

आकाश भैरव सम्बन्धी गुठीका गुठियारहरूको सम्बन्ध स्वयम्भू परिसर मा रहेको ऐतिहासिक शान्तिपुरसँग पनि रहेको देखिन्छ । हरेक वर्ष बडा दशैंपछिको पहिलो पूर्णिमा अर्थात कतिंपुन्हिका दिन आकाश भैरवका गुठियारहरू शान्तिपुरमा गई बाजा बजाउने चलन छ । सो दिन शान्तिपुरमा धिमे र पोंगा बजाउने गरिन्छ । शान्तिपुर भित्र केवल दीक्षा प्राप्त वज्राचार्यहरू मात्र जान पाइन्छ । तर कतिंपुन्हिका दिन आकाश भैरव गुठीका गुठियारहरू

१६० बलदेव जुजु, *वंघःत्वाःया आजुद्यः व यैंदेय्*, काठमाडौंः इन्द्रभक्त श्रेष्ठ, बि.सं. २०६०, पृ. १०, ३४ ।

१६१ सिद्धिरत्न शाक्यभिक्षु, *वंघः लागाया थथु लायूकू*, काठमाडौंः श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, बि.सं. २०६०, पृ. २७-२८ ।

पनि शान्तिपुर भित्रै गई बाजा बजाउने चलन छ ।[१६२]

इन्द्रजात्राका बेला हनुमानढोकामा यःसिं उठाइन्छ भने पाहाँचःऱ्हे (घोडे जात्रा) पर्वका बेला इन्द्रचोकमा यःसिं उठाइन्छ । चार दिन पछि त्यो यःसिं ढालिन्छ । यःसिं उठाउन आकाश भैरवमा 'आकाश भैरव लिंगो गुठी' नामको छुट्टै गुठी समेत छ । यःसिं सम्बन्धी सम्पूर्ण कार्य यही गुठीले गर्दछ । दशैँ पछिको पूर्णिमा (कतिंपुन्हि) देखि अर्को महिनाको पूर्णिमासम्म इन्द्रचोक अगाडि बाँस उठाएर त्यहाँ 'आलमत' बाल्ने गरिन्छ । 'आलमत' भनेको आकाशका नाममा बत्ती बाल्नु हो ।[१६३] स्थानीयहरूले बोलीचालीमा आकाशलाई 'आल' भनिन्छ ।

यसरी आकाश भैरव नेपालको प्राचीनकालीन संस्कृति र किरातकालीन इतिहासको रहस्यलाई नै गर्भमा बोकेर अहिलेसम्म अस्तित्वमा रहेको पाइन्छ ।

इन्द्रचोकस्थित आकाश भैरवलाई पहिलो किराती राजा यलम्बरको [टाउ]को मान्ने एउटा कथा महाभारतमा पाइन्छ । महाभारतमा वर्णन गरिएको [यो] प्रशंग भारतको राजस्थानस्थित 'खतु श्यामजी' भन्ने देवतासँग पनि [मिल्न] आउँछ । उक्त मन्दिरमा पनि खतु श्यामजीको टाउकोलाई मात्रै पूजा [गर्ने] परम्परा रहिआएको छ ।

किंवदन्ती अनुसार इन्द्रचोकस्थित पहिलो किराती राजा यलम्बर महाभारतको युद्ध अवलोकन गर्न कुरुक्षेत्रतिर जाँदै थिए । बीच बाटोमा कृष्णसँग भेट भयो । कृष्णले कहाँ जान लागेको भनी सोध्दा यलम्बरले आफू महाभारतको युद्ध हेर्न जान लागेको र युद्धमा जो पराजित हुन्छ आफूले उसैको पक्षमा युद्ध लड्ने कुरा बताए । यलम्बरको शक्ति कृष्णलाई थाहा थियो । त्यसैले उनलाई कुरुक्षेत्रमा पठाउनै हुँदैन भनी कृष्णले आफ्नो सुदर्शन चक्रद्वारा यलम्बरको टाउको नै छिनाइदिए । तर यलम्बरको टाउको उडेर आकाशतर्फ गयो र आकाशमै बसेर महाभारतको युद्ध अवलोकन गऱ्यो । युद्ध सकिए पछि उनी त्यहाँबाट फर्केर पुनः आफ्नै देशमा आए । आकाशमा बसेर महाभारतको युद्ध हेरेको कारणले उनलाई आकाश भैरव भनियो भन्ने किंवदन्ती पाइन्छ ।

त्यस्तै अर्को किंवदन्ती अनुसार महाभारत युद्ध हेरिसके पछि आकाशमा

---

१६२ पूर्ववत् १५० ।

१६३ अवलोकन ।

रहेको उक्त टाउको खसेर नदीमा बहन थाल्यो । नदीमा बहँदै आएर बागमती, बिष्णुमती र इच्छुमती नदीको दोभानमा आइपुगेपछि त्यहींकै एकजना ज्यापूले उक्त टाउकोलाई पानीबाट निकाली किनारमा राखिदिएछ । त्यही राति ज्यापूलाई सपनीमा आकाश भैरवले आफूलाई कतै छेउमा एउटा पाटी बनाई राखिदिनू भनी अनुरोध गरे । ज्यापूले त्यसै गरी एउटा सानो बल्चा (पाटी) बनाई आकाश भैरवको शिर विराजमान गरे ।[१६४]

यलम्बर र महाभारतको युद्ध सम्बन्धी यस्तै किंवदन्ती भारतमा पनि रहेको पाइन्छ । तर भारतमा प्रचलित किंवदन्ती भने नेपालमा प्रचलित भन्दा भिन्न रहेको देखिन्छ । त्यहाँ यलम्बरलाई बार्बरिक भन्ने नाम दिइएको छ । बार्बरिक पनि महाभारतको युद्ध हेर्न हिँडेका थिए । तर कृष्णले बाटोमा भेटेर कहाँ जान लागेको भनी सोध्दा उनले आफू महाभारतको युद्ध हेर्न जान लागेको र युद्धमा जो पराजित हुन्छ आफूले उसैको पक्षमा युद्ध लड्ने कुरा बताए । त्यसपछि कृष्णले चलाखीपूर्वक महाभारतको युद्ध हेर्ने हो भने किन युद्धस्थलमै जानु पर्‍यो र, मलाई तिम्रो टाउको दिनु, म त्यसलाई आकाशको कुनै राम्रो ठाउँमा राखिदिन्छु, त्यहाँबाट राम्ररी युद्ध हेर्नु भने । बार्बरिकले पनि हुन्छ भनी आफ्नो टाउको काटेर कृष्णलाई दिए । कृष्णले टाउकोलाई लगेर आकाशमा राखे । १८ दिनसम्म महाभारतको युद्ध हेरिसकेपछि टाउको लाई खतु भन्ने ठाउँमा ल्याएर राखिदिए । खतु भन्ने गाउँमा कृष्णले ल्याएर राखेको टाउको भएकोले उनको नाम 'खतु श्यामजी' रहन गयो । आज पनि राजस्थानको कोता भन्ने ठाउँमा खतु श्यामजीलाई राम्ररी पूजाआजा गरिन्छ । उनको टाउकोलाई पनि इन्द्रचोकमा आकाश भैरवको टाउकोलाई जस्तै फूलै फूलले सिंगारी पूजाआजा गर्ने परम्परा छ ।[१६५]

नेपालका मारवाडी समुदायले इन्द्रचोकको आकाश भैरवलाई राजस्थानको खतु श्यामजीकै अर्को स्वरुपका रुपमा पूजा गर्ने गर्दछन् । उनीहरूले अहिले पनि आफ्नो परिवारमा हुने शुभविवाह, नयाँ शिशुको जन्म आदि जस्ता शुभ कार्यहरूको उपलक्ष्यमा श्याम बाबाकै रुपमा आकाश भैरवनाथलाई विशेष पूजा चढाउने गर्दै आइरहेका छन् ।[१६६]

१६४ जनश्रुति अनुसार ।

१६५ क्यानाडाबाट प्रकाशित अनलाईन पत्रिका *'सम्प्रदाय सन'* मा मिति सन् २०१३ फेब्रुअरी २१ मा प्रकाशित लेख ।

१६६ डंगोल, पूर्ववत् १५६, पृ. ३७ ।

## बाकादे आजु

इन्द्रचोकमा रहेको आकाश भैरवको मन्दिर काठमाडौंको एक ख्यातिप्राप्त देवस्थल हो । इन्द्रजात्रामा मन्दिरभित्र रहेको आकाश भैरवको मूर्तिलाई बाहिर ल्याई सार्वजनिक प्रदर्शन गर्ने गरिन्छ। इन्द्रचोकको आकाश भैरवलाई आजुद्यः भन्ने चलन छ। इन्द्रजात्रामा आकाश भैरव मन्दिरको ठीक सामुन्ने वटु टोलमा ङ्वाट्ट हेर्दा आकाश भैरव जस्तै देखिने अर्को एउटा पनि भैरवको मूर्ति प्रदर्शन गरिन्छ। यसलाई 'बाकादे आजु' भनिन्छ। इन्द्रजात्रामा आठ दिन सार्वजनिक प्रदर्शन गरिने बाहेक यो बाकादे आजु भैरवको अरु बेला कुनै पूजा वा पर्व मनाएको पाइँदैन ।[१६७]

वटु टोलमा बाकादे आजु प्रदर्शन गर्ने कार्य वटु टोलमा बस्ने स्थानीय मानन्धरहरूले गर्दछ। हाल यो काम वटु मानन्धर सनाः गुथि नामक संस्थाद्वारा सञ्चालन हुँदै आइरहेको छ । इन्द्रजात्राको पहिलो दिन भाद्रशुक्ल द्वादशी हनुमानढोकामा यःसिं उठाएकै दिन वटु टोलमा बाकादे आजुलाई प्रदर्शन गर्ने परम्परा रहँदै आएको छ। यसको लागि वटु टोलमा एउटा सानो मञ्च बनाइन्छ। बाकादे आजु राखिने द्यःछें चाहिँ इन्द्रचोक क्षेत्रमै एउटा गल्लीभित्र रहेको छ। द्वादशीका दिन गुठियारहरू बिहानै द्यःछेँमा गई बाकादे आजुको पूजा गरी आसनबाट तल राखिन्छ। अनि मूर्ति र त्यसमा जडित गहनाहरू सफा गरिन्छ। त्यही दिन पुं (चित्रकार) आई मूर्तिमा रंगरोगन गर्ने कार्य गरिन्छ जसलाई 'लंपुं छायेगु' भनिन्छ ।[१६८]

रंगरोगन लगायत द्यःछें भित्र गर्नुपर्ने कार्य सकिए पछि बाकादे आजुलाई तल ल्याइन्छ । ल्याउँदा बाकादे आजुको मूर्तिमा मुख छोपेर ल्याउने गरिन्छ । इन्द्रचोकमा रहेको आकाश भैरवसँग बाकादे आजुको आँखा जुधाउनु हुँदैन भनिन्छ । त्यसैले आकाश भैरवसँग आँखा नजुधोस् भनेर बाकादे आजुलाई छोपेर बाहिर ल्याउने गरिन्छ। त्यसपछि बाकादे आजुलाई वटु टोलमा बनाइएको काठको डबलीमा राखिन्छ। यो डबली अस्थायी रुपमा बनाइएको हुन्छ। डबलीलाई नै पर्दाले घेरेर मूर्तिमाथि गहना, फूल आदिले सजाइन्छ र तयार भए पछि पर्दा खोलिन्छ। पर्दा खोलेपछि सर्वसाधारणको लागि पूजा खुल्ला हुन्छ। बाकादे आजुको मुनि दायाँबायाँ गणेश र कुमारको

१६७ अवलोकन ।

१६८ वटु मानन्धर सनाःगुथि (बाकादे आजु) का अध्यक्ष लिलाराम मानन्धरसँग अन्तर्वार्ता ।

मूर्ति रहेको हुन्छ ।[१६९]

बाकादे आजुको पछाडि माटोको घ्याम्पो जोडिएको हुन्छ । घ्याम्पोमा जाँड राखिएको हुन्छ, जुन पछि पाइपबाट चुहाएर 'हाथु हायेकेगु' गरिन्छ । हाथु सँगै समयूबजि पनि बाँड्ने काम हुन्छ ।

भाद्र शुक्लपक्ष पूर्णिमाका दिन श्री कुमारीको रथ माथिल्लो भेगबाट (थःनेयाः) तानेर ल्याई इन्द्रचोक पुगे पछि आकाश भैरवको मुखबाट जाँड अर्पण (हाथु हायेके) गरे जस्तै बाकादे आजुको मुखबाट पनि हाथु हायेके गर्नु पर्छ । त्यस्तै इन्द्रजात्राको अन्तिम दिन नानीचायाःका बेला पनि श्री कुमारीको रथ तानेर इन्द्रचोक पुऱ्याए पछि बाकादे आजुबाट हाथु हायेके गर्नु पर्दछ ।[१७०]

हनुमानढोकामा यःसिं ढाले पछि बाकादे आजुको जात्रा पनि सकिन्छ । यःसिं ढालेपछि भोलिपल्ट बाकादे आजुलाई पनि पहिले जस्तै डबलीमा पर्दा बन्द गरी गहना झिक्ने र उठाएर बाहिर ल्याउने गरिन्छ । द्यःछेँ पुगेपछि बाकादे आजुलाई स्वागत गरी भित्र्याउने गरिन्छ । त्यतिबेला देवतालाई सिफं लुयेगु (एउटा पाथीमा फूल, अक्षेता, अमला, चानचुन पैसा आदि राखेर टाउकोबाट खन्याउने कार्य) समेत गरी साँचोको झुप्पा देवतालाई थमाउन लगाई द्यःछेँ भित्र लगिन्छ । वटुबाट बोकेर द्यःछेँसम्म लिएर जाँदा कान्तां डबडब (डमरु) बजाएर लगिन्छ । द्यःछेँको आसनमा विराजमान गराइसके पछि पुनः गहना लगाइन्छ ।

इन्द्रजात्रामा आठ दिन बाहिर ल्याई प्रदर्शन गर्ने बाहेक वैशाखमा मातृ औंशीको एकदिन अघि 'चःऱ्हे पुजा' गर्ने चलन छ । यसलाई बाकादे आजुको 'देपुजा' (कुलपुजा) भनिन्छ ।

यो भैरव राखिने द्यःछेँ पहिले अर्कै ठाउँमा थियो । न्यूरोड (जुद्ध सडक) बन्नु अघि इन्द्रचोकबाट सीधा मखन टोल जाने बाटोको छेउमै पहिले 'बाकादे चोक' भन्ने ठाउँ थियो । बाकादे आजुको द्यःछेँ त्यही चोकमा थियो । न्यूरोड बने पछि इन्द्रचोकबाट सीधा भूगोलपार्कसम्म बाटो निकालियो । बाटो बनाउँदा 'बाकादे चोक' पनि मिचियो । भूगोलपार्क पछाडि हाल नेपाल बैंकको भवन रहेको ठाउँमा पहिले पोखरी थियो । त्यो पोखरीमा फुलेको

१६९ वटु मानन्धर सनाःगुथि (बाकादे आजु) का सदस्य दिपक मानन्धरसँग अन्तर्वार्ता ।
१७० पूर्ववत् १६८ ।

कमलको फूल ल्याएर बाकादे आजुलाई चढाउनु पर्ने चलन थियो । पोखरी मासिए पछि कमलको फूल पनि टिप्न पाइएन । अहिले बाकादे आजुलाई धुपीको फूल चढाउने गरिन्छ । त्यो चाहिँ अहिले सितापाइलातिरबाट किनेर ल्याउने गरिएको छ ।

बाकादे आजु कसरी अस्तित्वमा आए भन्ने विषयमा कुनै प्रस्ट इतिहास पाइँदैन । बाकादे आजुको नाम 'बाकादे' कसरी रहन गयो भन्ने विषयमा गुठीका अध्यक्ष लिलाराम मानन्धर आफूले सुन्दै आएको किंवदन्ती बताउनुहुन्छ - "पहिले पहिले येँदेय् (काठमाडौं नगर) भित्र पनि अरु ससाना १२ वटा 'देश'हरू थिए रे । ती १२ वटा देश मध्ये एउटा देश यो क्षेत्रमा पर्दथ्यो । शासन गर्दै जाँदा त्यो क्षेत्रका राजाले कुनै कारणवश आफ्नो आधा देश (अर्थात 'बागू देश') अर्को व्यक्तिलाई दान गरे । त्यसरी प्राप्त भएको आधा देश (बागू देश) मा शासन गरेको भएकाले त्यो ठाउँलाई 'बाकादे' भनियो र त्यहाँ शासन गर्ने राजालाई पछि 'बाकादे आजु' भन्न थालियो । इन्द्रचोकमा विराजमान आकाश भैरवलाई पनि पहिलो किराती राजा यलम्बरको मूर्ति हो भन्ने गरिन्छ । बाकादे आजुलाई आकाश भैरवको साथी पनि भन्ने गरेको पाइन्छ ।"[१७१]

यी किंवदन्तीलाई पुष्टि गर्ने कुनै ऐतिहासिक दस्तावेज भने प्राप्त भएको छैन । इन्द्रचोकमा रहेको आकाश भैरवलाई पहिलो किराती राजा यलम्बरको मूर्ति पनि भनिन्छ । इन्द्रचोकमै कान्तेश्वर महादेव पनि रहेको छ । यही इन्द्रचोक सँगै केलटोल रहेको छ । बुद्धकाल पछि नेपाल आएका कोलियहरू बसोवास गरेको ठाउँ भएकोले उक्त स्थानको नाम कोलिग्राम बन्न गएको र त्यही कोलिग्राम पछि 'केलटोल' हुन गएको हो । काठमाडौंलाई कुनै बेला कोलिग्राम र दक्षिण कोलिग्राम (यँम्बु र यँग्ल) मा विभाजत गरिएको थियो । यसरी इन्द्रचोकमा पहिलो किराती राजाको मूर्ति रहनु, त्यसको बगलमै 'बाकादे' नामको राज्य नै रहनुले यो ठाउँ कुनै बेला धार्मिक रूपले मात्र होइन राजनीतिक रूपले पनि महत्व बोकेको स्थान हुनुपर्छ भनी अनुमान गर्न सकिन्छ ।

यो 'बाकादे' राज्यको क्षेत्रफल इन्द्रचोकलाई छोडेर हालको शुक्रपथ हुँदै नेपाल बैंक लि.को केन्द्रीय कार्यालय रहेको स्थानसम्म थियो । बाकादेका

१७१ पूर्ववत् १६८ ।

निवासीहरुलाई 'बाकादेयूमि' भन्ने गरिन्थ्यो ।[१७२]

बाकादे आजुको द्यःछेँमा हाल केही कोठाहरू भाडामा दिइएकोले त्यसबाट आउने बहालबाट केही खर्च जुटेको छ । यही आयस्ताबाट वटु मानन्धर सनाः गुथिका अन्य कार्यहरू पनि सञ्चालन गर्नुपर्दछ । हाल यस गुठीमा ५० जना सदस्यहरू रहेका छन् । गुठीका अध्यक्ष लिलाराम मानन्धरका अनुसार पहिले त बाकादे आजु सम्बन्धी मात्रै काम गर्ने अर्को छुट्टै गुठी थियो । तर उनीहरूले मात्र गर्न नसकेपछि यसलाई टोलकै मानन्धर गुठी अन्तर्गत ल्याइएको थियो ।[१७३]

## इन्द्रद्यः ब्वये

काठमाडौंमा प्रचलित किंवदन्ती अनुसार मनाइने इन्द्रजात्राको एउटा महत्वपूर्ण अंग हो इन्द्रको मूर्ति प्रदर्शन । प्राचीन भारतमा पनि इन्द्रजात्रा धुमधामकासाथ मनाइने चलन भएता पनि त्यहाँ इन्द्रको प्रतिक स्वरुप इन्द्रध्वजोत्थान (यःसिं उठाउने) मात्रै गरिन्थ्यो । इन्द्रको मूर्तिकै जात्रा गर्ने चलन त्यहाँ थिएन । काठमाडौंमा भने इन्द्रको मूर्ति समेत राखेर इन्द्रजात्रा मनाइन्छ । त्यसैले पनि इन्द्रजात्रालाई काठमाडौंको मौलिक जात्रा मान्न सकिन्छ ।[१७४]

इन्द्रजात्राका बेला काठमाडौंमा विभिन्न ठाउँमा इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ। इन्द्र स्वर्गका राजा भएकोले उनको आसनलाई अरु भन्दा माथि अलि उचाईमा राख्ने गरिन्छ । काठमाडौंभित्र मरुटोलमा काष्ठमण्डप सँगै गःकुति अगाडि, इन्द्रचोकमा आकाश भैरवको मन्दिर अगाडि, नरदेवी (न्यत) डबली, किलागल, कुनांत्वाः (कमलाछि) र ज्याठामा इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ । यी स्थानहरूमा चार वटा लामा खम्बाहरू उठाई त्यसको चार कुनामा चार वटै हात्ती सहितको काठको आसन बनाई त्यसमा इन्द्रको मूर्ति विराजमान गराइन्छ । हनुमानढोका दरवार भित्र पनि मूचुक (मुलचोक) को डबलीमा स्वर्ण लेपित इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ । त्यस्तै यःसिं उठाइ सकेपछि

---

१७२ जीत बहादुर मानन्धर, *मानन्धर निबन्ध मुना,* काठमाडौंः मयूजु तारादेवी मानन्धर, वि.सं. २०६०, पृ. १२२ ।

१७३ पूर्ववत् १६८ ।

१७४ J. Gonda, *The Indra Festival According to the Atharvavedins*, India : Journal of the American Oriental Society (Vol. 87, No. 4), 1967.

त्यसको मुनि पनि सुनको इन्द्र मूर्ति प्रदर्शन गर्ने चलन रहँदै आएको छ ।[१७५]

यी मध्ये पनि काष्ठमण्डप सँगै करिब ३० फिट अग्लो चार वटा खम्बा उठाई त्यहाँ बनाइएको खटमा विराजमान गराइने इन्द्रको मूर्ति विशेष प्रकारको देखिन्छ । पारिजातको फूल चोर्न लाग्दा इन्द्र मरुसत्तलकै आसपासमा समातिएका थिए तथा उनलाई त्यहींनिरै दोबाटोमा बाँधेर राखिएको थियो भन्ने किंवदन्ती पाइन्छ । यसैले मरुसत्तलनिर दोबाटोमा प्रदर्शित गरिने इन्द्रको मूर्ति विशेष महत्वको मानिन्छ । मानिसको आकारभन्दा केही ठूलो सो मूर्ति कलाको दृष्टिले पनि महत्वपूर्ण देखिन्छ ।[१७६]

मरुटोलमा प्रदर्शन गरिने यो इन्द्रको मूर्तिसँगै सम्बन्धित पुजारीहरू पनि बसेका हुन्छन् । माथि रहेको इन्द्रका लागि भक्तजनहरूले चढाएको पूजा सामग्री तलबाट खर्पनमा राखी तानेर माथि पुऱ्याइन्छ र पूजा पछि प्रसाद पनि खर्पनबाटै तल पठाइन्छ । यहाँ राति पनि मूर्तिका लागि गुठियारहरू पालो बसेका हुन्छन् ।

इन्द्रजात्रामा प्रदर्शन गरिने इन्द्रहरू मध्ये यो सबैभन्दा ठूलो पनि हो । यहाँ इन्द्रको मूर्ति प्रदर्शन गर्ने यो जिम्मेवारी मरु टोलकै अशोक विनायक गुठीले निर्वाह गर्दै आइरहेको छ । अशोक विनायक गुठीको खास जिम्मेवारी मरु गणेश (अशोक विनायक) सँग सम्बन्धित दैनिक पूजाआजा एवं जात्राहरू सञ्चालन गर्नु हो । इन्द्रजात्राका बेला मरु टोलमा इन्द्रको मूर्ति प्रदर्शन गर्नु उक्त गुठीको थप जिम्मेवारी भएको गुठियारहरू बताउँछन् ।[१७७]

इन्द्रजात्रामा भाद्रकृष्ण एकादशीका दिन यहाँ खम्बा उठाई इन्द्रको आसन तयार गरिन्छ । द्वादशीका दिन हनुमानढोकामा इन्द्रध्वज अर्थात यःसिं उठाउने दिन यहाँ इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ । अरु बेला सामान्य पूजा मात्रै हुन्छ भने श्री कुमारीको रथयात्रा तल्लो भेगमा तान्ने (क्वःनेयाः) को दिन यहाँबाट यःमरि फाल्ने गरिन्छ । भोलिपल्ट पूर्णिमाको दिन इन्द्र पूजाको खास दिन हो । पूर्णिमाका दिन यो इन्द्रको मूर्ति मुनि होम गरिन्छ । उक्त होम वज्राचार्य गुर्जुहरूबाट सम्पन्न गरिन्छ । यस्तै इन्द्रचोकमा राखिएको इन्द्रलाई भने राजोपाध्याय द्यःभाजुहरूद्वारा पूजा गरिन्छ । यस्तै पूर्णिमाका दिन इन्द्रको

१७५ श्रेष्ठ, पूर्ववत् १४६, पृ. ७६ ।

१७६ वज्राचार्य, पूर्ववत् ६०, पृ. १७४ ।

१७७ अशोक विनायक गुठीका अध्यक्ष तीर्थमान महर्जन एवं सदस्यहरू जोगमान महर्जन, मचाकाजी महर्जन र आइतमान महर्जनसँग अन्तर्वार्ता ।

मूर्ति मुनि स्थानीय नेवार समुदायले देवा (एक प्रकारको दियो) बाल्ने कार्य पनि गर्छन् । यो देवा बाल्नु र वज्राचार्य गुर्जुद्वारा होम गर्नु विशुद्ध बौद्ध संस्कार हुन् ।[१७८]

यहाँ प्रदर्शन गरिने इन्द्रको मूर्तिमा भने इन्द्रले दुवै हात फैलाएर बसेको र इन्द्रलाई बाँधिएको देखिन्छ । तर बाँध्ने साधन भने डोरी नभई सात रंगको धागो हो जसलाई 'पसूका' भनिन्छ । उनले हात फैलाउनुलाई एक मुट्ठी बादल र एक मुट्ठी कुइरो दिइरहेको अर्थमा बुझ्नेहरू पनि छन् । जनै पूर्णिमाका दिन सर्वसाधारणले हातमा बाँधेको डोरो पनि यही पूर्णिमाका दिन फुकालेर यिनै इन्द्रको हातमा बाँध्ने चलन छ । इन्द्रको मूर्ति माथिसम्म हुने भएकोले कसै कसैले खम्बामै बाँधेर जाने पनि गर्छन् । आफ्नो मृत्यु पछि स्वर्गमा बास होस् भनी इन्द्रको हातैमा उक्त डोरो बाध्ने गरिएको हो । कसै कसैले त्यो डोरो तिहारको लक्ष्मीपूजाका दिन गाईको पुच्छरमा बाँध्ने चलन पनि छ । आफ्नो मृत्यु पछि स्वर्ग जाने बेला गाईको पुच्छर समातेर वैतरणी नदी तर्न सकियोस् भनेर गाईको पुच्छरमा डोरो बाँधेको विश्वास गरिन्छ ।

इन्द्रजात्रामा इन्द्रको मूर्तिलाई किन यसरी बाँधेर प्रदर्शन गरिएको भन्ने सन्दर्भमा प्रचलित किंवदन्ती यस प्रकार छ - स्वर्गमा इन्द्रकी आमा बसुन्धरा व्रतको तयारी गर्दै थिइन् । त्यो व्रतलाई नेपालभाषामा 'तिंला धलं' भनिन्छ । काठमाडौंका बौद्धमार्गीहरू पनि यो व्रत आयोजन गर्ने गर्दछन् । त्यसको लागि आवश्यक फूल टिप्न कान्तिपुर आउँदा चथाः पर्वका दिन यहाँका स्थानीयहरूले उनलाई चोर ठानेर समाए । उनी काठमाडौंमा थुनिए पछि उनको वाहन ऐरावत हात्ती (पुलुकिसि) र उनकी आमा (दागिं) पनि उनलाई खोज्न कान्तिपुर आए । त्यस पछि उनी स्वर्गका राजा रहेछन् भन्ने थाहा भए पछि उनलाई सम्मानपूर्वक पूजाआजा गरे । उनले पनि आफूलाई मुक्त गरे वापत स्थानीय जनतालाई वालीनाली सप्रन सहयोग गर्ने कुइरो छोडेर गए । त्यसैले काठमाडौंमा इन्द्रजात्रा पर्व पछि कुइरो आउन शुरु हुने विश्वास गरिन्छ ।[१७९]

किंवदन्ती अनुसार इन्द्रकी आमा र स्थानीय जनता बीच मरु टोलको

---

१७८ अवलोकन ।

१७९ जनश्रुति अनुसार ।

छ्वासपाखामै बसेर इन्द्रका तर्फबाट बाली पाक्न सहयोग हुने कुइरो दिने र उक्त वर्ष दिवंगत भएका व्यक्तिका आफन्तहरूलाई स्वर्ग लगी उनीहरूका आफन्तसँग भेट गराउने तथा स्थानीय जनताका तर्फबाट इन्द्रलाई ससम्मान रिहाई गर्ने सम्झौता गरिएको थियो ।

इन्द्र स्वर्गका राजा भएको र मानिसहरू मृत्यु पछि स्वर्ग नै जाने विश्वास गर्ने भएकोले इन्द्रको उपस्थितिमा मृत्यु र पितृ सम्बन्धी धार्मिक-सांस्कृतिक कार्यहरू पनि यति बेला नै गर्न थालिएको पाइन्छ ।

इन्द्र स्वर्गको राजा भए पनि उनलाई काठमाडौंमा 'खुँद्यः' अर्थात 'चोर देउता' पनि भन्ने गरिन्छ । इन्द्रलाई 'चोर देउता' भन्नु चाहिँ विभिन्न हिन्दू किंवदन्तीहरूसँग मेल खान गएको देखिन्छ । इन्द्रले विभिन्न समयमा अरु पनि विभिन्न वस्तुहरू चोरेको प्रशंग हिन्दू किंवदन्तीहरूमा पाइन्छ । उनले एक पटक सोमरस चोरेका थिए । त्यस्तै एक पटक अश्वमेध यज्ञको घोडा चोरेका थिए । भारतीय वाङ्मयहरूमा इन्द्रले पारिजात फूल चोरेका प्रशंगहरू पनि उल्लेख छन् । इन्द्रले एक पटक पारिजात फूलको लागि भगवान कृष्णसँग पनि झगडा गरेका थिए । नेपाली कथामा त्यो पारिजात फूल पृथ्वीमा फुल्ने भनिएको छ भने हिन्दू किंवदन्तीमा त्यो फूल स्वर्गमा मात्र फुल्छ भनिएको छ ।[१८०]

इन्द्रजात्राको अन्तिम दिन यःसिं ढाले पछि भोलिपल्ट यो इन्द्रलाई पनि खम्बाबाट तल झारिन्छ । त्यसपछि यसलाई अशोक विनायकको द्यःछेँमा लसकुस गरी भित्र्याइन्छ । यो इन्द्रको मूर्तिलाई अशोक विनायकको द्यःछेँमै एउटा अलग्ग कोठामा लगेर राखिन्छ । त्यहाँ राखिए पछि भने एक वर्षसम्म यसको कुनै पर्व  हुँदैन । त्यहाँ यसको दैनिक नित्य पूजा मात्र हुन्छ । त्यही द्यःछेँमा अशोक विनायकका तीन वटा विभिन्न मूर्तिहरू पनि राखिएका छन् । अशोक विनायकको मन्दिरमा हरेक मंगलवार राखिने तामाको छुट्टै मूर्ति छ भने गणेश चौथीका दिन गणेशको जन्मदिनमा राखिने मूर्ति अर्कै छ । दशैँ ताका अशोक विनायकको जात्रा गर्दा प्रदर्शन गरिने चाँदीको मूर्ति फेरि छुट्टै छ । यी मूर्तिहरू छुट्टै कोठामा राखिएका छन् । अशोक विनायक गुठीका अध्यक्ष तीर्थमान महर्जनका अनुसार यहाँ इन्द्रको मूर्तिलाई पूजा गर्दा मासु समेत रहेको समयूबजि पनि चढाउने गरिन्छ ।

---

१८० तोफाँ, पूर्ववत् १३ पृ. ८७ ।

यसका अतिरिक्त यो गुठीले हरेक वर्ष सापारु (गाइजात्रा) का बेला सात दिनसम्म बहिद्यः प्रदर्शन गर्ने र इन्द्रजात्राका बेला दागिं निस्कँदा त्यसको लागि बाजा बजाइदिने कार्यहरू पनि गर्दछ ।

पाहाँ चःऱ्हेका बेला कंग अजिमाको जात्रा चलाउँदा कंग अजिमाको गुठीले यो अशोक विनायक गुठीलाई 'कर' तिर्नुपर्ने एउटा अनौठा परम्परा पनि रहिआएको छ । गुठीका अध्यक्ष तीर्थमान महर्जनका अनुसार कंग अजिमाको जात्रा चलाउन अशोक विनायक गुठीका गुठियारहरू पहिले पहिले त्यहाँ पुगी २४ पैसा (नीप्यदां) कर उठाउँछन् र त्यसपछि मात्रै अजिमाको मूर्तिलाई खटमा विराजमान गरी जात्रा शुरु गर्छन् । अहिले भने दस्तुरका रूपमा तामाको एउटा द्याक राखिदिने चलन आएको छ ।[१८१]

मरु टोलमा अशोक विनायकको गुठी चलाउनेहरू पनि स्थानीय ज्यापू समुदाय नै हुन् । थर लेख्दा उहाँहरू 'महर्जन' लेख्नुहुन्छ । तर चलनचल्तीको बोलीमा भने उहाँहरूलाई 'मरु टोलको ज्यापू' भनिँदैन, बरु 'मरु किसान' भन्ने पदावली प्रयोग गरिन्छ । काठमाडौंको परम्परागत ३२ टोलका ज्यापूहरू मध्ये मरु टोल र असन टोलका ज्यापूहरूलाई मात्रै 'मरु किसान' र 'असं किसान' भन्ने शब्द प्रयोग गरिन्छ । मरु टोलको गणेश र असन टोलको अन्नपूर्णको जात्रा पनि दशैं ताका नै चलाइन्छ । यी दुवै जात्रामा सम्बन्धित टोलका ' किसान'हरू नै सहभागी भएका हुन्छन् ।[१८२]

इन्द्रजात्रामा इन्द्रको मूर्ति प्रदर्शन गर्ने कार्यका लागि अशोक विनायक गुठीलाई कुनै छुट्टै स्रोत भने उपलब्ध गराइएको छैन । त्यहाँ राज्यका तर्फबाट कुनै पूजा पनि ल्याउने गरिँदैन । हनुमानढोकामा इन्द्रको प्रतिक स्वरुप उठाउने यःसिं (इन्द्रध्वज)लाई जस्तो यो इन्द्रको मूर्तिलाई कुनै राजकीय सम्मान पनि प्राप्त छैन । इन्द्रको मूर्ति प्रदर्शन गर्दा सर्वसाधारणको पूजाबाट प्राप्त हुने भेटी नै यसको प्रमुख आय श्रोत हो ।[१८३]

इन्द्रजात्राका अवसरमा काठमाडौंको थःने क्षेत्रमा इन्द्रको यस्तो मूर्ति जम्मा चार ठाउँमा प्रदर्शन गरिन्छ । ती हुन् मरु टोल, इन्द्रचोक, किलागल टोल र न्यतमरु अजिमाको डबली । यी चारै ठाउँमा इन्द्रको मूर्तिलाई दक्षिण फर्किने गरी राख्ने गरिन्छ ताकि इन्द्रदह देख्न सकियोस् । किंवदन्ती अनुसार

१८१ पूर्ववत् १७७ ।
१८२ ऐजन ।
१८३ ऐजन ।

इन्द्रलाई फूल चोर्न आउँदा मरु टोलको ख्यः क्यबमा स्थानीय जनताले समातेका थिए। त्यसपछि उनलाई मरु टोलमा ल्याई केरकार गरे। अनि फूल चोर भनी सबैका सामू प्रदर्शनमा राख्न इन्द्रचोकको आकाश भैरवको अगाडि सात दिनसम्म प्रदर्शनमा राखिए। (शायद इन्द्रलाई प्रदर्शन गरिएको ठाउँ भएकोले उक्त ठाउँको नाउँ इन्द्रचोक रहन गएको हुनुपर्छ। नभए त्यहाँ इन्द्र सम्बन्धी कुनै सन्दर्भ भेटिएको छैन।) पछि इन्द्रकी आमा आएर स्थानीय जनतासँग सम्झौता गरी उनलाई छुटाए। छुटेर गए पछि उनीहरू त्यहाँबाट हिँड्दै गएर किलागल टोल पुगे जहाँ इन्द्रको ऐरावत हात्ती कुरेर बसिरहेका थिए। त्यहाँबाट हात्ती चढी न्यतमरु अजिमा पुगे पछि त्यहींबाट काठमाडौं छोडी आफ्नो गन्तव्यतर्फ प्रस्थान गरे। पहिले पहिले काठमाडौं आउ-जाउ गर्ने पश्चिमी नाका ङ्यतमरु अजिमा क्षेत्र थियो।[१८४]

राजगुर्जु मञ्जुश्री वज्राचार्यले सुनाउनु भएको किंवदन्ती अनुसार ख्यः क्यबमा फूल चोर्न आएका इन्द्रलाई स्थानीय जनताले समाउन खोजे पछि उनी भागेका थिए। उनलाई लखेट्दै जाँदा अहिलेको इन्द्रचोकमा उनी समातिए। त्यस पछि उनलाई त्यहाँबाट घिसार्दै ल्याएर मरुहिटीको पानीमा डुबाउने काम गरियो। केही वर्ष अघिसम्म पनि मरुहिटीमा इन्द्रको प्रतिक भन्दै काठको एउटा मूढालाई डुबाएर राख्ने चलन थियो। अहिले त्यो चलन हराइसकेको छ।[१८५]

यस सम्बन्धमा भारतमा पहिले पहिले इन्द्रध्वज उठाउनु अघि इन्द्रध्वजको काठलाई केही दिनसम्म पानीमा डुबाएर राख्ने चलन थियो। काठमाडौंमा हनुमानढोका अगाडि इन्द्रध्वज उठाउने परम्परा राजा प्रतापसिंह शाहको पालामा शुरु भएको थियो। तर त्यो भन्दा अघिसम्म अट्कोनारायणको मन्दिर अगाडि इन्द्रध्वज उठाउने चलन रहेको थियो। त्यहाँ उठाइने इन्द्रध्वजको उचाई सानो थियो। भारतमा इन्द्रध्वज उठाउनु अघि इन्द्रध्वजको काठलाई केही दिनसम्म पानीमा डुबाएर राख्ने चलन जस्तै सम्भवतः मञ्जुश्री वज्राचार्यले बताउनुभएको मरुहिटीको पानीमा डुबाउने काठको मूढा पनि अट्कोनारायण अगाडि उठाउने इन्द्रध्वज नै हुन सक्दछ। अहिले अट्कोनारायण अगाडि इन्द्रध्वज उठाउने र मरुहिटीमा काठको मूढालाई पानीमा डुबाउने

१८४ तोफाँ, पूर्ववत् १३, पृ. ८५।

१८५ काठमाडौं वडा नं. २३ का सिख्वंमू बहाःका राजगुर्जु मञ्जुश्री वज्राचार्यसँग अन्तर्वार्ता।

दुवै चलन हराइसकेको छ । यस विषयमा पनि थप अनुसन्धान आवश्यक देखिन्छ ।

काठमाडौंका यी विशेष चार ठाउँमा गरिने इन्द्रका मूर्ति प्रदर्शनहरू मध्ये मरुटोलमा अशोक विनायक गुठी र इन्द्रचोकमा आकाश भैरव गुठीले सबै कार्य सञ्चालन गर्दछन् भने किलागल टोलमा पुलुकिसि निकाल्ने स्थानीय किलागः त्वाः खलःले र न्यत (नरदेवी) मा स्थानीय नरदेवी त्वाः खलःले इन्द्रको मूर्ति प्रदर्शन गर्ने कार्य गर्दछ । किलागलमा एकादशीका दिन इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ । यसलाई स्थानीय नेपालभाषामा 'यंकि स्वायेगु' भनिन्छ । द्वादशीका दिन पुलुकिसिलाई रंगरोगन (लंपुं छायेगु) गरी इन्द्रको समेत पूजा गरिन्छ । पशुपति पुराणमा द्वादशीका दिन पशुपतिनाथका महन्तहरू आई किलागलको मूर्तिमा जल चढाउने र त्यसपछि हनुमानढोकाको इन्द्रध्वजमा गई जल चढाउने गरिन्छ भनी लेखिएको छ । तर अहिले त्यस्तो चलन भने हराइसकेको छ । पूर्णिकामा दिन इन्द्रको विशेष पूजा हुन्छ । किलागलमा इन्द्रको मूर्ति मुनि वज्राचार्य गुर्जुबाट होम गरिन्छ । त्यसमा मासु सहितको समयबजि इन्द्रलाई चढाइन्छ र सर्वसाधारणलाई बाँड्ने काम पनि हुन्छ । त्यस्तै श्री कुमारीको नानीचायाः समापन भएको भोलिपल्ट पुनः होम गरी इन्द्रको मूर्तिलाई गुठी घरमा लगेर राखिन्छ । यसलाई स्थानीय नेपालभाषामा 'यंकि लीगु' भनिन्छ ।[१८६]

उता नरदेवीमा प्रदर्शन गरिने इन्द्रको मूर्तिमा पनि द्वादशी, पूर्णिमा र नानीचायाःको भोलिपल्ट गरी तीन पटक नै होम गर्ने चलन छ । त्यहाँ पनि इन्द्रको पूजा गर्दा समयबजि चढाउने गरिन्छ । नरदेवीमा इन्द्रको मूर्ति राख्ने लगायत भिलिमिलि ग्वराः मत बाल्ने काम पनि नरदेवी त्वाः खलःले नै गर्दै आएको छ ।[१८७]

इन्द्रलाई काठमाडौंको स्थानीय चलन अनुसार समयबजि चढाए पनि बलि भने दिने गरिँदैन । इन्द्रजात्राकै अवसरमा कालभैरवको मूर्ति सामुन्ने पहिलेको प्रहरी कार्यालयसँगै विश्वरूपको मूर्ति पनि प्रदर्शन गरिन्छ । यसको पूजा भने तलेजुका कर्माचार्य पुजारीले गर्छन् । विश्वरूपलाई इन्द्रकै विराट स्वरुपको रूपमा लिने गरिन्छ । ठहिटीमा मल्ल थकु जुजुहरूले पनि हरेक छ

१८६ किलागःत्वाःखलः (पुलुकिसि) का सदस्य मचाराजा महर्जनसँग अन्तर्वार्ता ।
१८७ ऐजन ।

वर्षमा इन्द्रको मूर्ति प्रदर्शन गर्दछन् ।[१८८]

इन्द्रचोकमा इन्द्रको मूर्ति निकाल्दा भने अलिकति फरक प्रक्रिया अपनाउने गरेको देखिन्छ । नानीचायाःको भोलिपल्ट त्यहाँ इन्द्रको मूर्तिलाई तल झारे पछि त्यसलाई सबैभन्दा पहिले राजोपाध्याय द्यःभाजुको घरमै लगिन्छ । त्यहाँ यसलाई परम्परागत रुपमा शुद्धीकरण गरिन्छ । त्यसपछि बाजागाजा सहित आकाश भैरव मन्दिरमा लगिन्छ । त्यहाँ यो मूर्ति एक वर्ष त्यसै राखिन्छ ।[१८९]

सरकारी क्यालेण्डरमा 'इन्द्रजात्रा' भनी श्री कुमारीको रथयात्रा गरिने पहिलो दिन (क्वःनेयाः) लाई भन्ने गरिएता पनि इन्द्रका मूर्तिहरूलाई विशेष रूपमा होम गरी पूजाआजा गरिने दिन भने पूर्णिमा नै हो । स्थानीय नेवाः समुदाय यही पूर्णिमाको दिनलाई नै इन्द्रजात्रा (यँयाः) को प्रमुख दिनका रूपमा मान्ने गर्छन् । उक्त दिनलाई नेपालभाषामा 'यँयाः पुन्हि' भनिन्छ । इन्द्रका लागि होम गर्ने, समयबजि चढाउने र इन्द्रको मूर्ति मुनि १०८ वटा देवा बाल्ने दिन पनि यही नै हो । यो दिन समयबजि खाने र चढाउने भएकोले उक्त दिनलाई 'समय् पुन्हि' पनि भनिन्छ ।

इन्द्रजात्राका दिन यसरी इन्द्रको मूर्ति प्रदर्शन गर्ने पनि काठमाडौंको अत्यन्त पूरानो चलन हो । यस बारे इतिहासकार गौतमवज्र वज्राचार्यले लेख्नुभएको छ, 'विक्रमको सत्रौं शताब्दीको अन्त्यतिर तिब्बत पुगेका एकजना पादरीले इन्द्रजात्राको वर्णन अनौठो ढंगले गरेका छन् । ती पादरीले नेपाल उपत्यकाबाट भोट पुगेका एक जना सुनारलाई चाँदीको क्रस बनाउन दिंदा सुनारले यस्तो क्रस हाम्रो देशमा पनि पाइन्छन् भनी भने । काठ अथवा धातुमा विभिन्न नापमा ती बनाइन्छन् । हरेक वर्ष पाँच दिनसम्म बाटामा राखेर धूमधामसँग क्रसको पूजा गरिन्छ । ती क्रसलाई तिनीहरू इन्दोर् भन्छन् भनी ती पादरीले लेखेका छन् । इन्द्रजात्रामा देखाइने हात फैलाएर बसेका इन्द्रको मूर्ति क्रस जस्तो देखिने हुनाले नेपाल उपत्यकामा क्रसलाई इन्दोर (इन्द्र) भनी पूजा गरिन्छ भन्ने भ्रम उत्पन्न भएको देखिन्छ ।'[१९०]

यसरी इन्द्रजात्राका बेला ठाउँ ठाउँमा इन्द्रको मूर्ति प्रदर्शन गर्ने (इन्द्रद्यः

---

१८८ टोफाँ, पूर्ववत् १३, पृ. ९० ।

१८९ टोफाँ, पूर्ववत् १३, पृ. ८७ ।

१९० वज्राचार्य, पूर्ववत् ६०, पृ. १७४ ।

ब्वयेगु) यो चलन पनि काठमाडौंको मौलिक परम्परा हो । काठमाडौं उपत्यकामा अरु पनि विभिन्न देवी देवताहरूको जात्रा मनाउने गरिन्छ । जस्तो जनबहाःद्यः (सेतो मछिन्द्रनाथ) को जात्रा, विभिन्न अजिमाहरुको जात्रा, विभिन्न स्थानमा रहेका गणेशहरूको जात्रा, भैरवहरूको जात्रा, बुंगद्यः (रातो मछिन्द्रनाथ) को जात्रा आदि । वर्षको एक पटक यी देवीदेवताहरुको विधिपूर्वक भव्य जात्रा हुन्छ र त्यसपछि तिनीहरूलाई उनीहरूको आफ्नै मन्दिरमा फर्काई आसनमा विराजमान गराइन्छ । सर्वसाधारण मानिसहरू आफूलाई मन लागेको बेला मन्दिरमा गई ती देवीदेवताको पूजाआजा वा प्रार्थना गर्न सक्छन् । तर इन्द्र भगवानको सवालमा भने यो प्रचलन अनौठो ढंगले फरक छ । काठमाडौंमा इन्द्रको नाममा आठ दिनसम्म जात्रा चलाइन्छ तर जात्रा पछि इन्द्रको मूर्ति विराजमान गराउने आफ्नै कुनै मन्दिर भने छैन । अरु नै जात्रा पर्व चलाउने समूह वा गुठीहरूले इन्द्रलाई 'आश्रय' दिएर राखेको पाइन्छ । इन्द्रजात्रा पछि इन्द्रलाई कसैले पूजाआजा गर्ने चलन रहेको देखिँदैन ।[१९१]

## ग्वराः मत

इन्द्रजात्रामा धार्मिक आस्था प्रकट गर्न विभिन्न प्रकारका बत्तीहरू बाल्ने चलन रहँदै आएको छ । जस्तो बौमत, ह्यूमत, ग्वराः मत, दलूमत आदि । त्यस्तै उपाकु जाँदा र कुमारीको रथयात्रा हुँदा पनि बाटोभरि बत्ती राख्दै जाने चलन छ । यस मध्ये ग्वराः मत एउटा छुट्टै विशेषता रहेको बत्ती हो ।

इन्द्रजात्रामा कुमारीको रथ परिक्रमा गरिने क्षेत्रमा पर्ने विभिन्न स्थानमा यो ग्वराः मत बाल्ने गरिन्छ । आँखीझ्याल जस्तो काठले बनाइएको एउटै फ्रेम भित्र पाल्चा राख्न मिल्ने प्वालहरू बनाई त्यसमा झिलिमिली हुने गरी बालिने बत्तीलाई ग्वराः मत भनिन्छ । ग्वराः मत बाल्न बनाइने काठको फ्रेम विभिन्न उचाईका हुन्छन् । स्वरुप भने सबैको एउटै हुन्छ । यो हेर्दा प्यागोडा शैलीको मन्दिर आकारको हुन्छ । सबैभन्दा माथि टुप्पाको गजूरमा एउटा काठको ज्वलान्हायूकं[१९२] राखिएको हुन्छ ।

इन्द्रजात्रामा विभिन्न ठाउँमा स्थापना गरिने देवराज इन्द्र लगायत

१९१ टोफाँ, पूर्ववत् १३, पृ. ८४ ।

१९२ नेवार समुदायले शुभकार्यमा प्रयोग गर्ने एक सांस्कृतिक साधन, ज्वाला सहितको ऐना ।

विभिन्न देवीदेवताहरूका नाममा एउटै ठाउँमा बत्ती बाल्न ग्वराः मत प्रयोग गरिने जनश्रुति पाइन्छ । एकै ठाउँमा धेरै पाल्चाहरू बाल्ने भएकोले र इन्द्रजात्रा विशेष गरी रातको समयमा मनाइने भएकोले विजुली बत्ती नभएको तत्कालीन समयमा जात्रालुहरूलाई उज्यालो प्रकाश दिन कुमारीको रथयात्रा गर्ने प्रमुख चोकहरूमा यो ग्वराः मत बाल्ने चलन चलेको अनुमान गर्न सकिन्छ ।[१९३]

यस्ता ग्वराः मतहरू काठमाडौंको बसन्तपुरस्थित काष्ठमण्डप अगाडि, माजु देगल अगाडि, नरदेवी अगाडि राख्ने गरेको पाइन्छ । ती मध्ये सबैभन्दा अग्लो ग्वराः मत बसन्तपुरको माजु देगल र लक्ष्मीनारायण सत्तलको बीचमा राखिने गरिन्छ । यसमा तलदेखि माथिसम्म जम्मा ११ वटा तह रहेको छ । यो ग्वराःमा जम्मा ५३ वटा बत्ती बाल्न मिल्ने प्वालहरू राखिएका छन् । यो चार वटा खम्बामा उभिएको छ । तर खम्बाहरू जमिनमा गाडिएको हुँदैन । खम्बाहरू उभ्याउन जमिनमा एउटा अर्को ठूलो काठ राखिएको हुन्छ । त्यसलाई 'ला सिँ' भनिन्छ । तह तह बनाउन ११ वटा लामा काठ राखिएका हुन्छन् भने कोठा कोठा बनाउन ६३ वटा काठका टुक्राहरू राखिएका हुन्छन् । ती टुक्रा काठलाई 'तावःचा' भनिन्छ । पहिले पहिले इन्द्रजात्रामा यो ग्वराः मत बाल्दा ललितपुर र भक्तपुरबाट समेत उज्यालोको चमक देखिन्छ भन्ने जनश्रुति पाइन्छ ।

यो ग्वराः मत लायकूसाःका मानन्धरहरूले बनाउने गर्दछन् । पहिले पहिले लायकूसाःमा उत्पादन गरिने तेल नै कुमारीघर र दरवारमा प्रयोग गर्ने गर्दथ्यो । त्यसैले लायकूसाःलाई 'कुमारीसाः' पनि भन्ने गरिन्छ । तलेजु भवानीको मन्दिरमा रहेको अखण्ड दीपमा बत्ती बाल्न चाहिने तेल पनि लायकूसाःबाटै उपलब्ध गराइन्छ । इन्द्रजात्रा पछि यो ग्वराः मत बनाउन प्रयोग गरिने काठहरू सबै कुमारीघरमा राखिन्छ ।[१९४]

काठमाडौंको नरेदवी टोलमा पनि इन्द्रजात्रामा ग्वराः मत बाल्ने चलन छ । त्यहाँ इन्द्रको मूर्ति स्थापना गर्नुको साथसाथै मूर्ति सँगै नै ग्वराः मत पनि बालिन्छ । नरदेवीमा ग्वराः मत बाल्ने काम स्थानीय नरदेवी त्वाः खलःले गर्दै

---

१९३ कामपा २३ का लायकूसाः टोलनिवासी प्रकाश मानन्धरसँग अन्तर्वार्ता ।

१९४ प्रकाश मानन्धर, *'नेवाः संस्कृतिइ ग्वराः'*, येँः नेपालभाषा टाइम्स दैनिक, ने.सं. ११३९ यंलाथ्व १४, पृ. ६ ।

आएको छ। तर उक्त ग्वराःमा दैनिक बत्ती बाल्ने काम भने नरदेवीको न्यतमरु अजिमा नाचमा अजिमा भई नाच्ने 'मू धामी'ले नै गर्नुपर्ने चलन छ। त्यसको लागि आवश्यक तेल भने गुठी संस्थानले उपलब्ध गराउँदै आइरहेको छ।[१९५]

ललितपुरस्थित पूर्णचण्डीको मन्दिरमा पनि इन्द्रजात्राका बेला गरिने पुंचली भुजामा ग्वराः मत बाल्ने चलन छ। यसरी इन्द्रजात्रामा विभिन्न स्थानमा ग्वराः मत बाल्ने चलन कहिलेदेखि शुरु भयो भन्ने बारे भने स्पष्ट अभिलेख पाइँदैन। यस्तै काठमाडौंमा इन्द्रजात्रा जस्तै पुरानो अर्को पर्व पाहाँचः-हे (घोडेजात्रा) का अवसरमा पनि केही ठाउँमा ग्वराः मत बाल्ने चलन रहेको पाइन्छ। तर अहिले भने यो चलन अत्यन्त कम भइसकेको देखिन्छ।

## ह्यूमत

काठमाडौंको क्वःने (तल्लो क्षेत्र) स्थित ह्यूमत टोलमा इन्द्रजात्रामा रोटेपिङ्ग जस्तो घुमिरहने बत्तीहरू बालिएको हुन्छ। त्यसलाई 'ह्यूमत' भनिन्छ। इन्द्रजात्राभरि आठ दिन यो बत्ती बालिन्छ। उक्त ठाउँमा ह्यूमत बाल्ने एउटा छुट्टै घर पनि रहेको छ। उक्त घरको झ्यालमा यो बत्ती राखिएको हुन्छ। रोटे पिङ्ग जस्तो एउटै फ्रेममा झिलिमिलि बत्ती राखी घुमिरहने भएकोले यो बत्ती हेर्दा रमाइलो देखिन्छ। यो कार्य सञ्चालन गर्न एउटा अलग्गै गुठी राखिएको छ। गुठीका गुठियार पञ्चनारायण महर्जनका अनुसार पहिले पहिले उपाकु जाने दिन र श्री कुमारीको क्वःनेयाःका दिन मात्रै यो बत्ती घुमाएर प्रदर्शनमा राख्ने गरिन्थ्यो। अहिले भने त्यहाँ रहेको अजिमाको नाममा आठै दिन बत्ती बाल्ने गरिएको छ। महर्जनका अनुसार घुमिरहने बत्ती अर्थात नेपालभाषामा 'हिलाच्वनीगु मत' भएको कारणले यो बत्तीको नाम 'ह्यूमत' रहन गएको हो। यही बत्तीको नामबाट उक्त टोलको नाम नै ह्यूमत टोल रहन गएको विश्वास गरिन्छ।[१९६]

ह्यूमत बाल्दा त्यसमा ३२ वटा दलूमत (झुण्ड्याउने बत्ती) बाल्नुपर्ने हुन्छ। फ्रेमको एकापट्टि १६ वटा र अर्कोपट्टि १६ वटा बत्ती राखी यो निरन्तर घुमिरहने गर्छ। पहिले पहिले डोरीले बाँधेर यी बत्तीहरूलाई घुमाउने

१९५ किलागःत्वाःखलः (पुलुकिसि) का सदस्य मचाराजा महर्जनसँग अन्तर्वार्ता।

१९६ ह्यूमत टोल गुठीका अध्यक्ष पञ्च नारायण महर्जनसँग अन्तर्वार्ता।

गरिन्थ्यो । अहिले भने बेरिङ्गको सहयोगले घुमाउने गर्न थालिएको छ । क्वःने याःका दिन श्री कुमारीको रथयात्रा उक्त क्षेत्रमा ल्याउँदा रथलाई एकछिन घरको अगाडि रोकेर कुमारीलाई उक्त बत्ती देखाउने चलन रहँदै आएको छ ।[१९७]

संस्कृतिविद् डा. चुन्दा वज्राचार्यका अनुसार मानव जीवनमा एकपछि अर्को गरी आइरहने उज्यालो पक्ष र अँध्यारो पक्षको निरन्तरताको प्रतीक स्वरुप ह्यूमत बालिएको हो ।

गुठियार महर्जनका अनुसार पहिले पहिले ह्यूमत गुठीको आफ्नै जग्गा पनि थियो । दाताहरूले धार्मिक आस्थाका कारण ती जग्गा राखिदिएका थिए । तर ह्यूमत टोलमा रहेको गुठीको पुरानो घर तुरुन्तै बनाउनुपर्ने भएकोले त्यो जग्गा बेचेर घर बनाउने काम भयो । त्यसको लागि काठमाडौं महानगर पालिकाबाट पनि आर्थिक सहयोग लिएको थियो । अहिले सोही घरको पसल कवल भाडामा दिई गुठीको खर्च चलाउने गरिएको छ । गुठीको नाममा अरु पनि जग्गा थियो भन्ने सुनिएता पनि त्यो अहिले कहाँ छ थाहा नभएको उहाँले बताउनुभयो । कतिपय गुठियारहरूले गुठी छोडेर गएकाले हाल गुठीमा चारजना मात्रै गुठियार बाँकी छन् । गुठीले भने अहिले पनि जग्गादान दिने दाताको नाममा हरेक वर्ष श्राद्ध गर्दै आइरहेको छ ।[१९८]

इन्द्रजात्रामा गुठीले ह्यूमत बाल्ने लगायत समयूबजि बाँड्ने काम पनि गर्ने गर्दछ । इन्द्रजात्राको आठ दिन मात्रै यो बत्ती बालिन्छ । अरु बेला भने कलात्मक झ्यालमा ऐना राखी बत्ती बालिने फ्रेम मात्रै प्रदर्शन गरिएको हुन्छ ।

## समयद्वँ र समयबजि

नेवार समुदायले मनाउने विभिन्न जात्रा एवं चाडपर्वहरूमा विभिन्न प्रकारका खाद्यान्नहरू सेवन गर्ने परम्परा रहिआएको छ । जस्तो गाइजात्रामा क्वाति, योमरी पुर्णिमामा योमरी, सिथिनखःमा वः (बारा), घ्यःचाकु संल्हूमा घ्यू र चाकु आदि खाने गरिन्छ । यसरी नै इन्द्रजात्रामा खाने प्रमुख परिकार समयूबजि हो । इन्द्रजात्राकै बीचमा आउने पूर्णिमा (भाद्रशुक्ल पुर्णिमा) का दिन समयूबजि खाने गरिन्छ । इन्द्रजात्रा को पूर्णिमालाई नेपालभाषामा 'यँयाः

१९७ ह्यूमत टोल गुठीका अध्यक्ष पञ्च नारायण महर्जनसँग अन्तर्वार्ता ।
१९८ ऐजन ।

पुन्हि' भनिन्छ । उक्त दिन समयूबजि खाने भएकोले सो पूर्णिमालाई 'समय् पुन्हि' पनि भन्ने गरिन्छ ।

समयूबजिमा खास गरी पाँच वटा खानेकुरा रहेको हुन्छ । ती हुन् : स्याःबजि (भुटेको च्यूरा । अहिले च्यूरा राख्ने चलन आएको छ), कालो भटमास, अदुवा, छ्वयूला (पहिला पहिला माछा राख्ने गरिन्थ्यो) र जाँड वा रक्सी । इन्द्रजात्रामा घर घरमा यी पाँच परिकार रहेको समयूबजि बनाएर खाने गरिन्छ । साथ साथै उक्त दिन समयूबजि बाँड्ने पनि गरिन्छ । इन्द्रजात्रामा समयूबजि बाँडेर पनि खाने चलन भएकोले उक्त दिन घर घरमा गएर समयूबजि माग्न जाने परम्परा पनि रहेको छ । समयूबजि माग्न जाँदा बालबालिकाहरू 'ला छ्कू वयेक समयूबजि, वल वल पुलुकिसि' भन्दै भट्याउँदै जाने गर्दछन् । अर्थात एक टुक्रा मासु पनि आउने गरी समयूबजि पाउँ भनेर गाउँदै माग्न जाने यो चलनको विशेषता हो ।

समयूबजिमा राखिने यी पाँच परिकारहरू केवल भोजनको रुपमा ग्रहण गरिने खानेकुरा मात्र होइन । हाम्रो सांस्कृतिक मान्यता अनुसार यी पाँच परिकार भनेको पञ्चतत्वका प्रतीक हुन् । हाम्रो शरीर नै पनि पञ्चतत्वकै एउटा स्थूल रुप हो । अर्थात् पञ्चतत्व मिलेर नै मानव शरीर बनेको हुन्छ । प्राकृतिक चिकित्सा पद्धतिले पञ्चतत्वकै आधारमा मानव शरीरको उपचार गर्दछ । यी पाँच तत्वहरू मध्ये कुनै एक तत्व मात्रै घटी-बढी भएमा मानव शरीर अस्वस्थ हुन पुग्दछ भन्ने विश्वास गरिन्छ ।

पञ्चतत्व भन्नाले पृथ्वी, जल, आकाश, वायु र अग्निलाई लिने गरिन्छ। समयूबजिमा राखिने पाँचवटा परिकारमा यी पञ्चतत्वका गुणहरू रहेको हुन्छ भन्ने विश्वास गरिन्छ । स्याःबजिमा आकाश तत्व, कालो भटमासमा वायु तत्व, अदुवामा जल तत्व, छ्वयूलामा पृथ्वी तत्व र जाँड वा रक्सीमा अग्नि तत्वका गुणहरूको रहेको मानिन्छ । यी पाँच मध्ये एउटा मात्र परिकार नभए पनि त्यसलाई समयूबजिको रुपमा लिन सकिँदैन ।[१९९]

तन्त्रवादीहरूले ब्रम्हाण्डको निर्माण नै पञ्चतत्वबाट भएको भन्ने मान्यता राख्दछन् । मानव शरीर पनि पञ्चतत्वले निर्माण भएको र मृत्यु पछि पनि पञ्चतत्वमै विलिन भएर जाने विश्वास गरिन्छ । त्यसैले प्राकृतिक

१९९ सुरेन्द्रमान श्रेष्ठ, *'नेवाः संस्कृतिया इतिहास'*, काठमाडौंः इन्द्र-जवाहर सहयोग गुथि, ने.सं. ११२९, पृ.३९ ।

चिकित्सकहरूले मानव शरीरमा विद्यमान यी पाँच तत्वहरूको सन्तुलनलाई कायम गर्ने विधिलाई नै आफ्नो उपचारको आधार बनाएका छन्। पञ्चतत्वका गुणहरूले सम्पन्न हुने भएकोले समयबजिको आयुर्वेदिक महत्व पनि रहेको हुन्छ। समयबजिले मानव शरीरमा यी पाँच तत्वको सन्तुलन कायम गरी शरीरलाई सधैँ स्वस्थ राख्न मद्दत पुऱ्याउँछ भन्ने विश्वास गरिन्छ।

चिकित्सा पद्धति अनुसार मानव शरीरका विभिन्न पाँच वटा क्षेत्रहरूमा यी पञ्च तत्वहरू विद्यमान रहेका हुन्छन्। जस्तो कि मुख्य ढाडभन्दा मुनिको क्षेत्रलाई पृथ्वी तत्व मानिन्छ। त्यसभन्दा माथि लिङ्ग क्षेत्रलाई जल तत्व मानिन्छ। नाइटोको वरिपरि रहेको क्षेत्रलाई अग्नि तत्व मानिन्छ। छातीको क्षेत्रलाई वायु तत्व मानिन्छ भने टाउकोमा आँखीभौ भन्दा माथिको निधार क्षेत्रलाई आकाश तत्व मानिन्छ।

नेवार समाजमा कुनै शुभकार्य गर्दा ख्वेँ सगं (सगुन) दिने गरिन्छ। ख्वेँ सगंमा पनि पाँच वटै खाने परिकार राखिएको हुन्छ। ती पाँच परिकारहरू पनि पञ्चतत्वकै प्रतिक हुन्। ख्वेँ सगंमा राखिने पाँच वस्तुहरू मध्ये रक्सीलाई तेज तत्व, छ्वयूलालाई पृथ्वी तत्व, माछालाई जल तत्व, मासको वः (बारा) लाई वायु तत्व र उसिनेको अण्डालाई आकाश तत्वको प्रतिकका रुपमा लिने गरिन्छ। अहिले ख्वेँ सगं दिँदा पाँचको सट्टा अण्डा, माछा र रक्सी गरी तीन परिकार मात्रै दिने पनि गरिन्छ। यसमा अण्डाको पहेँलो भागलाई पृथ्वी तत्व र बाहिरको सेतो भागलाई आकाश तत्व मान्ने तथा माछालाई जल तत्व र यसको घुमाउरो स्वरुपलाई वायु तत्व मानेर सगुन दिने चलन रहेको छ। त्यसैले सगंमा राखिने माछा दाहिनेतिर घुम्रिएकै हुनु पर्छ भन्ने मान्यता रहेको छ।

इन्द्रजात्रामा विभिन्न तान्त्रिक देवीदेवताहरूको पूजा आराधना हुन्छ। त्यसैले यो जात्राका अवसरमा सेवन गरिने खाद्यान्न पनि तान्त्रिक मान्यताले नै भरिएको पाइन्छ। इन्द्रजात्राका दिन समयबजि खाने र छिमेकमा बाँड्ने समेत गरिने यो परम्पराले एक आपसमा पारस्परिक सम्बन्ध बढाउन पनि सहयोग गर्दछ। 'ला छ्कू वयेक समयबजि' माग्न जाँदा जातभात, धनीगरिब, ठूलोसानो केही नहेरी सबैजना मिलेर जाने गरिन्छ। यसले समाजमा समानता र एकताको भावना वृद्धि गर्न सहयोग गर्छ।

हाल पूर्णिमाका दिन समयबजि बाँड्ने चलन कम भए पनि घर घरमा समयबजि खाने र टोल छिमेकलाई बोलाएर दिने चलन भने कायमै रहेको छ।

अहिले टोल टोलमा समयूबजि बाँड्ने चलन नभए पनि विभिन्न तान्त्रिक देवताका मन्दिर वा मूर्तिको अगाडि समयूद्धँ (समयूबजिको थुप्रो) सजाएर राख्ने र पछि त्यही समयूबजि टोलवासीमा बाँडेर खाने चलन आएको छ ।

नेवार समाजमा विभिन्न भोज वा ठूला पूजाआजा गर्दा समयूबजि खाने गरिन्छ । इन्द्रजात्राको दिन समयूबजि नै खाने भएकोले यसको धार्मिक सांस्कृतिक महत्व उच्च रहेको मान्न सकिन्छ ।

# इन्द्रजात्राका सांस्कृतिक नाचहरू

इन्द्रजात्रा विभिन्न पर्व, सहायक जात्रा एवं नाचहरूको संयोजन हो । इन्द्रजात्रामा इन्द्रध्वजोत्थान, उपाकु परिक्रमा, कुमारी रथयात्रा आदि जस्ता पर्वहरू सञ्चालन भए जस्तै विभिन्न परम्परागत नाचहरू पनि प्रदर्शन गरिन्छन् । यी नाचहरू र यसमा बजाइने विभिन्न बाजागाजाहरूका कारण इन्द्रजात्रा पर्व अत्यन्त उल्लासमय बन्न पुग्दछ । यस्ता विभिन्न नाचहरू इन्द्रजात्राको आठै दिन प्रदर्शन गर्ने परम्परा रहेको छ । यी नाचहरू काठमाडौंका विभिन्न जातीय समुदाय तथा विभिन्न गुठीहरूद्वारा सञ्चालित भएका हुन्छन् । विभिन्न नाचहरूको आयोजनाकै कारण इन्द्रजात्रा पर्वमा जातीय समन्वय र आपसी सद्भावको भावना विकसित भइरहेको हुन्छ ।

इन्द्रजात्रामा प्रदर्शन गरिने यी सबै सांस्कृतिक नाचहरू हाम्रा सम्पत्ति हुन् । यी अमूर्त सम्पदाहरूको संरक्षण हामी सबैको कर्तव्य हो । यी नाचहरू केवल मनोरञ्जनका माध्यम मात्र होइनन् । यी सबै नाचहरू हाम्रो सांस्कृतिक पहिचानका अभिन्न अंग पनि हुन् । यी नाचहरू नचाउँदा देशमा शान्ति कायम हुने, जनतालाई सुख समृद्धि प्राप्त हुने, मुलुकलाई रोगव्याधी लगायतका खराब तत्वहरूले दुःख दिन नसक्ने, मुलुकको अक्षुण्णता रक्षा हुने विश्वास गरिन्छ । साथै यी नाचहरूले असत्यमाथि सत्यको विजय हुने, अनैतिकलाई नैतिकवानले परास्त गर्ने, पापीहरूलाई धर्मले नाश गर्ने जस्ता नैतिक शिक्षायुक्त सन्देश पनि समाजमा फैलाइरहेको हुन्छ । यी परम्परागत सांस्कृतिक नाचहरूका कारण पनि इन्द्रजात्राको गरिमा र महत्व अझ बढ्न गएको छ ।

इन्द्रजात्रामा प्रदर्शन गरिने त्यस्ता नाचहरूको संख्या पहिले धेरै थियो, अहिले घटेको छ । जंगबहादुर राणाको पालामा भेटिएका कागजपत्रको

आधारमा हेर्दा इन्द्रजात्राभरिमा सयभन्दा बढी नाच हनुमानढोका प्रांगणमा ल्याएर नचाइन्थे तथा सरकारबाट त्यसको लागि चाहिंदो बन्दोवस्त हुन्थ्यो ।[1]

## दीप्याखं

इन्द्रजात्राको अवधिभरि प्रदर्शन गरिने विभिन्न सांस्कृतिक नाचहरू मध्ये दीप्याखं अर्थात देवी नाच पनि एक हो । इन्द्रजात्रामा प्रदर्शनमा ल्याइने सबै नाचहरू भन्दा दीप्याखं (देवी नाच) छुट्टै र विशिष्ट प्रकृतिको छ । इन्द्रजात्रामा सबैभन्दा पहिले सार्वजनिक हुने नाच नै दीप्याखं हो । यो कथामा आधारित भई समूहमा प्रदर्शन गरिन्छ । यो नाच प्रदर्शनको आफ्नै एउटा छुट्टै विधि, शैली र कथ्य पनि रहेको पाइन्छ । यसमा दैत्य बाहेक अन्य सबै पात्रहरू मुकुण्डो लगाएर नै नाच्ने गर्दछन् ।

यो काठमाडौंको किलागल टोलका स्थानीय ज्यापू समुदायले प्रदर्शन गर्ने नाच हो । किलागल टोलबाटै इन्द्रजात्रामा पुलुकिसि नाच पनि निकालिने गरिन्छ । तर पुलुकिसि नाच निकाल्ने ज्यापू समुदाय छुट्टै हुन् ।

यो नाचको नाम देवी नाच अर्थात दीप्याखं राखिएको भएता पनि यो मूलतः कुमारी, भैरव र दैत्यसँग सम्बन्धित नाच हो । यस नाचको कथा अनुसार देशका जनतालाई सधैँभरि दुःख दिइरहने दैत्यलाई मार्न शुरुमा भैरवले प्रयास गर्छन् । तर दैत्य भैरवभन्दा पनि बलियो भएकोले भैरव आफै नै भाग्नुपर्ने हुन्छ । त्यसपछि कुमारी आई दैत्यसँग लडाइँ गर्छिन् र दैत्यलाई पराजित गरी त्यहाँबाट भगाउँछिन् । अरु देवी नाचहरूमा दैत्यलाई वध गरिन्छन् भने यो नाचमा भगाउने गरिएको छ ।[2]

देवी नाचका संयोजक नातिकाजी महर्जनका अनुसार यो नाचसँग अंक ७ को एउटा अनौठो संयोग जोडिएको छ । यो नाचमा कुल ७ जना पात्र हुन्छन्, ती हुन्- भैरव, कुमारी, चण्डी, दैत्य, कवं (कंकाल), बेताः (बेताल) र ख्याः (ख्याक) । यसमा विभिन्न विधाका गुरुहरू पनि ७ जना नै हुन्छन् । यसमा विभिन्न बाजाको ७ वटै तालहरू बजाइन्छन् । इन्द्र जात्राभरि यो नाच

१ गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरवार*, काठमाडौंः नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, वि.सं. २०३३, पृ. १७५ । इन्द्रजात्रामा नचाइने सांस्कृतिक नाचहरूको संख्या यति नै हो भनी किटान गर्न नसकिएता पनि लोप भएका नाचहरूको पुनरुत्थान र प्रचलनमा रहेको नाचहरूको संरक्षण तथा संवर्द्धन गर्नु आजको आवश्यकता हो ।

२ अवलोकन ।

७ वटा विभिन्न स्थानमा ७ पटक नै प्रदर्शन गरिन्छन् । यो नाच पूरा देखाउने हो भने करिब ७ घन्टै लाग्ने गर्छ । यसमा नाच्ने पात्रहरू, बाजा बजाउनेहरू, गीत गाउनेहरू, नाच सिकाउने प्रशिक्षक, व्यवस्थापक सबै गर्दा करिब ७० जनाको समूह बनेको हुन्छ ।[३] यस नाचसँग सम्बन्धित सबै तत्वहरूसँग अंक ७ को संयोग कसरी जोडिन पुग्यो भन्ने विषय अझै रहस्यमय नै भएकोले यस बारे थप अनुसन्धान आवश्यक पर्ने देखिन्छ ।

इन्द्रजात्रा शुरु हुन भन्दा करिब एक महिना अघिदेखि नै यो नाचको तयारी शुरु हुन्छ । अर्थात गुरुको घरमा नाचको अभ्यास गर्न थालिन्छ । नाच तयार भइसकेपछि इन्द्रजात्रा शुरु हुनुभन्दा ९ दिन अगाडि नै यो नाचको पहिलो प्रदर्शन हुन्छ । भाद्रशुक्ल चौथी अर्थात चथाःका दिन पोशाक बिना मुकुण्डो मात्र लगाएर बिज्यापू ननीमा नाच देखाइन्छ । त्यसपछि भाद्रशुक्ल अष्टमी अर्थात कायाअष्टमीका दिन मुकुण्डो र पोशाक नै लगाई किलागलको डबलीमा दीप्याखंको सार्वजनिक प्रदर्शन गरिन्छ । किलागल डबलीमा पहिलो सार्वजनिक प्रदर्शनी हुँदा लगाइने मुकुण्डो र बजाइने बाजाहरू सबै 'स्वने' (तान्त्रिक अनुष्ठान) गरेर मात्रै सम्बन्धित पात्रहरूलाई हस्तान्तरण गरिन्छ ।[४]

त्यसपछि भाद्रशुक्ल द्वादशीका दिन हनुमानढोकामा यःसिं (इन्द्रध्वज) उठाउने दिन कागेश्वर महादेव मन्दिर अगाडिको डबलीमा दीप्याखं प्रदर्शन गरिन्छ । इन्द्रजात्राका अवसरमा विभिन्न नाचहरू निकालिने चलन भएता पनि हाल यःसिं उठाउने दिन प्रदर्शन गरिने नाच भने यही एउटा मात्र हो । यो नाच देखाइसके पछि मात्रै यःसिं उठाइन्छ ।

श्री कुमारीको रथयात्रा हुँदा जुन क्षेत्रमा रथ लगिन्छ त्यही क्षेत्रमा भएको डबलीमा दीप्याखं प्रदर्शन गरिन्छ । क्वःने (तल्लो भेग) मा रथयात्रा हुँदा जैशी देवलस्थित डबलीमा दीप्याखं प्रदर्शन गरिन्छ । श्री कुमारीको रथ तानेर ल्याउँदा दीप्याखं अवलोकनको लागि रथलाई केही छिन त्यहीं रोकिन्छ । त्यस्तै थःनेयाः (माथिल्लो भेग) हुँदा बांगेमुढा चोकमा रहेको डबली र त्यसपछि इन्द्रचोकमा रहेको डबलीमा यो नाच देखाइन्छ । इन्द्रचोकको डबली भने न्यूरोड बनाउँदा हटाएका कारण अहिले डबली भएको स्थानमा घेरा बनाएर नाच प्रदर्शन गरिन्छ । इन्द्रजात्राको अन्तिम दिन श्री कुमारीको

३ दीप्याखं गुठीका अध्यक्ष नातिकाजी महर्जनसँग अन्तर्वार्ता ।

४ ऐजन ।

नानीचायाः हुँदा चाहिँ किलाघल टोलमै दीप्याखं प्रदर्शन गरिन्छ ।[५]

इन्द्रजात्रा अवधिभरि काठमाडौंको जुन जुन डबलीमा दीप्याखं प्रदर्शन गरिने हो त्यो डबलीमा यही एक नाच बाहेक अर्को नाच देखाउने चलन छैन ।[६] तसर्थ ती डबलीहरूलाई यही दीप्याखंकै लागि बनाइएको डबली भन्न सकिन्छ । यी डबलीहरूमा नाच नचाइरहँदा यदि पानी पर्‍यो भने पानीमा भिजेरै भए पनि नाचिरहनु पर्छ, नाच पूरा नहुँदै डबली छोड्नु हुँदैन । देव-देवीहरू पानीले भिजे पनि उनीहरूलाई छाता ओढाउनु हुँदैन । नाच प्रदर्शन गर्ने डबलीमाथि पाल पनि टाँग्नु हुँदैन ।[७]

त्यस्तै यसको एउटा अर्को महत्वपूर्ण पक्ष के हो त भन्दा यो नाचमा सहभागी प्रमुख देवदेवीहरूले लगाउने मुकुण्डोमाथि विभिन्न प्रकारका फूलहरूले सजाइएको मुकुट पनि रहेको हुन्छ । अरु नाचका मुकुण्डो जस्तो यसको मुकुण्डो सुख्खा हुँदैन । यसको मुकुटमा सजाइने फूलहरू सबै नयाँ र ताजा नै हुनु पर्दछ । फूलहरूले मुकुट सजाउनु आफैमा एउटा कला पनि हो । यस्तो पुष्पकलाले सजिएको मुकुट भैरव, कुमारी र चण्डीले लगाउने गर्दछ । यसमा रातो रंगको ककःचा फूल, हरियो रंगको धुपी फूल, मगमग बास्ना आउने सेतो रंगको पंखा फूल, लाहुरे फूल, नायूचा फूल, गोदावरी फूल आदि सजाउने गरिन्छ । कतिपय यी फूलहरू अहिले पाउन पनि मुस्किल छ भने कति लोपै पनि भइसकेको छ । त्यसैले नाचलाई चाहिने फूलहरू आफै उत्पादन गर्न दीप्याखं समितिले हालै मात्र तपिंताँ नजिक बिष्णुमती किनारमा एक टुक्रा जग्गामा विभिन्न फूलहरू रोप्न शुरु गरेको छ । इन्द्रजात्रा अवधिभरि मुकुटमा रहेका यी फूलहरू दुई तीन पटक फेर्नु पर्ने हुन्छ ।[८]

प्रत्येक १० वर्षमा नाचका सबै पात्रहरूको पोशाक फेर्ने गरिन्छ । पात्रहरू मध्ये भैरवले लगाउने पोशाकमा एउटा बाघको छाला पनि रहेको हुन्छ । प्रत्येक १० वर्षमा सबै पोशाक फेरिए पनि बाघको छाला फेर्न भने अहिले समस्या देखापरेको छ । दुर्लभ वन्यजन्तुका अंगप्रत्यंगहरू बेचबिखन गर्ने र घरमा राख्ने समेत गैरकानुनी घोषित गरिएको 'साइटिस' अन्तर्राष्ट्रिय महासन्धिका कारण दीप्याखंका भैरवलाई बाघको छाला पाउन मुश्किल

५ अवलोकन

६ नरेन्द्र महर्जन, *'देवीनाच एक परिचय'*, काठमाडौंः देवी नाच (दीप्याखं), बि.सं. २०७३, पृ. ४३ ।

७ ऐजन, पृ. ४३ ।

८ पूर्ववत् ३ ।

परेको छ । भैरवले बाघको छाला कम्मरमा बेरी नाच्ने गर्दछ ।[९]

इन्द्रजात्राको एउटा महत्वपूर्ण अंग रहेको यो नाच कति पुरानो हो भन्ने विषय भने स्पष्ट छैन । यही नाचमा गाइने एउटा गीतमा 'नेपालया भुवन पति/श्री गुणकर राजा/जुगांजुग जिवय् भुक्तिमुक्ति' भनी लेखिएकोले इतिहासकारहरूले यो नाच राजा गुणकामदेवको पालादेखि शुरु भएको भनी अनुमान गरेका छन् ।[१०] त्यस्तै इतिहासकार डा. साफल्य अमात्यले यो नाच धेरै पुरानो भए पनि जयप्रकाश मल्लले यसलाई कुमारीको रथयात्रासँग जोडेको अनुमान गर्नुभएको छ ।[११] यो नाचमा बजाइने गीतमा चर्याको समेत अंश रहेकोले यो पुरानै नाच हो भन्ने देखिन्छ ।

पृथ्वीनारायण शाहले इन्द्रजात्राका दिन काठमाडौं आक्रमण गर्दा राजा जय प्रकाश मल्ल जैशी देवल टोलको डबलीमा यही नाच हेरिरहेका थिए भन्ने कथन छ । उनलाई बसन्तपुरको दरवार पृथ्वीनारायण शाहले कब्जा गरिसके भन्ने जानकारी त्यहीं प्राप्त भएको थियो । त्यसपछि उनी त्यहींबाट दक्षिणढोकाबाट निस्की टेकूको बाटो हुँदै पाटनतिर लागे ।

नाचका मुल गुरु तथा नाइके इन्द्र महर्जनका अनुसार दानवरूपी नकारात्मक शक्तिमाथि देवीरूपी सकारात्मक शक्तिको विजय हुन्छ भन्ने सन्देश रहेको यो नाच मञ्चन गरे मुलुकमा स्थिरशान्ति कायम हुन्छ र लोकमा दुःखको हरण भई सुख व्याप्त हुन्छ भन्ने विश्वास गरिन्छ ।[१२]

यति धेरै महत्वको नाच भएर पनि हरेक वर्ष यसको मञ्चन गर्ने बेला भने सधैँ नाच सिकाउन र आवश्यक पूजाआजा गर्न आफ्नै स्थायी निवास नभएको हुनाले ठाउँको अभाव हुन्थ्यो । बिज्यापू ननीको एउटा घरमा यो नाच सम्बन्धी सबै कार्य गर्ने र नाच पनि त्यही घरबाट निकालिने चलन थियो । तर नाच सम्बन्धी सबै कार्य गर्न प्रयोग गरिएको उक्त घर नाचको आफ्नै घर भने थिएन । त्यो त्यहींकै एक स्थानीय व्यक्तिको निजी घर थियो । उनले त्यो घर पनि बेच्ने तयारी गरेपछि दीप्याखंलाई ठूलै धक्का पुग्न जाने डर उत्पन्न भयो । त्यस पछि केही समय अघि मात्रै दीप्याखंका सदस्यहरूले आफ्नै पैसामा त्यो घर खरिद गरी त्यसको ठाउँमा नयाँ परम्परागत शैलीको

९ पूर्ववत् ३ ।
१० महर्जन, पूर्ववत् ६, पृ. छ ।
११ महर्जन, पूर्ववत् ६, पृ. ञ ।
१२ दीप्याखं गुठीका मुल गुरु इन्द्र महर्जनसँग अन्तर्वार्ता ।

घर बनाउने काम शुरु गरेको छ। यसै आर्थिक वर्षमा काठमाडौं महानगर-पालिकाको आर्थिक सहयोगमा अब त्यहाँ दीप्याखंको पाँच तल्ले नयाँ आगमघर निर्माण हुँदैछ जुन काठमाडौं महानगरपालिकाका प्रमुख विद्यासुन्दर शाक्यले शिलान्यास गर्नुभएको थियो । सो आगमघरमा दीप्याखं सम्बन्धी सम्पूर्ण कार्य हुनुका साथ एउटा संग्रहालय समेत रहने जानकारी दीप्याखंका संयोजक नातिकाजी महर्जनले दिनुभएको छ ।[१३]

## लाखे

इन्द्रजात्रामा प्रदर्शन गरिने अत्यन्त रोमाञ्चकारी नाचहरू मध्ये लाखे सर्वाधिक लोकप्रिय र आकर्षक नाच हो । लाखे नाच हेर्दा डरलाग्दो जस्तो लागेता पनि साना बालबालिकाहरू समेत लाखे नाचेको हेर्न आतुर हुन्छन् । यो डबली वा कुनै निश्चित ठाउँमा नचाइने नभई थःने-क्वःने र उपाकु परिक्रमा गर्ने सबै क्षेत्र लगायत काठमाडौंका विभिन्न सडक र खुल्ला ठाउँहरूमा नचाइने भएकोले लाखे नाच र यसमा बजाइने आकर्षक तथा उत्तेजित बाजाको तालले पूरा इन्द्रजात्रा पर्वमै रौनक थपिदिएको हुन्छ ।

नेपालमा लाखे अरु विभिन्न जिल्लाहरूमा पनि निकाल्ने गरिन्छ । खास गरी जहाँ जहाँ नेवार समुदायको वस्ती छ त्यहाँ त्यहाँ लाखे नाच निकाल्ने गरिएको पाइन्छ । तर ती सबै लाखेहरू गाइजात्रा ताका निकालिने गरिन्छ । इन्द्रजात्रा ताका निकालिने लाखे भने यही मजिपाः लाखे मात्र हो । गाइजात्रा अर्थात नेपाल संवत् अनुसार 'गुँला' महिनामा निकालिने भएकोले अरु लाखेहरूलाई 'गुँला लाखे' भनिन्छ । यो चाहिं नेपाल संवत् अनुसार 'यँला' महिनामा निकालिने भएकोले यो लाखेलाई 'यँला लाखे' भनिन्छ । अनि यो काठमाडौंको मजिपाः टोलबाट निस्किने भएकोले यसलाई 'मजिपाः लाखे' पनि भनिन्छ । मजिपाः टोल मञ्जुश्रीले निर्माण गरेको 'मञ्जुपत्तन' नगरको अपभ्रंश रूप पनि भनिन्छ ।[१४]

इन्द्रजात्रामा निकालिने 'यँला लाखे' को घर काठमाडौंको क्वःने क्षेत्रमा रहेको 'लाखे ननी'मा अवस्थित छ जसलाई 'लाखेछेँ' (लाखेघर) भनिन्छ । इन्द्रजात्रामा त्यही लाखे ननीस्थित लाखेछेँबाट लाखे नाच आरम्भ हुन्छ ।

---

१३ पूर्ववत् ३ ।

१४ जनश्रुति अनुसार ।

लाखे नाच निकाल्ने कार्य काठमाडौंका रञ्जितकार समुदायको जिम्मेवारीमा रहेको छ ।

लाखे नाच सञ्चालनका लागि श्री लाखे आजु गुठी बनाइएको छ । त्यसका प्रमुख नाइके राजीव रञ्जितकार हुनुहुन्छ । उहाँले बताउनु भए अनुसार इन्द्र जात्रामा लाखे निकालिने विधि यस प्रकार रहेको छ :

लाखे निकालिने खास समय भाद्रशुक्ल द्वादशी अर्थात हनुमानढोकामा यःसिं उठाउने दिनमै भए पनि यसको लागि तयारी भने पन्ध्र दिन अघिदेखि नै शुरु भइसकेको हुन्छ । इन्द्रध्वजको पन्ध्र दिन अघि अर्थात् भाद्रकृष्ण एकादशीका दिन लाखे आजुको ख्वाःपाः (मुकुण्डो) बाहिर निकालिन्छ । लाखेछेँ (लाखेघर) मा एउटा अत्यन्त पुरानो पिला अर्थात सन्दूक (काठले बनाइएको बाकस) रहेको छ । त्यही बाकस भित्र लाखेको मुकुण्डो राखिएको हुन्छ । मुकुण्डो निकाल्ने र राख्ने बेला मात्रै त्यो पिला खोलिन्छ । तर पिला खोलिए पनि त्यसमा के छ भनेर हेर्ने काम भने गरिँदैन । पिला खोलेर त्यसमा हात मात्रै पसाएर भित्र रहेको मुकुण्डो निकालिन्छ भने जात्रा सकिए पछि पनि हात मात्रै पसाएर मुकुण्डो भित्र हालिन्छ । त्यही भएर पिला भित्र मुकुण्डो बाहेक अरु के के बस्तुहरू छन् कसैलाई थाहा छैन । मुकुण्डो बाहिर निकाले पछि तान्त्रिक विधिबाट पूजा गरी त्यसको न्यास (प्राण तत्व) निकाल्ने गरिन्छ । त्यसपछि रंगरोगन (लंपुं छायेगु) को लागि मुकुण्डोलाई चित्रकार कहाँ पठाइन्छ । न्यास निकाल्ने पूजा लाखे गुठीका थकालीहरूले गर्छन् ।[१५]

आवश्यक रंगरोगन गरी १४ दिन पछि मुकुण्डो पुनः लाखेछेँमा फर्काइन्छ । एकादशीका दिन त्यसमा पुनः न्यास प्रतिष्ठापन गर्ने पूजा हुन्छ । द्वादशीका दिन मुकुण्डोमा झ्यापलाक्क परेको रातो रङ्गको कपाल जोडेर आसनमा विराजमान गराइन्छ । यति गर्ने बित्तिकै मुकुण्डो जीवन्त देखिन आउँछ । त्यसपछि लाखे बन्ने व्यक्तिले लाखेको पोशाक धारण गर्दछ । लाखेको पोशाकमा रातो चोलो, जामा, हातमा रुमाल र कम्मरमा घंघला बाँधिएको हुन्छ । अनि मुकुण्डोलाई पूजा गरी मुकुण्डो बोकेर तल छिँडीमा आउँछन् । छिँडीमै बसेर अनुहारमा मुकुण्डो धारण गर्छन् र त्यसपछि फुत्त उफ्रेर लाखे बाहिर ननीमा निस्कन्छ र त्यहाँ तीन पटक उफ्रिन्छन् । त्यहाँ एकछिन झ्यालिंचा सहित लाखे

१५ श्री लाखे आजु गुठीका अध्यक्ष राजीव रँजितकारसँग अन्तर्वार्ता ।

नाच चल्छ । अनि लाखे ननीबाट पनि बाहिर निस्की सडकमा आउँछन् । त्यहाँबाट दौडेर मरु टोलतिर गई चिकंमुगल दोबाटोमा तीन चोटी फुत्त फुत्त उफ्रिन्छन् । त्यसपछि जैशी देवलतिर गई त्यहाँको पनि दोबाटोमा तीन चोटी फुत्त फुत्त उफ्रिन्छन् । आफ्नो नगरमा कुनै पनि प्रकारको महामारी नआओस् भनी महामारीलाई कुल्चिन त्यसरी उफ्रेको भन्ने जनविश्वास छ ।[१६]

यति गरिसके पछि लाखे सरासर यंगाल टोलमा एक स्थानीय राजभण्डारीको घरमा गई पूजा थाप्छन् । लाखेले थाप्ने यो नै पहिलो पूजा हो । यो पूजा थापिसके पछि मात्रै लाखेले अरु पूजाहरू थाप्ने गर्छन् । लाखेले यंगालमा राजभण्डारीकै घरमा गएर पूजा थाप्नुको पछाडि एउटा रोचक ऐतिहासिक प्रशंग जोडिएको छ । वि.सं. १९०६ सालमा जंगबहादुर बेलायतको यात्रामा निस्के । उनको बेलायत यात्रामा सहभागी भएका सदस्यहरू मध्ये यंगाल टोलका सुब्बा सिद्धिमान राजभण्डारी पनि एक थिए ।[१७]

त्यति बेलाको विदेश भ्रमण पानी जहाजबाट मात्रै हुने गर्दथ्यो । जंगबहादुरको टोली पनि भारतको कलकत्तादेखि पानी जहाजमै बेलायत गएको थियो । विभिन्न ठाउँमा भ्रमण गर्दागर्दै एकपटक उनीहरू जहाजमै भएको बेला समुद्रमा ठूलो तूफान आएर जहाज नै पल्टिएला जस्तो भयो । जहाजमा बसेका सबैजना डराएर विभिन्न देवताका नाम लिन थाले । तर पनि स्थिति काबुमा भने आएन । त्यही बेला सिद्धिमान राजभण्डारीले 'महाराज, अब एक पटक मेरो टोलको श्री लाखे आजुलाई पुकारा गरौं । सबैले आँखा चिम्लेर उहाँको नाम लिउँ' भने । सबैले त्यसै गरे । साँच्चै, लाखे आजुको नाम लिने बित्तिकै तूफान थामियो, जहाज हल्लिन छोड्यो । सबैले सन्तोषको सास लिए । बेलायतबाट फर्के पछि जंगबहादुरले आफू सबैको प्राण बचाइदिएको भनी सिद्धिमान राजभण्डारी मार्फत लाखे आजुलाई बहुमूल्य गहनाहरू चढाए । त्यस बेलादेखि लाखे आजुले इन्द्रजात्राको पहिलो दिन नै यंगालमा उनै सिद्धिमान राजभण्डारीको घरमा गई पहिलो पूजा ग्रहण गर्ने चलन शुरु भएको हो ।[१८]

---

१६ अवलोकन

१७ पुरुषोत्तम शम्सेर जबरा, *श्री ३ हरूको तथ्य वृत्तान्त*, काठमाडौं: विद्यार्थी पुस्तक भण्डार, वि.सं. २०६२, पृ. ८० ।

१८ सिद्धिमान राजभण्डारीकी चार पुस्ताकी नाति बुहारी बिष्णुदेवी राजभण्डारीसँगको कुराकानी ।

जंगबहादुरको बेलायत भ्रमणताका उनलाई राजकीय सम्मान स्वरुप सलामी चढाउनु पर्दा नेपालको राष्ट्रिय गान बजाउनु पर्ने भएछ । तर त्यति बेलासम्म नेपालको राष्ट्रिय गान तयार भइसकेको थिएन । अब नेपालको राष्ट्रिय गान के प्रस्तुत गर्ने भन्ने समस्या नेपाली टोली सामु उत्पन्न भयो । त्यति बेला जंग बहादुरले नेपालको राष्ट्रिय गान स्वरुप काठमाडौंमा अत्यन्त लोकप्रिय गीत 'राजमति कुमति...' प्रस्तुत गर्न लगाएको कुरा इतिहासमा उल्लेख छ। त्यो अप्ठेरो स्थितिमा बेलायतमै रहँदा जंगबहादुरलाई राष्ट्रिय गानका रुपमा 'राजमति कुमति' गीत सिकाउने व्यक्ति यिनै सिद्धिमान राजभण्डारी थिए भनी उनकै टोलछिमेकका बूढापाकाहरू बताउने गर्छन् ।

इन्द्रजात्राको पहिलो दिन काठमाडौंमा उपाकु घुम्ने कार्य भइरहेको हुन्छ। उपाकु घुम्ने सबै ठाउँमा लाखे पनि पुगिरहेको हुन्छ। उपाकु आउनेहरू सबैको रक्षाका लागि लाखे त्यसरी घुम्ने विश्वास गरिन्छ । उपाकु घुम्न लाखेले कोहिटीबाट नाच्न शुरु गर्छ र परिक्रमा पछि कोहिटीमै आएर सकिन्छ ।

इन्द्रजात्रा शुरु भएदेखि आठै दिन लाखे बाहिर आएर विभिन्न स्थानमा नाच प्रदर्शन गरिरहेको हुन्छ। कुमारीको थःनेयाः, क्वःनेयाः र नानीचायाः हुँदा कुमारी रथको अगाडि अगाडिनै लाखे नाच्दै आइरहेको हुन्छ। नानीचायाःको दिन श्री कुमारीको रथयात्रा समापन हुने बित्तिकै लाखे आजु आफ्नै घरमा फर्कन्छ र जात्रा सकिन्छ ।[१९]

इन्द्रजात्रा सकिएर लाखेको मुकुण्डोलाई पुनः पिला भित्र राखिए पछि अर्को इन्द्रजात्रा नआउन्जेल त्यो खोलिँदैन । यस बीचमा कोही लाखे आजुको पूजा गर्न चाहन्छन् भने लाखेछेँमा आई पिला बाहिरबाटै पूजा गर्न सक्छन् । घरमा स्वस्तिशान्ति कायम गर्न, कुनै विरामी छन् भने सुस्वास्थ्यको कामना गर्न लाखे आजुको पूजा गर्ने चलन छ। अहिले खास गरी शनिवार लाखेछेँमा पूजाका लागि भक्तजनहरू आउने गर्दछन् । लाखे आजुको पूजा गर्दा उसिनेको अण्डा चढाउने गरिन्छ । कोही कोही लाखे आजुका लागि नयाँ पोशाक सिलाएर चढाउनेहरू पनि छन् । पहिले पहिले हरेक चार वर्षमा लाखेका लागि नयाँ पोशाक सिलाउने गरिन्थ्यो । तर अहिले भक्तजनहरूले नै चढाउने भएकाले पोशाकको खासै समस्या हुने गरेको

---

१९ पूर्ववत् १५ ।

छैन ।[२०]

लाखे आजुको मुकुण्डो भने हरेक वर्ष रंगरोगन मात्रै गरिन्छ । विभिन्न समयमा लाखे आजुको मुकुण्डो पटक पटक चोरी भइसकेको छ । आजभन्दा ७० वर्ष अघि लाखेको मुकुण्डो चोरी भएको थियो । त्यस पछि नयाँ मुकुण्डो बनाएर प्रतिष्ठापन गरियो ।

यो यँला लाखे सम्बन्धी गुठीमा हाल ८ जना सदस्यहरू छन् । उहाँहरू सबै एउटै परिवारका हुन् । पहिले त यसमा २५-३० जना नै सदस्य थिए । तर लाखे नाच व्यवस्थापनको लागि कुनै ठोस श्रोत नभएको कारणले धेरै गुठियारहरूले गुठी छोड्दै गए । अहिले एउटै परिवारका सदस्यहरू मिली सक्दो काम गरिरहेका छन् । लाखे आजुलाई दैनिक नित्य पूजा पनि गर्नु पर्दछ । कौशी तोषाखानाबाट पहिले लाखे पूजाका लागि एउटा राँगो र अन्य पूजा खर्च वापत ९,३३२।- रुपैयाँ दिने गर्दथ्यो । त्यो प्रयाप्त थिएन । त्यसैले अहिले इन्द्रजात्रा व्यवस्थापन समिति नै बनिसके पछि नेपाल सरकारले उपलब्ध गराउने १ लाख ३५ हजार रुपैयाँ काठमाडौं महानगरपालिका मार्फत प्राप्त भइरहेको छ ।[२१]

इन्द्रजात्रा ताका पहिले पहिले क्वःने क्षेत्रका लाखे, थःने क्षेत्रका पुलुकिसि र हल्चोकका सवःभकु बीच सधैँजसो झगडा पर्ने गर्दथ्यो । आजभन्दा ३५ वर्ष जति अघि त्यस्तो झगडा साम्य पार्न तीनवटै नाचका गुठीहरू बीच मेलमिलाप गरी एक आपसमा सद्भाव बढाउने र एउटा समूहले अर्को दुई समूहलाई आफूकहाँ बोलाई पूजा गर्ने चलन शुरु भयो । अहिले हरेक इन्द्रजात्राका बेला लाखेले थःनेयाःका दिन पुलुकिसि र सवःभकुलाई पूजा दिने गर्छन् । पुलुकिसिले नानीचायाःका दिन लाखे र सवःभकुलाई पूजा दिने गर्छन् भने इन्द्रजात्रा सकिए पछि सवःभकुले लाखे र पुलुकिसि खलःलाई हल्चोकमै बोलाएर पूजा अर्पण गर्छन् । त्यसरी पूजाको लागि बोलाउँदा सम्पूर्ण नाच समूहलाई नै भोज पनि खुवाउने गरिन्छ । लाखेले सवःभकु र पुलुकिसिलाई बोलाउँदा करिब चार पाँच सय जनालाई नै भोज खुवाउनु पर्ने हुन्छ ।[२२]

---

२० पूर्ववत् १५ ।

२१ ऐजन ।

२२ ऐजन ।

इन्द्रजात्रामा मात्र निकालिने यो लाखे नाचको सम्पूर्ण सञ्चालन मजिपाः टोलका रञ्जितकार समुदायले गर्ने भए पनि हाल अन्य जातिका मानिसहरू पनि लाखे भई नाच्न सकिने भएको छ । लाखे आजु गुठीका प्रमुख नाइके राजीव रञ्जितकारका अनुसार अहिले रञ्जितकार समुदायका मानिस मात्रै लाखे भई नाच्न सम्भव छैन । नाच्दा नाच्दै दिनमै तीन चार जनासम्म मान्छे फेर्नु पर्ने हुन्छ । लाखे नाच्न अत्यन्तै बल चाहिने भएकोले जोसुकैले निरन्तर नाचिरहन सम्भव हुँदैन । त्यसैले कुनै घरमा पूजाको लागि बोलाइएको छ भने त्यो घरमा पूजा ग्रहण गर्न गएकै बेला लाखेको पोशाक र मुकुण्डो अर्को मान्छेलाई धारण गराई मान्छे फेर्ने गरिन्छ ।

लाखे नाच्न गुठीले कुनै किसिमको तालिम दिने गर्दैन । साथै बाजाको लागि पनि कुनै तालिम दिने चलन छैन । इन्द्रजात्राको आठ दिन लाखे सार्वजनिक भएको बेला त्यसमा सहभागी हुँदाहुँदै नै नयाँ केटाहरूले बाजा बजाउन र लाखे नाच्न सिकिसकेको हुन्छ । उनीहरूलाई सिकाउने अवसर पनि त्यही नै हो । अहिलेसम्म बाजा बजाउने र लाखे बनेर नाच्ने नयाँ मानिसहरू यसरी नै उत्पादन हुँदै आइरहेको छ । इच्छा भएको जो पनि यसमा सहभागी हुन सक्छन् । तै पनि नाचको मुख्य नियन्त्रण भने लाखे गुठीकै हातमा रहेको हुन्छ ।[२३]

लाखे नाचमा लाखेलाई जिस्काउँदै अर्को एउटा सानो पात्र पनि नाचिरहेको हुन्छ । त्यो सानो पात्रलाई 'झ्यालिंचा' भनिन्छ । रञ्जितकारका अनुसार झ्यालिंचालाई आकाश भैरवका रूपमा लिइन्छ त्यसैले उनको मुकुण्डो सधैँ आकाशतिर फर्किएको हुन्छ । लाखे आफैलाई पनि 'शान्त भैरव' भनिन्छ । भैरव भएकोले नै होला, लाखेलाई 'लाखे आजु' भन्ने गरिन्छ । लाखे नाचमा झ्यालिंचाले लाखेलाई जिस्काउने र लाखेले झ्यालिंचालाई लखेट्ने गर्छ । लाखे र झ्यालिंचाको त्यो द्वन्द अत्यन्त रोमाञ्चकारी हुने गर्दछ । लाखे बन्न जो भए पनि हुन्छ तर झ्यालिंचा भने गुठीकै सदस्यका सन्तान मात्रै बन्ने चलन छ । झ्यालिंचा भएर नाच्न अक्सर १०-१२ वर्षको केटोलाई प्रयोग गरिन्छ । झ्यालिंचाले लाखेलाई 'तिमी यो धर्तीमा आएर के पायौ खोइ ?' भनेर जिस्काउने र लाखेले उनलाई लखेट्ने गर्दछ ।[२४]

---

२३ पूर्ववत् १५ ।
२४ अवलोकन ।

लाखे वास्तवमा को हो भन्ने विषयमा प्रामाणिक अभिलेखहरू पाइँदैन। 'लाखे' शब्द मूलतः 'राक्षस' शब्दबाटै अपभ्रंश हुँदै आएको हो। लाखेको डरलाग्दो अनुसार, जिङरिङ्ग छोडिएको कपाल र उफ्री उफ्री नाच्ने शैली हेर्दा पनि लाखे कुनै 'राक्षस' नै हो भन्ने देखिन्छ।

इन्द्रजात्रा वर्षा ऋतुको चतुर्मासको बेला मनाइने जात्रा हो। हिन्दू धर्म अनुसार यो बेला भगवान बिष्णु नागको शैय्यामा आराम गर्न गएका हुन्छन्। बिष्णु आराम गरिरहेको यही चार महिनाको अवधिमा (श्रावण-भाद्र महिना ताका) विभिन्न खराब तत्वहरूले नगरमा आक्रमण गर्न खोज्छन्। देवतालाई हराएका दैत्य एवं राक्षसहरू पनि यही बेला बाहिर आई सडकमा नाच्न थाल्छन्। लाखे त्यसैको प्रतीक हो।[२५]

तर यँला लाखे राक्षस भए पनि सर्वसाधारण जनतालाई दुःख दिने राक्षस नभई सुख र सुरक्षा प्रदान गर्ने राक्षस हुन्। राक्षस भइकन पनि यिनी कसरी नगर र नगरवासीका रक्षक बने भन्ने विषयमा एउटा किंवदन्ती पाइन्छ।

किंवदन्ती अनुसार राजा हरिसिंहदेव सिम्रौनगढबाट काठमाडौं आउँदा लाखे पनि सँगै आएका थिए। काठमाडौं आए पछि यहींकै एक स्थानीय ज्यापुनीसँग उनको प्रेम पर्न गयो। प्रेममा डुबेका लाखे दिउँसो ज्यापुनीसँग हिंड्ने र राति स्थानीवासीका बच्चाहरू चोरेर खाने गर्दथ्ये। पछि स्थानीय जनताले यो कुरा थाहा पाए पछि लाखेलाई समाएर देश निकाला गर्ने निर्णय गऱ्यो। तर यहाँका ज्यापुनीसँग प्रेममा फँसेका लाखेलाई नगर छोडेर जाने इच्छा भएन। त्यसैले अब आइन्दा आफूले बच्चाहरू चोरेर खाँदिन, बरु सबै बच्चाहरूको संरक्षण गर्छु र नगरको सुरक्षा समेत गर्छु भन्ने वाचा गरी उनी यहीं बस्न थाले। उनी बस्नको लागि लाखे ननीमा छुट्टै घर पनि बनाइदिए।[२६]

लाखे ननीस्थित लाखेछेँ जीर्ण भएकोले वि.सं. २०६९ सालमा पूरै भत्काई पुनर्निर्माण गरिएको छ। यसरी एउटा हिंस्रक लाखे कालान्तरमा शान्त, शिष्ट र नगरको रक्षक समेत बन्न पुगे। लाखे नाच्दा उनको हातमा कुनै हतियार पनि हुँदैन। नाच्दा उनको हातमा पंचरंगी कपडा एक टुक्रा मात्र रहेको हुन्छ।[२७]

---

२५ Gerard Toffi, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present*, Kirtipur: Contributions To Nepalese Studies (Volume 19), TU, 1992, p. 82.

२६ किम्बदन्ती अनुसार।

२७ अवलोकन।

काठमाडौंको रक्षक भएको नाताले लाखे कहिल्यै पनि खोला तरेर अर्को ठाउँमा जाने गर्दैन । यो घुम्ने क्षेत्र भनेको उपाकु परिक्रमा गरिने सीमा भित्र मात्रै हो । तै पनि आजभोलि उपाकु क्षेत्रभित्र नपर्ने ठाउँका स्थानीय मानिसहरूले पनि आफ्नो क्षेत्रमा लाखे ल्याइदिनु पऱ्यो भनेर अनुरोध गर्न थालेकोले लाखे त्यतातिर पनि जान थालेको छ । तर खोला तरेर जाने काम भने अहिलेसम्म भएको छैन ।

लाखेका बारे ऐतिहासिक दस्तावेजहरू खासै पाइँदैन । भाषा वंशावली (द्वितीय भाग) मा लाखेका बारे यस्तो लेखिएको छ ।[२८]

"फेरि यिनै समयमा कान्तिपुरका पश्चिमतिर कोही एक मजिपात नाम जग्गा थियो । त्यहाँदेखि कोही एक राक्षस नित्य आई कान्तिपुरका दक्षिणपट्टि सहरका छेउ एक रञ्जितकार छिपानीसँग क्रीडा गरी जान्छ भन्या कुरा वैश्य ठकुरीहरूले सुन्या र बाऱ्ह ठकुरीहरूले जुक्ति गरी त्यस मनुष्यरुप धरी आउन्या राक्षसकन भेटी बुझाई सत्य कबुल्याई इन्द्रजात्रामा लाख्याको स्वरुपले मकुंडो लगाई ठूलो यात्रा प्रतिवर्ष गराया । घर पनि बनाई मञ्जिपात नाम गरी राखी दिया । त्यस राक्षस त्यसै जग्गामा गुप्त रुपले प्रवेश गरी रह्याको छ । अद्यापि इन्द्रजात्रामा त्यस मञ्जिपात राक्षसका नामले यात्रा प्रतिवर्ष गर्दछन् ।"[२९]

लाखे नाच कति पुरानो भन्ने बारे ठोस अभिलेख भेटिएको छैन । कोही कोही यसलाई गुणकामदेवले काठमाडौं नगर निर्माण गरे पछि लाखे नाच शुरु गरेको दावी गर्छन् । यकिन तिथिमिति नभेटिए पनि लाखेकै नामबाट विभिन्न स्थानको नामाकरण समेत भएकोले यो पुरानै नाच हो भन्ने अनुमान भने गर्न सकिन्छ । लाखेको नामबाट लाखे चौर, लाखे ननी, लाखे सिमा, लाखे ध्वाखा, लाखे फल्चा, लाखे हिति, लाखे ल्वहं, लाखे दो, लाखे बुँ, लाखे तुं आदि जस्ता नामहरू रहेको हामी पाउँछौं ।

गुँला लाखे देशैभरि नेवाः वस्तीहरूमा अस्तित्ववान रहेको पाइन्छ । अहिले देशको करिब ६५ जिल्लामा लाखे नाच नचाइन्छ । त्यति मात्र होइन अहिले भारत, अमेरिका, बेलायत, अष्ट्रेलिया आदि देशका विभिन्न शहरहरूमा समेत इन्द्रजात्रा मनाउने क्रममा लाखे नाच अनिवार्य जस्तै नचाउन थालेका

२८ पं. देवीप्रसाद लंसाल (सं), *भाषा वंशावली* (द्वितीय भाग), काठमाडौंः नेपाल राष्ट्रिय पुस्तकालय, बि.सं. २०२३, पृ. २९ ।

२९ गणेशराम लाछि, *नेवाः संस्कृतिइ लाखे प्याखं, नेपाः संस्कृति*, वर्ष ३/४, अंक ३, काठमाडौंः नेपाल संस्कृति तथा सञ्चार समाज, ने.सं. ११३७, पृ. ३२ ।

छन् । काठमाडौंमा यँला लाखे एउटै मात्र भए पनि बाहिर जिल्लामा भने कतै दुइटा, कतै चार वटा त कुनै जिल्लामा बत्तिस वटासम्म गुँला लाखेहरू रहेको पनि पाइन्छ । देशभरि अहिले करिब एक हजार वटा जति लाखे अस्तित्वमा रहेका छन् ।[३०]

यी लाखेहरू बीच वर्षेनी नाचको प्रतिस्पर्धा पनि हुन्छ । लाखे नाचलाई संरक्षण र प्रवर्द्धन समेत गर्न अहिले 'लोकसंस्कृति तथा राष्ट्रिय लाखे नाच प्रतिष्ठान' समेत गठन भइसकेको छ जसले हरेक वर्ष यस्तो नाचको प्रतिस्पर्धा आयोजना गर्दछ । यस्ता सार्वजनिक नाचहरूमा विभिन्न जिल्लाका गुँला लाखेहरू सहभागी हुन पुगे पनि काठमाडौंका मजिपाः लाखे भने त्यस्ता कार्यक्रमहरूमा कहिल्यै सहभागी हुँदैनन् । त्यसैले मजिपाः लाखेको धार्मिक पवित्रता र सांस्कृतिक महत्ता अझै कायमै छ ।

## पुलुकिसि

इन्द्रजात्रा भन्ने बित्तिकै मानिसको मस्तिष्कमा झट्ट आइहाल्ने एउटा प्रतीक नै पुलुकिसि हो । सडकमा पुलुकिसि नाचेको देखिए पछि मात्रै इन्द्रजात्राको छनक आउने गर्दछ । भाद्रकृष्ण द्वादशीका दिन इन्द्रध्वजोत्थान गरिएकै दिनदेखि पुलुकिसिको नाच पनि शुरु हुन्छ ।

किंवदन्ती अनुसार पुलुकिसि भनेको स्वर्गका राजा इन्द्रको वाहन ऐरावत हात्तीको प्रतीक हो । काठमाडौंमा प्रचलित इन्द्रजात्रासम्बन्धी कथा अनुसार इन्द्रलाई काठमाडौंका स्थानीय वासिन्दाले समातेर राखेपछि आफ्नो मालिक कहाँ गए भनी खोज्न ऐरावत हात्ती आएका थिए । इन्द्रलाई खोज्न उनी काठमाडौंको तल्लो क्षेत्र, माथिल्लो क्षेत्र सबैतिर कुद्न थाले । पुलुकिसि आउँदा 'ताङताङ' आवाज आउने छुट्टै प्रकारको बाजा बजाउने गरिन्छ । 'ताङताङ' आवाजको बाजासहित आउने भएकोले पुलुकिसिलाई कसैकसैले 'तानाकिसि' पनि भन्ने गरेको पाइन्छ ।[३१]

त्यस्तै अर्को किंवदन्ती अनुसार प्राचीनकालमा किलागल टोल एउटा ठूलो जंगल थियो जुन प्रशस्त हात्तीहरूको वासस्थान थियो । एक दिन

---

३० जितेन्द्रविलास वज्राचार्य, *मजिपाः लाखे*, लहना वाःपौ, वर्ष ६, अंक २७, काठमाडौंः लहना मिडिया, वि.सं. २०७६, पृ. ६ ।

३१ किलागःत्वाःखलः (पुलुकिसि) का सदस्य मचाराजा महर्जनसँग अन्तर्वार्ता ।

एक जना बनेपाःका राजा उक्त जंगलमा शिकार खेल्न आए । तर जंगलमा राजालाई नै हात्तीले लखेट्न थालेपछि ज्यान जोगाउन मुश्किल भयो । उनले तत्काल श्वेतकाली देवीको प्रार्थना गरे । श्वेतकालीले एउटा सेतो हात्तीको रुप धारण गरेर हात्तीहरूको हुलमा पसी राजाको ज्यान जोगाए । त्यसै उपलक्ष्यमा राजाले श्वेतकालीको सम्मान स्वरुप सेतो हात्तीको नाच नचाउने चलन शुरु गरेको हो ।[३२]

पुलुकिसि काठमाडौंको किलागल टोलका स्थानीय ज्यापू (महर्जन) समुदायले निकाल्ने गर्दछ । किलागल टोलका स्थानीय ज्यापू समुदायको 'किलागः त्वाः खलः' नामक परम्परागत संस्था रहेको छ । पुलुकिसि त्यही संस्थाको संयोजनमा निकालिने गरिन्छ । खलःका सदस्य मचाराजा महर्जनका अनुसार इन्द्रजात्राका बेला जतातते पुलुपालु (झल्याकझुलुक) देखिने भएकोले यसलाई 'पुलुकिसि' भनिएको हो । तैपनि कोही कोही यसलाई 'पुलुंकिसि' पनि भन्ने गर्दछन् ।[३३]

संस्कृतिविद् यज्ञमानपति वज्राचार्य पनि 'पुलुक पालुक' अर्थात झाकल झुकल मात्रै देखिन आउने भएकोले यसलाई 'पुलुकिसि' भनिएको हो भन्ने मान्यता राख्नुहुन्छ । पुलुकिसि निकाल्दा चिराग अनिवार्य हुन्छ ।

पुलुकिसि निकालिने किलागल टोल काठमाडौंको प्राचीन क्षेत्र हो । किलागलको उत्तरी भेगमा रहेको इखा पोखरीलाई लिच्छविकालीन पोखरी मानिन्छ । किलागल क्षेत्र कुनै बेला घना जंगल नै थियो जहाँ हात्तीहरू रहने गर्दथ्यो । यहाँ हात्ती राखिने ठाउँ अर्थात 'किसिगः' भएको कारणले नै यो ठाउँको नाउँ 'किलागल' बन्न गएको हो । यही ठाउँमा 'किलायूकु गल्ली' भन्ने ठाउँ पनि छ । 'किसि लाये गल्ली' अर्थात् हात्ती समाउने गल्ली भएको कारणले उक्त गल्लीको नाउँ नै 'किलायूकु गल्ली' रहन गएको विश्वास गरिन्छ । यही ठाउँमा अहिले 'दुम्बः चुक' भन्ने ठाउँ पनि छ । 'दुम्बः' भनेको पहाड जस्तो सानो ढिस्को हो । हात्तीको जिउ चिलायो भने यही ढिस्कोमा गएर आङ चिलाउने गर्दथे भन्ने पनि जनश्रुति छन् ।[३४]

किलागल टोलबाट इन्द्रजात्राका बेला निकालिने पुलुकिसिको रंग

३२ डा. साफल्य अमात्य, *नेपालमण्डल काठमाडौं उपत्यकाका सांस्कृतिक नाचहरू*, काठमाडौंः चकं दबू, बि.सं. २०६२, पृ. २९ ।

३३ पूर्ववत् ३१ ।

३४ ऐजन ।

सेतो हुन्छ । किनभने स्वर्गका राजा इन्द्रको वाहन ऐरावत हात्तीको रंग पनि सेतै हुन्छ । तर किलागलमा रातो हात्तीको मूर्ति पनि छ । रातो हात्तीको मूर्ति रहने घर अर्कै छ । किलागलमा कालो हात्ती पनि रहेको जनविश्वास छ तर अहिले उक्त हात्तीको बारे भने कसैलाई जानकारी छैन ।[३५]

पुलुकिसि भाद्रकृष्ण द्वादशीका दिन निकालिने भए पनि यसको लागि तयारी भने दुई महिना जति अघिदेखिनै शुरु भइसकेको हुन्छ । पुलुकिसिको मुकुण्डोलाई आवश्यक मर्मत र रंगरोगन गर्न मासंगल्लीका चित्रकारहरूलाई दिइन्छ । यही बीच यःसिं उठाउनु पन्ध्र दिन अघिदेखि पुलुकिसि बनाउने कार्य पनि शुरु हुन्छ । पुलुकिसि बनाउँदा सबैभन्दा पहिले भित्र दुई जना जति मान्छे बस्न मिल्ने गरी बाँसको कंकाल बनाइन्छ । त्यसमाथि सेतो कपडाले छोपिदिन्छ । एकादशीसम्ममा मुकुण्डो मात्रै लगाउन बाँकी भई सबै काम सकिएको हुन्छ । द्वादशीका दिन किलागल टोलमा इन्द्रको मूर्ति प्रदर्शन गर्ने समयमै पुलुकिसिको मुकुण्डो पनि ल्याइपुऱ्याउँछ । पहिल्यै तयार गरिएको शरीरमा मुकुण्डो जोडिसके पछि पुलुकिसि बाहिर निस्कन तयार हुन्छ । पुलुकिसि बनाउँदा यसको आकार ठीक यति नै लम्बाई-चौडाईको हुनुपर्छ भन्ने छैन । त्यो केही मात्रामा सानो-ठूलो हुन सक्छ । सामान्यतया त्यहाँ भित्र दुई जना मान्छे अट्ने भए पछि त्यसलाई ठीकै मानिन्छ ।[३६]

पुलुकिसि बाहिर आउँदा एकजना पथप्रदर्शकले हातमा चिराग बाली उनलाई डोऱ्याइरहेको हुन्छ । पुलुकिसिको सेतो बुट्टेदार कपडाले छोपिएको भाग भित्र दुई जना मानिस बसेको हुन्छ । पुलुकिसि बाहिर निस्कँदा 'ताङताङ' आवाज आउने एउटा छुट्टै खालको बाजा बजाउँदै आउँछ । त्यो त्रिकोण आकारको बाजालाई 'कँय् पुइचा' भनिन्छ । त्यसको साथै एउटा धिमे र एउटा भुस्याः (झ्याम्टा) पनि बजाइन्छ । पुलुकिसि नाचमा बजाइने धिमे अरु सामान्य धिमे भन्दा फरक खालको हुन्छ । यो धिमेलाई 'किसिप्वः' धिमे भनिन्छ । फरक फरक अवसरहरूमा यो धिमेको बोल पनि फरक फरक हुन्छ । पुलुकिसिलाई पूजा गर्दै गर्दा यो धिमे 'पुजाप्वः' बोलमा बजाइन्छ । पुलुकिसि नाचिरहँदा बजाइने यसको बोललाई 'छ्वःरा' भनिन्छ भने बाटोमा हिँडिरहँदा बजाइने बोललाई 'लँप्वः' भनिन्छ । यसरी यो तीन किसिमको

---

३५ पूर्ववत् ३१ ।

३६ अवलोकन

बोलमा बजाउने गरिन्छ । पुलुकिसिलाई दर्शन गर्दा टोपी फुकाल्नु पर्ने र अन्यथा पुलुकिसिले टोपी तानेर हुट्याइदिने गर्दछ भन्ने पनि भनाई पाइन्छ ।[३७]

पुलुकिसि नाचसँगै बजाइने यो बाजा सम्बन्धी तालिम किलागल टोलका स्थानीय ज्यापू समुदायलाई हरेक १२ वर्षमा एक पटक सिकाइन्छ । हरेक १२ वर्षमा टोलका सबै पुरुष ज्यापूहरूलाई 'वःलाः' पठाउने गरिन्छ । यति बेला आफ्नो परम्परागत कला, संस्कृति, बाजा, धुन्या जस्ता सबै सीप सिकाइन्छ । यही बेला पुलुकिसिको धिमे बजाउने तालिम पनि दिइन्छ ।[३८]

इन्द्रजात्रा शुरु भएपछि आठै दिन पुलुकिसि बाहिर निस्कन्छ । अन्तिम दिन नानीचायाःको बेला भने श्री कुमारीको रथ आफ्नै किलागल टोलबाट तान्ने भएकोले पुलुकिसिले आफ्नो नाच अझै रौनकपूर्वक प्रस्तुत गर्दछ । भाद्र कृष्णपक्ष चतुर्दशीका दिन इन्द्रजात्रा सकिए पछि पुलुकिसिको मुकुण्डो निकाली शरीरलाई अलग्गै राखिन्छ । मुकुण्डो भने गणेशको मूर्ति सरह हुने भएकोले त्यसलाई छुट्टै आसनमा राखेर हरेक दिन पूजा गर्ने चलन छ ।[३९]

पुलुकिसि इन्द्रजात्राको एउटा विशिष्ट अंग हो । यो काठमाडौं बाहेक अन्त कतै नभएको जात्रा हो । भक्तपुरमा पनि इन्द्रजात्रा ताका पुलुकिसि निकाल्ने गरिन्छ । तर त्यहाँको पुलुकिसि भने काठमाडौंको भन्दा फरक छ । भक्तपुरमा एकदिन मात्रै पुलुकिसि निकालिन्छ जो काठमाडौंको भन्दा आकार र स्वरुपमा मात्र होइन बनाउने विधिमा समेत फरक छ ।[४०]

किलागल टोलबाटै इन्द्रजात्राका बेला ऐतिहासिक दीप्याखं पनि निकाल्ने गरिन्छ । दीप्याखं निकाल्ने पनि किलागल टोलका स्थानीय ज्यापूहरू नै हुन् । तर टोल एउटै भए पनि दीप्याखं निकाल्ने गुठी र पुलुकिसि निकाल्ने गुठी भने फरक छन् । यी दुई गुठीका बीच पनि कुनै सम्बन्ध छैन । पुलुकिसि निकाल्ने गुठीले पुलुकिसि बाहेक किलागल टोलबाट सम्पन्न हुने अरु पनि सांस्कृतिक कार्यहरू गरिरहेका छन् । यो गुठीले इन्द्रजात्राकै बेला किलागल डबलीमा इन्द्रको मूर्ति प्रदर्शन गर्ने, फागु पूर्णिमाका दिन टुँडिखेलमा गुरुमापालाई एक मुरी चामलको भात खुवाउने, पाहाँचःऱ्हे (घोडेजात्रा) मा स्थानीय गणेशको

३७ पूर्ववत् ३१ ।
३८ ऐजन ।
३९ ऐजन ।
४० ऐजन ।

खट जात्रा चलाउने काम पनि गर्दछ। फागु पूर्णिमाका दिन किलागल टोलका ज्यापूहरूले टुँडिखेलमा गई गुरुमापालाई भात खुवाई राति फर्कंदा 'घातु' गीत गाएर आउने गर्दछ। त्यसैको भोलिपल्टदेखि उपत्यकामा गाइने ऋतु गीत परिवर्तन भई 'घातु' गाउन शुरु हुन्छ।[४१]

किलागल टोलमा यही पुलुकिसि निकाल्ने समूहबाटै इन्द्रजात्राको पहिलो दिन इन्द्रको मूर्ति पनि प्रदर्शन गर्ने चलन रहँदै आएको छ। उक्त इन्द्रको मूर्ति प्रदर्शन गर्न बनाइने अग्लो आसनमा एउटा गजूर पनि राख्ने गरिन्छ। उक्त गजूरमा गजूर चढाउने व्यक्तिको नाम र संवत् पनि उल्लेख गरिएको छ। किलागःत्वाः खलः (पुलुकिसि गुठी) का सदस्य मचाराजा महर्जनले उक्त गजूरमा लेखिएको विवरण बारे ललितपुरस्थित 'छ्यलाबुला ज्यासः' नामक संस्थाले उक्त गजूरमा लेखिएको विवरणलाई लिप्यान्तर गर्ने कार्य गरेको भनी जानकारी दिनुभयो। उक्त संस्थाले गरेको लिप्यान्तर र त्यसमाथि गरिएको टिप्पणी यस प्रकार छ :

> '१ श्रयोऽस्तु सम्बत ४७२ पद शुक्ल अष्टंम्याम्यां मूलनक्षत्रे आयुक्ष्ममान योगे आदितवासरे श्री यंब्यु महानगरे किसलागल द्विवाशिनश्री संछें ब्रम्हपुर द्विवाशिनो दिजब्र श्री जयशीह त्रातभात्य सहस्य सामग्री (श्री) मलीचन्द भाऱ्या पूर्नश्रि सहितेन श्री इन्द्र भतारिकस ध्वजा सहितेन संप्रब्धा क्षिताभवंतिथ्व देगनो गजुन्हिनो वलर्कष (?) थ्वते पदर्थ महानस द्विवीता जुरो महान पनिसन जजमान आछृच मात्रविजयमाल्व अनेन दानेन जजमानस्य इहत्र सुखी संतान वृद्धि भर्वीत शुभवत् ॥

**टिप्पणी :**

ने.सं. ४७२ भाद्र शुक्लपक्ष अष्टमीका दिन काठमाडौंको यंब्यु किलागल (किसिलागल), ब्रम्हपुरका ब्राम्हण श्री जयशी, भाइमली चन्द र श्रीमती पूर्नश्रिबाट श्री इन्द्रलाई ध्वजा सहित गजूर र वलर्कष (?) चढाएको र जजमानलाई केही दान दिनुपर्ने र उक्त दानबाट सुखी सन्तान वृद्धि हुने

---

४१ पूर्ववत् ३१।

आशा गरिएको छ ।

माथि उल्लेखित विवरणलाई हेर्ने हो भने इन्द्रजात्रा सम्बन्धी अभिलेख-हरूका सन्दर्भमा यो अत्यन्त महत्वपूर्ण सामग्री भएको देखिन्छ । हालसम्म पाइएका अभिलेखहरू मध्ये इन्द्रजात्राको नाम नै किटान गरिएको सबैभन्दा पुरानो अभिलेख भक्तपुर तौमढी टोलको ने. सं. ५६० को अभिलेखहो । तर किलागलको गजूरमा लेखिएको उक्त अभिलेख भक्तपुरको अभिलेख भन्दापनि पुरानो भएतापनि यसमा इन्द्रलाई ध्वजा सहित गजूर चढाएको व्यहोरा मात्र उल्लेख गरिएको छ । त्यसैले उक्त अभिलेख इन्द्रजात्रा कै हो भनी ठम्याउन थप अध्ययन गर्न आवश्यक छ । मितिका हिसावले यो अभिलेखलाई इन्द्रजात्रासँग सम्बन्धित अभिलेख मध्ये भक्तपुरमा प्राप्त भएको अभिलेख भन्दा पुरानो मान्न सकिन्छ । तर यो गजूरको अभिलेखको आधिकारिकताका सम्बन्धमा भने थप अनुसन्धान गर्नुपर्ने देखिन्छ । उक्त इन्द्रको मूर्ति माथि राखिने गजूरमा ने. सं. ४७२ भाद्रशुक्ल अष्टमी लेखिएको पाइएको छ । उक्त दिन राजा जयराजदेवले गजुर चढाएको भन्ने व्यहोरा पनि त्यसमा लेखिएको कुरा गुठियार मचाराजा महर्जन बताउनुहुन्छ । तर त्यसको विज्ञबाट अनुसन्धान भने भएको छैन । किलागलमा प्रदर्शन गरिने उक्त इन्द्रको मूर्तिलाई पशुपतिका महन्थहरू आई जल चढाउने चलन छ भनी पशुपति पुराणमा लेखिएको भए पनि आफूले त्यसरी जल चढाउन आएको भने अहिलेसम्म नदेखे पनि उहाँले बताउनुभयो । पहिले पहिले पुलुकिसिले हनुमानढोकामा दरवारमा दिनदिनै हाजिर जनाउनुपर्ने चलन पनि थियो । अहिले त्यो चलन पनि हटेको छ ।[४२]

पुलुकिसि नाचको ऐतिहासिकता कति पुरानो छ भन्न नसकिए पनि पुलुकिसि सिधै इन्द्रसँग सम्बन्धित भएकोले यो बीचमा थपिएको नाच नभई इन्द्रजात्रा सँगसँगै यो नाच पनि शुरु भएको अनुमान गर्न सकिन्छ। अरु नाचहरूलाई जस्तै पुलुकिसि जात्रा सञ्चालनको पनि प्रमुख समस्या पहिले आर्थिक नै थियो । अहिले भने काठमाडौं महानगरपालिकाले खर्च व्यवस्थापन गरेकोले केही हलुको भएको उहाँ बताउनुहुन्छ ।

४२ पूर्ववत् ३१ ।

## सवः द्यः

इन्द्रजात्रामा नचाइने नाचहरू मध्ये अत्यन्त चर्चामा आउने अर्को नाच हल्चोक आकाश भैरवको नाच पनि हो । काठमाडौंस्थित स्वयम्भू पछाडिको डाँडालाई स्थानीय भाषामा होल्चो भनिन्छ । त्यहाँ अवस्थित भैरवलाई पनि आकाश भैरव नै भनिन्छ भने यसलाई स्थानीय भाषामा 'सवःद्यः' वा 'सवःभक्कु' भनिन्छ ।

सवःभक्कु नाच हल्चोकका स्थानीय पुतुवार जातिले निकाल्ने गर्दछ । काठमाडौंमा हल्चोक लगायत गोलढुंगा, इचंगु र कीर्तिपुरमा मात्र पुतुवार जातिको बसोवास रहेको पाइन्छ । यी मध्ये हल्चोकका पुतुवार जातिको नाच मात्रै इन्द्रजात्रामा प्रदर्शन गरिन्छ । यो नाचको प्रवन्ध गर्नका लागि श्री हल्चोक आकाश भैरव गुथि नामको छुट्टै गुठी पनि रहेको छ । उक्त गुठीका अध्यक्ष सागर पुतुवारका अनुसार हल्चोक आकाश भैरवको पूरा देवगणमा जम्मा बाह्र जना देवीदेवताहरू रहेका हुन्छन् । ती मध्ये तीन जना देवीदेवता मात्रै इन्द्रजात्रामा निकालिने गरिन्छ ।

आकाश भैरव नाचको पूरा देवगणमा आकाश भैरव, कुमारी, चण्डी, गंगा, महादेव, पार्वती, आकाशदेवी, बाराही, महाकाली, दक्षिणकाली, सिंघ्रणी र व्याघ्रिणी रहेका हुन्छन् । अहिले सिंघ्रणी र व्याघ्रिणी हटिसकेकोले यो द्यःगणमा जम्मा दश जना मात्र पात्रहरू बाँकी रहेका छन् । यी मध्ये आकाश भैरव, कुमारी र चण्डी मात्रै इन्द्रजात्रामा नचाउन ल्याउने गरिन्छ । यसमा आकाश भैरव निलो वर्णको हुन्छ भने कुमारी र चण्डीको मुकुण्डो रातो वर्णको समान खाले हुन्छ । यी दुई देवताहरू हेर्दा उस्तै देखिए पनि चण्डीको मुकुण्डोमा जुंगा हुन्छ, कुमारीको जुंगा हुँदैन ।[४३]

इन्द्रजात्रा शुरु हुनु एक दिन अघि एकादशीका दिन हल्चोकस्थित आकाश भैरवको द्यःछेँमा प्रमुख पूजा हुन्छ । भाद्रशुक्ल द्वादशीदेखि नाच आरम्भ हुन्छ । इन्द्रजात्रा शुरु हुनु करिब एक हप्ता अगाडि नाचको लागि अभ्यास शुरु हुन्छ । नाचमा सहभागी हुनुपर्ने आकाश भैरव, कुमारी र चण्डीको मुकुण्डोमा रंगरोगन गर्ने कार्य काठमाडौंको मासंगल्लीस्थित चित्रकारहरूले गर्दछ । मुकुण्डो हरेक वर्ष रंगरोगन गरिए पनि प्रत्येक तीन वर्षमा मर्मत सम्भार

४३ अवलोकन ।

पनि गर्नुपर्ने हुन्छ ।[४४]

सवःद्यःको खास स्थान हल्चोक भए पनि इन्द्रजात्रा ताका भने यो हल्चोक क्षेत्रमा नचाउनु पर्दैन । सवःद्यःको नाच काठमाडौंको हनुमानढोका क्षेत्र वरिपरि नै नचाउने गरिन्छ । यो नाचका देवगण शहर प्रवेश भए पछि स्थानीय मानिसहरूले उनीहरूलाई पूजा पनि दिने गर्दछन् ।[४५]

यो नाच नचाउँदा बजाइने बाजाको धुन पनि अत्यन्त मौलिक रहेको छ । यो नाच नचाउँदा वा देवगणहरू पैदल आइरहँदा 'घिन्नाले सिङ्तान' बोलको धुन बजाउने गरिन्छ । यो बोलकै कारणले नगरमा यस नाचलाई 'घिन्नाले सिङ्तान नाच' भनेर पनि चिन्ने गरिन्छ ।[४६]

यो नाच कहिलदेखि शुरु भयो भन्ने विषयमा कतै स्पष्ट लेखिएको पाइँदैन । संस्कृतिविद् डा. चुन्दा वज्राचार्यले नाचको उत्पत्ति बारे संक्षिप्तमा लेख्नु भएको छ, 'कलिगताव्द ३८२२ मा राजा गुणकामदेवलाई श्री महालक्ष्मीले सपनामा आज्ञा दिए बमोजिम इन्द्रचोकमा कान्तिश्वर महादेवको स्थापना गरी पहिले इन्द्रचोकसम्म मात्र कायम रहेको राज्यको सीमा बढाएर कान्तिपुर नामाकरण गरी नगरको रक्षार्थ ठाउँ ठाउँमा देवदेवीहरू स्थापना गरे । हलचोकमा बाह्र जना गण भएको भैरवको स्थापना गरिदिए । त्यसपछि राजा अमर मल्लले त्यही हलचोकको भैरव गरी तीन जनाको नाच नचाउन शुरु गरे । त्यस मध्ये इन्द्रजात्रामा आठ दिनसम्म सवःभकु दुईजना गणमा आकासे रङ्गको भैरवको नाच नचाउन थाले ।[४७]

पहिले पहिले यो नाचलाई हनुमानढोका दरवारको नासल चोकमा एउटा जीवित राँगो दिने गरिन्थ्यो भने भैरवले त्यसलाई मार हानेर ढाल्ने गरिन्थ्यो । राँगोलाई मार हान्दा कहिलेकाहीं भैरव र राँगो बीच 'युद्ध' पनि चल्ने गर्दथ्यो । त्यसमा भैरवले राँगोलाई लखेट्दै तरवारले जिउभरि काटेर मार्ने गरिन्थ्यो । 'सवःभकुलाई राँगो दिने' त्यो रोमाञ्चकारी दृश्य हेर्न नासलचोकमा राजपरिवारका सदस्य तथा विदेशी पाहुनाहरू आउने गर्दथ्यो । तर त्यो एकदम खतरनाक काम थियो । कहिलेकाहीं घाइते राँगो पीडाले छटपट भएर दर्शक

४४ हल्चोक आकाश भैरव गुठी (सवःभक्कु) का अध्यक्ष सागर पुतुवारसँग अन्तर्वार्ता ।

४५ अवलोकन ।

४६ पूर्ववत् ४४ ।

४७ डा. चुन्दा वज्राचार्य, *नेवाः सांस्कृतिक चाडपर्व*, ललितपुरः आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, बि.सं. २०७२, पृ. ७९ ।

बस्ने ठाउँतिर पनि दौडेर आउँथ्यो जसले गर्दा हेर्न आउने मानिसहरू समेत घाइते हुने गर्दथे । वि.सं. २०४६ मा भएको राँगो दिने कार्यमा दर्शक बीच भागदौडै मच्चिएको थियो जसमा धेरैजना मानिसहरू घाइते पनि भएका थिए । त्यसपछि सवःभक्कुलाई राँगो दिने कार्य बन्द गरियो ।[४८]

गुठीका अध्यक्ष सागर पुतुवारका अनुसार त्यो वास्तवमा दरवारको मनोरञ्जनको लागि कुनैबेला थपिएको प्रदर्शनी मात्र थियो । त्यसमा राँगोलाई अत्यन्त विभत्स ढंगले मार्ने भएकोले पछि त्यसलाई बन्दै गरिदियो । तर यो चलन अहिले बन्द भइसके पनि सवःभक्कुको नाच भनेपछि पुराना मान्छेहरू यही राँगो दिने प्रशंगलाई सम्झन पुग्दछन् ।

इन्द्रजात्रा बाहेक यो नाच दशैंमा चार दिन र पाहाँचःऱ्हे (घोडेजात्रा) मा पनि चार दिन नचाउनु पर्ने चलन रहेको छ । यो बाहेक प्रत्येक बाह्र वर्षमा यो नाचको विशेष प्रदर्शन हुन्छ । यसलाई 'हल्चोक आकाश भैरवको बाऱ्ह वर्षे नाच' पनि भनिन्छ । सवःभक्कु नाचमा आकाश भैरव सहित जम्मा दश जना देवगण रहेको हुन्छ । ती मध्ये बाऱ्ह वर्षे नाचमा नाच गणका दश जनै देवीदेवताहरू प्रदर्शनका लागि बाहिर निकालिन्छ भने इन्द्रजात्रामा यी मध्येबाट भैरव, कुमारी र चण्डी गरी तीन जना मात्र देवगणहरू प्रदर्शनका लागि बाहिर निकाल्ने गरिन्छ । बाऱ्ह वर्षे नाच एक महिनासम्म विभिन्न ठाउँमा लगी प्रदर्शन गर्ने चलन रहेको पाइन्छ ।[४९]

बाऱ्ह वर्षे नाच शुरु गर्नका लागि सबैभन्दा पहिले नागार्जुनको जंगलमा देवता लिन जानु पर्दछ । नागार्जुनको छहारी भन्ने ठाउँबाट यो देवता ल्याउने गरिन्छ । यसको लागि उक्त ठाउँमा बलि सहितको विशेष पूजा गर्नु पर्दछ । पूजा गरिसके पछि त्यहींबाट आकाश भैरवलाई लिएर आउने चलन छ । यस पछि हल्चोकको द्यःछेँमा बाऱ्ह वर्षे नाचको तयारी शुरु हुन्छ । तयारी पूरा भए पछि सम्पूर्ण देवगण नै काठमाडौंको ताम्सीपाखास्थित एउटा चोकमा आएर बस्ने गर्दछ । हरेक बाह्र वर्षको नाच हुँदा सवःभक्कुको देवगण यही चोकमा बस्ने चलन रहँदै आएको छ । देवगणका सम्पूर्ण पोशाक, गरगहना, बाजागाजा लगायतका सामग्री पनि यहीं राखिन्छ । यहींबाट देवगणहरू काठमाडौंका विभिन्न स्थानमा गई नाच प्रदर्शन गरिन्छ । बाऱ्ह वर्षे

४८ पूर्ववत् ४४ ।
४९ ऐजन ।

नाच प्रदर्शनका क्रममा काठमाडौंको हनुमानढोका दरबार, इन्द्रचोक, मरु टोल लगायतका स्थानमा नचाउने चलन छ । साथै नाच प्रदर्शनका लागि जहाँ जहाँबाट निमन्त्रण आउँछ त्यहाँ त्यहाँ पनि प्रदर्शन गर्ने चलन रहेको छ। बान्ह वर्षे नाचमा आकाश भैरवका साथसाथै आकाशदेवी पनि नाच्ने गरिन्छ। आकाशदेवीको पोशाक र मुकुण्डो हरियो रंगको हुन्छ ।[५०]

पछिल्लो बान्ह वर्षे नाच वि.सं. २०७० सालमा निकालिएको थियो । अब अर्को बान्ह वर्षे नाच वि.सं. २०८२ सालमा वैशाख १ गते निकालिने छ । वैशाख महिनाभरि नचाए पछि यो नाचको बाह्र वर्षे विशेष उत्सव समाप्त हुन्छ ।

जात्रा पर्वहरू समापन भइसके पछि सम्पूर्ण देवगणको मुकुण्डो, पोशाक आदि सामग्रीहरू हल्चोकस्थित आकाश भैरवको द्यःछेँमा सुरक्षितपूर्वक राख्ने गरिन्छ । इन्द्रजात्रामा जात्रा चलाउनु पर्ने तीन जना देवीदेवताहरू आकाश भैरव, कुमारी र चण्डीको मुकुण्डो र पोशाकहरू भने गाइजात्राका दिन द्यःछेँबाट बाहिर निकाली घाममा सेकाउने गरिन्छ ।

श्री आकाश भैरव गुठीका अध्यक्ष सागर पुतुवारका अनुसार गुठीको द्यःछेँ आजभन्दा सय वर्ष जति अघि ठूलो आगलागीमा परेको थियो । त्यसमा परी देवगणहरूका सबै मुकुण्डो, पोशाक र बाजागाजा लगायत केही पुराना थ्यासफूहरू समेत नष्ट भएको थियो । त्यस पछि सबै पोशाक र मुकुण्डोहरू नयाँ बनाउनु परेको थियो । हालै केही वर्ष अघि मात्रै हल्चोकमै गुठीको नयाँ द्यःछेँ बनाउने कार्य सम्पन्न भयो । यसले गर्दा देवगणका सामग्रीहरू सुरक्षित राख्न, नाचको अभ्यास गर्न र अन्य धार्मिक सांस्कृतिक कार्यहरू गर्न सहज भएको पुतुवारले बताउनुभयो ।

जात्रा नभएका बेला पनि द्यःछेँमा रहेका देवगणका मुकुण्डोहरू भने भक्तजनहरूले पूजा गर्न सक्दछन् । स्थानीय मानिसहरू हल्चोक आकाश भैरवलाई दैनिक नै पूजा गर्न जान्छन् । त्यहाँ गुठीबाट नित्य पूजा पनि गरिन्छ। हल्चोक आकाश भैरवको पूजा गरे टाउको लगायतका स्वास्थ्य समस्याहरू निको हुन्छ भन्ने विश्वास गरिन्छ । त्यसैले यहाँ ठिमी, भक्तपुर, दांगबाट समेत मानिसहरू पूजा गर्न आउने उहाँले बताउनुभयो । यो देवताको नाम पनि आकाश भैरव नै भए पनि काठमाडौंको इन्द्रचोकस्थित आकाश भैरवसँग भने

५० पूर्ववत् ४४ ।

यसको कुनै सम्बन्ध नभएको पनि उहाँले बताउनुभयो ।

द्यःछेँ रहेको ठाउँबाट तलतिर आकाश भैरवको मन्दिर पनि रहेको छ । बाटो छेउमै रहेको उक्त मन्दिरमा पनि भक्तजनहरू आउने गर्दछन् ।

अध्यक्ष पुतुवारका अनुसार विभिन्न समयमा नाच निकाल्ने बेला धेरै मान्छे जुट्नु पर्ने र भोजको पनि आयोजना गरिरहनु पर्ने हुन्छ । तर आफ्नो छुट्टै कुनै आयश्रोत नभएका कारण यस्ता कार्यहरू गर्न आर्थिक समस्या पर्ने गरेको छ । नाचमा देवगण भई नाच्ने, बाजा बजाउने र अन्य सहयोगीको काम गर्ने कसैलाई पनि कुनै किसिमको पारश्रमिक व्यवस्था गर्न सकिएको छैन । जसले गर्दा अहिले जात्राका बेला काम गर्ने मान्छे पाउनै समस्या हुन थालेको पनि पुतुवार बताउनुहुन्छ । आफ्नो आयआर्जनका नियमित कामहरू छोडेर अहिले जात्राका लागि भनेर मानिसहरू आउन गाह्रो मान्ने गरेका छन् । धेरै स्थानीय युवाहरू रोजगारीका लागि विदेश गइरहेको पनि अध्यक्ष पुतुवारले औंल्याउनुभयो । यी विविध कारणहरूले गर्दा पनि अहिले जात्रा चलाउन कठिन हुँदै गइरहेको उहाँले बताउनुभयो ।

## महाकाली प्याखं

काठमाडौंमा मनाइने इन्द्रजात्रामा भक्तपुरदेखि पनि नाचहरू ल्याएर प्रदर्शन गर्ने परम्परा रहेको छ । भक्तपुरबाट आउने उक्त नाच महाकाली प्याखं अर्थात महाकाली नाच हो । इन्द्रजात्रा आरम्भ भएको दिन भाद्रशुक्ल द्वादशीदेखि नै काठमाडौंका विभिन्न स्थानमा महाकाली नाच प्रदर्शन गरिन्छ । यो नाचलाई महाकाली नाच भनिए पनि यसमा महाकाली लगायत महालक्ष्मी, कौमारी जस्ता देवीहरूका साथै अरु पनि पात्रहरू रहेका हुन्छन् । लोकमा महिषासुर दैत्य लगायत असुर दैत्यहरूले धेरै दुःख दिने गरेको हुँदा तिनीहरूलाई निर्मूल पार्न तीन जना देवीहरू महाकाली, महालक्ष्मी र कुमारी प्रकट भई महिषासुर दैत्यको वध गरी अन्य दैत्यहरूलाई समेत सखाप पारेको र त्यसै खुशियालीमा यो नाच नचाएको भन्ने जनविश्वास पाइन्छ ।

महाकाली नाच हेर्दा एउटै भए पनि प्रत्येक वर्ष इन्द्रजात्रामा भक्तपुरबाट काठमाडौंमा यो नाच ल्याई देखाउने समूह भने सात वटा रहेका छन् । भक्तपुरका विभिन्न सात वटा जातीय समूहहरूले काठमाडौंमा यो नाच प्रदर्शन गर्दै आइरहेका छन् । ती जातीय समूहहरू भक्तपुरका विभिन्न स्थानमा

बसोवास गर्छन् ।

काठमाडौंमा आई महाकाली नाच प्रदर्शन गर्ने समूह यस प्रकार रहेको छ - भाते ढिकुरका फैजु समूह, टौमढीका ब्यांजु समूह, भोटवहालका दैवेज्ञ समूह, खौमा लायूकूका मुस्याख्वः समूह, दोक्छेका खर्बुजा समूह, गलसीं पुखु समूह र गलसीं पुखुका माकः प्याखं समूह । यी महाकाली नाच समूहमा रहने पात्रहरू यस प्रकार छन् : महाकाली, कुमारी, महालक्ष्मी, बेताल, भूत, कवं (२ जना), शिचा-जंगली (२ जना), ख्याः (२ जना), सिंह र म्हयूखा (मयूर) । यसमा वाद्यवादन समूहलाई समेत जोड्दा २४ जनाको टोली रहेका हुन्छन् ।[५१]

काठमाडौंको इन्द्रजात्रामा यी सातवटै समूहबाट महाकाली नाच प्रदर्शन गरिन्छ । नाच टोलीहरू काठमाडौं आउँदा यी सबै समूहको नेतृत्व गलसीं पुखु समूहका नाइके तुल्सीनारायण दण्डेख्याले गर्नुहुन्छ । काठमाडौंमा नाच प्रदर्शन गर्ने लगायत नाचका लागि आवश्यक आर्थिक व्यवस्थापनका लागि विभिन्न निकायहरूसँग समन्वय गर्ने कार्य समेत दण्डेख्याले नै गरिरहनुभएको छ । उहाँका अनुसार यी सात वटै टोलीका सम्पूर्ण सदस्यहरू जम्मा गर्दा १२४ जनाको समूह बन्छ । इन्द्रजात्रामा यी सात वटै टोलीले हनुमानढोका दरवारमा गई हाजिरी जनाउनु पर्दछ । त्यसपछि नगरका विभिन्न ठाउँमा यी टोलीहरूले पालैपालो नाच प्रदर्शन गर्दछन् ।

महाकाली नाचलाई बोलीचालीमा देवी नाच पनि भन्ने गरिन्छ । यसलाई अष्टमातृका गणकै विभिन्न नाचहरू मध्ये एक नाच मानिन्छ । यो नाचले बनेपाको चण्डेश्वरी, भक्तपुरको भैरव र कान्तिपुरको भद्रकाली नाचको प्रतिनिधित्व गरेको भन्ने पनि मान्यता रहेको छ ।

नाइके दण्डेख्याका अनुसार पहिले पहिले इन्द्रजात्रामा यो नाच देखाउन ल्याएन भने सरकारले ५० रुपैयाँ दण्ड गर्ने र नाच देखाउन ल्याएमा ५० रुपैयाँ पुरस्कार दिने चलन थियो । इन्द्रजात्रा बाहेक पनि कहिलेकाहीं दरवार भित्र छुट्टै नाच देखाउने चलन पनि थियो । त्यसरी नाच देखाउँदा राजाहरूबाट बक्सिस पाइने गरिन्थ्यो । राणाशासनको अन्त्य सँगै दरवारमा नाच देखाउने परम्परा पनि क्रमिक रुपमा हटेर गयो ।

इन्द्रजात्रामा नाच प्रदर्शनीका लागि काठमाडौं ल्याउँदा यहाँको

५१ महाकाली प्याखं भक्तपुरका अध्यक्ष तुल्सीनारायण दण्डेख्यासँग अन्तर्वार्ता ।

भद्रकालीस्थित सत्तलमा टोलीका सबै सदस्यहरूलाई बस्ने व्यवस्था गरिन्थ्यो। आठ दिनसम्म टोलीको बास त्यही सत्तलमा हुने गर्दथ्यो । अहिले भने नाचका सामानहरू मात्र त्यहाँ राखी समूहका व्यक्तिहरू दिनदिनै भक्तपुर फर्कने र अर्को दिन काठमाडौं आउने गरिरहेका छन् ।

यी नाच टोलीहरू मध्ये कुनै टोलीमा दैत्य पात्र रहेको पाइन्छ भने कुनैमा दैत्य नभएको पनि पाइन्छ। त्यस्तै कुनै टोलीमा मयूर पनि राखिएको पाइन्छ। त्यसैले सबै टोलीमा पात्रहरूको सदस्य संख्या समान छैन। भक्तपुरमा यी सबै नाच टोलीहरूको आफ्नै गुठी पनि रहेका छन् तर ती सबै गुठीहरू पारिवारिक प्रकृतिका छन् अर्थात् गुठीमा एउटै परिवारका सदस्यहरू मात्रै गुठियारका रुपमा रहेका छन् । नाच टोलीहरूको अस्तित्व भने छुट्टाछुट्टै रहेको पाइन्छ।

संयोजक दण्डेख्याका अनुसार सबै नाचको नाम महाकाली नै हो । उनीहरू बीच पोशाक र नाचका भंगिमाहरूमा थोरै भिन्नता रहेको बाहेक धेरै कुरामा समानता पाइन्छ। कुनै बेला एउटै समूह रहेको यो नाच पछि विभिन्न कारणले छुट्टिँदै गई धेरै समूह बन्न गएको हुनसक्ने दण्डेख्याको अनुमान छ।[५२]

यी नाच टोलीहरूले गाइजात्रामा भक्तपुरमै नाच प्रदर्शन गर्छन्। अहिले भक्तपुर नगरपालिकाले गाइजात्रामा निकालिने नाचहरूका बीच प्रतियोगिता समेत चलाउने भएकोले सबै महाकाली नाच समूहहरू त्यसमा सहभागी हुँदै आइरहेका छन्। यस बाहेक अरु विभिन्न सभा समारोहहरूमा नाच प्रदर्शनको लागि निमन्त्रणा प्राप्त भयो भने त्यसमा पनि यी नाच समूहहरू जाने गरेका छन् ।

भक्तपुरमा खास गरी नवदुर्गा देवगणको जलसमाधी हुँदा नगरमा कुनै दुर्भिक्षले आक्रमण गर्न नसकोस् भनी नवदुर्गा गण समाधीबाट बाहिर नआउन्जेलको छ महिनासम्म यो नाच निकाल्ने परम्परा रहँदै आएको छ। तर नवदुर्गा नाचको पूजा र विधि व्यवहार धेरै विस्तृत खालको हुन्छ भने महाकाली नाचको पूजाविधि त्यस्तो विस्तृत रहेको पाइँदैन । नवदुर्गा देवगण बाहिर निस्कँदा टोल टोलमा देवीहरूलाई पूजा दिने गरिन्छ । तर महाकाली नाचका देवगणलाई भने त्यस्तो पूजा दिने गरिँदैन। नवदुर्गा नाचका देवगणहरूलाई देवताकै रुपमा मान्यता दिने गरिन्छ भने महाकाली नाचका

५२ पूर्ववत् ५१।

देवगणहरूलाई नाच समूहका पात्रका रुपमा मात्रै मान्ने गरिन्छ। काठमाडौंमा भने महाकाली नाचका देवगणलाई पनि पूजा दिने गरिन्छ। भक्तपुरमा नवदुर्गा देवगणका मुकुण्डोहरू जात्रा समापन हुने बित्तिकै जलाउने परम्परा रहँदै आएको छ। त्यहाँ अर्को वर्ष देवगण निकाल्नका लागि नयाँ नै मुकुण्डो बनाउने गरिन्छ। तर महाकाली नाचका देवगणका मुकुण्डोहरू भने सुरक्षित नै गरिन्छ। रंग खुलिएमा पुनः रंगरोगन गर्ने मात्रै चलन रहँदै आएको छ। त्यस्तै पोशाक पनि प्रयोग गर्न मिलुन्जेलसम्म प्रयोग गरिरहेकै हुन्छ।[५३]

महाकाली नाच प्रदर्शनका लागि विभिन्न जातिका समूहहरू अस्तित्वमा रहेको भएता पनि उनीहरूको नाचमा सहभागी भई देवीका रुपमा नाच्न भने सोही जातिकै मात्र पात्र चाहिन्छ भन्ने कुनै नियम रहेको पाइँदैन। संयोजक दण्डेख्याका अनुसार टोलका कुनै पनि जातिका इच्छुक मानिसहरू नाचमा सहभागी हुन सक्छन्। अहिले कुनै कुनै महाकाली नाच समूहमा महिलालाई पनि पात्रका रुपमा नचाउन थालेका छन्। पहिले पहिले यस्तो नाचमा पात्रका रुपमा महिलाहरूको सहभागिता वर्जित थियो। दण्डेख्याका अनुसार अब अरु समूहहरूले पनि युवा महिलाहरूलाई नाचमा पात्रका रुपमा समावेश गर्दै लाने सम्भावना बढेको छ।

महाकाली नाचको लागि पुरातत्व विभाग र गुठी संस्थानले वर्षेनी पोशाक लगायत अन्य कार्यका लागि केही मात्रामा खर्चको व्यवस्था गर्दै आइरहेको छ। दण्डेख्याका अनुसार महाकाली नाचका गुठीहरू व्यक्तिगत भएकोले यसको लागि सरकारले कुनै पनि प्रकारको सुविधा दिने कार्य भने गरेको छैन। इन्द्रजात्रामा नाच प्रदर्शनको लागि काठमाडौं महानगरपालिकाले प्रदान गर्ने आर्थिक सहयोगले भने केही राहत मिलेको उहाँ बताउनुहुन्छ।

यो नाच कहिलेदेखि शुरु भयो भन्ने स्पष्ट इतिहास भेटिएको छैन। राजा जयस्थिति मल्लले यो नाचको संरक्षणका लागि गुठी व्यवस्था समेत गरेको पाइन्छ भने उपत्यकामा राजा यक्ष मल्लको समयमा राजकीय महत्वका साथ यो नाच प्रचलनमा ल्याइएको हो भनी दण्डेख्याले बताउनुभयो।[५४]

यही प्रकृतिको महाकाली नाच नगदेशमा पनि नचाउने गरिएको पाइन्छ। नगदेशको महाकाली नाच बारे लेखक सौभाग्य प्रधानांगले लेख्नुभएको छ,

५३ पूर्ववत् ५१।

५४ महाकाली प्याखं भक्तपुरका अध्यक्ष तुल्सीनारायण दण्डेख्यासँग अन्तर्वार्ता। तर त्यसको प्रमाणिक अभिलेख भने पाइएको छैन्।

"भाषा वंशावलीमा राजा राय मल्लले भक्तपुरमा नवदुर्गा नाच र बोडेमा महालक्ष्मी देवीको नृत्य प्रशिक्षण तथा प्रदर्शन गरेको उल्लेख छ । सम्भवतः यससँगै अष्टमातृका नृत्य नचाउने परम्परा शुरु भएको अनुमान गर्ने ठाउँ नभएको होइन । ......नगदेशको महाकाली नाचका गुरु भक्तबहादुर घजुका अनुसार यो नाच पनि वि.सं. १९९६ सालसम्म दरवारमा प्रदर्शन गर्दै आइरहेको थियो । तर पछि बदलिँदो समयसँगै विविध कारणहरूले रोकिन गएको थियो ।"[५५]

महाकाली नाच भक्तपुरको भए पनि यसलाई काठमाडौंको इन्द्रजात्रामा किन नचाउन ल्याए भन्ने प्रश्न भने उठ्न सक्छ । यस बारे संस्कृतिविद् यज्ञमानपति वज्राचार्यले बताउनुभए अनुसार पहिले पहिले नेपालको राजधानी भक्तपुरमा हुँदा त्यहाँ यो नाच देखाउने गरिन्थ्यो होला, राजधानी काठमाडौंमा सारिए पछि यो प्रशिद्ध महाकाली नाचलाई नयाँ राजधानी काठमाडौंमा पनि नचाउने परम्परा चलाएको हुनुपर्छ । महाकाली नाच नचाएमा देशप्रद, पिशाच, राजभय, चोरभय, जलभय, अग्निभय, वायुभय, चट्याङभय, भूकम्प आदि भयबाट मुक्ति पाउने विश्वास गरिन्छ ।[५६]

नाइके दण्डेख्याका अनुसार उपत्यकाका यति धेरै लोकप्रिय नाच भए पनि यसको संरक्षणमा भने विभिन्न समस्याहरू आइरहेका छन् । नाच सिकाउने दक्ष गुरुको अभाव, नाचमा सहभागी हुन आउने नयाँ पुस्ताको अभाव, नाचका मुकुण्डो, गरगहना र पोशाकहरू संरक्षण गर्ने उचित स्थानको अभाव आदि जस्ता समस्याहरूले गर्दा नाचलाई निरन्तरता दिन समस्या आइरहेको पनि उहाँले बताउनुभएको छ ।

## दश अवतार

इन्द्रजात्रामा प्रदर्शन गरिने विभिन्न नाचगानहरू मध्ये दश अवतारको प्रदर्शन पनि एक महत्वपूर्ण अंग हो । बसन्तपुरस्थित कुमारीघर सामुन्ने अवस्थित त्रैलोक्यमोहन नारायण मन्दिरको पछाडि पाँच खुड्किलाको पेटीमा यो दश अवतार प्रदर्शन गरिन्छ । इन्द्रजात्राको पहिलो दिन भाद्रशुक्ल द्वादशीदेखि

५५ सौभाग्य प्रधानांग, *नगदेशको महाकाली नाच, नेपालमण्डलका मुकुन्डो नाच*, भक्तपुरः मध्यपुर कला परिषद् थिमि, बि.सं. २०६२, पृ. ४९-५० ।

५६ काठमाडौंवडा नं. २३ सिख्वंमू बहाःकाबौद्ध विद्वान यज्ञमानपति बज्राचार्यसँग अन्तर्वार्ता ।

नै हरेक साँझ यो दश अवतार प्रदर्शन शुरु हुन्छ । यसमा भगवान विष्णुका विभिन्न दश अवतार र ती अवतारसँग सम्बन्धित विभिन्न घटना र देवदेवीका कार्यहरूलाई झाँकीका रुपमा प्रदर्शन गरिन्छ । यसमा प्रत्येक दिन बाह्रदेखि पन्ध्र वटासम्म दृश्य देखाइन्छ जसको लागि करिब दुई घन्टाभन्दा बढी समय लाग्ने गर्दछ । दश अवतार देखाउँदा चिराग बाल्ने गरिन्छ । बीच बीचमा काठको धूलो छर्केर चिरागबाट ज्वाला प्रज्वलित गर्दा दर्शकहरू अति रोमाञ्चित हुने गर्दछन् ।

इन्द्रजात्रामा हरेक साँझ दश अवतार हेर्न दर्शकहरूको ठूलो भीड लाग्ने गर्दछ । मन्दिरको पेटीमा विभिन्न हाउभाउ गरिरहेका देवीदेवताहरूको आकर्षक झाँकीले दर्शकहरूलाई पूर्ण मनोरञ्जन प्रदान गरेको हुन्छ । पहिले पहिले सिनेमा, टिभी जस्ता मनोरञ्जनको साधन नभएको बेला दश अवतार प्रदर्शन पनि एक मनोरञ्जनको माध्यम बन्ने गर्दथ्यो । यसले मानिसलाई नैतिक शिक्षा प्रदान गर्दथ्यो ।

यो दश अवतार सञ्चालन गर्न एउटा गुठीको पनि व्यवस्था गरिएको छ । यसलाई दिगु गुठी भनिन्छ । हाल यो गुठी नाइके दीपकप्रसाद श्रेष्ठले सञ्चालन गर्दै आइरहनुभएको छ । दश अवतार देखाउन कुनै छुट्टै डबली वा मञ्चको व्यवस्था गरिएको छैन । त्रैलोक्यमोहन मन्दिरको सिँढी नै दश अवतार देखाइने 'मञ्च' हो । गुठीका नाइके श्रेष्ठका अनुसार त्रैलोक्यमोहनको मन्दिर र दश अवतार बीच धार्मिक सम्बन्ध भएको कारणले पनि यो दश अवतार त्यहीं देखाइएको हुनुपर्छ । यो मन्दिर भित्र लक्ष्मी-नारायणको मूर्ति स्थापित गरिएको छ । दश अवतार भगवान बिष्णुका विभिन्न अवतारसँग सम्बन्धित छ । त्यसैले यो मन्दिरमा दश अवतार प्रदर्शन गरिएको अनुमान गर्न सकिन्छ ।

दश अवतार कहिलेदेखि र कसले शुरु गऱ्यो भन्ने विषयमा कुनै प्रामाणिक इतिहास नभएको श्रेष्ठ बताउनुहुन्छ । लेखक डा. साफल्य अमात्यले गुठीका पूर्व नाइके स्व. गंगाप्रसाद श्रेष्ठलाई उद्धृत गरी लेख्नुभए अनुसार दश अवतार प्रदर्शनको चलन राजा प्रताप मल्लको पालामा शुरु भएको हो । उहाँले लेख्नुभएको छ, "प्रताप मल्लको समयमा भारतबाट आएका प्रसिद्ध तान्त्रिक लम्बकर्ण भट्टले हनुमानढोका दरवार अगाडि हनुमान स्थापना गरेपछि हनुमान सारै खुशी भए । यसरी खुशी भएका हनुमानसँग

निज भट्टले राजाको इच्छा बमोजिम देशमा सुखशान्ति कायम राख्न के गर्नुपर्ला भनी सोध्दा हनुमानले कुमारीलाई खुशी राख्न सकियो भने देशमा सधैँ सुखशान्ति कायम हुन्छ भने । त्यसै समयदेखि कुमारीलाई खुशी पार्न कुमारीघर अगाडिको त्रैलोक्यमोहन नारायण मन्दिरको डिलमा इन्द्रजात्राको अवधिभरि कुमारीको रथ तान्ने दिनहरूमा दिउँसो रथ तान्न शुरु भैसकेपछि र अन्य दिनहरूमा राति भाद्रशुक्ल द्वादशीका दिनदेखि आठ दिनसम्म दश अवतारका झाँकीहरू देखाउने चलन छ ।"[५७]

प्रताप मल्लको पालामा कुमारी तान्नु अघि कुमारीलाई देखाउन दश अवतार शुरु गरिएको भनिएता पनि प्रताप मल्लको पालामा कुमारी रथयात्राको चलन शुरु भइसकेको थिएन भने कुमारी घर पनि बनिसकेको थिएन । कुमारी रथयात्राको चलन प्रताप मल्लभन्दा १२५ वर्ष पछिका राजा जयप्रकाश मल्लले शुरु गरेका थिए भने कुमारीछेँ पनि जयप्रकाश मल्लले नै वि.सं. १८१४ तिर बनाएका थिए । त्यसैले डा. साफल्य अमात्यले लेख्नुभए जस्तो प्रताप मल्लले दश अवतार शुरु गरेको भन्ने कथन विश्वसनीय देखिँदैन ।

गुठी नाइके श्रेष्ठका अनुसार पहिले पहिले दश अवतार त्रैलोक्यमोहन मन्दिरमा प्रदर्शन गरिने होइन । यो त्यही मन्दिर सँगै रहेको डबलीमा प्रदर्शन गर्ने चलन थियो । कुमारीघर अगाडि रहेका दुइटा डबली मध्ये एउटामा दश अवतार प्रदर्शन गर्ने र अर्कोमा राजा एवं उनका परिवार बसेर हेर्ने चलन थियो । आजभन्दा करिब ७०-८० वर्ष अघिसम्म पनि यस्तो चलन थियो भनेर उहाँले सुन्नुभएको थियो । तर दश अवतारलाई के कारणले र कुन बेलादेखि डबलीमा नदेखाई त्रैलोक्यमोहन मन्दिरको पेटीमा देखाउन थालियो भन्ने विषय नाइके श्रेष्ठलाई पनि जानकारी नभएको हुँदा यसै भन्न कठिन रहेको छ ।

दश अवतार प्रदर्शन गरिने त्रैलोक्यमोहन मन्दिर भने कुमारीघर भन्दा पनि पुरानो हो । वि.सं. १७३७ मा यो मन्दिर बनाइएको हो । प्रताप मल्लको छोरा राजा नृपेन्द्र मल्लको निधनमा उनकै सम्झनामा यो मन्दिर बनाइएको थियो । नृपेन्द्र मल्लको निधनको एक महिना पछि आषाढमा यो मन्दिर बनाउन शुरु गरी कार्तिकमा सम्पन्न भएको थियो । त्यतिबेला काठमाडौंको

५७ अमात्य, पूर्ववत् ३२, पृ. ३५ ।

राजगद्दीमा नृपेन्द्र मल्लका भाइ पार्थिवेन्द्र मल्ल थिए ।[५८]

दश अवतार इन्द्रजात्राको आठ दिन पूरै प्रदर्शन गरिन्छ । कहिलेकाहीं तिथिको गडबडी हुँदा सात दिन मात्र पनि देखाइने गरिन्छ । यदि इन्द्रजात्रा चलिरहेकै बेला भूकम्प आयो भने दश अवतार पुनः शुरुदेखि नै देखाउनु पर्ने चलन रहेको छ ।[५९]

पहिले पहिले राजाहरू पनि डबलीमै बसेर दश अवतार हेर्ने चलन थियो । गुठीका नाइके श्रेष्ठले आफूले पनि सुनेको भनी बताए अनुसार एक दिन डबलीमा राखिएको राजाको सिंहासनमा एउटा बहुला आएर बसिदिएछ रे ! त्यसपछि राजाहरू डबलीमा नबसी गद्दी बैठकमा बसेर दश अवतार हेर्न थालेछन् । पछि राजाहरू आउने क्रम टुट्न गयो । राजाहरू आउन छोडे पछि दश अवतारका झाँकीहरू पनि परिवर्तन हुन थाल्यो । पहिले पहिले दश अवतारमा नाच पनि देखाउने गरिन्थ्यो । पछि नाचलाई परिवर्तन गरी झाँकी मात्रै देखाउन थालियो ।[६०]

दश अवतार देखाउँदा प्रतिदिन बाह्रदेखि तेह्र वटासम्म झाँकी प्रदर्शन हुन्छ । हरेक दिन प्रदर्शन गर्ने दश अवतारमा बाइसदेखि पैंतिस जनासम्म कलाकार संलग्न रहेका हुन्छन् । अधिकतम पैंतिस जनासम्म कलाकारको झाँकी हुने भएकाले दश अवतार प्रदर्शन गर्न प्रत्येक दिन पैंतिस जना कलाकार चाहिन्छ । त्यसमा कलाकारहरूलाई पोशाक लगाइदिने, मेकअप गर्ने, भीड नियन्त्रण गर्ने, चिराग समाउने, पर्दा तान्ने, सामान मिलाइदिने, निर्देशनमा सहयोग गर्ने सहयोगीहरू समेत जोड्ने हो भने कुल मिलाएर पचास जनाको टोली बनेको हुन्छ ।

दश अवतार देखाउनु एक महिना अघि हनुमानको पूजा गर्नु पर्छ । हनुमानको पूजा भएकोले यो पर्वका नाइकेले इन्द्रजात्रा अवधिभरि स्त्रीगमन गर्न हुँदैन भन्ने नियम छ । पूजा गर्नुपर्ने हनुमानको मूर्ति चाहिँ नाइके श्रेष्ठकै घरमा राखिएको छ ।

दश अवतार देखाउँदा पहिलो दिन गणेशको झाँकीबाट आरम्भ हुन्छ । त्यसपछि शारदादेवी नमोः भनी सरस्वतीको झाँकी देखाइन्छ । त्यसपछि क्रमशः बिष्णुको दशवटै अवतारहरू प्रदर्शन गरिन्छ । त्यसको शुरुवाट मत्स्य

५८ वज्राचार्य, पूर्ववत् १, पृ. ४६ ।

५९ दिगु गुठी (दशअवतार) का अध्यक्ष दीपक प्रसाद श्रेष्ठसँग अन्तर्वार्ता ।

६० ऐजन ।

अवतारबाट हुन्छ । भगवान बिष्णुले सबैभन्दा पहिले मत्स्य (माछा) को अवतार लिनुभएको थियो । त्यसपछि कुर्म (कछुवा) अवतार प्रदर्शन हुन्छ । त्यस पश्चात क्रमशः बराह, नरसिंह, वामन, परशुराम, राम, कृष्ण, बलराम र कल्की अवतार प्रदर्शन हुन्छ ।

त्यस पछिका दिनहरूमा सत्य युग, द्वापर युग र त्रेता युगका दृश्यहरू क्रमशः कालक्रम अनुसार देखाइन्छ । दश अवतारमा देखाइने झाँकीहरू निम्न अनुसार रहेका छन् :[६१]

राम लक्ष्मण भरत, धनुष विद्या, तारकासुर वध, अयोध्या उद्धार, शिव धनुष, राम-परशुराम भेट, सुपर्णखाको नाक काटेको, लक्ष्मण लेखा, जटायु युद्ध, सवरी उद्धार, सवरी श्रृङ्गार, हनुमान-सुग्रीव भेट, राम-हनुमान भेट, काली युद्ध, राम-अंगद संवाद, हनुमान लंका प्रवेश, सीता खबर, हनुमान-विभिषण भेट, अशोक बाटिका विध्वंश, अक्षय कुमार वध, भगवान-रावण संवाद, लंका विध्वंश, राम..चर स्थापना, रावण-अंगद संवाद, लक्ष्मण-मेघनाथ युद्ध, लक्ष्मण मुर्छित, संजीवनी बुटी, लक्ष्मण-मेघनाथ वध, कुम्भकर्ण वध, राम-रावण युद्ध, राम-रावण वध, विभिषण राज्यारोहण, त्रैलोक्यमोहन-लक्ष्मी नारायण, श्रीराम राज्यारोहण, सीता अग्नि परीक्षा, राम-लवकुश युद्ध, राम-काल संवाद, कृष्ण जन्म, कृष्ण गोकुल लगेको, दही लीला, पुतना वध, राश लीला, राधा कृष्ण, गोवर्द्धन पहाड, गोपिनी विरह, सुदामा-कृष्ण भेट, रुक्मिणी हरण, वकासुर वध, कंश वध, श्रीकृष्ण-बलराम, द्रोपदी-चीरहरण, किचक वध, भीष्म प्रतीज्ञा, दुशासन वध, भीम गदा युद्ध, दुर्योधन वध, शिव परिवार, ब्रम्हा विष्णु महेश्वर, बिष्णुको चक्रदान, सतीदेवी-महादेव विवाह, विश्वामित्र-सदानन्द भेट, राजा इन्द्र, धृतराष्ट्र सभा, देवासुर संग्राम, महादेव -सतीभामा, सती विरह, भष्मासुर महादेव, समुद्र मन्थन, मार्काण्डे ऋषि, महिषासुर संग्राम, चन्ड-मुन्ड, छिन्नामस्त, बलभद्र-महाकाली, रक्तबीज ।

नाइके श्रेष्ठले यसरी सबै गरी एक सय पैंतिस वटा झाँकी तयार गर्नुभएको छ । यी झाँकीहरू सबै उहाँले हरेक दिन अनुसार मिलाएर प्रदर्शन गर्दै आइरहनुभएको छ । उहाँले वि.सं. २०६१ सालमा दश अवतार देखाउने जिम्मेवारी निर्वाह गर्नुभएको थियो । त्यो भन्दा अघि यो काम उहाँका बुबाको जिम्मामा थियो । बुबाभन्दा अघि हजुरबाको जिम्मामा थियो । यो जिम्मेवारी

६१ पूर्ववत् ५९ ।

बुबाको हातबाट जेठो छोरोको हातमा सर्दै जाने परम्परा रहेछ । यसको लागि 'दिगु गुठी' नामको गुठी बनाइएको छ । यो गुठीमा सात परिवार रहेको छ । हाल दश अवतारको जिम्मा यही सात परिवारमाथि रहेको छ । गुठीको नाइके पद पनि नाइकेकै जेठो छोरोमा सर्दै जाने परम्परा रहेको छ । बसन्तपुरको त्रैलोक्यमोहन मन्दिर पनि यही गुठी मातहत रहेको छ । यसको साँचो पनि गुठीकै गुठियारहरूसँग रहेको छ । गुठियारहरूले हरेक दिन उक्त मन्दिर खोलेर पूजा गर्ने चलन छ ।[६२]

गते २०७२ सालको शक्तिशाली भूकम्पमा दश अवतार देखाइने त्रैलोक्यमोहनको मन्दिर पूरै भत्केको थियो । दश अवतारको सामग्रीहरू पनि सबै त्यही मन्दिर भित्रै रहेकोले मन्दिर भत्के पछि दश अवतारका सामग्रीहरू पनि सबै त्यहीं पुरिए । यसले गर्दा उक्त वर्षको दश अवतार समेत प्रदर्शन गर्न नसकिने अवस्था आइसकेको थियो । तर काठमाडौं महानगरपालिकाको सहयोग लिएर इन्द्रजात्रा व्यवस्था समितिका अध्यक्ष लगायत उहाँ भारतको नयाँ दिल्ली गई दश अवतारका लागि आवश्यक नयाँ सामग्रीहरू किनेर ल्याउनुभयो । यसरी उक्त वर्षको दश अवतार पनि रोकिएन । नाइके श्रेष्ठका अनुसार दश अवतार देखाउने कार्य उहाँले थाहा पाएसम्म अहिलेसम्म कहिल्यै रोकिएको छैन । यो हरेक अप्ठेरो बेला पनि चल्दै आइरहेको उहाँको दावी छ ।[६३]

अहिले समयक्रममा झाँकी प्रदर्शनका नयाँ नयाँ प्रविधिहरू आएका छन् । उहाँले त्यसलाई पनि सकभर प्रयोग गर्ने गर्नुभएको छ । पहिले दायाँ बायाँ चिराग बालेर प्रकाश फाल्ने गरिन्थ्यो । अहिले लीड लाइट बालेर प्रकाश फाल्ने गरिएको छ । यसले गर्दा दश अवतार हेर्ने दर्शकलाई सुविधा भएको छ । साथै प्रकाश निकाल्ने पुरानो चलनलाई पनि छोडेको छैन ।

दश अवतार प्रदर्शन गर्दा कुल मिलाएर पचास जनाको टोली रहेको हुन्छ । लगातार आठ दिनसम्म पचास जनाको टोलीलाई सम्हालेर राख्न गाह्रो हुने श्रेष्ठ बताउनुहुन्छ । दश अवतारको लागि सरकारले दिने रकम पचास जनाका लागि धेरै अपुग रहेको उहाँको गुनासो छ । त्यसमाथि रकम निकासा ढिलो हुँदा हरेक वर्ष पैसा लिनुपर्ने कलाकार र सहयोगीहरूले

६२ पूर्ववत् ५९ ।
६३ ऐजन ।

पैसाको लागि आफूलाई ताकेता गरिरहने पनि उहाँ बताउनुहुन्छ। हरेक वर्ष दश अवतारकै लागि भनेर आफू व्यक्तिगत काम समेत छोडेर लागिपरे पनि आर्थिक समस्याले भने परम्परा चलाउन गाह्रो परेको उहाँ बताउनुहुन्छ।

## लोप भएका नाचहरू

इन्द्रजात्रामा विभिन्न नाचहरूको प्रदर्शन एवं विभिन्न सांस्कृतिक पर्वहरूको अभ्यास गर्ने गरिन्छ। इन्द्रजात्रामा प्रदर्शन गरिने त्यस्ता कतिपय नाच एवं पर्वहरू अहिले लोप भएर गइसकेका पनि छन्। काठमाडौंको बदलिँदो समाज र वस्ती विकासका क्रममा ती परम्पराहरू लोप हुँदै गएको अनुमान गर्न सकिन्छ।

लेखक जेराँ तोफाँका अनुसार प्राचीन भारतमा मनाइने इन्द्रजात्रा मूलतः एक नाटकीय प्रस्तुतीमा आधारित छ। त्यस्तो नाटकमा तत्कालीन राजाहरू समेत सहभागी हुने गर्दथे। क्यापुचिन मिशीनरीहरूका अनुसार अठारौं शताब्दीसम्म पनि इन्द्रजात्रामा हनुमानढोका दरवारको नासल चोकमा पनि त्यस्ता नाटकीय प्रस्तुतीहरू हुने गर्दथे। भारतमा जस्तै नेपालमा पनि नाटक मञ्चन भनेको विशेषतः राजकीय कार्य नै हुने गर्दथे। परम्परागत रुपमै इन्द्रजात्रामा काठमाडौंका विभिन्न ठाउँमा प्याखं र ज्यापू प्याखंहरू देखाउने चलन थियो।[६४]

लेखक गौतमवज्र वज्राचार्यले पनि हाल लोप भइसकेको इन्द्रजात्राको परम्परा बारे लेख्नुभएको छ, "विक्रमको अठारौं शताब्दीतिर काठमाडौंमा लेखिएको एउटा ठ्यासफूमा इन्द्रजात्रामा प्रदर्शित गरिने एउटा आकर्षक प्रदर्शनको चर्चा गरिएको छ। हनूमानढोका राजदरवारभित्र बेलुका देखाइने सो प्रदर्शन एक किसिमको रोमाञ्चकारी कृत्रिम युद्धको रूपमा प्रस्तुत गरिन्थ्यो। मल्लकालमा युद्ध हुँदा शत्रुको किल्लामा आगो लगाइदिने काममा विशेष जोड दिइने हुनाले उक्त कृत्रिम युद्धमा पनि विपक्षी दलले आएर शत्रुको किल्लामा आगो लगाइदिएको दृश्य देखाउने चलन थियो। खट जस्तो गरी बनाइएको सो नक्कली किल्लामा पनि आक्रमणको प्रतिरोध गर्न मानिसहरू बसेका हुन्थे। यसरी यो कृत्रिम युद्ध सांग्रामिक कुशलताको प्रदर्शन थियो। तर वि.सं. १७३९ मा देखाइएको यस किसिमको कृत्रिम युद्धमा आगो

६४ तोफाँ, पूर्ववत् २५, पृ. ८१।

लगाउनुभन्दा अघि नै किल्ला भत्केको हुनाले त्यसमा बसेका मानिसहरू घाइते भए तर कोही मरेनन् भनी उक्त ठ्यासफूमा वर्णन गरिएको छ ।[६५] मल्लकालमा मनाइने इन्द्रजात्राको एक झलक यसले प्रस्तुत गरेको छ ।[६६]

*१. 'सं. ८०२ भाद्रपद शुक्ल ॥ एकादशी शनेश्चरवार कुन्हु एन्दकिरि स्वाङा ॥ एन्दकिरिलृया गाक तिराक कुन्हुं, वरन्हि राजकुलस, झरेचाया क्वाथ मि चोय धक झरेचा ल्वातका वेलस क्वाथ मि चोय मरातक झरेचा खत दुंङाव खतस चोकों ल्हाक जुरो, सि जुको छमहं मसीक जुरो ॥' (रेग्मी, 'मेडियाभल् नेपाल' ३ भाग, ३ परिशिष्ट २० पृ.)*

## दबू प्याखं

इन्द्रजात्राका अवसरमा काठमाडौंका विभिन्न टोलहरूमा दबू प्याखं देखाउने चलन थियो । टोलको दोबाटो वा कुनै खाली ठाउँमा मट्टितेलका खाली ड्रमहरू राखेर त्यसमाथि सुकुल बिछ्याई मञ्च बनाइन्थ्यो । यस्तो मञ्चलाई नेपालभाषामा दबू भनिन्छ । त्यस्तो दबूमा देखाइने नाटकलाई दबू प्याखं भनिन्थ्यो ।

खास गरी राति ९-१० बजेतिर देखाइने यस्ता दबू प्याखंहरू दुई तीन घन्टा लामा हुने गर्दथे । पर्दा नहाली चारै कुनाबाट हेर्न सकिने यस्ता नाटक प्रदर्शनीका नाट्य विधान छुट्टै हुने गर्दथ्यो । यसमा संवादका साथसाथै गीत संगीत पनि हुने भएकोले यस्तो नाटक हेर्न दर्शकहरूको ठूलो भीड लाग्ने गर्दथ्यो । नाटकमा महिला पात्रको भूमिका चाहिँ पुरुषहरूले नै निभाउने गर्दथे । महिलाहरू नाटक खेल्ने चलन आइसकेको थिएन ।

शुरु शुरुमा विभिन्न पौराणिक कथाहरूमा आधारित नाटकहरू मञ्चन गरिन्थ्यो भने पछि सामाजिक परिवेशका नाटकहरू पनि बन्न थाले । नाटक पूरै नेपालभाषामा हुन्थे । रातको समयमा प्रदर्शन गरिने भएकोले माइक पनि आवश्यक पर्दैनथ्यो । कलाकारहरूले ठूलठूलो स्वरमा बोलेको संवाद टाढा टाढासम्मै सुन्न सकिन्थ्यो । नाटक प्रदर्शन अगावै त्यसको प्रचार पनि गर्ने चलन थियो । नाटकको लागि आवश्यक श्रोत भने जुन ठाउँमा नाटक देखाउने हो त्यही ठाउँका स्थानीय जनतासँग चन्दा उठाएर जुटाउने गरिन्थ्यो ।

६५ बज्राचार्य, पूर्ववत्, १, पृ. १७५ ।

६६ ऐजन, पृ. १७५ ।

त्यतिबेला बेखाचा, गोविन्द चिकंमू आदि यस्ता केही निर्देशकहरू थिए जसको नाटक भने पछि दर्शक हुरुक्कै हुन्थे ।[६७]

यस्तो दबू प्याखं हेर्न स्थानीय मानिसहरू रात रातभरि जाग्राम समेत हुने गर्दथे । कोही कोही त एउटा टोलमा देखाएको नाटक सकिने बित्तिक्कै दौडेर फेरि अर्को टोलको नाटक समेत हेर्न भ्याउँथे । काठमाडौंको ओमबहाल, झोछेँ, खिचापोखरी, लगन टोल, ब्रम्ह टोल, असन, इन्द्रचोक, बांगेमुढा, किलागल आदि जस्ता ठाउँमा नियमित रुपमा दबू प्याखंहरू मञ्चन हुने गर्दथे ।[६८]

आजभन्दा करिब चालिस वर्ष अधिसम्म दबू प्याखं प्रदर्शन गर्ने चलन थियो । त्यस पछि क्रमिक रुपमा यो चलन हराउँदै जान थाल्यो ।

जनकवि दुर्गालाल श्रेष्ठका अनुसार त्यतिबेला इन्द्रजात्रा शुरु हुन लाग्यो कि टोलैभरि नाच सिकाउने निर्देशक र कलाकारहरूको भ्याइनभ्याई हुन थाल्थ्यो । उनीहरू जता जता मिल्छ त्यता त्यतै बसी नाचको रिहर्सल गर्न थाल्थे ।[६९]

## खःप्याखं

इन्द्रजात्रामा ज्याठा टोलका स्थानीय कुम्हाः (प्रजापति) जातिले प्रदर्शन गर्ने 'खःप्याखं' पनि अहिले लोप भइसकेको छ । यो नाच पनि इन्द्रजात्राको आठै दिन प्रदर्शन गर्ने चलन थियो । यो नाचमा देव पुचः, दैत्य पुचः भनी पात्रहरूको समूह समूह हुन्थ्यो । नाच्ने पात्र र वाद्यवादक समेत गरी नाचको टोलीमा पच्चिस छब्बिस जना जति सदस्य हुन्थे । नाचको पात्रका रुपमा लाखे पनि रहेको हुन्थ्यो । त्यस्तै यसमा कुकुर, स्याल जस्ता पात्रहरू पनि हुन्थे । पात्रहरूले मुकुण्डो लगाउनु पर्दैन थियो । टाउको माथि मुकुट मात्र लगाए पुग्थ्यो । इन्द्रजात्राको पहिलो दिन ज्याठाबाट यो नाच शुरु हुने गर्दथ्यो । त्यसपछि सिधै इन्द्रचोकको आकाश भैरव र हनुमानढोकाको श्वेत भैरवमा गई द्यः ल्हाये गरिन्थ्यो । त्यस पछि अरु ठाउँमा गई नाच प्रदर्शन गरिन्थ्यो । यो नाचको लागि छुट्टै डबली बनाइएको पाइँदैन । यसलाई जलन्धर प्याखं पनि भन्ने गरिन्थ्यो ।

६७ स्थानीयसँग कुराकानी ।

६८ ऐजन ।

६९ जनकवि दुर्गालाल श्रेष्ठसँग अन्तर्वार्ता ।

अरु नाचहरूमा जस्तो यो नाचमा धेरै उफ्रिने र जोडले नाच्नु पर्दैनथ्यो । बाजाको ताल अनुसार यताबाट उता र उताबाट यता हिँडेर मात्र नाच्ने गरिन्थ्यो ।

ज्याठाका स्थानीय प्रजापतिहरूको परम्परागत संस्था 'ज्याठा पञ्चदान गुथि प्रजापति खलः' का अध्यक्ष जुजुकाजी प्रजापतिका अनुसार यो नाच प्रदर्शन गर्ने पात्रहरू सबै स्थानीय प्रजापतिहरू भए पनि यसको सञ्चालन भने स्थानीय प्रधान थरका मानिसहरूले गर्दथे ।

यसको लागि छुट्टै गुठी वा आयस्ताको व्यवस्था गरिएको छैन । स्थानीय प्रधानहरूमा पनि गुरुबा भन्ने एकजना गुरु हुनुहुन्थ्यो । नाचको सम्पूर्ण कार्य उहाँले नै गर्नुहुन्थ्यो । प्रजापतिहरूलाई नाच सिकाउने र अरु व्यवस्थापनको कार्य समेत उहाँले नै गरिरहनुभएको थियो । उहाँलाई सधैँजसो नाच सञ्चालन गर्न आर्थिक समस्या हुने गर्दथ्यो । जाडो महिनामा खःप्याखंको नासः पूजा गरी भोज खुवाउने चलन पनि थियो । गुरुबाले उक्त नासः पूजा समेत राम्ररी गर्न सक्नु भएन । उहाँ अशक्त भए पछि नाच रोकियो ।

ज्याठा टोलका प्रजापतिहरूको स्थानीय गुठी 'ज्याठा पञ्चदान गुथि प्रजापति खलः' सँग यो नाचको कुनै सम्बन्ध छैन । गुठीबाटै एक पटक यो नाच चलाउने अधिकार आफूलाई दिइयोस् भनी कुरा चलाएको थियो तर प्रधानहरूले दिन मानेनन् ।[७०]

आजभन्दा करिब तीस वर्ष अघिसम्म यो नाच प्रदर्शन गर्ने चलन थियो । नाचमा सहभागी भएका व्यक्तिहरू पनि अहिले केही मात्रै जीवित हुनुहुन्छ ।

किलागल टोलमा पनि कुनै बेला खःप्याखं नामक अर्को नाच प्रदर्शन गर्ने चलन रहेको कुरा दीप्याखंका गुरु इन्द्र महर्जनले बताउनुभएको छ । उहाँका अनुसार किलागल टोलमा दीप्याखं र खःप्याखं सँगसँगै प्रदर्शन गर्ने चलन थियो । पछि खः प्याखं बन्द भयो, दीप्याखं मात्रै निरन्तर चलिरह्यो ।[७१]

---

७० ज्याठा पंचदान गुठी प्रजापति खलःका अध्यक्ष जुजुकाजी प्रजापतिसँग अन्तर्वार्ता ।

७१ नरेन्द्र महर्जन, 'देवीनाच एक परिचय', देवी नाच (दीप्याख), काठमाडौं: वि.सं. २०७३, पृ. ४३

# इन्द्रजात्रासँग सम्बन्धित गुठीहरू

गुठी परम्परा नेपाली समाजको अभिन्न अंग हो । नेपालमा गुठीको धेरै लामो परम्परा रहँदै आएको छ । नेपाली समाजमा प्रचलित अधिकांश संस्कार-संस्कृतिहरू गुठीकै आधारमा अहिलेसम्म निरन्तर सञ्चालन हुँदै आइरहेको पाइन्छ । काठमाडौं उपत्यकावासीको पारिवारिक, सामाजिक र सांस्कृतिक जीवनमा गुठीको ठूलो महत्व रहेको हुन्छ । त्यस्तै उनीहरूको दैनिक जीवनसँग सम्बन्धित धार्मिक, सांस्कृतिक गतिविधिहरू पनि गुठीद्वारा नै सञ्चालन हुने गर्दछ ।

गुठी परम्परा नेपालमा कति पुरानो छ भन्न सकिँदैन । नेपालको प्रामाणिक इतिहासको आरम्भ सँगै नै गुठीको इतिहास पनि थालनी भएको विश्वास गरिन्छ । मानदेव प्रथमको चाँगु नारायणको अभिलेख (वि.सं. ५२१) मा समेत गुठीको उल्लेख भएको पाइन्छ । नेपालमा अहिलेसम्म लिच्छविकालका करिब २०० जति अभिलेखहरू भेटिएका छन् । ती मध्ये ४८ वटा अभिलेखमा कुनै न कुनै रूपमा गुठीको उल्लेख भएको पाइन्छ ।[१]

नेपालमा लिच्छविकालभन्दा पहिले गुठीको कस्तो व्यवस्था थियो भन्ने अभिलेख पाइएको छैन । तर पनि यति चाहिँ निश्चित रूपमा भन्न सकिन्छ कि लिच्छवि राजा मानदेव प्रथमभन्दा पहिले नै नेपालमा गुठी परम्परा सुगठित रूपले सञ्चालन भइसकेको थियो । नेपालको इतिहासमा धार्मिक, सामाजिक, सांस्कृतिक कार्यहरूका लागि अलग अलग गुठी स्थापना गर्ने चलन रहेको पाइन्छ ।[२]

---

१ डा. गोविन्द टण्डन, *नेपालमा गूठीव्यवस्था,* काठमाडौंः नेपाल अध्ययन समूह, वि.सं. २०५२, पृ. १ ।

२ ऐजन, पृ. १ ।

लिच्छविकालीन अभिलेखहरूमा 'गोष्ठी' र 'गौष्ठिक' शब्द धेरै ठाउँमा प्रयोग भएको पाइन्छ। मल्लकालमा आएर यही शब्द 'गुठी' का रुपमा प्रयोग हुन थालियो। नेपालभाषामा यसलाई 'गुथि' र यसका सदस्यहरूलाई 'गुथ्याः' भनी सम्बोधन गर्ने गरिएको छ। सामान्यतया समाजमा आवश्यक कामकुरो मिलेर गर्ने भावना नै गुठी व्यवस्थाको आधार हो।

लिच्छविकालमै नेपालमा विभिन्न प्रकारका गुठीहरू अस्तित्वमा आइसकेको पाइन्छ। लिच्छविकालमा राज्यले कर उठाउन समेत गुठीको व्यवस्था गरेको देखिन्छ। यसलाई 'कर गुठी' भनिएको छ। त्यस्तै धार्मिक कार्यहरू र मन्दिरहरूमा दियो बाल्नका लागि 'प्रदिप्त गुठी' को व्यवस्था पनि लिच्छविकालमा गरिएको छ। यसरी नै खेतमा सिँचाईका लागि पानी लान 'प्रणाली गौष्ठिक' र बटुवाहरूलाई पानी खुवाउन 'पानीय गोष्ठी' को व्यवस्था पनि लिच्छविकालमा गरिएको पाइन्छ। यातायात सम्बन्धी व्यवस्थापन गर्न 'प्रवहण गोष्ठी', पहलमानी सम्बन्धी खेललाई व्यवस्थापन गर्न 'मल्लयुद्ध गोष्ठी' जस्ता गुठीहरू लिच्छविकालमा राखिएको पाइन्छ।[३]

गुठी राख्नाका अनेक कारणहरू हुन सक्दछन्। तर धेरैजसो गुठी स्थापनाको मूल कारण धार्मिक र सामाजिक नै रहेको देखिन्छ। गुठी राख्नाले धर्म लाग्छ भन्ने विश्वास र परम्पराका कारण लिच्छविकालमा धेरै गुठीहरू राखिएको पाइन्छ। आफूले स्थापना गरेको मन्दिर, पाटी, पौवाको संरक्षण एवं जीर्णोद्धार आदि गर्न, धार्मिक आस्था सहितको जात्रा पर्वहरू सञ्चालन गर्न, समाजमा प्रचलित संस्कारगत कार्यहरू गर्न, कुनै देवस्थलमा नियमित पूजाआजाको कार्य गर्न मात्र होइन बाटोघाटो निर्माण गर्न, भएका बाटोघाटो मा सरसफाई आदि गर्न, पशुपंक्षीहरूलाई आहारा खुवाउन, बटुवाहरूलाई ठाउँ ठाउँमा पानी खुवाउन, बाजागाजाको व्यवस्था गर्न लगायतका विभिन्न सामाजिक धार्मिक क्रियाकलापहरू गर्न गुठी स्थापना गरिएको पाइन्छ। गुठी स्थापना गर्दा उक्त गुठी सञ्चालनका लागि त्यसको नियमित आयश्रोतका रूपमा विशेष गरी जग्गाजमिन राखिएको हुन्छ। जग्गाजमिन कहिल्यै नासिएर नजाने पुस्तौं पुस्तासम्म रहिरहने अचल सम्पत्ति भएकोले यसलाई आयस्ताको रुपमा राखिए गुठी दिगो भई निरन्तर रुपमा चलिरहने विश्वास गरिन्छ। आफ्नो हक छोडी गुठीका लागि राखिने जग्गाजमिन लगायतका आयस्रोतहरू

३ डा. जगदिशचन्द्र रेग्मी, *लिच्छवि संस्कृति,* काठमाडौंः पृ. ३३५-३३८।

देवीदेवता तथा कीर्तिको लागि अघि सारिएको सम्पत्ति भएकोले त्यो देवस्व हो, त्यसलाई जोगाउनु बचाउनु सबैको दायित्व हो तर नास्नमास्न भने कसैले हुँदैन भन्ने मान्यताका साथ गुठीको आयस्रोतको व्यवस्था गरिएको हुन्छ।

नेपालको इतिहासमा गुठीका लागि सबैभन्दा बढी जग्गा राख्ने व्यक्तिको रुपमा रत्नसंघको नाम अगाडी आउँछ। लिच्छवि राजा मानदेव प्रथमको पालामा संवत् ३९९ (वि.सं. ५३५) मा रत्नसंघ नामक एक व्यापारीले रत्नेश्वरको स्थापना गरी त्यसको पूजाआजाको लागि २५७० भूमि (रोपनी) जग्गा गुठी राखेका थिए। त्यसपछि वि.सं. १८५६ मा श्री ५ कान्तवतीले पशुपतिको महास्नान एवं महाबलि गुठीको निमित्त देवपाटनमा १६३४ र फटकशिलामा ५६६ रोपनी गरी जम्मा २२०० रोपनी जग्गा गुठी राखेका थिए।[४]

सामान्यतया आयस्रोतको रुपमा गुठीको लागि जग्गाको व्यवस्था गर्दा यति धेरै परिणाममा राखेको पाइँदैन। मध्यकालमा भने धेरैजसो १ देखि ५ रोपनीसम्मको जग्गा गुठीको रुपमा राखिएको उल्लेख पाइन्छ। त्यसपछि २५ देखि ५० रोपनीसम्म केही र १०० रोपनीभन्दा अधिक गुठी जग्गा राखिएका उदाहरण कम मात्र पाइन्छन्। त्यसमा पनि २५-३० रोपनीभन्दा बढी जग्गा राजा, राजपरिवारका सदस्य तथा तिनका नातेदार, अमात्य र भारदारहरूबाट मात्र राखिएको पाइन्छ। जनसाधारणले भने आफ्नो गच्छे अनुसार न्यूनतम जग्गादेखि लिएर १०-१५ रोपनीसम्म गुठी राखेका उदाहरण पाइन्छन्।[५]

गुठीहरू विभिन्न प्रकारका हुन्छन्। गुठीहरूले गर्ने कामको प्रकृति अनुसार तिनीहरूको वर्गीकरण गरिएको हुन्छ। धार्मिक प्रयोजनको लागि राखिएको गुठीलाई धार्मिक गुठी भनिन्छ। नेपालमा रहेका सबैभन्दा धेरै गुठीहरू धार्मिक गुठी नै हुन्। विभिन्न देवीदेवताको नाउँमा मन्दिर बनाउन, जात्रा चलाउन राखिने गुठीलाई धार्मिक गुठी भनिन्छ। यस्ता गुठीहरू धेरै जसो राज्यका तर्फबाट नै राखिएका छन् भने व्यक्तिहरूले पनि आआफ्नो आस्था अनुरुप धार्मिक गुठीहरू राखेको पाइन्छ। त्यस्तै समाजको सर्वोपरि हितलाई मध्यनजर गरी राखिएका गुठीहरूलाई लौकिक गुठी भनिन्छ।

४ टण्डन, पूर्ववत् १, पृ. ७।

५ रमेश ढुंगेल र ऐश्वर्यलाल प्रधानांग, *काठमाडौं उपत्यकाको मध्यकालिक आर्थिक इतिहास*, कीर्तिपुरः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिवि, बि.सं. २०५६, पृ. ६८-६९।

यस्ता गुठीहरूले खास गरी बाटोघाटो, ढुंगेधारा, जलद्रोणी, पाटीपौवा, सत्तल, घाट आदि बनाउने कार्य गर्दछ । यी सबै निर्माण कार्य आफ्नो भन्दा अरुको हितका लागि गरिने हो । त्यसै गरी समाजमा विभिन्न प्रकारका मनोरञ्जनात्मक कार्यहरू सञ्चालन गर्न पनि गुठीको व्यवस्था गरिएको छ। लिच्छविकालमा राखिएको मल्लयुद्ध गोष्ठीलाई यसको उदाहरणको रुपमा लिइन्छ। त्यस्तै विभिन्न जातिहरूले आआफ्नो जातीय कर्महरू सम्पन्न गर्न पनि गुठीको व्यवस्था गरेको पाइन्छ। त्यस्तो गुठीलाई वर्गीय गुठी अन्तर्गत राखिएको छ।[६]

यसरी विभिन्न प्रकारका गुठीहरूको संयोजनबाट नै नेपाली समाजको धार्मिक-सामाजिक गतिविधिहरू सुचारु भइरहेको पाइन्छ। धार्मिक आस्थाका रुपमा जग्गाजमिनको आयस्ता सहित राखिएका धार्मिक गुठीहरूबाट नै नेपालका अधिकांश जात्रापर्वहरू निरन्तर रुपमा सञ्चालन हुँदै आइरहेको पाइन्छ। यस मध्ये धेरै संख्यामा गुठीहरूको व्यवस्था भएको एक महत्वपूर्ण जात्रा इन्द्रजात्रा पनि हो । नेपालमा इन्द्रजात्रा सञ्चालन गर्न पनि विभिन्न ठाउँमा जग्गा सहितको गुठी राखिएको पाइन्छ । इन्द्रजात्रा पर्वमा सम्पन्न गर्नुपर्ने विभिन्न धार्मिक सांस्कृतिक कार्यहरू गर्नका लागि विभिन्न ठाउँमा गुठीको व्यवस्था गरिएको सम्बन्धी अभिलेखहरू धेरै पाइएका छन्। इन्द्रजात्रा सञ्चालनको लागि राखिएको गुठीकै कारणले वास्तवमा इन्द्रजात्राको इतिहास समेत थाहा पाउन सकिएको हो। पाटनको लेलेमा भेटिएको शिवदेव अंशुवर्माको एउटा अभिलेखमा 'इन्द्रगोष्ठी' को उल्लेख गरिएको छ। संवत् ५२६ (बि.सं. ६६१) आश्विन शुक्ल मिति लेखिएको उक्त अभिलेखमा लेखिएको छ :-[७]

## मूलपाठ

*...ध्वजगोष्ठिकानाम्मा १७ प्र- - गौष्ठिकानाम्मा २० प्रणालीगौष्ठिकानाम्मा ८*
*ब्राम्हणसा -*
*१३. नात्थ्यगौष्ठिकानाम्मा १० हिद्धिमशालाया मा...प्रदीपगौष्ठिकानाम्मा ८*

---

६ टण्डन, पूर्ववत् १, पृ. ८-२१ ।

७ धनवज्र वज्राचार्य, *लिच्छविकालका अभिलेख*, काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, बि.सं. २०३०, पृ. २८३ ।

*प्रवहणनौ-*

१४. *ष्ठिकानाम्मा २० उत्तरलाशायाः मा २० पूर्व्वशालाया मा १० ध्वजगौ ष्ठिकानाम्मा ११ भूयो ध्वजगौ-*

१५. *ष्ठिकानाम्मा १० मल्लयुद्धगौष्ठिकानाम्मा ३ अर्च्चनीयगौष्ठिकानाम्मा ४ इन्द्रगौष्ठिकानाम्मा ६*

१६. *पूर्व्वशालायाः मा १० भगवतश्चूडिकेश्वरस्य पाञ्चालिकै..मानङ्ग्रामस्य पूर्व्वतःमा ४० पश्चिमतश्च*

१७. *मा ४० तदेतेषां क्षेत्राणान्न केनचिदाक्षेपः पीडा वा कार्य्यो यस्त्वतामाज्ञामति*

**व्याख्या**

मानगृह (दरवार) बाट जारी गरिएको उक्त अभिलेखमा तत्कालीन समयमा प्रचलित विभिन्न गुठीहरू मध्ये कुन कुन गुठीलाई कति कति खर्च दिने भन्ने व्यहोरा उल्लेख गरिएको छ । उक्त अभिलेखमा ब्राम्हण गोष्ठीका गुठियारलाई १० मानिका, प्रदीप गोष्ठीका गुठियारलाई १० मानिका, पौलमूको पानीय (पानी) गोष्ठीका गुठियारलाई १० मानिका, मल्लयुद्ध-गोष्ठिका गुठियारलाई ६८ मानिका, धूपगोष्ठीका गुठियारलाई २ मानिका, 'इन्द्रगोष्ठी' का गुठीयारहरूका लागि ४ मानिका, उत्तरशालालाई १२ मानिका, वादित्त्र (बाजा) गोष्ठीका गुठियारलाई १० (मानिका) आदि खर्च उपलब्ध गराउने व्यहोरा उल्लेख छ। यस अभिलेखमा इन्द्रजात्राको नाम पनि उल्लेख भएकोले नेपालमा इन्द्रजात्राको प्रचलन लिच्छविकालदेखि नै चलिसकेको मान्ने गरिन्छ।

नेपालमा इन्द्रजात्रा काठमाडौं बाहेक अन्य विभिन्न स्थानहरूमा पनि मनाउने गरिन्छ । काठमाडौं उपत्यकाका विभिन्न पुराना वस्तीहरूमा इन्द्रजात्राका बेला सम्पन्न गर्नुपर्ने विभिन्न धार्मिक सांस्कृतिक कार्यहरू गर्न गराउन गुठीको व्यवस्था गरिएको बारे उल्लेख भएका अभिलेखहरू धेरै पाइएका छन् । इन्द्रजात्रासम्बन्धी यी गुठीहरू कुनै तत्कालीन राजा र राज खलकका सदस्यहरूले राखेका छन् भने कुनै स्थानीय जनताले राखेका छन् । इन्द्रजात्राका बेला बत्ती बाल्ने, स्याःबजि (एक प्रकारको भुटेको च्यूरा) बाँड्ने, हाथ्वँ (जाँड) बाँडेर खुवाउने जस्ता कार्यहरू सम्पन्न गर्न गुठीको

व्यवस्था गरेको पाइन्छ । त्यस्ता गुठीहरूका लागि धेरै रोपनी जग्गा राखिएको देखिन्छ ।

ललितपुरमा स्थानीय पुरन्दरसिंहले आफ्ना बुबा बिष्णुसिंहका नाममा वर्षेनी इन्द्रजात्राका दिन ५० वटा बत्ती बाल्नका लागि गुठी राखेका थिए । उक्त गुठीले इन्द्रजात्रामा बत्ती बाल्नुका साथै बुंगद्यः (रातो मछिन्द्रनाथ) को लगन यात्राका दिन च्यूरा, जाँड, मासु, केराउ आदि दान दिनुपर्ने व्यवस्था पनि गरिएको छ । ने.सं. ७०९ मा स्थापना गरेको उक्त गुठीका लागि १४ रोपनी जग्गा आयस्ता राखिएको थियो ।[८]

त्यस्तै कीर्तिपुरमा पनि भाद्रशुक्ल द्वादशी इन्द्रजात्रा आरम्भ भएकै दिन दान प्रदान गर्नका लागि गुठीको व्यवस्था गरिएको पाइन्छ । त्यहाँका तवच टोलमा इन्द्रलाई बत्ती बाल्ने लगायत भुटेको च्यूरा, मासु, जाँड आदि चढाउने कार्यका लागि उक्त गुठी राखिएको थियो ।[९]

त्यसै गरी थानकोटमा पनि स्थानीय जजमान हाकुसिह भारो भन्ने व्यक्तिले इन्द्रजात्राका लागि बत्ती बाल्न र अरु पूजाका लागि सरसामानको व्यवस्था गर्न गुठी राखेका थिए ।[१०]

दोलखामा पनि ने.सं. ७१९ मा स्थानीय भिष्मदेव ठाकुरले आफ्नो भाइ त्रिलोकदेव दिवंगत हुँदा उनको सम्झनामा सुनको भैरव बनाई त्यसको पूजाआजाको लागि जग्गा एवं रुपियाँ गुठी राखी प्रत्येक वर्ष इन्द्रजात्रा र कार्तिक यात्रामा पूजा गर्ने व्यवस्था गरेका थिए ।[११]

इन्द्रजात्रा र इन्द्रजात्रासँग सम्बन्धित विभिन्न धार्मिक सांस्कृतिक कार्यहरूका लागि गुठी राख्ने चलन मल्लकालमा मात्र होइन शाहकालमा पनि रहेको पाइन्छ । नुवाकोटमा इन्द्रजात्राका बेला इन्द्रध्वज उठाउने उत्सवका लागि पृथ्वीनारायण शाहका छोरा युवराज प्रतापसिंह शाहले गुठी व्यवस्था गरेका थिए । नुवाकोटको वि.सं. १८२० को पृथ्वीनारायण शाहको अभिलेखमा हरेक वर्ष इन्द्रजात्राका बेला इन्द्रध्वज उठाउने उत्सवका लागि युवराज

---

८ धनवज्र वज्राचार्य, *मध्यकालका अभिलेख*, काठमाडौंः नेपाल एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, बि.सं. २०५६, पृष्ठ : ३८ ।

९ ऐजन, पृष्ठ ५३७ ।

१० ऐजन, पृष्ठ २३५ ।

११ टण्डन, पूर्ववत् १, पृ. ९ ।

प्रतापसिंह शाहले मार्सी धान आउने खेत गुठी राखेका थिए ।[12]

प्रतापसिंह शाह नेपालको राजा भइसकेपछि उनले नुवाकोटमा लिङ्गो उठाउने कार्य बन्द गरी राजधानी काठमाडौंमा लिङ्गो उठाउने चलन शुरु गरे । भाषा वंशावली अनुसार श्री ५ प्रताप सिंहले नुवाकोटमा लिंगो गाडे जस्तै काठमाडौंको आफ्नो दरवार सामुन्ने लिंगो खडा गरी इन्द्रजात्रापछि लिङ्गो ढाल्ने नियम बनाएका थिए । यस कार्यको लागि पनि गुठी राखी प्रतिवर्ष जात्रा चलाउने बन्दोवस्त मिलाएका थिए । उनैका दरवारिया पण्डित शक्तिवल्लभ भट्टाचार्यले लेखेको इन्द्रध्वजोत्सव नामक विस्तृत ग्रन्थमा यस बारे उल्लेख गरिएको छ ।

इन्द्रजात्राका अवसरमा विभिन्न धार्मिक सांस्कृतिक कार्यहरू गर्न राजा मात्र होइन स्थानीय जनता आफैले राखेका गुठीहरूको संख्या पनि धेरै छन् । आफूले शुरु गरेको धार्मिक सांस्कृतिक कार्यहरू परन्तुसम्म निरन्तर चलिरहोस् भन्ने उद्देश्यले गुठी राख्ने गरिन्छ । इन्द्रजात्राका सन्दर्भमा पनि यसको लागि गुठी नै राखेर गएका कारण पहिले पहिलेका मानिसहरूमा इन्द्रजात्रा प्रति ठूलो आस्था र विश्वास रहेको स्पष्ट हुन्छ ।

नेपाली समाजमा धार्मिक-सांस्कृतिक जस्ता परोपकारी कार्यका लागि छुट्याइएको गुठीको जग्गा नास्नु-मास्नु हुँदैन भन्ने विश्वास गरिन्छ । तर विभिन्न लोभ र स्वार्थका कारणले नेपालमा शाहकालीन शासन शुरु भए पछि गुठीको जग्गा पनि हरण गरेको उदाहरण प्रशस्त पाइन्छ । गोर्खाका राजा पृथ्वीनारायण शाहले काठमाडौं जितिसकेपछि यहाँका धेरै गुठी जग्गाहरू राज्यको मातहत ल्याई आफ्ना सेनालाई जागिरका रुपमा प्रदान गरेका थिए । यसमा चाँगु (दोलाशिखर) नारायणको पूजाआजा गर्न राखिएको जग्गा सबै भन्दा चर्चित छ । ती मध्ये केही जग्गाहरू पछि फिर्ता पनि भएको पाइन्छ । तर अधिकांश भने फिर्ता भएनन् । उनले आफू भन्दा अघिल्लो कालका सम्पूर्ण गुठी जग्गाहरू जफत नगरी केही गुठीका जग्गा जफत गरेको पाइन्छ ।[13]

गुठी जग्गा प्रायः करमुक्त हुन्थ्यो । किनकि प्रायः गुठी राज्यको विकास कार्यसँग नै जोडिएका हुन्थे । गोर्खाका राजा पृथ्वीनारायण शाहले काठमाडौं

१२ उच्चस्तरीय अध्ययन समिति प्रतिवेदन, *गुठी संस्थानको औचित्य र नेवाः संस्कृति सञ्चालन*, काठमाडौः संघीय मामिला, संसदीय व्यवस्था तथा संस्कृति मन्त्रालय, वि.सं. २०६६, पृ. ४९ ।

१३ टण्डन, पूर्ववत् १, पृ. ३० ।

उपत्यकामा आधिपत्य कायम गरिसके पछि गुठी जग्गामा पनि कर लगाउने परम्पराको थालनी भयो । यिनले भक्तपुरको गुठी जग्गामा प्रति रोपनी दश रुपैयाँ कर लगाएका थिए ।[१४] यति मात्र होइन, पृथ्वीनारायण शाहले काठमाडौं जिते पछि जात्रा पर्व सञ्चालनका लागि दिइने सहायता सबै बन्द गरिएको कुरा लेखक सिल्भाँ लेभीले उल्लेख गर्नुभएको छ । उहाँले लेख्नुभएको छ, "यता गोरखा सरकार आएपछि सरकारबाट दिइने प्रत्यक्ष र अप्रत्यक्ष सबै सहायता बन्द भयो; यसरी सबै कुरा झिकिदिएपछि जात्राहरूका लागि आयको स्रोत नै बन्द भयो । त्यसो भए पनि जात्राहरूको चलन अझ पनि छ, प्रचलन र धर्म बमोजिम । पुर्खौली चलन सम्बन्धित व्यक्तिले चलाइराख्नु पर्ने हुन्छ । मन परेर होस् या मन नपरेर होस् रथ बनाउने; मुकुन्डो बनाउने; नाचगान गर्ने; ध्वजापताका, रंग इत्यादिको बन्दोवस्त गर्ने काम पहिले गरिआएको समूहले गर्नु पर्ने व्यवस्था छ । सम्बन्धितले आफ्नो जिम्माको काम नगरेमा जरिवाना तिर्नु पर्छ ।"[१५]

गुठीको जग्गामाथि कर लगाउने पृथ्वीनारायण शाहको कार्यलाई पछि जंगबहादुरले अझै विस्तारित गरे । यिनले नेपाल-तिब्बत युद्धको समयमा पहिलो पटक देशव्यापी रुपमा गुठी जग्गामा कर लगाएका थिए ।[१६]

यस पछिका समयमा पनि राज्यबाट गुठीको जग्गालाई विभिन्न बहानामा अतिक्रमण गर्ने, हडप्ने कार्यलाई निरन्तरता दिँदै आइरहेको पाइन्छ । यसर्थ देशमा भएका सम्पूर्ण गुठी जग्गाको व्यवस्थापन र उक्त जग्गाको आयस्ताबाट सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूका लागि खर्च व्यवस्थापन गर्न नेपाल सरकारले वि.सं. २०२१ कार्तिक १७ गते गुठी संस्थान गठन गरेको थियो । यो भन्दा अघि यही कार्य गुठी तहसिल अड्डा, गुठी खर्च अड्डा आदि जस्ता सरकारी निकायहरूले सम्पादन गर्दथे । गुठी संस्थान गठन भए पछि गुठी सम्बन्धी जग्गा, गुठी सम्बन्धी धार्मिक सामाजिक कार्य, गुठी सम्बन्धी लगतको कार्य आदि गर्ने सबै निकायहरूलाई गुठी संस्थान अन्तर्गत ल्याइयो । गुठीको जग्गा र गुठीले सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूलाई व्यवस्थित गर्न गुठी संस्थान गठन गरिएको भए पनि यो संस्थानको गठन पछि गुठीको जग्गा

१४ प्रतिवेदन, पूर्ववत् १२, पृ. ४९-५० ।

१५ सिल्भाँ लेभी, *नेपाल : हिन्दू अधिराज्यको इतिहास (दोश्रो खण्ड)*, काठमाडौंः हिमाल किताब प्रा.लि., सन् २००७, पृ. २४ ।

१६ प्रतिवेदन, पूर्ववत् १२, पृ. ४९-५० ।

सुरक्षित हुन नसकेको र उल्टो हिनामिना समेत हुन थालेको कुरा हाल विभिन्न गुठीसँग सम्बन्धित जग्गाहरू मासिसकेको अवस्थाबाट पनि छर्लङ्ग हुन्छ। गुठीका जग्गाहरू हिनामिना हुने क्रममा गुठी संस्थान अन्तर्गत रहेका धेरै जग्गाहरू रैतानी भइसकेका छन्। जसको कारणले सोही जग्गाको आयस्तामा चल्नुपर्ने धेरै जात्रापर्वहरू सञ्चालन गर्न समस्या आएको पाइन्छ।

नियमानुसार गुठीको जग्गाबाट प्राप्त हुने रकम अक्षय कोषमा जम्मा गरी त्यसबाट आउने ब्याज मध्ये २५ प्रतिशत मूल धनमा नै राखिन्छ। ५ प्रतिशत गुठी संस्थानको प्रशासनमा खर्च गरिन्छ। बाँकी ७० प्रतिशत सम्बन्धित गुठी, पूजा, पर्व, जात्रा आदि सञ्चालनमा खर्च गरिन्छ। तर गुठी संस्थानले ब्याजको ७० प्रतिशत रकम गुठीका गुठियारहरूलाई उपलब्ध गराउनु पर्नेमा त्यसो नगरी त्यसको थोरै वा नगन्य मात्र उपलब्ध गराउँदै आएको छ। गुठी संस्थानले यो दायित्व पूरा नगरिदिँदा नेवार समाजसँग सम्बन्धित सांस्कृतिक, धार्मिक र सामाजिक पर्व, पूजा, जात्रा सञ्चालनमा नकारात्मक प्रभाव पर्न गएको छ। यसमा गुठी संस्थानका पदाधिकारी र जिम्मेवार व्यक्तिहरूले चासो दिएको पाइँदैन। तै पनि नेपाली संस्कृतिको अस्तित्व बचाउनुपर्छ भन्ने भावना भएका केही गुठियारहरूले आफ्नै निजी खर्चमा ती जात्रापर्वहरू सञ्चालन गरेकै कारणले ती पर्वहरू आजसम्म जीवित रहेका छन्। यदि ती पर्वहरू बचाउन आफ्नो खर्चमा आफै लाग्नुपर्ने हो भने गुठी संस्थान किन चाहियो भन्ने प्रश्न उठ्नु अस्वाभाविक होइन।[१७]

नेपालको ऐतिहासिक पहिचान बनिसकेका जात्रा पर्वहरू सञ्चालनको जिम्मेवारी रहेका गुठी खलःहरूलाई गुठी संस्थानबाट उपलब्ध गराउनु पर्ने सहयोग प्रयाप्त नभएको भनी धेरै ठाउँबाट धेरै पटक गुनासाहरू आएको मात्र होइन यस विषयमा अध्ययन गर्न गठन गरिएको उच्चस्तरीय समितिले समेत यस्तो प्रतिवेदन दिएका कारण गुठी संस्थानले यस मामिलामा गम्भीर भई चिन्तन गर्न अत्यावश्यक छ।

हाल गुठी संस्थानमा दर्ता भएका काठमाडौं जिल्लाका कुल ६५१ वटा गुठीहरू छन् भने ती गुठीहरूले वार्षिक सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूको संख्या १२८२ वटा रहेका छन्। त्यस्तै भक्तपुरमा ३०१ वटा गुठीहरू रहेका छन् भने यी गुठीहरूले वार्षिक सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूको संख्या ३०

१७ प्रतिवेदन, पूर्ववत् १२, पृ. ६६।

९ वटा छन् । ललितपुरमा कुल १६१ वटा गुठीहरू रहेका छन् भने तिनीहरूले सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूको संख्या ४२२ वटा रहेका छन् ।[१८]

यसबाट देखिन्छ, उपत्यकामा गुठीहरूको संख्या जति छन् ती गुठीहरूले सञ्चालन गर्नुपर्ने जात्रा पर्वहरूको संख्या त्यो भन्दा बढी रहेको छ । अर्थात यहाँ रहेका अधिकांश गुठीहरूको काँधमा एकभन्दा बढी जात्रा पर्व सञ्चालन गर्ने अभिभारा रहेको छ ।

गुठी संस्थानमा दर्ता रहेका गुठी र ती गुठीहरूले सञ्चालन गर्नुपर्ने जात्रापर्वहरूको संख्या धेरै रहे पनि ती गुठीहरूका नाममा रहेको जग्गा भने धेरै नै हराइसकेको पाइन्छ । यस विषयमा पनि सम्बन्धित गुठीका गुठियारहरूले धेरै गुनासो गरेका छन् । गुठी संस्थानमा स्पष्ट रूपमा दर्ता देखिएका जग्गाहरू समेत कालान्तरमा बेपत्ता भएको उदाहरणका रुपमा श्वेत भैरवसँग सम्बन्धित गुठीको जग्गालाई लिन सकिन्छ। इन्द्रजात्रासँग सम्बन्धित श्वेत भैरवको नाममा रहेको गुठीमा पहिले १०४ रोपनी जग्गा थियो । उक्त गुठीसँग यति जग्गा रहेको कुरा लालमोहरमै अंकित छ। यो १०४ रोपनी मध्ये गुठी संस्थानले ७१ रोपनी ८ आना ३ पैसा २ दाम जग्गा रैतानी गरिसकेको रहेछ । यति जग्गा रैतानी गरे वापत संस्थानले १६,५५,४०८।५० पैसा रकम दाखिला गरेको थियो । गुठीको जग्गा रैतानी गर्दा संस्थानले सम्बन्धित गुठियारहरूलाई त्यसको जानकारी समेत दिएको थिएन । अझ यसमा पनि १०४ रोपनी जग्गामा ७१ रोपनी ८ आना ३ पैसा २ दाम जग्गा रैतानीमा परिणत गरिसके पछि अब संस्थानसँग ३२ रोपनी ७ आना २ पैसा १ दाम जग्गा बाँकी हुनुपर्ने हो । तर अहिले संस्थानको लगतमा जम्मा १६ रोपनी मात्रै जग्गा बाँकी रहेको देखाइएको छ । अर्को १६ रोपनी संस्थान आफैले हिनामिना गरेको पाइएको छ ।[१९]

यस्तै इन्द्रजात्रा पर्व सञ्चालनका लागि सरकारका तर्फबाट प्रदान गरिने खर्चहरूको लगत गुठी संस्थानले राख्ने गरेको छ । गुठी संस्थानबाट प्राप्त वि.सं. २०१० कार्तिक ८ गते खडा गरेको यस्तै एउटा दरबन्दी लगत किताब अनुसार गणेश र भैरवलाई रू. २०० का दरले प्रति वर्ष रू. ४०० उपलब्ध गराउँदै आइरहेकोमा अब उप्रान्त प्रति देवता रू. २५० कायम गरी रू. ५००

---

१८ प्रतिवेदन, पूर्ववत् १२, पृ. ५२ ।

१९ ऐजन, पृ. ६२ ।

उपलब्ध गराउने भन्ने व्यहोरा उल्लेख छ। लगत किताबमा यो रकम 'श्री गणेश भैरव गुठी' का लागि खर्च गर्न प्रदान गरिएको भनी उल्लेख भएको छ। हाल यो 'श्री गणेश भैरव गुठी' अस्तित्वमा रहेको पाइँदैन। त्यस्तै भाद्रवदी ११ देखि आश्विनवदी ४ रोजसम्म इन्द्रजात्रा सञ्चालन गर्न प्रदान गर्दै आइरहेको रकम पनि वृद्धि गरी ६७६।७६ रुपैयाँ व्यवस्था गरिएको व्यहोरा पनि त्यसमा उल्लेख गरिएको छ।

इन्द्रजात्रामा रथयात्रा चलाउनुपर्ने श्री कुमारीका लागि नगद सहयोग मात्र नभई धेरै ठाउँहरूमा स्थायी आयस्ताका रूपमा जग्गाजमिनहरू पनि राखिएको सुन्न पाइन्छ। तर अहिले कुमारीका नाम कहीं पनि त्यस्तो जग्गा नरहेको कुरा कुमारी घरका चिताइदार सदस्य एवं इन्द्रजात्रा व्यवस्थापन समितिका अध्यक्ष गौतम शाक्यले बताउनुभएको छ।

श्री कुमारीलाई हरेक वर्ष घोडेजात्राका दिन टुँडिखेलको छेउमा विराजमान गराई घोडेजात्रा अवलोकन गराउने परम्परा छ। उक्त दिन कुमारीलाई हाल नेपाल वायुसेवा निगमको केन्द्रीय कार्यालय रहेको स्थानमा राखेर घोडेजात्रा अवलोकन गराउने चलन थियो। निगमको कार्यालय रहेको उक्त सम्पूर्ण क्षेत्र नै कुमारीको नाममा राखिएको जग्गा हो भन्ने समितिका अध्यक्ष गौतम शाक्य बताउनुहुन्छ। पछि निगमको कार्यालय बनाए पछि कुमारीको उक्त जग्गा अतिक्रमण गरियो। खुल्ला ठाउँमा निगमको भवन बनाएकोले कुमारीलाई निगमको खुल्ला ठाउँमा राखेर जात्रा अवलोकन गराउन थालियो। पछि निगमले घोडेजात्राको एक दिन कुमारी बस्नका लागि आफ्नो कार्यालयमा एउटा छुट्टै कोठा उपलब्ध गराउन थाल्यो। तर त्यस्तो कोठामा श्री कुमारीको लागि राम्रो बस्ने व्यवस्था भने हुँदैनथ्यो। त्यसैले निगम कार्यालयमा कुमारीका लागि स्थायी रुपमै कोठाको व्यवस्था हुनुपर्ने भन्ने माग भए पछि निगमले कार्यालयको माथिल्लो तल्लामा एउटा कोठा स्थायी रुपले नै व्यवस्था गरिदिएको छ। अहिले घोडेजात्राका दिन कुमारीलाई सोही कोठामा आसन गराई घोडेजात्रा अवलोकन गराइन्छ। उक्त कोठामा अहिले कुमारीका लागि छुट्टै आसन पनि बनाइएको छ। घोडेजात्रा बाहेक अरु बेला उक्त कोठामा ताला लगाई साँचो भने कुमारी घरमै राख्ने गरिन्छ।[२०]

२० इन्द्रजात्रा व्यवस्थापन समितिका अध्यक्ष गौतम शाक्यसँग अन्तर्वार्ता।

इन्द्रजात्रा पर्वमा सहभागी हुनुपर्ने विभिन्न नाच एवं सहायक जात्राहरूको पनि आआफ्नै गुठीहरू रहेका छन् । इन्द्रजात्रा पर्वमा यी नै गुठीका गुठियारहरू सक्रिय भई जात्रा सम्पन्न गरिन्छ । तर यी गुठीहरूको छुट्टै आयस्ता नभएका कारण जात्रा सञ्चालन लगायत अन्य दैनिक कार्यहरू सञ्चालन गर्न भने समस्या रहेको देखिन्छ । सबैजसो गुठीको आयस्ताको रूपमा जग्गा राखिएको थियो रे भन्ने मात्रै सुनिन्छ, तर अहिले त्यो जग्गा कहाँ छ भन्ने विषयमा भने कसैलाई जानकारी छैन ।

इन्द्रजात्रासँग सम्बन्धित विभिन्न नाच एवं सहायक जात्राहरू मध्ये हनुमानढोकाको हाथुद्यः (श्वेत भैरव)सँग मात्रै आयस्ताको रुपमा केही जग्गा रहेको देखिन्छ । त्यो पनि केही रैतानी भइसकेको र केही गुठी संस्थान भित्रबाटै हिनामिना भएकोले अहिले थोरै मात्र बाँकी रहेको छ । त्यो पनि गुठी संस्थानको अधिनमा रहेकोले त्यसको भोगचलन श्वेत भैरवको गुठीले गर्न पाउँदैनन् । श्वेत भैरव सम्बन्धी जात्राको सम्पूर्ण कार्य 'ठूला भैरव गुठी' ले गर्दछ । हाल यसका सञ्चालक सुनिल ताम्राकार हुनुहुन्छ । शुरुमा यो गुठीमा ताम्राकार, तुलाधर र स्थापित समेत गरी जम्मा छ वटा जातीय समुदाय गुठियार थिए । पछि अरुले छोडेर गएपछि अहिले ताम्राकार मात्रै बाँकी रहेको छ ।[२१]

त्यस्तै मरु छ्वासपाखाबाट दागिं निकाल्नका लागि पनि 'दागिं गुठी' नामक छुट्टै गुठी राखिएको छ । यो मूलतः मरुटोलका ताम्राकार जातिको गुठी हो । यसमा १३ जना गुठियारहरू रहेका छन् । गुठीको आफ्नो कुनै आयस्रोत नभएको कारणले दागिं निकाल्ने कार्य समेत गुठियारहरूको निजी आवासबाट सञ्चालन गर्नुपर्ने अवस्था छ । इन्द्रजात्रामा दागिं निकाल्न गर्नुपर्ने सबै कार्य छ्वासपाखास्थित गुठीका गुठियारको घरबाट हुन्छ । जात्रा पछि दागिंको मुकुण्डो (ख्वाःपाः) र पोशाकहरू पनि सबै यही घरमा राखिन्छ ।

यस्तै इन्द्रजात्राका दिन काष्ठमण्डप छेउबाट बौमत निकालिन्छ । बौमत सञ्चालनका लागि बौमत गुठी बनाइएको । तर यसको लागि कुनै नियमित आयस्ताको व्यवस्था भने गरिएको छैन । काठमाडौंका स्थानीय मानन्धरहरूको परम्परागत छवटा टोल मिलेर यो जात्रा सम्पन्न गरिन्छ ।

इन्द्रचोकस्थित आकाश भैरवलाई इन्द्रजात्रामा मन्दिरबाट बाहिर

---

२१ ठूलो भैरव गुठी (हाथुद्यः) का अध्यक्ष सुनिल ताम्राकारसँग अन्तर्वार्ता ।

निकाली काठले बनाइएको दबलीमा आसिन गराई जात्रा मनाउने परम्परा छ। आकाश भैरवको जात्रा चलाउने लगायत अन्य कार्यहरू आकाशभैरव नाथ गुठी खलःले सञ्चालन गर्दछ। आकाश भैरवको मन्दिरमा रहेको पसल कवलबाट उठ्ने भाडा नै अहिले यो गुठीको एक मात्र आयस्ता बनेको छ। श्री आकाश भैरवको नाममा जग्गा जमिन नभएको पनि होइन तर लालपूर्जा नभएको कारणले त्यसको कूत बुझाउन आएको छैन। आकाश भैरवको नाममा रहेको उक्त जग्गाजमिन प्राप्त गर्न अदालतमा मुद्दा समेत हारेका कारण आयस्रोत सीमित हुन पुगेको कुरा गुठी सञ्चालक समितिका अध्यक्ष शरद कुमार डंगोलले बताउनुभएको छ।[२२]

वटु टोलमा प्रदर्शन गरिने बाकादे आजु सम्बन्धी कार्यहरू स्थानीय वटु मानन्धर सनाः गुठीले सञ्चालन  गर्दछ। गुठीको द्यःछेँमा हाल केही कोठाहरू भाडामा दिइएकोले त्यसबाट आउने बहालबाट जात्रा सञ्चालन एवं अन्य धार्मिक कार्यहरू सञ्चालन गरिन्छ। यस गुठीमा ५० जना सदस्यहरू रहेका छन्।

मरुटोलमा थाम उठाई आठ दिनसम्मै इन्द्रको मूर्ति प्रदर्शन गरिन्छ। यो कार्य गर्नका लागि पनि कुनै छुट्टै गुठी रहेको पाइँदैन। इन्द्रजात्रामा इन्द्रको मूर्ति प्रदर्शन गर्ने यो कार्य स्थानीय अशोक विनायक गुठीले सञ्चालन गर्दै आइरहेको छ। उक्त गुठीको खास काम अशोक विनायक (मरु गणेश) को हेरचाह गर्ने र मरु गणेशको जात्रा सञ्चालन गर्ने हो। इन्द्रजात्रामा इन्द्रको मूर्ति प्रदर्शन गर्दा भक्तजनहरूले चढाउने भेटी नै यसको प्रमुख आयस्रोत हो।[२३]

इन्द्रजात्रामा बसन्तपुरका विभिन्न ठाउँमा आँखीझ्याल जस्तो फ्रेम बनाई त्यसमा पाल्चा बालेर झिलिमिली पार्ने गरिन्छ। यो झिलिमिली बत्तीलाई ग्वराः मत भनिन्छ। यो ग्वराः मत विभिन्न ठाउँमा विभिन्न समूहरूले राख्ने गरिएता पनि माजु देवलसँगै रहने ग्वराः सबैभन्दा ठूलो मानिन्छ। यो ग्वराः मत बाल्दा भक्तपुरबाट समेत देखिन्छ भन्ने जनश्रुति छ। यसको लागि पनि कुनै गुठी र आयस्ताको व्यवस्था गरिएको छैन। यो ग्वराः लायकूसाःका

२२ आकाश भैरवनाथ (आजुद्यः) गुठी संचालक समितिका अध्यक्ष सरद डंगोलसँग अन्तर्वार्ता।
२३ अशोक विनायक गुठीका अध्यक्ष तीर्थमान महर्जनसँग अन्तर्वार्ता।

मानन्धरहरूले बनाउने गर्दछन् ।[२४]

ह्यूमत टोलमा इन्द्रजात्राका बेला बालिने ह्यूमत सञ्चालन गर्न भने एउटा छुट्टै गुठी राखिएको छ । उक्त गुठीको घरबाट आउने आयस्रोतबाट गुठीका कार्यहरू सञ्चालन गरिँदै आएको छ ।

यस्तै इन्द्रजात्राको पहिलो दिन उठाइने यःसिं सम्बन्धी सम्पूर्ण कार्य हाल केन्द्रीय मानन्धर संघबाट सञ्चालन हुँदै आइरहेको छ । यसको लागि पनि मानन्धर संघसँग आफ्नो कुनै आयस्रोत रहेको पाइँदैन । खास यःसिं उठाउने कार्यको जिम्मेवारी मानन्धर जातिको नाइके 'न्हयसः नायः' को काँधमा हुने गर्दथ्यो । अहिले केन्द्रीय मानन्धर संघको व्यवस्थापनमा यो कार्य हुँदै आएको छ ।[२५]

इन्द्रजात्राको सबैभन्दा महत्वपूर्ण र आकर्षक अंश हो श्री कुमारीको रथयात्रा । यो रथयात्रा कार्यको प्रमुख नेतृत्वमा कुमारी घर नै रहेको हुन्छ । तर कुमारीको रथयात्राको लागि पनि कुनै छुट्टै गुठीको व्यवस्था गरिएको छ । कुमारीको नाममा विभिन्न ठाउँमा जग्गाजमिनहरू आयस्ताका रुपमा राखिएको भनिएता पनि ती जग्गाजमिनका बारे भने अहिले कसैलाई जानकारी नभएको इन्द्रजात्रा व्यवस्थापन समितिका अध्यक्ष गौतम शाक्यले बताउनुभयो ।[२६]

किलागल टोलका स्थानीय ज्यापू समुदायले प्रदर्शन गर्ने दीप्याखं नाचको पनि आफ्नै दीप्याखं गुठी त छ, तर गुठीको आयस्ताका रुपमा कुनै जग्गा भने राखिएको छैन । उक्त दीप्याखं नाचको अभ्यास गर्ने लगायत नाचसँग सम्बन्धित पूजाआजाको काम समेत अरुको घरबाट सम्पन्न गर्नुपर्ने अवस्था थियो । हालै गुठियारहरूले ऋण लिएर पुरानो घर किनी त्यहाँ नयाँ आगमघर पुनर्निर्माण गर्न थालिएको छ ।

यस्तै इन्द्रजात्राको आकर्षक नाचको रुपमा रहेको लाखे नाच मजिपाः टोलका रञ्जितकार समुदायले सञ्चालन गर्दछ । यो नाच लगायत लाखे सम्बन्धी कार्यहरू लाखे आजु गुठीबाट सञ्चालन हुँदै आइरहेको छ । तर गुठी रहे पनि गुठीको आयस्ताको रुपमा कुनै जग्गाजमिन भने राखिएको छैन ।

---

२४ कामपा २३ का लायकूसाः टोलनिवासी प्रकाश मानन्धरसँग अन्तर्वार्ता ।

२५ केन्द्रीय मानन्धर संघका सचिव गजेन्द्र मानन्धरसँग अन्तर्वार्ता ।

२६ पूर्ववत् २० ।

लाखेका नाममा विभिन्न ठाउँमा जग्गा रहेको सुन्न पाइए पनि हाल गुठीको हातमा भने लाखेननीको एउटा घर बाहेक कुनै सम्पत्ति रहेको छैन ।[२७]

पुलुकिसि काठमाडौंको किलागल टोलका स्थानीय ज्यापू (महर्जन) समुदायको 'किलागः त्वाः खलः' बाट सञ्चालन हुन्छ । किलागः त्वाः खलःको आफ्नै गुठीछेँ (घर) हाल पुनर्निर्माणको चरणमा रहेको छ ।[२८]

हल्चोकका पुतुवार जातिले निकाल्ने सवःभक्कु नाच सञ्चालनका लागि श्री हल्चोक आकाश भैरव गुठी बनाइएको छ । उक्त गुठीको आफ्नै द्यःछेँ रहे पनि आयस्ताको कुनै स्रोत भने छैन । नाचका देवगणहरूको मुकुन्डो र पोशाकका लागि तीन वर्षमा एकपटक कौशी तोषाखानाले सहयोग गरे पनि जात्रा सञ्चालनका लागि आउने रकम भने सधैँ अपुग रहने गरेको छ ।

त्यस्तै इन्द्रजात्राका बेला भक्तपुरबाट महाकाली नाचका सात वटा समूह काठमाडौंमा आई नाच प्रदर्शन गर्ने परम्परा छ । ती सात वटा समूह देहाय-बमोजिम छन् : भाते ढिकुरका फैजु समूह, टौमढीका ब्यांजु समूह, भोटबहालका दैवेज्ञ समूह, खौमा लाय्कूका मुस्याख्वः समूह, दोक्छेका खर्बुजा समूह, गलसीं पुखु समूह र गलसीं पुखुका माकः प्याखं समूह । यी महाकाली नाच समूहहरूका पनि आफ्नो कुनै छुट्टै गुठी रहेको पाइँदैन । नाच देखाए वापत प्राप्त हुने सहयोग नै यो नाचको आयस्रोत हो ।[२९]

इन्द्रजात्रा आरम्भ भएकै दिनदेखि कुमारी घरको अगाडी त्रैलोक्यमोहन मन्दिरको पछाडिको पेटीमा दश अवतार प्रदर्शन गर्ने चलन छ । दश अवतारको सञ्चालन दिगु गुठीले गर्दछ । दश अवतारको लागि पनि छुट्टै गुठी रहे पनि यसको आफ्नै आयस्ताको व्यवस्था भने गरिएको पाइँदैन । यो गुठीमा सात परिवार रहेको छ । दश अवतारको जिम्मा यही सात परिवारमाथि रहन्छ । बसन्तपुरको त्रैलोक्यमोहन मन्दिर पनि यही गुठी मातहत रहेको छ । हरेक दिन मन्दिर खोलेर पूजा गर्ने अभिभारा पनि यही गुठीको रहेको छ ।

श्री कुमारीको रथयात्रा गर्दा रथमा बसी रथ हाँक्न नेतृत्वकारी भूमिका खेल्ने व्यक्तिलाई महाने भनिन्छ । रथयात्रा हुँदा महानेले रथको अगाडीको भागमा बसी 'ह्यस्ते' भन्दै रथ तान्नेहरूलाई हौस्याइरहेको हुन्छ । महानेले

---

२७ श्री लाखे आजु गुठीका अध्यक्ष राजीव रँजितकारसँग अन्तर्वार्ता ।

२८ किलागःत्वाःखलः (पुलुकिसि) का सदस्य मचाराजा महर्जनसँग अन्तर्वार्ता ।

२९ मिहाकाली प्याखं भक्तपुरका अध्यक्ष तुल्सीनारायण दण्डेख्यासँग अन्तर्वार्ता ।

'ह्यस्ते' भने पछि रथ तान्नेहरूले 'हाँइस्ते' भन्दै जोडले रथ तान्न थाल्दछ। इन्द्रजात्रामा श्री कुमारी, श्री गणेश र श्री भैरव तीन वटै रथलाई महानेले नै नेतृत्व दिई तान्न दिइरहेको हुन्छ। रथ तान्ने कार्यलाई अराजक हुन नदिई व्यवस्थित गर्न महानेको योगदान रहेको हुन्छ। महाने पनि परम्परादेखि एउटा गुठीकै रुपमा विद्यमान रहेको पाइन्छ।[३०]

हनुमानढोका क्षेत्रमा श्वेत भैरव मन्दिरको सँगै रहेको ठूलो घन्टा र ठूलो नगरा यो क्षेत्रकै प्रमुख आकर्षणको केन्द्रका रुपमा रहेको छ। श्वेत भैरव मन्दिर सँगै रहेको देगु तलेजुमा नित्य पूजा हुँदा यो ठूलो घन्टा र ठूलो नगरा बजाउने चलन रहँदै आएको छ। यसको लागि छुट्टै व्यक्तिहरूको व्यवस्था गरिएको छ। घन्टा र नगरा बजाए वापत उनीहरूलाई निश्चित पारिश्रमिक दिइने गरिन्छ।

तलेजु भवानीको मन्दिर तल रहेको चोकमा अवस्थित डबलीमा दशैं ताका दैत्य नाच प्रदर्शन गर्ने चलन रहेको छ। यो नाच काठमाडौं ओमबहालस्थित जोर गणेश टोलका शाक्यहरूद्वारा प्रदर्शन गरिन्छ। हनुमानढोका दरवार भित्र देखाइने हुनाले यो नाच धेरैले हेर्न सक्ने हुँदैन। हाल यो नाच स्थगित रहेको अवस्था छ। त्यस्तै इन्द्रजात्राका बेला ज्याठा टोलबाट निकालिने त्रिपुराशुरको खःप्याखं पनि हाल स्थगित रहेको छ। इन्द्रजात्रा व्यवस्थापन समितिले अब यी नाचहरू पनि पुनः प्रदर्शनका लागि सम्बन्धित गुठीहरूलाई घचघच्याइरहेको छ।[३१]

बसन्तपुरमा रहेको कँडेलचोक भगवती पृथ्वीनारायण शाहले नुवाकोटबाट ल्याएको विश्वास गरिन्छ। यो भगवती साथमा रहे इन्द्रजात्राका दिन काठमाडौंमा युद्ध जित्न सकिन्छ भनेर सपनीमा देखेका कारण उनले यो भगवती नुवाकोटबाट बोकेर काठमाडौं ल्याएका थिए। हरेक वर्ष यो भगवतीलाई जात्राका लागि नुवाकोट नै लाने गरिन्छ। हाल यो भगवती रहेको ठाउँ इन्द्रजात्रा ताका आठ दिन खोल्ने गरिएता पनि भगवतीको दर्शन भने गर्न दिइँदैन। एउटै परिवारले सञ्चालन गर्ने भए पनि यो भगवतीसँग सम्बन्धित जात्रा र पूजाआजाका लागि गुठीको व्यवस्था गरिएको छ।

इन्द्रजात्रा लगायत अरु पनि विभिन्न अवसरहरूमा श्री कुमारीलाई

---

३० पूर्ववत् २०।

३१ ऐजन।

तलेजुको मन्दिर भित्र प्रवेश गराउने चलन छ। सो अवसरमा श्री कुमारीलाई तलेजुको मन्दिर भित्र स्वागत गर्न एउटा छुट्टै गुठीको व्यवस्था गरिएको छ। यसलाई श्री कुमारी दुका गुठी भनिन्छ। यसमा तलेजुको मन्दिरसँग सम्बन्धित पुजारीहरू गुठी सदस्यका रुपमा रहेका छन्।

इन्द्रजात्रामा श्री कुमारीको रथयात्रा हुँदा रथको हेरचाह गर्न पनि एउटा गुठी बनाइएको छ। यो नयाँ गुठी हो। यसलाई श्री कुमारी, श्री गणेश, श्री भैरव रथ संरक्षण पुचः नाम दिइएको छ। रथयात्राका बेला केही गरी रथ बिग्रेमा मर्मत गर्ने कार्य यही पुचःले गर्दछ। यो पुचःमा सिकर्मी लगायतका व्यक्तिहरू रहेका छन्। यो पुचःलाई इन्द्रजात्राका बेला निश्चित रकम प्रदान गर्ने व्यवस्था गरिएको छ।[३२]

यसरी इन्द्रजात्रासँग सम्बन्धित विभिन्न नाच एवं सहायक जात्राहरूको लागि विभिन्न गुठीहरू बनाएको भएता पनि ती गुठीहरू सञ्चालनका लागि इन्द्रजात्राकै बेला सरकारबाट केही रकम प्रदान गर्ने बाहेक छुट्टै स्थायी स्रोतको व्यवस्था भने गरिएको छैन। स्थायी स्रोतको रुपमा केही गुठीहरूको जग्गा रहेको भनिए पनि हाल ती जग्गाहरू नासिइसकेको देखिन्छ। ती गुठीहरूको आयस्ताका रुपमा रहेको जग्गाजमिनहरू नासिइसकेको कारणले जात्रा सञ्चालनमा कठिनाई उत्पन्न भएको छ। यस्तै सरकारले उपलब्ध गराउने रकम समयानुकुल वृद्धि नहुने र अर्कोतर्फ बजार भाउ भने हरेक वर्ष बढिरहने भएकोले प्राप्त रकमबाट जात्रा सञ्चालन गर्न कठिन हुँदै आइरहेको गुनासो सबै गुठी खलःहरूको रहँदै आएको छ।

इन्द्रजात्रा सञ्चालनका लागि हाल सरकारबाट हरेक वर्ष १३ लाख ९३ हजार ६७० रुपैया एकमुष्ठ निकासा हुँदै आइरहेको छ। यो रकम कुन जात्राका लागि कति खर्च गर्ने भन्ने विनियोजन समेत त्यसैमा गरिएको छ। सरकारबाट प्राप्त हुने यो रकम इन्द्रजात्रासँग सम्बन्धित सबै प्रकारका नाच, सहायक जात्रा, पूजाआजामा संलग्न भक्तजन समूह, बाजागाजा समूह आदि समेत गरी विभिन्न ३६ वटा गुठी खलःहरूमा विभाजन गरिन्छ। बि.सं. २०७६ सालको इन्द्रजात्रामा संलग्न हुने सम्पूर्ण गुठी खलः एवं उनीहरूलाई सरकारबाट प्राप्त हुने सहयोग देहाय बमोजिम रहेको छ :[३३]

---

३२ पूर्ववत् २०।

३३ संस्कृति पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय, सांस्कृतिक प्रबर्धन कार्यक्रम।

| | | | | |
|---|---|---|---|---|
| १) | श्री कुमारी (कुमारी घर) | - | रू. | ५६,५६५ |
| २) | श्री गणेश | - | रू. | २१,९६० |
| ३) | श्री भैरव | - | रू. | २१,९६० |
| ४) | श्री श्वेत भैरव | - | रू. | ५४,१७० |
| ५) | श्री पुलुकिसि, किलाघः | - | रू. | ४०,१९५ |
| ६) | श्री लाखे आजु | - | रू. | १,४६,४१० |
| ७) | श्री हल्चोक भैरव | - | रू. | १,४६,४१० |
| ८) | श्री दश अवतार नाच | - | रू. | ७३,२०५ |
| ९) | श्री आकाश भैरवनाथ गुठी | - | रू. | ४३,२९० |
| १०) | श्री दागिं गुठी | - | रू. | ५२,७०० |
| ११) | श्री गणेश महाने | - | रू. | १४,६४० |
| १२) | श्री स्वच्छन्द भैरव | - | रू. | २३,४२० |
| १३) | श्री कुमारी दुका गुठी | - | रू. | ११,७१० |
| १४) | श्री तलेजु भवानी निनि समूह | - | रू. | २१,९६० |
| १५) | श्री ढूलो नगरा बाजा | - | रू. | १४,६४० |
| १६) | श्री कुमारी, श्री गणेश, श्री भैरव रथ संरक्षण पुचः | | | |
| | (७ वटा गुठी पुचः) | - | रू. | १४,६४० |
| १७) | श्री राज गुरुजु (पञ्चबुद्ध) | - | रू. | १४,६४० |
| १८) | श्री तलेजु भवानी नाय् समूह | - | रू. | ११,७१० |
| १९) | श्री वटु सनागु खलः बाकादे | - | रू. | २१,९६० |
| २०) | श्री कँडेलचोक भगवती | - | रू. | २१,९६० |
| २१) | श्री अशोक विनायक गुठी | - | रू. | २९,२८० |
| २२) | श्री कुमारी श्री भैरव महाने | - | रू. | २१,९६० |
| २३) | श्री कुमारी यात्रा पञ्चे बाजा (कुस्ले) | | रू. | ११,७१० |
| २४) | महाकाली नाच ६ थरी भक्तपुर : | | | |
| | २४.१) मुस्याजु समूह | - | रू. | ३८,३३० |
| | २४.२) खर्बुजा समूह | - | रू. | ३८,३३० |
| | २४.३) जोशी समूह | - | रू. | ३८,३३० |
| | २४.४) दैवज्ञ समूह | - | रू. | ४०,४६० |
| | २४.५) लोहला समूह | - | रू. | ३८,३३० |
| | २४.६) फैजु समूह | - | रू. | ३८,३३० |
| २५) | श्री रामचन्दै नाच समूह | - | रू. | ३८,३३० |

| | | | |
|---|---|---|---|
| २६) श्री देवी नाच किलाघः | - | रू. | ३६,६०० |
| २७) श्री केन्द्रीय मानन्धर संघ | - | रू. | ४३,९२० |
| २८) श्री लिंगोमा डोरी बाँध्ने गुठी र सरकारी नाइके | - | रू. | १४,६४० |
| २९) श्री बौमत गुठी | - | रू. | १७,५६५ |
| ३०) दैत्य जात्रा, जोर गणेश | - | रू. | १६,६३५ |
| ३१) त्रिपुराशुर नाच ज्याठा | - | रू. | ६,५८५ |
| ३२) कुमार नाच, असन | - | रू. | ७,३२० |
| ३३) श्रीश्रीश्री कुमारी भक्तजन सेवा समिति | | रू. | १३,३१० |
| ३४) श्री ठूलो घण्टा | - | रू. | १३,३१० |
| ३५) गाउने ढाडी, काठमाडौं | - | रू. | ४,३९० |
| ३६) श्री गणेश, श्री भैरव, श्री कुमारी सरकारी पूजा | - | रू. | ५७,२३० |
| **जम्मा** | **-** | **रू.** | **१३,९३,६७०** |

सरकारबाट उपलब्ध गर्दै आइरहेको यो रकम वर्तमान बजार भाउ अनुसार जात्रा सञ्चालनका लागि पर्याप्त नभएको स्पष्ट छ । यो सूचीमा सूचीकृत रहेका कतिपय जात्रा पर्वहरू खर्चकै कारण हाल नियमित भइरहेका छैनन् । त्यसलाई नियमित गर्न पनि इन्द्रजात्रा व्यवस्थापन समितिले सम्बन्धित गुठीहरूलाई सम्पर्क गरी अनुरोध गरिरहेको छ । सरकारले उपलब्ध गराउने रकम पर्याप्त नभएको कारणले हाल काठमाडौं महानगरपालिकाले पनि इन्द्रजात्राका लागि सहयोग उपलब्ध गर्न थालेको छ । यसबाट जात्रा सञ्चालन कार्य केही हदसम्म सहज भएको छ । काठमाडौं महानगरपालिकाले काठमाडौंका मूर्त अमूर्त सम्पदाहरूको जगेर्ना गर्ने क्रममा विभिन्न गुठीसँग सम्बन्धित गुठी घर, आगम घर, द्यःछेँ आदिको पुनर्निर्माण र उनीहरूबाट सञ्चालन हुने जात्रापर्वहरू सञ्चालनमा पनि सहयोग गर्दै आइरहेको छ । साथै आयस्ता सहितको गुठी नभई संकटमा परेका सांस्कृतिक पर्वहरूलाई सुचारु गर्न पनि काठमाडौं महानगरपालिकाले उल्लेख्य सहयोग गर्दै आइरहेको छ ।

यसै क्रममा इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच एवं सहायक जात्राहरूका समस्याहरू समाधान गर्न पनि काठमाडौं महानगरपालिकाले सहयोग गर्दै

आइरहेको छ । यस्तै प्रकारका सहयोगहरूलाई व्यवस्थित गर्नको लागि इन्द्रजात्रासँग आवद्ध गुठी खलःहरूले गएको एक दशकदेखि सामुहिक प्रयासको थालनी गरेका छन् । यसको लागि सबै गुठी खलःहरू मिलेर 'इन्द्रजात्रा व्यवस्थापन समिति' नामक एउटा संयोजनकारी समिति गठन गरी त्यस मार्फत कार्य अघि बढाउन थालेको छ । इन्द्रजात्रा व्यवस्थापन समितिको गठन पछि जात्रासँग आबद्ध आर्थिक, व्यावहारिक समस्याहरू हल गर्न सहयोग मिलेको छ ।

इन्द्रजात्रा सञ्चालनका लागि आवश्यक व्यवस्थापन सम्बन्धी कार्य गर्न 'इन्द्रजात्रा व्यवस्थापन समिति' गठन गरिएको हो । वि.सं. २०६५ सालमा यो व्यवस्थापन समिति गठन भएको थियो । व्यवस्थापन समिति अस्तित्वमा आउनु भन्दा अघि पनि इन्द्रजात्रा त सञ्चालन हुन्थ्यो, तर त्यतिबेला इन्द्रजात्रामा सहभागी हुने विभिन्न नाच, पर्व, बाजागाजा खलः तथा गुठीहरू बीच कुनै समन्वय भने हुँदैनथ्यो । जात्रा शुरु भयो कि सबैले आफूले गर्नुपर्ने कामहरू गर्ने र जात्रा सकिए पछि आआफ्नो बाटो लाग्ने गर्दथे । जात्रामा सहभागी हुने नाच तथा पर्व सञ्चालक गुठी खलःहरूका बीच एकआपसमा परिचय समेत थिएन ।

यसै क्रममा वि.सं. २०६५ सालको इन्द्रजात्रामा एउटा अप्रिय घटना हुन पुग्यो । इन्द्रजात्रामा सहभागी हुनु पर्ने लाखे, सवःभक्कु, पुलुकिसि, श्वेत भैरव आदिलाई बलि दिनका लागि सरकारबाट उपलब्ध गराउँदै आइरहेको राँगो अब उप्रान्त उपलब्ध नगरिने भन्ने सूचना एक्कासी प्राप्त भयो । सरकारले बलिका लागि पशु उपलब्ध नगराउने बारे पहिले केही भनिएको थिएन । जात्रा शुरु भइसके पछि अचानक यस्तो सूचना आउँदा सम्बन्धित गुठीहरू सबै आक्रोशित भए । त्यसपछि जात्रामा सहभागी भइरहेका सबै नाचहरू बन्द भए । बाजागाजाहरू पनि बन्द भए । बलि दिन बन्द गरिएको विरोधमा संस्कृतिप्रेमीहरूले नाराबाजी समेत गरे । विरोधका बीचमै अघि बढिसकेको श्री कुमारीको रथयात्रा पनि बीचैमा रोकियो । त्यसपछि जात्रा अघि बढ्न सकेन । देवीदेवताहरूलाई बीचबाटै रथबाट तल ओराली निवासमा फर्काउनु पऱ्यो ।

जात्रा अवरुद्ध भए पछि सरकारले जात्रासँग आवद्ध गुठी खलःहरूलाई वार्तामा बोलाए । तत्कालीन अर्थमन्त्री डा. बाबुराम भट्टराईसँग राति नै

सिंहदरवारस्थित उहाँको कार्यकक्षमा जात्रासँग आवद्ध विभिन्न गुठी खलःका प्रतिनिधिहरू बीच वार्ता भयो । उक्त वार्तामा इन्द्रजात्रासँग आवद्ध विभिन्न गुठी खलःका तर्फबाट सामुहिक रूपमा १० बुँदे माग पेश गरिएको थियो । सिंहदरवारमा भएको उक्त वार्तामा इन्द्रजात्रा सञ्चालनका लागि नेपाल सरकारबाट एकमुष्ठ रकम प्रदान गर्ने र भविष्यमा इन्द्रजात्रा लगायत उपत्यकाका अन्य जात्राहरूलाई कसरी व्यवस्थित रुपले सञ्चालन गर्ने भन्ने विषयमा अध्ययन गर्न एउटा अध्ययन समिति गठन गर्ने निर्णय भयो । यस पछि इन्द्रजात्रा सञ्चालनका लागि सरकारले प्रदान गर्ने भनिएको रकम प्राप्त गर्न मंगलकृष्ण मानन्धरको संयोजकत्वमा इन्द्रजात्रासँग सम्बन्धित सबै गुठी खलःहरूको एउटा तदर्थ समिति गठन भयो । वि.सं. २०६६ सालमा वरिष्ठ सांस्कृतिक अभियन्ता मोहनकृष्ण डंगोल संरक्षक र मंगलकृष्ण मानन्धर अध्यक्ष रहेको उक्त समितिलाई जिल्ला प्रशासन कार्यालयमा विधिवत् दर्ता गरियो । उक्त समितिलाई सरकारले पहिलोपल्ट रू. ६ लाख प्रदान गरेको थियो । वि.सं. २०६८ सालमा उक्त समितिको नेतृत्व परिवर्तन भई नयाँ अध्यक्षका रुपमा कुमारी छेँका गौतम शाक्य आउनुभयो । हाल शाक्य नै उक्त समितिका अध्यक्ष हुनुहुन्छ ।

समितिलाई सरकारबाट रकम प्रदान गर्दा उक्त रकमलाई हरेक २ वर्षमा १० प्रतिशत वृद्धि गर्ने सहमति भएको थियो । हाल समितिलाई नेपाल सरकारका तर्फबाट वर्षेनी १३ लाख ९५ हजार ६७० रुपैयाँ प्रदान गर्दै आइरहेको छ । इन्द्रजात्रा पर्व सञ्चालनका लागि आर्थिक व्यवस्थापन गर्न गत वर्ष इन्द्रजात्राकै समयमा नेपाल सरकारले पाँच करोड रुपैयाँको अक्षय कोष खडा गर्ने घोषणा गरेको थियो । उक्त अक्षय कोष खडा गर्न संघीय सरकार, बागमती प्रदेश सरकार, काठमाडौं महानगरपालिका र गुठी संस्थानबाट आर्थिक सहयोग उपलब्ध गर्ने भएको छ ।

समिति गठन हुनु भन्दा पहिले इन्द्रजात्रा पर्व सञ्चालनका लागि सामुहिक कार्यहरू गर्ने चलन थिएन । सबै गुठी खलःहरू जात्रासँग सम्बन्धित आआफ्नो सहायक जात्राका कामहरू गर्दथे र जात्रा सकिए पछि आफ्नै ढंगले विजर्सन गर्दथे । जात्रा पछि पुनः भेटघाट गर्ने वा जात्राका बारेमा समीक्षा गर्ने चलन पनि थिएन । समिति गठन भए पछि जात्रा सञ्चालन कार्यमा सामुहिकताको भावना जागृत भएको छ । जात्रासँग सम्बन्धित कुनै

समस्या भए सबैभन्दा पहिले समितिमै प्रस्तुत गरिन्छ । समितिले त्यसलाई सम्बन्धित निकायमा पुऱ्याइदिने र त्यहाँबाट काम सम्पन्न गराउने चलन छ ।

यसरी हेर्दा इन्द्रजात्रा पर्व सञ्चालन गर्न दर्जनौं गुठीहरू अस्तित्वमा रहेको देखिन्छ । यो जात्रासँग सम्बन्धित विभिन्न गुठीहरूको अध्ययन गर्दा इन्द्रजात्रा नेपालमा प्राचीनकालदेखि नै प्रचलनमा रहेको महत्वपूर्ण जात्रा हो भन्ने जानकारी पाउन सकिन्छ। इन्द्रजात्रा धेरै दिन चलाउनु पर्ने र धेरै समूहहरू मिलेर सम्पन्न गर्नुपर्ने ठूलो जात्रा हो । यो जात्रा सम्पन्न गर्न धेरै गुठीहरू सक्रिय हुनुपर्ने भएकोले यसले नेपाली समाजमा विद्यमान गुठीको महत्वलाई पनि दर्शाएको छ । तर गुठी भएर पनि त्यसको आयस्ताका लागि राखिएका जग्गाजमिनहरू नासिँदै जानु भने यसको दुःखद् पक्ष हो । आयस्ताको अभावले गर्दा यी गुठीहरू अहिले जीर्ण अवस्थामा रहेका आफ्ना आगम घर, गुठी घरहरू समेत जीर्णोद्धार गर्न नसक्ने अवस्थामा पुगिसकेका छन् । गुठीहरूकै पहलमा इन्द्रजात्रा पर्व सञ्चालन हुँदै आइरहेको कारणले गुठीहरू कमजोर भए त्यसको असर जात्रामा पनि पर्न सक्ने सम्भावना रहन्छ । इन्द्रजात्रा पर्व सञ्चालन गर्न सरकारबाट हाल उपलब्ध गराउँदै आइरहेको आर्थिक सहयोग धेरै अगाडी निर्धारण गरिएको दररेटमा आधारित छ । समयसापेक्ष प्रचलित बजार भाउ अनुसार यसलाई समायोजन नगरिएको कारणले सरकारले उपलब्ध गराउने यस्ता सहयोग नगण्य सरह हुन पुगेको छ । जात्राका लागि उपलब्ध गराउने यी सहयोगहरूलाई समयसापेक्ष समायोजन गर्न नेपाल सरकारले नीतिगत रुपमै सुधार गर्नु आवश्यक छ । यस बाहेक पनि इन्द्रजात्रासँग सम्बन्धित गुठीहरूका सांस्कृतिक जिन्सी सामानहरू, गुठीको आगम घर, द्यःछेँ, गुठीछेँ आदि सम्पूर्ण कुराहरू चुस्तदुरुस्त राख्न नेपाल सरकारले विशेष पहल गर्नु पर्दछ । हुन त इन्द्रजात्रासँग सम्बन्धित गुठीहरूका आगम घर, गुठी घरहरू पुनर्निर्माण कार्यमा हाल काठमाडौं महानगरपालिकाबाट पनि आवश्यक सहयोग गर्दै आइरहेको छ। तर इन्द्रजात्रा नेपालको ऐतिहासिक महत्वको प्राचीन एवं राष्ट्रिय पर्व भएको कारणले इन्द्रजात्रा पर्व सञ्चालन गर्न र इन्द्रजात्रासँग सम्बन्धित सबै गुठीहरूको संरक्षण र प्रवर्द्धन गर्न नेपाल सरकारबाट नै प्राथमिकताका साथ सहयोग गर्न आवश्यक छ । यसका साथै इन्द्रजात्राको दिगोपनाका लागि इन्द्रजात्रासँग आवद्ध गुठीहरूलाई पनि समयानुसार सशक्तीकरण गर्दै लैजानु पर्ने आजको आवश्यकता हो ।

# इन्द्रजात्रासँग राजनीतिक तथा सामाजिक–सांस्कृतिक सम्बन्ध

इन्द्रजात्रा समाजका सबै वर्ग र जातिका मानिसहरू साथसाथै राष्ट्रप्रमुख र राज्यका विभिन्न अंगका प्रमुखहरू समेत एकै ठाउँमा भेला भई उल्लासपूर्वक मनाउने एक विशेष पर्व हो । इन्द्रजात्रा मनाउँदा सर्वसाधारण मानिसहरू भेला भएर केवल बाजागाजा बजाई नाचगान गर्ने र धार्मिक अनुष्ठानका कार्यहरू मात्रै सम्पन्न गरिँदैन । योसँग अरु धेरै औपचारिक रुपमा सम्पन्न गर्नुपर्ने राजकीय कार्यहरू पनि जोडिएर आएका हुन्छन् । इन्द्रजात्रा पर्व मनाउने क्रममा तत्कालीन राजा, राजाका परिवारजन, दरवारका भाइभारदारहरू, उच्चपदस्थ पदाधिकारी एवं सैनिक अधिकारीहरू समेत सक्रियपूर्वक सहभागी भएका हुन्छन् । राजा र दरवारका उच्चपदस्थ पदाधिकारीहरूको सक्रिय सहभागिताले इन्द्रजात्रालाई धार्मिक-सांस्कृतिक पर्व मात्र होइन एक राजकीय उत्सवकै रुपमा समेत झल्को पाउन सकिन्छ । नेपालमा विभिन्न जात्रापर्वहरू मनाउने परम्परा रहेको छ, तर इन्द्रजात्रा जस्तो राज्यका अंगहरूसँग पनि उतिकै घुलमिल भई मनाउने पर्व अर्को पाइँदैन ।

इन्द्रजात्रा नेपालको एक महत्वपूर्ण धार्मिक-सांस्कृतिक पर्व भए पनि यसको मर्म र यससँग सम्बन्धित विभिन्न नाच एवं पर्वहरूको आसय भने राज्यशक्तिसँग पनि प्रत्यक्ष जोडिएको पाइन्छ । इन्द्रजात्रा पर्व आयोजना गर्नाले राज्यसत्ता स्थिर बनाउन, शत्रुको आक्रमणबाट राज्यलाई सुरक्षित तुल्याउन, राज्यको आर्थिक उन्नति-प्रगति गर्न र कुनै पनि रोगव्याधीबाट राज्य एवं देशवासीलाई बचाउन दैवीय शक्ति प्राप्त हुने विश्वास गरिन्छ ।

इन्द्रजात्राको प्रारम्भ नै शत्रुलाई पराजित गरी आफ्नो गुमेको राज्यशक्ति पुनः प्राप्त गर्ने अभिप्रायले भएको पाइन्छ । लेखक कुलचन्द्र कोइरालाले

'बिष्णुधर्मोत्तर पुराण' लाई उद्धृत गरी लेख्नुभए अनुसार शत्रुको आक्रमणबाट गद्दी छोडेर भाग्न बाध्य भएका देवराज इन्द्र भगवान बिष्णुको शरणमा पुगे। बिष्णुले उनलाई एउटा ध्वजा दिई युद्धमा जान सल्लाह दिए। देवराज इन्द्र उक्त ध्वजा लिई पुनः युद्ध गर्न गए। युद्धमा उनको जित भयो। जित हासिल गरी आफ्नो गुमेको राज्य पुनः प्राप्त गर्न देवराज इन्द्र सफल भए।[१]

यस्तै महाभारतको आदिपर्वमा उल्लेख भए अनुसार एकपटक चेदी देशका राजा वसु राजपात छोडी जंगलतिर बस्न गए। उनको जंगलबासका कारण राज्य अस्तव्यस्त भएका कारण उनलाई आफ्नो राज्यमा फर्काई पुनः राजकाजमा लगाउन देवताहरूले इन्द्रलाई आग्रह गरे। इन्द्रले राजा वसुलाई बाँसमा बेरिएको ध्वजा दिई यसलाई उठाएमा जनताको रक्षा हुने कुरा बताए। उक्त ध्वजा पाए पछि राजा वसु पुनः राजकाजमा फर्के। उनको राज्य पुनः समृद्ध हुन थाले। अर्को वर्षदेखि उनले उक्त ध्वजालाई उठाई इन्द्रको आराधना शुरु गरे। त्यसपछि अरु राजाहरूले पनि आफ्ना राज्य स्थिर बनाउन त्यसैको नकल गरी इन्द्रध्वजा उठाई आराधना गर्न थाले। यस पश्चात जसले यो ध्वजा उठाउँछ उसको राज्य विस्तार हुने, राज्यमा शत्रुले आक्रमण गर्न नसक्ने, गुमेको भूभाग पुनः प्राप्त हुने र धेरै उब्जनी भई राज्यको उन्नति पनि हुने विश्वास गर्न थालियो।[२]

यस प्रकार इन्द्रजात्रा पर्व गुमेको राज्य शक्ति पुनः प्राप्त गर्ने, आफ्नो राज्य स्थिर बनाउने, राज्यलाई शत्रुको आक्रमणबाट सुरक्षित तुल्याई अक्षुण्ण राख्ने अभिप्रायबाट आरम्भ गरिएको वर्णन पुराणहरूमा उल्लेख भएको पाइन्छ। यी वर्णनहरूबाट इन्द्रजात्रा पर्वको महत्व सांस्कृतिक रुपमा मात्र नभई राजनीतिक रुपमा अझ बढी रहेको देखिन्छ।

धार्मिक साहित्यहरूमा मात्र इन्द्रजात्राको उल्लेख भएको नभई वास्तवमा इन्द्रजात्रा मनाउने प्रामाणिक इतिहासहरू पनि धेरै पाइएको छ। इतिहासको विभिन्न समयमा इन्द्रजात्रा भारतको विभिन्न ठाउँमा, खास गरी बंगालमा, मनाउने गरेको परम्परा देखिन्छ। भारतमा मुस्लिमहरूको आक्रमण र शासन पछि त्यहाँ चलिरहेको इन्द्रजात्रा पर्व लोप हुन पुग्यो। नेपालमा भने ऐतिहासिककालदेखि नै यो जात्रा निरन्तर रुपमा चलिरहेको छ। तर नेपाल

१ कुलचन्द्र कोइराला, *इन्द्रजात्रा,* काठमाडौंः गुठी संस्थान, रामशाह पथ, बि.सं. २०४२, पृ. ९।

२ Gerard Toffi, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present,* Kirtipur: Contributions To Nepalese Studies (Volume 19), TU, 1992, p. 79.

र भारत दुवै देशमा इन्द्रजात्रा प्रारम्भ गर्नुको मूल आसय भने राज्यशक्तिलाई बलियो बनाउनु, राज्यलाई शत्रुबाट सुरक्षित बनाउनु, राज्यको समृद्धि गर्नु नै रहेको देखिन्छ ।

नेपालमा इन्द्रजात्राको इतिहास शुरुदेखि नै राजा र राज्यशक्तिसँग जोडिएर आएको पाइन्छ । इतिहास शिरोमणि वाबुराम आचार्यले लिच्छविकालको प्रारम्भतिर काठमाडौंको दक्षिणकोलिग्राम क्षेत्रमा बनाइएको 'इन्द्र कुट' नामक राजदरवार अगाडि इन्द्रध्वज उठाएर इन्द्रजात्रा आरम्भ गरिएको भनाई राख्नुभएको छ । धेरै इतिहासकारहरूले राजा गुणकामदेवले व्यवस्थित काठमाडौं शहर निर्माण गरेपछि यो शहरको सुरक्षा र स्थायित्वको कामना गर्दै इन्द्रजात्रा पर्व आरम्भ भएको दावी गरेका छन् । यी ऐतिहासिक मान्यताहरूलाई पुष्टि गर्ने कुनै पनि प्रामाणिक सामग्रीहरू अहिलेसम्म पाइएको छैन । तर यी कथनहरूले पनि राजा, राज्य र राजशक्तिको सुरक्षाको आकांक्षाबाट नै इन्द्रजात्रा पर्व आरम्भ भएको भन्ने मनसाय व्यक्त भएको पाइन्छ ।

काठमाडौंमा मनाइने इन्द्रजात्रामा देखाइने विभिन्न नाचहरू पनि राज्य र राजशक्तिको सुरक्षासँग नै सम्बन्धित रहेको पाइन्छ । ती सबैजसो नाचहरूमा राज्यका शत्रुहरू अर्थात दैत्यहरूले राज्यमाथि हमला गर्न खोजेको अवस्थामा देवीदेवताहरूले उनीहरूसँग युद्ध लडी आफ्नो मुलुकलाई बचाएको कथालाई नै देवी नाचको माध्यमबाट प्रस्तुत गरिरहेका हुन्छन् । किलागलको दीप्याखं, हल्चोकको सवःभक्कु, भक्तपुरको महाकाली नाचका पात्र र नाच्ने शैली फरक भए पनि ती नाचहरूले दिने सन्देश भने एउटै हो- बाहिरी शत्रुबाट आफ्नो मुलुकलाई सुरक्षित गर्ने । किलागलबाट निकालिने दीप्याखंमा देशलाई दुःख दिइरहने दैत्यलाई देवीले भगाई राज्यको रक्षा गरेको कथा पाइन्छ । उक्त नाचमा देशका जनतालाई सधैँभरि दुःख दिइरहने दैत्यलाई मार्न शुरुमा भैरवले दैत्यसँग युद्ध गर्छन् । तर दैत्य भैरवभन्दा पनि बलियो भएकोले दैत्यसँग युद्ध गर्दागर्दै नसक्ने भए पछि भैरव आफै भाग्नुपर्ने हुन्छ । त्यसपछि कुमारी आई दैत्यसँग लडाइँ गर्छिन् । केही बेरको युद्ध पछि कुमारीले दैत्यलाई पराजित गरी त्यहाँबाट भगाउँछिन् । अरु देवी नाचहरूमा यस्तो युद्ध पछि दैत्यलाई वध गरेको दृश्य रहेका हुन्छन् भने यो देवी नाचमा दैत्यलाई भगाउने गरिएको पाइन्छ ।

त्यस्तै इन्द्रजात्रामा भक्तपुरबाट आई प्रदर्शन गरिने महाकाली नाचमा पनि देवीहरूले राज्यमा सधैं आतंक मच्चाइरहने महिषासुर दैत्यको वध गरी देशमा शान्ति कायम गरेको कथालाई नाट्य प्रस्तुतीबाट अभिव्यक्त रहेको पाइन्छ। लोकमा महिषासुर दैत्य लगायत असुरहरूले धेरै दुःख दिने गरेको हुँदा तिनीहरूलाई समाप्त पार्न तीन जना देवीहरू महाकाली, महालक्ष्मी र कुमारी प्रकट हुन्छन्। त्यस पछि तीनवटै देवीहरूले महिषासुर दैत्यसँग युद्ध गर्छन्। उक्त युद्धमा दैत्यको वध गरी अन्य दैत्यहरूलाई समेत सखाप पारेको सन्देश नै यो नाचले दिने गरेको पाइन्छ। भक्तपुर राज्य विभाजन भएपछि काठमाडौंमा शासक बनेका नयाँ राजाले आफ्नो पुर्खौली राज्यको चिन्ह भएकोले मात्र होइन आफ्नो नयाँ राज्यको सुरक्षा र बाह्य तत्वको आक्रमणबाट रक्षा गर्ने मनशायबाट समेत यो महाकाली नाचलाई इन्द्रजात्रासँगै जोडेर काठमाडौंमा प्रस्तुत गर्ने गरेको अनुमान गर्न सकिन्छ।

यस्तै हल्चोकको सवःभक्कु अर्थात हल्चोक आकाश भैरवको नाचमा पनि महिषासुर दैत्यको वध गरी राज्यमा सुखशान्ति कायम गरिएको कथा नाट्यशैलीमा प्रस्तुत गरिएको छ। यो नाच देखाउँदा हनुमानढोका भित्र नासल चोकमा महिषासुरको प्रतीक स्वरुप राँगो दिने र सवःभक्कुले उक्त राँगोलाई मार हानी वध गर्ने चलन थियो। अहिले यसरी राँगो दिई नाचको रुपमै वध गर्ने चलन हराइसकेको भए पनि सवःभक्कु नाचले दिने सन्देश भने राज्यमा दुःख दिने असुरलाई देवीको हातबाट वध गरी राज्यको सुरक्षा गर्नु नै हो भनी बुझ्न सकिन्छ।

राज्यमा दुःख दिने विभिन्न असुरहरूको वध गरी राज्यको सुरक्षा दिने कार्यमा भैरवको भूमिका रहिरहेको देखिन्छ। इन्द्रजात्रामा देखाइने विभिन्न नाचहरूमा दैत्यसँग गरिने युद्धमा भैरवको पनि सहभागिता देखाइने गरिन्छ। तर इन्द्रचोकस्थित आकाश भैरवलाई भने इन्द्रजात्रामा यो भन्दा फरक ढंगले मान्ने गरिएको पाइन्छ। इन्द्रचोकस्थित आकाश भैरवलाई पहिलो किराँती राजा यलम्बरको शिरको रुपमा लिने गरिन्छ। राज्यसत्ता प्राप्तीको लागि भएको महाभारत युद्ध किराँती राजाले यलम्बरले पनि अवलोकन गरेका थिए। उनी युद्ध हेर्न भनी हिंडेका बेला कृष्णले छल गरी उनको टाउको काटेको र उक्त टाउको आकाशमा उडेर गई त्यहींबाट महाभारत युद्ध हेरेका थिए। युद्ध पछि टाउको पुनः आफ्नै राज्यमा फर्केर आए। यसरी यलम्बरले राज्यसत्ताका

लागि भएको महाभारत युद्ध हेरेको र उनी आफै पनि किरांत वंशका पहिलो राजा भएको कारणले राज्यशक्तिसँग उनको प्रत्यक्ष सम्बन्ध रहेको पाइन्छ । त्यसै कारणले पनि राज्यको रक्षा र बाहिरी शत्रुबाट राज्यलाई बचाउने मनसायबाट शुरु गरिएको इन्द्रजात्रा पर्वमा इन्द्रचोकस्थित आकाश भैरवको पनि विशेष जात्रा गरिएको अनुमान गर्न सकिन्छ ।

इन्द्रजात्रालाई अझ विकसित र विस्तार गर्ने कार्य मल्लकालमा आएर भएको देखिन्छ । मल्लकालीन राजाहरू इन्द्रजात्राप्रति निक्कै ठूलो सम्मान प्रकट गर्दथे भन्ने कुरा इतिहासका विभिन्न घटनाहरूबाट पुष्टि हुन्छ । इन्द्रलाई एक लडाकू देवताको रुपमा मान्ने गरिन्छ । इन्द्रको पूजाआजा, आराधना गर्नाले राज्य बलियो हुने, राज्यलाई शत्रुहरूको आक्रमणबाट बचाउन सकिने र आफ्नो राज्य स्थिर राख्न सकिने विश्वास गरिन्छ । त्यसैले मल्लकालको विभिन्न कालखण्डमा विभिन्न मल्ल राजाहरूले इन्द्रजात्रामा अरु नयाँ सहायक पर्वहरू थपेर यो पर्वलाई अझ समृद्ध बनाएको पाइन्छ ।

नेपालको मध्यकालीन इतिहासमा कान्तिपुरका राजा प्रताप मल्ललाई अत्यन्त झगडालु राजाका रुपमा लिइन्छ । उनको पालामा कहिले ललितपुर त कहिले भक्तपुरसँग युद्ध भइरहने गर्थ्यो । प्रताप मल्लले बेला बेलामा ललितपुर र भक्तपुरमा आक्रमण गरी त्यहाँको कलात्मक मूर्ति एवं अरु सामग्रीहरू लुटी ल्याई आफ्नो दरवारमा सजाउने पनि गरेका थिए भनिन्छ । त्यसैले उनलाई सधैँ आफ्नो राज्यमा अरु राज्यबाट आक्रमण हुने डर भइरहन्थ्यो । आफ्नो राज्यलाई शत्रुबाट बचाइराख्न पनि राजा प्रताप मल्लले इन्द्रजात्रालाई भव्य रुप दिएको अनुमान गर्न सकिन्छ । यसरी आफू सधैँ युद्धमा सरिक भइरहनु पर्ने भएको कारणले पनि राजा प्रताप मल्लले इन्द्रजात्रालाई पहिलेभन्दा तडकभडकपूर्वक ढंगले मनाउने चलन शुरु गरेको कुरा इतिहासमा उल्लेख गरिएको छ ।

एकपटक राजा प्रताप मल्ल हनुमानढोका दरवार भित्र निर्माण गरेको भण्डारखाल पोखरीको लागि बुढानिलकण्ठबाट पानी ल्याउन ढल खन्दै जाँदा एक वर्ष नै रानीवनमा बस्नुपर्ने भयो । त्यो बेला उनले इन्द्रजात्रा पर्व नै रानीवनमा मनाएका थिए ।[३] राजा प्रताप मल्लले इन्द्रजात्रालाई कति धेरै महत्व दिएका रहेछन् भन्ने कुरा यो ऐतिहासिक तथ्यले स्पष्ट गर्दछ ।

---

३ तोफाँ, पूर्ववत् २, पृ. ८८ ।

मल्ल राजाहरूले आफ्नो राज्य सञ्चालनमा तलेजु भवानीलाई प्रमुख शक्तिका रुपमा लिने गर्दछन् । तलेजु भवानीको प्रतीकका रुपमा श्रीयन्त्रलाई मल्ल राजाहरूले आफ्नो राज्य शक्तिकै श्रोतको रुपमा मान्यता दिने गरेका छन् । मल्ल राजाहरूको पुर्ख्यौली राज्य सिम्रौनगढमा पनि तलेजुको छुट्टै मन्दिर बनाई तलेजु भवानीको प्रतीक श्रीयन्त्रको श्रद्धापूर्वक पूजाआजा गर्ने चलन थियो ।

सन् १३२५ मा दिल्लीका सुल्तान गयासुद्दिन तुगलकले सिम्रौनगढमा आक्रमण गरी राज्य नै ध्वस्त पारे पछि राजा हरसिंहदेव आफ्ना सन्तान र केही सेना लिएर त्यहाँबाट भागे । तीनपाटनको पूर्वोत्तर तर्फ पहाडमाथि किल्लामा आफ्ना आराध्यदेवी (पाटनदेवी अर्थात पट्टनदेवी) को स्थापना गरी आफ्नो गुमेको राज्य पुनः प्राप्त गर्ने उद्देश्यले नेपालका शासकवर्गसँग सैनिक सहायता माग्न रानी देवलदेवीका साथ राजकुमार जगतसिंहदेवलाई राजा हरसिंह देवले नेपाल पठाए । तर देवलदेवी फर्केर आउन नपाउँदै राजा हरसिंहदेवलाई तामाकोशीको पश्चिमी किनारा नजिकै पर्ने रजगाउँका माझी भारो (रामग्रामका भारदार) ले पक्री कैद गरे । उता नेपालमा शरण लिन आएका देवलदेवी र राजकुमार जगतसिंहलाई नेपालका राजा रुद्रदेवले राजधानी भक्तपुरको युथुनिम दरवारमा ल्याएर इज्जतसाथ राखे ।[४]

नेपालमा देवलदेवीले शरण पाउने बित्तिकै आफूले लिएर आएको 'तलेजुको कलश' दरवारमा स्थापना गर्न लगाए । यहाँका राजाहरूले पनि तलेजुलाई मान्न थाले । उनका छोरा जगत्सिंहले यहींकै राजकुमारी नायकदेवीसँग विवाह गरे । यस जोडीबाट राजल्लदेवीको जन्म भयो । उनै राजल्लदेवीको विवाह जयस्थिति मल्लसँग भयो ।[५]

राजा यक्ष मल्लको पालामा नेपाल मण्डल राज्य विभाजन भई चार टुक्रा हुन पुग्यो । मूल राज्य भक्तपुर भए पनि यक्ष मल्लका छोरा र नातिहरूलाई ललितपुर, कान्तिपुर र बनेपामा स्वतन्त्र राज्य गर्न दिइयो । राज्य विभाजित भए पछि ती विभाजित राज्यहरूमा तलेजु भवानी पनि स्थापित हुँदै गए । मल्ल राजाहरूले आफ्नो राज्य शक्तिको श्रोत नै तलेजु भवानीलाई मान्ने

४ मोहनप्रसाद खनाल, *सिमरौनगढको इतिहास*, काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिवि, बि.सं. २०५६, पृ. ७०-७१ ।

५ डा. पेशल दाहाल, *नेपालको इतिहास*, काठमाडौंः एम.के. पब्लिसर्स एण्ड डिष्ट्रिब्युटर्स, बि.सं. २०५७, पृ. ११९ ।

भएकोले राज्य विभाजित भए पछि राज्य शक्तिको श्रोतका रुपमा आआफ्नो नयाँ राज्यहरूमा भक्तपुरकै तलेजु भवानीको शक्तिलाई तान्त्रिक विधिबाट तानेर लगी नयाँ तलेजु मन्दिरहरूमा शक्ति प्रतिष्ठापित गर्दै लगे ।

मल्ल राजाहरूले तलेजु भवानीको मन्दिर बनाउँदा त्यो आफ्नो दरवार भित्रै बनाउने गरेको पाइन्छ । तलेजु भवानीसँग राज्यशक्तिको गहिरो सम्बन्ध यसबाट पनि थाहा पाउन सकिन्छ । ने.सं. ६०४ (वि.सं. १५४१) मा रत्न मल्लले कान्तिपुरमा एकल शासन चलाए पछि आफ्नो दरवार भित्र तलेजुको सानो मन्दिर बनाउन लगाएका थिए । त्यो मन्दिर अहिले कहाँ छ थाहा छैन । पछि ने.सं. ६८४ (वि.सं. १६२१) मा महेन्द्र मल्लले तलेजुको ठूलो मन्दिर बनाउन लगाएका थिए । मल्ल राजाहरूका बीच एक आपसमा कुनै सन्धि गर्नुपर्दा तलेजु भवानीलाई नै साक्षी राख्ने चलन थियो ।[६]

किंवदन्ती अनुसार मल्ल राजाहरू त्यतिबेला आफ्नो तन्त्रको बलले तलेजु भवानीसँग प्रत्यक्ष संवाद गर्न सक्दथे । मल्ल राजाहरू तलेजु भवानीसँग एकान्तमा पासा खेल्ने र राजकाज बारे सरसल्लाह समेत लिने गर्दथे । मुलुकमा कुनै ठूलो निर्णय गर्नु पर्दा राजाहरू तलेजु भवानीको पनि राय लिने गर्दथे । तर एक दिन राजाले तलेजु भवानीप्रति नै कुदृष्टि राखेका कारण भवानीले अब उप्रान्त आफू राजासँग प्रत्यक्ष भेट गर्न नआउने बरु राजाले भेट्न चाहेमा कुनै अर्कै व्यक्ति मार्फत मात्र प्रत्यक्ष भेट्ने कुरा अघि सारे । अब यसको लागि के गर्नुपर्ला भनी राजाले सोध्दा तलेजु भवानीले कुनै एक कन्या केटीलाई कुमारीको रुपमा स्थापना गरे आफू तिनै कुमारीको शरीरमा आएर बस्ने सुझाव दिए । त्यस पछि राजाले तलेजु भवानीकै जीवित प्रतीकका रुपमा जीवित देवी कुमारीको स्थापना गरे । मल्ल राजाहरूले जीवित देवी कुमारीलाई तलेजु भवानीकै जीवित प्रतीकका रुपमा पूजा गर्ने गर्दछन् ।

पछि कालान्तरमा मल्ल राज्यहरू विभाजित भई नयाँ साना राज्यहरू बन्न थाले पछि मल्ल राजाहरूले आफ्नो नयाँ राज्यमा छुट्टै तलेजु भवानीको मन्दिर मात्र होइन त्यसको साथसाथै तलेजुको जीवित प्रतीकका रुपमा छुट्टै जीवित देवी कुमारीको पनि पूजा आराधना गर्न थाले । यसले

६ तीर्थलाल नःघःभनी, *श्री तलेजु भवानी, प्राचीन नेपाल, अंक ८२,* काठमाडौः पुरातत्व विभाग, सन् १९८४ जुन-जुलाई, पृ. ८-९ ।

गर्दा उपत्यकामा एक भन्दा बढी राज-कुमारीहरू अस्तित्वमा आए । ती कुमारीहरूलाई सम्बन्धित राज्यका सर्वसाधारण मात्र होइन स्वयम् राजा र राज्यका तर्फबाट समेत पूजा पठाई आराधना गर्ने चलन चल्न थाल्यो ।

काठमाडौंका राजा जयप्रकाश मल्लले चाहिँ यसरी तलेजु भवानीको प्रतीक स्वरुप स्थापित गरिएको कुमारीलाई नै प्यागोडा शैलीको रथ बनाएर त्यसमा विराजमान गरी नगर परिक्रमा गराउने रथयात्राको नयाँ चलन समेत शुरु गरे । राजा जयप्रकाश मल्लले आफूलाई तलेजु भवानीबाटै प्राप्त भएको आदेश बमोजिम कुमारीको रथयात्रा आरम्भ गरेका थिए । यसो गरे उनको गुमेको राज्य पुनः प्राप्त हुने र राज्यलाई बाहिरी शत्रुको आक्रमणबाट सुरक्षित गर्न सकिने भनी विश्वास गरिएको थियो । राजा जयप्रकाश मल्लले इन्द्रजात्राकै अवसरमा कुमारीको रथयात्रा आरम्भ गर्नुको कारण इन्द्र आफै पनि स्वर्गका राजा भएको र इन्द्रको आराधना गर्नाले गुमेको राज्य फिर्ता पाउने, आफ्नो राज्य टिकाउन शत्रुको आक्रमणलाई निस्तेज पार्न सकिने भन्ने विश्वास भएकै कारणले हुनुपर्दछ । यसै विश्वासका कारण राजा जयप्रकाश मल्लले वि.सं. १८१५ मा इन्द्रजात्राकै अवसरमा श्री कुमारीको रथयात्रा शुरु गरेका थिए । उनले कुमारीका लागि छुट्टै कुमारी घर बनाइदिने र कुमारीलाई रथमा राखी नगर परिक्रमा गर्ने गरी जात्रा चलाउने संकल्प गरेकै कारण उनले गुमिसकेको राज्य पुनः फिर्ता पाएको विश्वास गरिन्छ । राजा जयप्रकाश मल्ल आफ्नै महारानी र भारदारहरूको षडयन्त्रमा परी राज्यच्युत हुँदा कान्तिपुर भित्रै विभिन्न ठाउँमा लुकेर बस्ने गरेका थिए । त्यसरी लुकेर बसिरहेकै बेला उनले कुमारीको आराधना गर्ने र बेलाबेलामा गोप्य रुपमा कुमारीको दर्शन पनि गर्ने गर्दथे । कुमारीका लागि नयाँ घर बनाई रथयात्रा समेत चलाएकै कारण जयप्रकाश मल्लले थप दश वर्ष शासन चलाउन पाएको भन्ने पनि जनश्रुति पाइन्छ ।

इन्द्रजात्राका दिन कुमारीको रथयात्रा चलाएर दश वर्ष थप शासन गर्न पाएका राजा जयप्रकाश मल्ल संयोगवश इन्द्रजात्रामा कुमारीको रथयात्रा चलाइरहेकै बेला राज्यच्युत हुन पुगे । वि.सं. १८२५ को इन्द्रजात्राकै दिन पृथ्वीनारायण शाहले काठमाडौं आक्रमण गर्दा जयप्रकाश मल्ल कुमारीको रथयात्रा चलाउँदै काठमाडौंको जैसी देवल पुगिरहेका थिए । बसन्तपुरमा आफ्नो गद्दी पृथ्वीनारायण शाहले कब्जा गरिसकेको जानकारी पाउने बित्तिकै

उनी त्यहींबाट टेकूको बाटो हुँदै पाटनतिर लागे ।

उता राजा भागेर हनुमानढोकामा राजगद्दी नै कब्जा गरिसक्दा पनि पृथ्वीनारायण शाहले आफूलाई कान्तिपुरको राजा घोषणा गरेका थिएनन् । बीचमा रोकिएको कुमारीको रथलाई आफ्नो भाई र भारदारहरू पठाई साबिक बमोजिम जात्रा चलाई बसन्तपुरमै फिर्ता ल्याएर श्री कुमारीको हातबाट टीका ग्रहण गरिसकेपछि मात्रै उनले आफूलाई 'कान्तिपुरको राजा' घोषणा गरेका थिए। काठमाडौंका स्थानीय जनताको समर्थन प्राप्त गर्न पृथ्वीनारायण शाहले मल्ल राजाहरूले जस्तै श्री कुमारीको गोडा ढोग्ने प्रथालाई पनि स्वीकारे । साथै काठमाडौंमा प्रचलित इन्द्रजात्रा सम्बन्धी सबै गुठीगानाहरूलाई यथावत् चलाउन दिने बाचा पनि गरे ।

पृथ्वीनारायण शाहको उक्त आक्रमण बारे लेखक गौतमवज्र वज्राचार्यले लेख्नुभएको छ, "काठमाडौं शहरको दक्षिणी भागमा हुने यही रथयात्राको दिन श्री ५ पृथ्वीनारायणले काठमाडौं हमला गरी विजय प्राप्त गरेका थिए । त्यस बेला काठमाडौंका मल्ल राजा जयप्रकाश कुमारीको रथमा आफै बसी रथजात्रामा भाग लिइरहेका थिए । रातको समय थियो । कुमारीको रथ कोहिटीसम्म पुगिसकेको थियो । अकस्मात गोरखाली फौज काठमाडौंको शहरी किल्ला फुटाई भित्र पसे । राजा जयप्रकाश त्यतैबाट पाटनतिर भागे । यसरी काठमाडौं शहर विजय प्राप्त गरे पछि रथजात्रा यथागत् चलाउन दिई पृथ्वीनारायणले कुमारीको दर्शन गरे । नेपालको इतिहासमा गोरखालीहरूको काठमाडौं विजय युगान्तकारी घटना थियो । यस कारण हरेक वर्ष उठानका शाह राजाहरूले यस दिन विजयोत्सवको रुपमा कुमारीजात्रालाई बढी धूमधामसँग मनाए । राणाहरूको समयमा पनि प्रधानमन्त्रीदेखि लिएर सारा सैनिक कर्मचारीहरू यस जात्रामा भाग लिन्थे । उच्च ओहदाका व्यक्तिहरू हात्ती र घोडामा चढी सजधजसँग नगर परिक्रमा गर्दथे । केही दशक अगाडिसम्म पनि यो प्रथा चलेर आएको थियो ।"[७]

इन्द्रजात्रामा श्री कुमारीको हातबाट टीका ग्रहण गर्नुलाई राज्यशक्तिसँग जोडेर हेर्ने गरिन्छ । उक्त दिन कुमारीको हातबाट टीका ग्रहण गर्नुको अर्थ पुनः अर्को वर्ष पनि शासन चलाउन देवीबाट प्राप्त भएको आशीर्वादका

७ वज्राचार्य, गौतमवज्र, *हनुमान्ढोका राजदरवार*, नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, काठमाडौंः वि.सं. २०३३, पृ. १८० ।

रुपमा लिने गरिन्छ ।

पृथ्वीनारायण शाह गोरखाको राजा नभएकै बेला एकपटक उनलाई भक्तपुरकी कुमारीले टीका लगाइदिएका कारण अब उनी सबै ठाउँका राजा हुने भए भनी अर्थ्याएको पाइन्छ । उक्त प्रशंग बारे लेखक सिल्भाँ लेभीले लेखेका छन्, "पृथ्वीनारायण शाह जवान नै हुँदा, भातगाउँमा राजा रणजित मल्लको पाहुना भएर बसेका बेलामा, रणजित र पृथ्वीनारायण दुवै विजयादशमीको जात्रा हेरिरहेका थिए । कुमारीले राजालाई फूल दिनु पर्ने थियो तर राजाको सट्टा पृथ्वीनारायणलाई दिइन्, भैरवले पनि त्यसै गरे । गोरखा सबै देशको राजा हुन्छ भनी दैवी चुनाव भएको जस्तो भयो ।"[८]

यसबाट कुमारीले टीका लगाइदिएकै कारण अब पृथ्वीनारायण शाह भक्तपुरका पनि राजा बन्ने निश्चित छ भन्ने मनोवैज्ञानिक प्रभाव तत्कालीन समाजमा पर्न गएको मान्न सकिन्छ ।

काठमाडौंमा कुमारी जात्राको पहिलो दिन जात्रा सिद्धिएपछि गद्दी बैठक अगाडिको डबलीमा सुनको सिंहासन ल्याएर राखिने चलन थियो । काठमाडौं विजय गरेका दिन श्री ५ पृथ्वीनारायण शाहले त्यस डबलीमा सुनको सोही सिंहासनमा बसी त्यस दिनदेखि आफू काठमाडौंको पनि राजा भएको कुरो जनाएका थिए । यसैले हरेक वर्ष यस दिन डबलीमाथि राखिएको उक्त सिंहासनमा राजप्रतिनिधि स्वरुप खड्ग ल्याएर राखिन्छ ।[९]

पृथ्वीनारायण शाह पछि एकीकृत नेपालको राजा बनेका उनका छोरा प्रतापसिंह शाहले इन्द्रजात्रालाई पनि एकिकृत गरी राजधानी काठमाडौंमा केन्द्रित गरेको पाइन्छ । देशको विभिन्न ठाउँमा उठाउने चलन भएको इन्द्रध्वजलाई उनले मूल राजधानी काठमाडौंमा केन्द्रित गरी अरुतिर बन्द गरेका थिए । प्रताप सिंह शाहले तिब्बतसँग भएको युद्ध पश्चात ने.सं. ८९५ मा केन्द्रीय राजधानी काठमाडौंको हनुमानढोका दरवार अगाडि मात्रै इन्द्रध्वज उठाउने चलन गरेका थिए ।[१०]

इन्द्रध्वज उठाउने चलन रहुन्जेल बाहिरी जिल्लाहरूले आफूलाई भर्खर एकीकरण भएको नेपालको अंग नमान्ने मनोविज्ञान कायम रहने डर थियो ।

---

८ लेभी, सिल्भाँ, *नेपाल : हिन्दू अधिराज्यको इतिहास (दोश्रो खण्ड)*, काठमाडौं: हिमाल किताब प्रा.लि., सन् २००७, पृ. २८ ।

९ वज्राचार्य, पूर्ववत् ७, पृ. १८२ ।

१० सुरेन्द्रमान श्रेष्ठ, *'यंला पुन्हि'*, यें : नेवाः संस्कृतिया नखःचखः, रामभक्त भोँमि, ने.सं. ११२१, पृ. १३१ ।

त्यसैले शाह राजा प्रतापसिंह शाहले अरुतिर इन्द्रध्वज उठाउने पर्व नै बन्द गरी यसलाई राजा बस्ने दरवारमा मात्र केन्द्रित गरेको विश्वास गरिन्छ ।

इन्द्रध्वजोत्थान गर्दा यःसिंका सामू राष्ट्रिय गान गाउने गरिन्छ । त्यहाँ एउटा सेतो घोडा पनि ल्याउने गरिन्छ । त्यसलाई कुमारीको घोडा भनिन्छ । त्यो वास्तवमा शाह राजाको घोडा हो । इन्द्रध्वजोत्थानलाई प्रताप सिंह शाहले 'पुनर्संरचना' गरेको थियो । त्यसो गर्दा उनले यो जात्रालाई शाह राजवंश अनुकुल बनाएका थिए ।[११]

हनुमानढोका दरवार अगाडि यःसिं (इन्द्रध्वज) उठाउँदा पहिले पहिले राजा आफू पनि उपस्थित हुने चलन थियो । अहिले राजा नआई राजाको प्रतीक स्वरुप खड्ग मात्रै पठाउने चलन आएको छ । नेपाली सेनाको टुकडीले खड्गलाई नै राष्ट्रिय गान बजाई सलामी अर्पण गर्ने चलन छ । यःसिंको लागि रुख काट्न जाँदा र यःसिंलाई नगर प्रवेश गराउँदा राज्यबाट प्रदान गर्ने सम्मान स्वरुप गुर्जुको पल्टन पनि साथै जाने चलन अहिले पनि निरन्तर चलिरहेकै छ । यःसिं उठाइसके पछि यःसिंको मुनि इन्द्रको एउटा सुनको मूर्ति पनि राख्ने गरिन्छ । उक्त मूर्तिको नित्य पूजा भने दरवारमा राजाले नियुक्त गरेका राज पुरोहितले नै गर्दथे ।

यःसिं उठाउने कार्यलाई पनि राजासँग जोडेर हेर्ने गरिन्छ । यःसिं उठाउने क्रममा यदि बीचैमा यःसिं ढल्यो वा भाँचियो भने त्यसको प्रत्यक्ष असर राजालाई पर्ने विश्वास गरिन्थ्यो । यदि यःसिं फेदमा भाँचियो भने राजालाई सामान्य असर पर्ने र टाउकोतिर भाँचियो भने राजाको निधन समेत हुन सक्छ भन्ने जनविश्वास थियो । त्यस्तै यःसिं ढाल्दा पनि राति राजा सुतिरहेकै बेला राजालाई कुनै खबर नगरी ढाल्नुपर्ने व्यहोरा पुराणहरूमा उल्लेख छ । इन्द्रजात्राको अन्तिम दिन यःसिं ढालेर बागमती र बिष्णुमतीको दोभानमा सेलाउनु अघि पनि राज पुरोहितबाटै यःसिंको शिरमा फूल चढाई टीका लगाएर अन्तिम पूजा गर्ने चलन थियो ।

इन्द्रजात्रामा काठमाडौंका विभिन्न टोलहरूमा इन्द्रको मूर्ति प्रदर्शन गर्ने चलन छ । सार्वजनिक रुपमा गरिने यी प्रदर्शनहरूभन्दा फरक हनुमानढोका दरवारभित्र नासल चोकमा पनि इन्द्रको एउटा विशेष मूर्ति प्रदर्शन गरिन्छ । सुन लेपन गरिएको उक्त तामाको इन्द्र मूर्तिलाई नासल चोक भित्र रहेको

---

११ तोफाँ, पूर्ववत् २, पृ. ७६ ।

डबलीको बीचमै विराजमान गर्ने चलन छ । नासल चोकको उक्त डबली नयाँ राजाको राज्यारोहण गर्दा मात्रै प्रयोग गर्ने परम्परा रहिआएको छ । नयाँ राजाको राज्यारोहणमा प्रयोग गर्ने डबलीमै इन्द्रको मूर्ति विराजमान गर्ने यो चलनले स्वर्गका राजा इन्द्र र मर्त्यलोकका राजालाई बराबरी देखाउन खोजिएको हो कि भनी अनुमान गर्न सकिन्छ ।[१२]

नासलचोकको उक्त डबलीमा इन्द्रको मूर्ति विराजमान गर्ने चलन राजा प्रताप मल्लको पालादेखि शुरु भएको मानिन्छ । इन्द्रजात्रा बाहेक अरु बेला यो मूर्तिलाई मल्ल राजाहरूको कुलदेवता राखिने देगुतलेको मन्दिरमै सुरक्षितसाथ राखिएको हुन्छ । इन्द्रजात्राको पहिलो दिन स्थानीय ज्यापूहरूले यो मूर्तिलाई बोकेर नासल चोकको डबलीमा विराजमा गराइन्छ । इन्द्रजात्राको पहिलो दिन र अन्तिम दिन इन्द्रचोकका राजोपाध्यायहरूले यो मूर्तिको पूजा गर्ने चलन रहिआएको छ ।[१३]

शाहकाल पछि इन्द्रजात्रालाई धार्मिक-सांस्कृतिक पर्वका साथसाथै शाह राजाहरूको विजयोत्सवका रुपमा मनाउने चलन पनि शुरु भयो । इन्द्रजात्रामा कुमारीको रथयात्रा हुँदा तत्कालीन राणा प्रधानमन्त्री लगायत दरवारका उच्चपदस्थ कर्मचारीहरू हात्ती चढी रथको पछि पछि लाग्ने गर्दथे । एकपटक काजी जंगबहादुर पनि हात्ती नै चढी रथको पछि पछि आएका रहेछन् । मर्यादाक्रम अनुसार त्यतिबेला इन्द्रजात्रामा हात्ती चढ्ने हैसियत जंगबहादुरको थिएन । त्यही बेला अर्को हात्तीमा आएका प्रधानमन्त्री माथवरसिंह थापाले उनलाई 'तिमी पनि हात्ती चढेर आएको ?' भनी व्यंग्यपूर्वक प्रश्न गरेका थिए ।[१४]

इन्द्रजात्रामा हात्ती चढेर रथको पछि लाग्नु तत्कालीन राणा सरकारको शक्ति प्रदर्शन गर्ने माध्यम थियो भन्ने यसबाट थाहा हुन्छ । राणा शासकहरूले तत्कालीन ब्रिटिश इण्डिया सरकारका काठमाडौंस्थित कुटनीतिक नियोगका पदाधिकारीहरूलाई सम्मानपूर्वक इन्द्रजात्रा अवलोकन गराई आफ्नो राजनीतिक सम्बन्ध मजबूत बनाउने कार्य पनि गर्दथे ।

राणाशासनको पतन पछि गठन भएको जनताको पहिलो सरकारले

---

१२ तोफाँ, पूर्ववत् २, पृ. ८१ ।

१३ अवलोकन

१४ पुरुषोत्तमशमशेर जबरा, *श्री ३ हरूको तथ्य वृत्तान्त* (भाग १), काठमाडौं: विद्यार्थी पुस्तक भण्डार, वि.सं. २०६२, पृ. १८ ।

इन्द्रजात्रालाई दरवारिया शक्ति प्रदर्शन गर्ने अवसरका रुपमा प्रयोग गर्न रोक लगायो । इन्द्रजात्रामा गरिने त्यो प्रदर्शनले जनतामा राजनीतिक विभाजन प्रस्ट देखिने भन्दै प्रजातान्त्रिक सरकारले राजपत्र नै प्रकाशित गरी त्यसमाथि रोक लगाएको थियो ।

त्यस्तै २००७ साल पछि गठन भएको वीपी कोइराला नेतृत्वको पहिलो निर्वाचित सरकारले इन्द्रध्वजोत्थानका बेला राति सम्पूर्ण निजामति कर्मचारीहरू हनुमानढोकामा हाजिर हुनुपर्ने चलन र सेनाका सबै टुकडीहरू हनुमानढोकामा भेला हुनुपर्ने परम्परा खारेज गरे ।[१५]

तर इन्द्रजात्रामा गरिने यस्ता विभिन्न प्रदर्शन र परम्पराहरू प्रतिबन्धित भए पनि इन्द्रजात्रालाई प्राप्त भइरहेको राजकीय सम्मानमा भने कुनै कमी भएन । इन्द्रजात्रामा राजा आफै सवारी भई कुमारीको रथयात्रा अवलोकन गर्ने परम्परा कायमै रह्यो । साथै इन्द्रजात्राको अन्तिम दिन राजा आफै कुमारी घर सवारी भई कुमारीको हातबाट टीका ग्रहण गर्ने परम्परा पनि यथावत चलिरह्यो । इन्द्रजात्राको अन्तिम दिन श्री कुमारीको हातबाट टीका ग्रहण गर्नुको अर्थ राजालाई अर्को वर्ष पनि राजकाज चलाउने अनुमति प्राप्त हुनु हो भन्ने मान्यता शाहकालमा पनि व्याप्त थियो । सन् १९५४ मा एकपटक राजा त्रिभुवन तत्कालीन युवराज महेन्द्रलाई पनि लिएर टीका ग्रहणको लागि कुमारी घर गएका थिए । त्यहाँ श्री कुमारीले राजा त्रिभुवनलाई भन्दा पनि पहिले युवराज महेन्द्रलाई टीका लगाइदिए । त्यही वर्ष राजा त्रिभुवन विरामी भए । उपचारको लागि उनी स्वीट्जरल्याण्ड गए । अर्को साल त्यहीं उनको निधन भयो । त्यस पछि युवराज महेन्द्र नयाँ राजा घोषित भए । नेपाली राजनीतिमा यो घटनालाई पनि महत्वकासाथ चर्चा गर्ने गरिन्छ ।

नेपालमा राजतन्त्र हुन्जेल नयाँ कुमारी छनौट गर्दा पनि हुनेवाला कुमारी कन्याको चिना राजाको चिनासँग भिडाएर मात्रै छनौट गर्ने चलन रहेको थियो । राजाको चिनासँग मेल खाएका कन्यालाई मात्रै कुमारी छनौटको प्रक्रियामा सहभागी गराइन्थे । कुमारी घरमा कुनै अनिष्टकारी घटना भएको देखिए वा सुनिए त्यसको पहिलो जानकारी राजदरवारमै दिने गरिन्थ्यो । त्यसपछि राजदरवारबाट त्यसलाई निराकरण गर्न क्षमा पूजा पठाउने गरिन्थ्यो ।

१५ H.N. Agrawal, *The Administrative System of Nepal from Tradition to Modernity*, Delhi: Vikas Publishing House, 1976. p. 159.

यसरी इतिहासको विभिन्न कालखण्डमा देशमा भएका विभिन्न राजनीतिक परिवर्तनहरूका कारण इन्द्रजात्रा मनाउने परम्परामा क्रमिक परिवर्तन हुँदै आइरहेको छ । लेखक जेराँ तोफाँले सन् १९९१ मा भएको राजनीतिक परिवर्तनमा शाह राजाहरूको अधिकार कटौती भए पछि अब नेपालको धार्मिक र राजनीतिक सम्बन्ध के होला भनी प्रश्न गरेका थिए ।[१६] तर अहिले देशमा राजतन्त्र समाप्त भई गणतान्त्रिक व्यवस्था स्थापना भइसकेको अवस्था छ । यस्तो स्थितिमा इन्द्रजात्रासँग परम्परादेखि कायम रहँदै आइरहेको राजनीतिक सम्बन्ध के होला भनी प्रश्न उठ्नु स्वाभाविक छ ।

तर इन्द्रजात्राको धार्मिक-सांस्कृतिक गरिमा र महिमा भने मुलुकमा गणतान्त्रिक व्यवस्था आए पनि कहीं घटेको देखिँदैन । इन्द्रजात्रा ऐतिहासिककालदेखि नै जनस्तरमा अत्यन्त लोकप्रिय र जनजनमा भिजेको सांस्कृतिक पर्व हो । राजाहरूसँग यसको सम्बन्ध टुटे पनि मुलुकको राजकीय सम्मानबाट भने इन्द्रजात्रा पटक्कै विमुख भएको छैन । पहिले राजाको संलग्नतामा सम्पन्न हुने इन्द्रजात्रा सम्बन्धी सम्पूर्ण कार्यहरू अहिले राष्ट्रप्रमुखको संलग्नतामा सम्पन्न हुँदै आइरहेको छ। जात्राका लागि आवश्यक आर्थिक व्यवस्थापन सम्बन्धी कार्य स्थानीय सरकारबाट हुँदै आइरहेको छ । स्थानीय जनताबाटै निर्वाचित स्थानीय सरकारको इच्छाशक्तिका कारण अहिले इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच एवं पर्वहरूलाई संस्थागत गर्दै लाने कार्य अघि बढेको छ । अहिले सम्पूर्ण इन्द्रजात्रालाई व्यवस्थित गर्न छुट्टै कोष बनाउने तयारी भइरहेको छ । इन्द्रजात्रासँग आवद्ध विभिन्न नाचहरू लाखे, सवःद्यः, पुलुकिसि, दीप्याखं आदिका लागि आफ्नै घर बनाउने कार्यलाई पनि स्थानीय सरकारबाट सहयोग गर्दै आइरहेको छ ।

यसरी इन्द्रजात्रा र योसँग जोडिएको राजनीतिक पक्ष बारे विश्लेषण गर्दा तत्कालीन शासकहरूले आफ्नो राज्य र राज्यशक्तिलाई सबै प्रकारले सुदृढ बनाउने उद्देश्यबाट नै इन्द्रजात्रा पर्व चलाएको देखिन आउँछ । वैदिककालमा स्वर्गका राजा इन्द्रलाई एक पराक्रमी र लडाकू स्वभाव भएका देवताका रुपमा चित्रण गरिएको छ । आफ्नो इन्द्रासन बचाउन इन्द्रले धेरै जनासँग धेरै पटक युद्ध गरेको बयान वेदहरूमा गरिएको पाइन्छ । पुराणकालमा

१६ तोफाँ, पूर्ववत् २, पृ. ८८ ।

उनै इन्द्रको नाममा इन्द्रध्वजोत्थान गरी गुमिसकेको राज्यलाई शत्रुको हातबाट पुनः प्राप्त गर्न, आफ्नो राज्यलाई स्थिर गर्न र राज्यको सीमालाई शत्रुको हातबाट सुरक्षित गर्न इन्द्रजात्रा पर्व आरम्भ भएको देखिन्छ । इन्द्रको आराधना गरे राज्य सुरक्षित हुने, शत्रुहरूले राज्यमा आक्रमण गर्न नसक्ने र राज्य समृद्ध बन्ने यही पुराणकालीन दर्शनका आधारमा भारतका विभिन्न शहर र नेपालमा समेत इन्द्रजात्रा पर्व शुरु भएको मान्न सकिन्छ । भारतमा यो पर्व हराएर गए पनि नेपालमा भने राज्यशक्तिकै सक्रियतामा इन्द्रजात्रा पर्व चलिरह्यो । नेपालमा इन्द्रजात्राको आरम्भ लिच्छविकालको प्रारम्भतिरै भएको देखिएता पनि अत्यधिक आपसी झैंझगडाहरू भइरहने भएकोले मल्लकालीन समयमा भने यसको बढी विकास भएको पाइन्छ । मल्लकालीन नेपालमा एक राज्यले अर्को राज्यमाथि नियमित झैं हस्तक्षेप गरिरहने र सानातिना कुराहरूमा पनि झगडा चलिरहन्थ्यो । यस्तो अवस्थामा आफ्नो सैन्यबल मात्र होइन आत्मबल समेत बलियो पार्न मल्ल राजाहरू विभिन्न तान्त्रिक देवीदेवताहरूको आराधना गरी दैवी शक्ति प्राप्त गर्न खोजिरहन्थे । मल्ल राजाहरूले शक्ति आर्जनको लागि पूजा आराधना गर्ने तलेजु भवानीको प्रतीक कुमारीको जात्रालाई समेत इन्द्रजात्रामै जोड्न ल्याए । यसबाट पनि इन्द्रजात्रासँग राज्य शक्तिको सम्बन्ध र विश्वासलाई बुझ्न सकिन्छ । इन्द्रजात्रा र राज्यशक्ति बीचको सम्बन्ध कति दरिलो छ भन्ने कुरा गोर्खाका राजा पृथ्वीनारायण शाहले तत्कालीन नेपाल देशमा आक्रमण गरी आफूलाई नेपालको राजा घोषणा गर्ने दिनका रुपमा इन्द्रजात्रालाई नै रोज्नुबाट पनि पुष्टि हुन्छ । मल्लकालको अन्त पछि शाहकालमा पनि इन्द्रजात्रालाई राजाहरू आफै सहभागी भई मनाउने क्रम निरन्तर चलि नै रह्यो ।

शासकहरूले आफ्नो राज्य र राज्यशक्तिमा आफूलाई बलियो पार्न शुरु गरिएको भए पनि इन्द्रजात्रा पर्वले अहिले भने हाम्रो समाजको एउटा ठूलो सांस्कृतिक सम्पदाको रुप लिइसकेको छ । शुरुमा यो पर्व राजनीतिक शक्ति प्राप्त गर्ने उद्देश्य सहित आरम्भ भएको भए पनि अहिले वर्तमान समयमा भने राजनीतिक शक्ति आर्जन गर्ने उद्देश्य नभई सामाजिक सांस्कृतिक महत्वका साथ स्थापित हुँदै गएको पाइन्छ ।

## सामाजिक-सांस्कृतिक

इन्द्रजात्रा नेपालका सबै जाति, वर्ग र समुदायका मानिसहरू सबै मिली धुमधामपूर्वक मनाउने देशकै एक राष्ट्रिय पर्व हो । यसमा राष्ट्रप्रमुख लगायत राज्यका विभिन्न अंगका प्रमुखहरूको पनि सहभागिता रहेको हुन्छ । इन्द्र आफै पनि देवताहरूका राजा भएको कारणले उनको नाममा मनाइने यो जात्रामा विभिन्न प्रतिकात्मक रुपमा देवीदेवताहरू समेत नाच-भ्फाँकी-पर्व आदि विविध स्वरुप लिएर सहभागी भएका हुन्छन् । तसर्थ यो जात्रालाई राज्य संयन्त्र, विभिन्न जातीय समुदाय र प्रतीकात्मक रुपमा देवीदेवताहरू समेत मिलेर सामुहिक रुपले मनाउने एक समन्वयात्मक जात्राको रुपमा बुझ्न सकिन्छ ।

सबै जातीय समुदायका मानिसहरू मिलेर इन्द्रजात्रा मनाउने भएकोले यसले विभिन्न जातजातिका मानिसहरूलाई एक आपसमा सहकार्य गरी अघि बढ्ने सामाजिक एकताको सन्देश पनि दिएको पाइन्छ । साथै यसले मुलुकका सबै वर्ग र सबै जातिका मानिसहरूलाई कुनै पनि प्रकारका भेदभावहरू नराखी गोलबन्द भएर सामाजिक सद्भाव कायम गर्ने सन्देश पनि दिएको देखिन्छ ।

इन्द्रजात्रा विशेष गरी स्वर्गका राजा इन्द्रसँग सम्बन्धित छ । इन्द्रलाई त्रर्षाको देवताका रुपमा पनि पुज्ने गरिन्छ । कृषि कार्यका लागि अत्यावश्यक वर्षाका लागि उनले विभिन्न असुरहरूसँग युद्ध गरेको वर्णन पनि पुराणहरूमा उल्लेख गरिएको पाइन्छ । त्यसैले हरेक वर्ष कृषि कार्य सकिएर धान काट्ने बेलामा कृषिका लागि अत्यावश्यक वर्षा उपलब्ध गराइदिए वापत उनीप्रति कृतज्ञता ज्ञापन गर्न पनि सर्वसाधारण जनता मिलेर इन्द्रजात्रा मनाएको विश्वास गर्न सकिन्छ । पहिले पहिले कृषि युगमा समाजका सबै वर्ग र जातीय समुदायको सबैभन्दा प्रमुख कार्य र आर्थिक आयको सबैभन्दा ठूलो श्रोत भनेकै कृषि थियो । कृषि कार्यको लागि अत्यावश्यक पानी उपलब्ध गराउने सबैभन्दा ठूलो आधार भनेकै वर्षा हो । त्यसैले कृषिमा आवद्ध हुने समाजका सबै समुदायले वर्षाका देवता इन्द्रलाई श्रद्धापूर्वक आराधना गर्नु स्वाभाविक थियो । वर्षाका देवता भएको कारणले देवराज इन्द्र तत्कालीन कृषि युगका सबै समुदायको साभ्का देवता पनि थिए । त्यसैले उनको नाममा

मनाइने जात्रामा सबै वर्ग, सबै जातिको समानस्तरको सहभागिता हुन पुगेको मान्न सकिन्छ । इन्द्रजात्रा मनाउने क्रममा जुट्न जाने यो सामाजिक सहभागिताले समाजमा सबै जाति र सबै वर्गलाई आपसी सहअस्तित्वकासाथ जीवन जिउन पनि प्रेरणा प्रदान गर्दछ ।

काठमाडौंमा मनाइने इन्द्रजात्रामा यहाँ रहेका धेरै जातीय समुदायहरू सहभागी भएका हुन्छन् । जात्रा मनाउने क्रममा ती सबै समुदायहरूको आआफ्नै भूमिका रहेको हुन्छ। प्रत्येक जातीय समुदायलाई जात्रा अवधिभरि वहन गर्नुपर्ने फरक फरक जिम्मेवारीहरू दिएका हुन्छन् । ती सबै जातीय समुदायहरूले आआफ्नो तर्फबाट गर्नुपर्ने कार्यहरू सम्पन्न गरेर नै इन्द्रजात्रा पर्व मनाउने हो । जस्तो इन्द्रजात्रामा श्री कुमारी, श्री गणेश र श्री भैरवको रथयात्रा गरिन्छ। उक्त रथयात्रामा विराजमान हुने श्री कुमारी, श्री गणेश र श्री भैरव तीन जनै देवीदेवताहरू शाक्य जातिबाट छनौट गरिन्छन् । इन्द्रजात्राको पहिलो दिन इन्द्रध्वजोत्थान अर्थात यःसिं उठाउने कार्य मानन्धर समुदायबाट गरिन्छ। इन्द्रजात्रामा प्रदर्शन गरिने विभिन्न नाचहरू मध्ये पुलुकिसि, दीप्याखं महर्जन समुदायबाट सञ्चालन हुन्छ भने लाखे नाच रञ्जितकार समुदायबाट प्रदर्शन गरिन्छ। हल्चोक आकाश भैरव पुतुवार समुदायले सञ्चालन गर्छ। हाथुद्यः अर्थात स्वेत भैरवबाट जाँड अर्पण गर्ने कार्य ताम्राकार समुदायले गर्दछ । दागिं निकाल्ने गुठी पनि ताम्राकार समुदायबाटै सञ्चालित छ भने दागिंका रुप नगर परिक्रमा गर्ने कार्य भने कुम्हाः महर्जनबाट सम्पन्न हुन्छ। दश अवतार श्रेष्ठ समुदायले सञ्चालन गर्छ। श्री कुमारीको रथयात्रा चलाउँदा रथको अघि अघि पञ्चबुद्धका प्रतीकका रुपमा वज्राचार्य समुदाय सहभागी भएका हुन्छन्। कुमारी यात्रा शुरु हुँदा रथको सबैभन्दा अगाडि बसेर जनतालाई जात्रा आउँदै गरेको जानकारी दिँदै नायूखिं बाजा बजाउने कार्य खड्गी समुदायले गर्छ । भक्तपुरबाट ल्याउने महाकाली नाचमा भक्तपुरका विभिन्न जातीय समुदायहरू ब्यांजु, फैजु, दैवेज्ञ, मुस्याख्वः, खर्बुजा र दण्डेख्या समुदाय सहभागी भएका हुन्छन् । इन्द्रजात्राकै अवसरमा इन्द्रचोक र हनुमानढोका भित्र विराजमान गरिने देवराज इन्द्रको मूर्तिमा पूजा गर्ने कार्य राजोपाध्याय समुदायले गर्छ । इन्द्रजात्राको अन्तिम दिन यःसिं ढालेर टेकू दोभानमा सेलाइसके पछि त्यसको व्यवस्थापन गर्ने कार्य स्थानीय पोडे समुदायले गर्छ ।

यसरी इन्द्रजात्रा पर्व सम्पन्न गर्न समाजका विभिन्न जातीय समुदायहरू मिलेर आआफ्नो जिम्मेवारीका कार्यहरू सामुहिक रुपले सम्पन्न गर्नुपर्ने हुन्छ । इन्द्रजात्रा पर्व सम्पन्न गर्न समाजका विभिन्न जातीय समुदायहरू एक आपसमा मिलेर विभिन्न भूमिकाहरू निर्वाह गरिरहेका हुन्छन् । यसमा सबैको भूमिकाको स्थान समान हुन्छ । इन्द्रजात्राको आयोजना राज्यका तर्फबाट गरिने भए पनि यो मूलतः समाजका सबैजसो समुदाय मिलेर मनाइने सामुहिक पर्व हो । जात्रा मनाउँदा व्यक्त हुने यो ऐक्यवद्धता र सामुहिकताको भावले समाजमा गर्नु पर्ने अन्य कार्यहरूलाई पनि उर्जा प्रदान गर्ने विश्वास गर्न सकिन्छ ।

इन्द्रजात्रा पर्वका दृष्टिकोणले एउटै भए पनि यसमा विभिन्न क्षेत्र र समुदायको प्रत्यक्ष सहभागितामा आयोजना हुने विभिन्न उप-जात्राहरूको संयोजन गरिएको पर्वका रुपमा लिन सकिन्छ । इन्द्रजात्रा मूलतः विभिन्न सांस्कृतिक नाच एवं पर्वहरूको एउटा ठूलो संगम हो । त्यसैले इन्द्रजात्रा आउने बित्तिकै यसले समाजका विभिन्न समुदायलाई आ-आफ्नो तर्फबाट जात्राका लागि तयारी गर्न सक्रिय गराइसकेको हुन्छ । इन्द्रजात्राका लागि तयारी गर्ने ती समुदायहरू एउटै मात्र धार्मिक समुदायसँग आवद्ध हुनुपर्छ भन्ने छैन । काठमाडौंमा मनाइने इन्द्रजात्रा यस्तो सांस्कृतिक पर्व हो जसमा काठमाडौं उपत्यकामा सदियौंदेखि बसोवास गर्दै आइरहेका सबै धार्मिक सांस्कृतिक समुदायको उतिकै योगदान र सहभागिता रहेको हुन्छ ।

इन्द्रजात्रामा काठमाडौंमा रहेका विभिन्न धार्मिक सम्प्रदायहरूको पनि समान सहभागिता भएको देखिन्छ । इन्द्रजात्रामा विभिन्न भैरवहरूको पनि जात्रा गरिन्छ। भैरवलाई शिवको प्रतीक मानिन्छ। हनुमानढोकामा हाथु हायेके गर्नुपर्ने हाथुद्यः अर्थात श्वेत भैरवलाई शिवको रौद्र रुप भनिन्छ । लाखेलाई शान्त भैरव भनिन्छ । इन्द्रचोकको आकाश भैरवलाई शिवको समेत अंश भएको देवता मानिन्छ । त्यस्तै हल्चोकको सवःभकु र किलागलको दीप्याखं भैरवहरूकै नाच हुन् । अतः यसमा हिन्दू धर्म भित्रको शैव सम्प्रदायको सहभागिता भएको मान्न सकिन्छ ।

इन्द्रजात्रामा कुमारीको रथयात्रा हुन्छ । साथै विभिन्न सांस्कृतिक नाचहरूमा पनि कुमारीकै प्रमुख भूमिका रहेको हुन्छ । जीवित देवी कुमारी बौद्ध सम्प्रदायका शाक्य कन्या हुने गरेता पनि कौमारी अवधारणा भने हिन्दू

धर्म अन्तर्गत शाक्त सम्प्रदायकी देवी हुन् । इन्द्रजात्रामा महाकाली, महालक्ष्मी आदि अन्य शाक्त सम्प्रदायका देवीहरूको नाच पनि प्रदर्शन गरिन्छ । त्यस्तै बसन्तपुरमा नुवाकोटबाट ल्याइएको नुवाकोट भगवतीको मूर्ति पनि प्रदर्शन गरिन्छ । उक्त मूर्तिका लागि आवश्यक पूजासामानको व्यवस्था गर्न दरबारबाट छुट्टै गुठीको समेत व्यवस्था गरिएको छ ।

इन्द्रजात्रामा रथयात्रा चलाउनु पर्ने जीवित देवी कुमारी रजोवती हुने उमेर पुगे पछि निवृत्त हुने परम्परा छ । कुमारीबाट निवृत्त भए पछि उहाँ अन्य सामान्य मानिस सरह सार्वजनिक जीवनमा प्रवेश गर्नुहुन्छ । निवृत्त हुने बित्तिकै उहाँको इहि कर्म गरिन्छ । त्यसको केही समय पछि उपयुक्त साइत हेरी बाऱ्हाः राख्ने कार्य हुन्छ । त्यस पछि गरिने अर्को संस्कार भनेको पाणिग्रहण (विवाह) संस्कार हो । पहिले पहिले नेपाली समाजमा कुमारी भइसकेकी महिलालाई कुनै पनि पुरुषले विवाह गर्नुहुन्न भन्ने जनश्रुति थियो । तर यो जनश्रुति कहाँबाट कसरी आयो भन्न भने गाऱ्हो छ । कुमारी निवृत्त पछि उहाँले विवाह गर्नुहुन्न वा विवाह गरे के हुन्छ भन्ने कुरा प्रामाणिक रूपमा कुनै ग्रन्थ तथा अभिलेखहरूमा उल्लेख भएको पनि पाइँदैन । यो सम्भवतः श्री कुमारीप्रति विद्यमान असीम आस्थाका कारण समाज आफैले सिर्जना गरेको जनश्रुति पनि हुन सक्दछ । भूतपूर्व कुमारीहरू निवृत्त पछि सहजपूर्वक सामान्य जीवनमा फर्की विवाह गरेर आआफ्नो परिवारकासाथ सुखपूर्वक जीवन बिताइरहेको पाइन्छ । विवाह पछि उहाँहरूको पारिवारिक वा व्यक्तिगत जीवनमा कुनै कठिनाई आएको भन्ने पनि कतै सुनिएको-देखिएको पाइँदैन । त्यसैले कुमारीले निवृत्त पछि विवाह गर्नुहुन्न भन्ने जनश्रुति व्यवहारिक रूपले पनि गलत साबित हुँदै आएको छ । निवृत्त पछि उहाँहरू आफ्नो रूची अनुसारको शिक्षा ग्रहण गरी प्रतिष्ठित पेशाहरूमा आवद्ध हुनुभएको पनि पाइन्छ ।

इन्द्रजात्रामा बिष्णुका विभिन्न अवतारहरूलाई झाँकीका रूपमा प्रदर्शन गर्ने दशअवतार पनि देखाउने चलन रहेको छ । दशअवतार हिन्दू धर्म अन्तर्गत वैष्णव सम्प्रदायको अंग हो । दश अवतारमा बिष्णुले अवतार लिएका विभिन्न हिन्दू देवताहरूकै विभिन्न सन्दर्भहरूलाई मानिसहरूले नै अभिनय गरी झाँकीको रुपमा प्रदर्शन गरिन्छ ।

पुराणहरूमा उल्लेख गरिए अनुसार इन्द्रजात्रामा इन्द्रध्वजोत्थान गर्ने

प्रचलन बिष्णुसँग जोडिएको छ। युद्धमा पराजित भएका इन्द्रलाई बिष्णुले नै विजयको कामना सहित एउटा ध्वजा दिएका थिए। युद्धमा विजय भए पछि इन्द्रले उक्त ध्वजा चेदी देशका राजा वसुलाई दिएका थिए। राजा वसुले सोही ध्वजा उठाई इन्द्रध्वज पर्व शुरु गरेका थिए। अतः इन्द्रजात्रामा जुन यःसिं अर्थात इन्द्रध्वज उठाउने गरिन्छ त्यो मूलतः बिष्णुले प्रदान गरेको ध्वजा हो। यसलाई इन्द्रजात्रामा हिन्दू धर्म अन्तर्गत रहेको बैष्णव सम्प्रदायको सहभागिताका रुपमा लिन सकिन्छ।

हिन्दू धर्ममा देवराज इन्द्रलाई पनि एउटा छुट्टै सम्प्रदायका देवता मानिन्छ। इन्द्रलाई बुद्ध धर्ममा आठ दिक्पालहरू मध्ये एक मान्ने पनि गरिन्छ।[१७]

यसको साथै इन्द्रजात्रामा वज्रयानी बौद्ध सम्प्रदायको पनि त्यतिकै सक्रिय सहभागिता रहेको पाइन्छ। वेद एवं पुराणहरूमा इन्द्रलाई हिन्दू देवताको रुपमा वर्णन गरिएको छ। बौद्ध धर्ममा पनि इन्द्रलाई विशिष्ट स्थान दिइएको पाइन्छ। बौद्ध धर्म अनुसार मानिसको अन्तिम लक्ष्य भनेको बुद्धत्व प्राप्त गर्नु हो। बुद्धत्व प्राप्त गर्नुलाई देवता हुनु भन्दा पनि श्रेष्ठ मानिन्छ। बुद्धत्व केवल मानिसले मात्र प्राप्त गर्न सक्ने भएकोले देवलोक तथा देवताहरूका राजा इन्द्र पनि मर्त्यलोक प्रति सम्मान गर्दथे।

बौद्ध मत अनुसार संसारमा जम्मा ३१ लोकहरू छन्। ती हुन् : ४ अपाय गतिहरू, ६ देवलोकहरू र १ मनुष्यलोक। यी ११ वटा लोकहरूलाई 'काम लोक' भनिन्छ। यस अलावा १६ रुप-ब्रम्हलोकहरू र ४ अरुप-ब्रम्हलोकहरू छन्।[१८] यी ३१ वटा लोकहरू मध्ये इन्द्र देवलोकमा बस्छन्। देवलोक ६ वटा छन्। मनुष्यलोक एउटा मात्र छ। बुद्धले मनुष्यलोकमा जन्म लिई बुद्धत्व प्राप्त गरे। बुद्धत्व प्राप्त गर्न मनुष्य लोकमै जन्म लिनु पर्दछ भन्ने अवधारणा छ। मनुष्यलोकमा जन्मेर बुद्धत्व प्राप्त गर्नुलाई देवता हुनु भन्दा पनि श्रेष्ठ मानिन्छ। त्यही भएकोले मनुष्यलोक र भगवान बुद्ध प्रति देवलोकका इन्द्रले पनि सम्मान गर्दथे। त्यसैले पनि इन्द्र हिन्दू र बौद्ध दुबै धर्मका आस्थाका देवता हुन्। यसैले पनि इन्द्रजात्रा हिन्दू र बौद्ध दुबै धर्मावलम्बीहरूले महत्वका साथ मनाउने राष्ट्रिय पर्वको रुपमा स्थापित

१७ बीणा पौड्याल, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १)*, कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी, पृ. ७९।

१८ गोरकम, एन.भी., *जीवनको प्रत्येक घडीमा अभिधर्मको उपयोग,* ताइवानः द कर्पोरेट बडी अफ द बुद्धिष्ट एडुकेशनल फाउण्डेशन, बि.सं. २०४१, पृ. २४१।

भएको मान्न सकिन्छ ।

त्यस्तै इन्द्रजात्रामा रथयात्रा गरिने श्री कुमारीलाई बौद्ध दर्शन अनुसार वज्रदेवीको रूपमा पूजा गरिन्छ । त्यही भएर कुमारी घरमा अहिले पनि कुमारीलाई वज्राचार्य गुर्जुबाट नित्यपूजा गर्ने चलन रहेको छ । बौद्ध विहारहरूमा कुमारी रहने नेपाल उपत्यकाको पुरानो परम्परा हो । स्वयम् कुमारी घर पनि एक विहार वास्तुकलाकै स्वरुपमा निर्माण गरिएको देवस्थल हो । उक्त विहारको नाम राजकीर्ति मनोरम महाविहार हो । कुमारीलाई हिन्दू देवी तलेजु भवानीको जीवित स्वरुपको रूपमा पनि पूजा गरिन्छ । जीवित देवी कुमारी बौद्ध विहारमा विराजमान हुने देवी भएको नाताले बौद्धहरूका लागि बौद्ध देवी नै हुन् भने हिन्दूहरूका लागि तलेजु भवानीको जीवित रूप हो ।

हिन्दू दर्शन अनुसार भैरवलाई शिवको अर्को रुप मानिन्छ भने बौद्ध दर्शनमा भैरवलाई रक्षा गर्ने देवताको प्रतीक मानिन्छ । बौद्ध विहारहरूमा मूलद्वारबाट भित्र प्रवेश गर्ने बित्तिकै दायाँ बायाँ भैरवको मूर्ति पनि राखिएका हुन्छन् । बौद्ध विहारमा विहारको रक्षार्थ यसरी भैरवको मूर्ति राखेको पाइन्छ । इन्द्रजात्रामा कुमारीको रथयात्रा चलाउँदा कुमारी रथको सामुन्ने कुमारीको रक्षार्थ भैरवको रथयात्रा चलाउँदै आइरहेको हुन्छ ।

त्यस्तै हिन्दू धर्ममा गणेशलाई कुनै पनि कार्य आरम्भ गर्ने कार्यसिद्धिका लागि पुजिने देवताका रुपमा पूजा गरिन्छ । केही बौद्ध विद्वानहरूले भने गणेशलाई पञ्चशीलको प्रतिकका रुपमा पनि व्याख्या गरेको पाइन्छ। त्यसैले केही बौद्ध विद्वानहरूका अनुसार विहारमा प्रवेश गर्नासाथ राखिएको गणेशको मूर्तिले प्रतिकात्मक रूपमा पञ्चशील पालना गरेर मात्र विहारमा जानु पर्छ भन्ने अर्थ दिएको हुन्छ । इन्द्रजात्रामा श्री कुमारीको रथयात्रा चलाउँदा सबै भन्दा अगाडि गणेशको रथयात्रा चलाउने परम्परा रहिआएको छ ।

इन्द्रजात्रामा कुमारीको रथयात्रा चलाउँदा रथको अगाडि पञ्चबुद्धको प्रतीक स्वरुप वज्राचार्य गुर्जुहरू पनि सहभागी भएका हुन्छन् । वज्रयानी बौद्ध धर्ममा पञ्चबुद्ध भन्नाले मानव बुद्ध नभई प्रतीकात्मक बुद्धहरू हुन् । पञ्चबुद्धमा पाँच जना प्रतीकात्मक बुद्धहरू हुन्छन्, ती वैरोचन, अक्षोभ्य, अमोघसिद्धि, अमिताभ र रत्नसम्भव हुन् ।[१९]

१९ काठमाडौं वडा नं. २३ का सिख्वंमू बहाःका राजगुर्जु मञ्जुश्री वज्राचार्यसँग अन्तर्वार्ता ।

इन्द्रजात्राको पहिलो दिन भाद्रशुक्ल द्वादशीको अपरान्ह दिवंगतहरूका नाममा उनका आफन्तहरू उपाकु जाने गर्दछन् । सोही वर्ष दिवंगत भएका मानिसहरूले राम्रो लोकमा जन्म लिन पाउन् भन्ने कामना गरी उनका आफन्तहरू उपाकु जाने चलन छ । उपाकु जाँदा बाटोभरि काँचो माटोको पाल्चा बालेर बाटोमा राख्दै जाने गरिन्छ । उपाकुमा खास गरी बौद्धमार्गी नेवारहरू सहभागी भएका हुन्छन् । अहिले भने उपाकु जाँदा हिन्दूमार्गी नेवारहरू पनि सहभागी हुन थालेको पाइन्छ ।

त्यस्तै कुमारीको रथयात्रा हुँदा रथ तान्ने थःने र क्वःने (माथिल्लो र तल्लो) क्षेत्रमा पनि काँचो माटोको पाल्चा हाल्दै परिक्रमा गर्ने चलन पनि छ। यो पनि सोही वर्ष दिवंगत भएका मानिसहरूका नाममा उनका आफन्तहरूले गर्ने कार्य हो । पूर्णिमाका दिन बौद्ध परम्परा अनुसार इन्द्रलाई पनि बत्ति (देवा मत) बाल्ने गरिन्छ ।

काठमाडौंमा इन्द्रजात्रा बाहेक अरु पनि धेरै जात्रापर्वहरू मनाउने चलन छ। तर काठमाडौंमा मनाइने अरु जात्राहरू क्षेत्रगत रूपमा सीमित भेगमा मात्रै मनाउने गरेको पाइन्छ । जस्तो काठमाडौंको अर्को ठूलो पर्व पाहाँचःऱ्हेमा मनाइने विभिन्न अजिमाहरूको खटजात्रा आफ्नै क्षेत्रमा मात्र सीमित रहेको पाइन्छ। त्यस्तै बाला चतुर्दशीमा मनाइने लुति अजिमाको जात्रा माथिल्लो भेगमा मात्र सीमित छ भने दशैंको पचिमऱ्हःका दिन मनाइने पचली भैरवको जात्रा तल्लो भेगमा मात्र सीमित छ। तर इन्द्रजात्रा भने काठमाडौंको तल्लो र माथिल्लो दुवै भेगमा मनाउने गरिन्छ । इन्द्रजात्रामा कुमारीको रथयात्रा चलाउँदा थःनेयाः र क्वःनेयाः भनी दुवै भेगलाई समान मान्यता समेत दिने गरेको पाइन्छ । त्यस्तै इन्द्रजात्रामा निकालिने दागिं र बौमतले पनि काठमाडौंको थःने र क्वःने दुवै क्षेत्र परिक्रमा गर्दछ । साथै दीप्याखं, सवःभक्कु, लाखे, पुलुकिसि, महाकाली नाचहरू पनि माथिल्लो र तल्लो भेगका सबै क्षेत्रमा प्रदर्शन गरिन्छ। उपाकु यात्रामा अझ तल्लो र माथिल्लो भेगको कुनाकाप्चा समेत परिक्रमा गरिन्छ। काठमाडौंको तल्लो र माथिल्लो भेगलाई लिच्छविकालमा दक्षिणकोलिग्राम र उत्तरकोलिग्राम भनी छुट्याइएको थियो। यी क्षेत्रमा मनाइने सांस्कृतिक पर्व एवं जात्राहरू पनि आआफ्नै थिए। इन्द्रजात्रा भने यी दुवै क्षेत्रको समेत जात्रा थियो । इन्द्रजात्राले यी दुवै क्षेत्रलाई समेटेको पाइन्छ। इन्द्रजात्रा माथिल्लो र तल्लो दुवै भेगमा उत्तिकै

सम्मानपूर्वक मान्ने भएकोले काठमाडौंका यी दुई प्राचीन भेगलाई इन्द्रजात्रा पर्वले जोडेको मान्न सकिन्छ। दुवै क्षेत्रमा मनाइने भएकोले इन्द्रजात्रामा दुवै क्षेत्रका जनता सहभागी भएका हुन्छन् । अतः यसलाई काठमाडौंमा सम्पूर्ण जनताको साझा जात्रा मान्न सकिन्छ ।

इन्द्रजात्रामा विशेष रुपमा मनाउने अर्को पर्व समयूबजि खाने र बाँड्ने पनि हो । इन्द्रजात्राकै बीचमा आउने पूर्णिमाका दिन घरमा समयूबजि बनाएर आफू खाने र टोल छिमेकमा अरुलाई बाँड्ने पनि गरिन्छ। समयूबजि खाने पूर्णिमा भएकोले उक्त दिनलाई 'समयू पुन्हि' पनि भनिन्छ। घर घरबाट समयूबजि बाँड्ने भएकोले उक्त दिन बालबालिकाहरू टोल छिमेकको घर घरमा गई समयूबजि माग्ने पनि चलन छ। आफ्नो घरमा बनाएको समयूबजि अरुलाई समेत बाँड्ने यो परम्पराले दान दिने भावनालाई बढाउने र टोल छिमेकमा सामाजिक सद्भावको भावना अभिवृद्धि गर्ने विश्वास गर्न सकिन्छ ।

इन्द्रजात्रामा इन्द्रलाई समयूबजि चढाउन र सर्वसाधारणमा बाँड्न पहिले पहिले छुट्टै गुठीहरूको समेत व्यवस्था गरिएको पाइन्छ । नेपालको मध्यकालीन अभिलेखहरूको अध्ययन गर्दा स्थानीय जनता आफैले स्थापना गरेका यस्ता गुठीहरूका बारेमा धेरै ठाउँमा उल्लेख भएको पाइन्छ। त्यस्तो गुठीहरू स्थापना गर्दा गुठी चलाउन आवश्यक आयस्ता समेत स्थानीय जनता आफैले व्यवस्था गरेको पनि देखिन्छ । आयस्ताका रुपमा विभिन्न ठाउँमा आवश्यकतानुसार ५ रोपनी, १० रोपनी खेतको व्यवस्था पनि गरिएको देखिन्छ । त्यतिबेला इन्द्रजात्रा प्रति स्थानीय मानिसहरूको श्रद्धा र आस्था कति बढी थियो भन्ने कुरा यसबाट थाहा पाउन सकिन्छ। स्थानीय जनताले इन्द्रजात्रामा समयूबजि बाँड्नका लागि मात्र होइन, इन्द्रजात्राकै अवसरमा कतै हाथु हायेके गर्न, कतै बत्ती बाल्न पनि आयस्ता समेतको व्यवस्था गरी यस्ता गुठीहरू स्थापना गरेको पाइन्छ। ऐतिहासिककालमा समेत इन्द्रजात्रा वास्तवमा राज्यस्तरबाट मात्र होइन जनस्तरबाट समेत अत्यन्त आस्थापूर्वक मान्ने गरिन्थ्यो भन्ने कुरा यसबाट थाहा पाउन सकिन्छ। इन्द्रलाई वर्षात्को देवता मानिन्छ। त्यसैले अति वर्षाद वा सुख्खा दुवै नगरी ठिक्क मात्राको वर्षादको लागि सम्पूर्ण जनताका तर्फबाट इन्द्रको आराधना गर्न पनि कुनै मनकारी व्यक्तिले यस्तो गुठीको व्यवस्था गरेको हुनुपर्दछ ।

इन्द्रजात्रा सञ्चालन गर्न अहिले विभिन्न गुठीहरू आवद्ध भएका हुन्छन्।

अहिले इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच एवं पर्वहरूका लागि छुट्टाछुट्टै नै परम्परागत गुठीहरूको व्यवस्था गरिएको छ । यी गुठीहरूका बीच एक आपसमा कुनै सम्बन्ध रहेको पाइँदैन । यी सबै गुठीहरू स्वतन्त्र हैसियतका हुन् । तर इन्द्रजात्राका बेला भने आपसमा कुनै सम्बन्ध नभएता पनि यी सबै गुठीहरू एकै ठाउँ भेला भई जात्रा सम्पन्न गर्न सक्रिय हुन्छन् । अहिले केही वर्ष अघिदेखि इन्द्रजात्रा व्यवस्थापन समिति गठन गरी छुट्टाछुट्टै रहेका यी गुठीहरूलाई इन्द्रजात्रा पर्व सफलतापूर्वक सम्पन्न गर्ने उद्देश्यले एउटै ठाउँमा ल्याई सामुहिक भावनाबाट जात्रा चलाउने कार्य शुरु गरिएको छ । इन्द्रजात्राकै कारण सिर्जना हुने गुठीहरू बीचको यो समन्वयले सांस्कृतिक एकताको भाव प्रदर्शन गर्दछ ।

हालैका वर्षदेखि श्री कुमारीको नानीचायाः हुँदा श्री कुमारी लगायत श्री गणेश र श्री भैरवको रथ समेत महिलाहरूले मात्र तान्ने नयाँ चलन शुरु भएको छ । नानीचायाः विशेषतः एक महिलाकै नाममा समर्पित याः (यात्रा) हो । त्यसैले उक्त दिनको जात्रा प्रति महिलाहरूको भावनात्मक सम्बन्ध पनि जोडिन आएको देखिन्छ । त्यही कारणले नानीचायाःका दिन ुरुदेखि अन्त्यसम्म महिलाहरूले मात्रै रथ तानेर कुमारी जात्रा सम्पन्न गर्ने ाँगर उत्पन्न भई काठमाडौंका स्थानीय महिला दिदीबहिनीहरूले यो नयाँ लन शुरु गरेका थिए । उक्त दिनको कुमारी यात्रालाई व्यवस्थित गर्न महिला समूहले छुट्टै नियमहरू पनि बनाएका छन् । खास गरी रथयात्रामा सहभागी हुँदा महिलाहरूले कस्तो पोशाक लगाउने, कस्तो व्यवहार देखाउने, गरगहनाहरू कसरी व्यवस्थित गर्ने भन्ने व्यहोरा उक्त नियममा उल्लेख गरिएको छ । छुट्टै नियम समेत बनाएर अत्यन्त अनुशासित भई रथयात्रा गर्ने भएकोले नानीचायाः अहिले व्यवस्थित र रोचक पनि हुने गरेको छ । कुनै बेला यस्तो रथयात्रामा महिलाहरूले रथ तान्नु हुँदैन भन्ने धारणा थियो । तर हाल यो पुरानो अवधारणालाई तोड्दै महिलाहरू आफै सक्रिय भई रथ तान्ने कार्यमा सरिक हुन आएका छन् । महिलाहरू यसरी अघि सर्नु भनेको नेपाली महिलाहरूमा आएको सांस्कृतिक जागरणको संकेत हो । यसले महिलाहरू पनि कुनै काम गर्न असक्षम वा कमजोर छैनन्, आवश्यक परे उनीहरू पनि पुरुष सरह नै अघि सर्न सक्छन् भन्ने आत्मविश्वास जगाएको मान्न सकिन्छ ।

त्यस्तै हालैका वर्षमा हनुमानढोकास्थित हाथुद्यः (श्वेत भैरव) को

मुखबाट प्रसाद स्वरुप अर्पण गरिने जाँड ग्रहण गर्न लागि पनि महिलाहरूका लागि छुट्टै व्यवस्था गर्न थालिएको छ। पहिले पहिले पुरुषहरूको भीडभाडले गर्दा महिलाहरूका लागि हाथुद्यःको प्रसाद ग्रहण गर्न पाउनु असम्भव जस्तै थियो । तर अहिले महिलाहरूका लागि पनि यो व्यवस्था गर्न थालिएकोले महिलाहरूले इन्द्रजात्रामा पूर्ण सहभागिता जनाउन पाएका छन् । इन्द्रजात्रामा बढेको महिलाहरूको यो सहभागिता महिला सशक्तीकरणको उदाहरण पनि हो। यसले महिलाहरूलाई हरेक ठाउँमा निडर भई घुलमिल हुन सक्ने र सहज सामाजिकीकरणको क्षमता प्रदान गर्दछ। इन्द्रजात्रा पर्वले सांस्कृतिक रुपमा महिलाहरूलाई प्रदान गरेको यो जाँगर र चेतनालाई महिला सशक्तीकरणका अन्य क्षेत्रमा पनि उत्प्रेरणाका रुपमा प्रयोग गर्न सकिन्छ।

इन्द्रजात्रामा देखाइने कतिपय सहायक जात्राहरू सञ्चालन गर्न अझै पनि विभिन्न समस्याहरू रहेको बताइन्छ। ती मध्ये दीप्याखं पनि धेरै पहिलेदेखि विभिन्न समस्याहरूबाट गुज्रिँदै आइरहेको थियो । गत वर्ष दीप्याखंलाई दिगो बनाउने उद्देश्यले दीप्याखं गुठीका गुठियारहरू आफै सक्रिय भई ऋण लिएर दीप्याखंको आगंछेँ बनाउने कार्य शुरु गरेको छ। जात्रालाई निरन्तरता दिन आर्थिक बोझ समेत आफैले व्यहोर्ने गरी आगंछेँ बनाउन गुठियारहरूमा आएको यो जाँगर पनि इन्द्रजात्राबाट समाजलाई प्राप्त भएको एउटा अर्को उत्साहको उदाहरण हो । त्यति मात्र होइन दीप्याखं प्रदर्शन गर्दा आवश्यक पर्ने विभिन्न प्रकारका फूलहरू लोप हुँदै गएकोले अब त्यस्ता फूलहरू आफै उत्पादन गर्ने उद्देश्यले दीप्याखं गुठीले बिष्णुमती छेउमा एउटा सानो जग्गा प्राप्त गरी त्यहाँ बारी बनाई फूल रोप्ने कार्य पनि शुरु गरेको छ । यसले पर्यावरणीय संरक्षणमा योगदान पुऱ्याउनुका साथै काठमाडौंका रैथाने वनस्पतिलाई लोप हुनबाट बचाउने पनि निश्चित छ । यो पनि इन्द्रजात्रा सञ्चालनकै सन्दर्भमा सिर्जना भएको जाँगर हो। यही उत्साहपूर्ण जाँगरलाई समाजमा गर्नुपर्ने अन्य सामाजिक कार्यहरूमा पनि लागू गर्न सके त्यसले समाज विकासलाई टेवा नै दिने विश्वास लिन सकिन्छ।

इन्द्रजात्रा पर्वको शुरुवात इन्द्रध्वजोत्थानबाट भएको वर्णन पुराणहरूमा गरिएको पाइन्छ। तर काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्ती भने यो भन्दा फरक र मौलिक रहेको देखिन्छ । काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्ती अनुसार काठमाडौंमा पारिजातको फूल

अहिले इन्द्रजात्रासँग आवद्ध विभिन्न नाच एवं पर्वहरूका लागि छुट्टाछुट्टै नै परम्परागत गुठीहरूको व्यवस्था गरिएको छ । यी गुठीहरूका बीच एक आपसमा कुनै सम्बन्ध रहेको पाइँदैन । यी सबै गुठीहरू स्वतन्त्र हैसियतका हुन् । तर इन्द्रजात्राका बेला भने आपसमा कुनै सम्बन्ध नभएता पनि यी सबै गुठीहरू एकै ठाउँ भेला भई जात्रा सम्पन्न गर्न सक्रिय हुन्छन् । अहिले केही वर्ष अघिदेखि इन्द्रजात्रा व्यवस्थापन समिति गठन गरी छुट्टाछुट्टै रहेका यी गुठीहरूलाई इन्द्रजात्रा पर्व सफलतापूर्वक सम्पन्न गर्ने उद्देश्यले एउटै ठाउँमा ल्याई सामुहिक भावनाबाट जात्रा चलाउने कार्य शुरु गरिएको छ । इन्द्रजात्राकै कारण सिर्जना हुने गुठीहरू बीचको यो समन्वयले सांस्कृतिक एकताको भाव प्रदर्शन गर्दछ ।

हालैका वर्षदेखि श्री कुमारीको नानीचायाः हुँदा श्री कुमारी लगायत श्री गणेश र श्री भैरवको रथ समेत महिलाहरूले मात्र तान्ने नयाँ चलन शुरु भएको छ । नानीचायाः विशेषतः एक महिलाकै नाममा समर्पित याः (यात्रा) हो । त्यसैले उक्त दिनको जात्रा प्रति महिलाहरूको भावनात्मक सम्बन्ध पनि जोडिन आएको देखिन्छ । त्यही कारणले नानीचायाःका दिन शुरुदेखि अन्त्यसम्म महिलाहरूले मात्रै रथ तानेर कुमारी जात्रा सम्पन्न गर्ने जाँगर उत्पन्न भई काठमाडौंका स्थानीय महिला दिदीबहिनीहरूले यो नयाँ चलन शुरु गरेका थिए । उक्त दिनको कुमारी यात्रालाई व्यवस्थित गर्न महिला समूहले छुट्टै नियमहरू पनि बनाएका छन् । खास गरी रथयात्रामा सहभागी हुँदा महिलाहरूले कस्तो पोशाक लगाउने, कस्तो व्यवहार देखाउने, गरगहनाहरू कसरी व्यवस्थित गर्ने भन्ने व्यहोरा उक्त नियममा उल्लेख गरिएको छ । छुट्टै नियम समेत बनाएर अत्यन्त अनुशासित भई रथयात्रा गर्ने भएकोले नानीचायाः अहिले व्यवस्थित र रोचक पनि हुने गरेको छ । कुनै बेला यस्तो रथयात्रामा महिलाहरूले रथ तान्नु हुँदैन भन्ने धारणा थियो । तर हाल यो पुरानो अवधारणालाई तोड्दै महिलाहरू आफै सक्रिय भई रथ तान्ने कार्यमा सरिक हुन आएका छन् । महिलाहरू यसरी अघि सर्नु भनेको नेपाली महिलाहरूमा आएको सांस्कृतिक जागरणको संकेत हो । यसले महिलाहरू पनि कुनै काम गर्न असक्षम वा कमजोर छैनन्, आवश्यक परे उनीहरू पनि पुरुष सरह नै अघि सर्न सक्छन् भन्ने आत्मविश्वास जगाएको मान्न सकिन्छ ।

त्यस्तै हालैका वर्षमा हनुमानढोकास्थित हाथुद्यः (श्वेत भैरव) को

मुखबाट प्रसाद स्वरुप अर्पण गरिने जाँड ग्रहण गर्न लागि पनि महिलाहरूका लागि छुट्टै व्यवस्था गर्न थालिएको छ । पहिले पहिले पुरुषहरूको भीडभाडले गर्दा महिलाहरूका लागि हाथुद्यःको प्रसाद ग्रहण गर्न पाउनु असम्भव जस्तै थियो । तर अहिले महिलाहरूका लागि पनि यो व्यवस्था गर्न थालिएकोले महिलाहरूले इन्द्रजात्रामा पूर्ण सहभागिता जनाउन पाएका छन् । इन्द्रजात्रामा बढेको महिलाहरूको यो सहभागिता महिला सशक्तीकरणको उदाहरण पनि हो । यसले महिलाहरूलाई हरेक ठाउँमा निडर भई घुलमिल हुन सक्ने र सहज सामाजिकीकरणको क्षमता प्रदान गर्दछ । इन्द्रजात्रा पर्वले सांस्कृतिक रुपमा महिलाहरूलाई प्रदान गरेको यो जाँगर र चेतनालाई महिला सशक्तीकरणका अन्य क्षेत्रमा पनि उत्प्रेरणाका रुपमा प्रयोग गर्न सकिन्छ ।

इन्द्रजात्रामा देखाइने कतिपय सहायक जात्राहरू सञ्चालन गर्न अझै पनि विभिन्न समस्याहरू रहेको बताइन्छ । ती मध्ये दीप्याखं पनि धेरै पहिलेदेखि विभिन्न समस्याहरूबाट गुज्रिँदै आइरहेको थियो । गत वर्ष दीप्याखंलाई दिगो बनाउने उद्देश्यले दीप्याखं गुठीका गुठियारहरू आफै सक्रिय भई ऋण लिएर दीप्याखंको आगंछेँ बनाउने कार्य शुरु गरेको छ । जात्रालाई निरन्तरता दिन आर्थिक बोझ समेत आफैले व्यहोर्ने गरी आगंछेँ बनाउन गुठियारहरूमा आएको यो जाँगर पनि इन्द्रजात्राबाट समाजलाई प्राप्त भएको एउटा अर्को उत्साहको उदाहरण हो । त्यति मात्र होइन दीप्याखं प्रदर्शन गर्दा आवश्यक पर्ने विभिन्न प्रकारका फूलहरू लोप हुँदै गएकोले अब त्यस्ता फूलहरू आफै उत्पादन गर्ने उद्देश्यले दीप्याखं गुठीले बिष्णुमती छेउमा एउटा सानो जग्गा प्राप्त गरी त्यहाँ बारी बनाई फूल रोप्ने कार्य पनि शुरु गरेको छ । यसले पर्यावरणीय संरक्षणमा योगदान पुऱ्याउनुका साथै काठमाडौंका रैथाने वनस्पतिलाई लोप हुनबाट बचाउने पनि निश्चित छ । यो पनि इन्द्रजात्रा सञ्चालनकै सन्दर्भमा सिर्जना भएको जाँगर हो । यही उत्साहपूर्ण जाँगरलाई समाजमा गर्नुपर्ने अन्य सामाजिक कार्यहरूमा पनि लागू गर्न सके त्यसले समाज विकासलाई टेवा नै दिने विश्वास लिन सकिन्छ ।

इन्द्रजात्रा पर्वको शुरुवात इन्द्रध्वजोत्थानबाट भएको वर्णन पुराणहरूमा गरिएको पाइन्छ । तर काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्ती भने यो भन्दा फरक र मौलिक रहेको देखिन्छ । काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्ती अनुसार काठमाडौंमा पारिजातको फूल

टिप्न आएका देवराज इन्द्रलाई स्थानीय जनताले चोरको आरोप लगाएर पक्रे। त्यसपछि उनलाई सजाँय स्वरुप दोबाटोमा बाँधेर राखे । उनी स्वर्गका राजा हुन् भन्ने थाहा पाए पनि त्यसै छोडेनन् । उनलाई दण्ड स्वरुप धान वालीको लागि आवश्यक कुइरो दिने कबुल गरे पछि मात्रै मुक्त गरियो । इन्द्र सम्बन्धी यो कथाले वास्तवमा चोर्ने काम जोकोहीले गरे पनि उसले सजायँ पाउँछ भन्ने नैतिक सन्देश समाजलाई दिएको छ। यो कथाले साना बालबालिकाहरूलाई चोरी जस्तो काम गर्नुहुन्न भने मनोविज्ञान सानैबेलादेखि प्रदान गरी शिलवान बन्न सहयोग गर्दछ।

त्यस्तै इन्द्रजात्रामा दीप्याखं, सवःभक्कु र महाकाली नाच जस्ता देवी नाचहरू पनि प्रदर्शन गरिन्छन् । यी सबैजसो देवीनाचहरूमा राज्यमा दुःख दिन आउने खराब तत्वलाई पराजित गरी असल पक्षले विजय हासिल गरेको कुरा प्रदर्शन गरिएका छन् । अर्थात असत्यमाथि सत्यले जित हासिल गरेको कथालाई नाट्य शैलीमा प्रस्तुत गरिएका छन् । आफ्नो राज्यमा दुःख दिन आउने बाह्य शक्ति अर्थात असुरहरूसँग देवीदेवताहरूले युद्ध लडेको र उक्त युद्धमा असुर शक्तिलाई पराजित गरी राज्यको सुरक्षा गर्न दैवी शक्ति सफल भएको प्रशंगलाई कलात्मक ढंगले प्रस्तुत गरिएका हुन्छन् । ती नाचहरूले प्रस्तुत गर्ने यो कथाले देशवासीलाई राष्ट्रप्रेमको भावना जागृत गराउनुका साथै असत्यमाथि सधैँ सत्यले नै विजय हासिल गरेको हुन्छ भन्ने सन्देश पनि दिइरहेको हुन्छ। यसबाट मानिसलाई असत्यबाट टाढै रही सधैँ सत्य मार्गमा हिँड्न प्रेरणा प्रदान गर्दछ।

यसरी हेर्दा इन्द्रजात्रा एक धार्मिक-सांस्कृतिक पर्व भए पनि यसले सामाजिक जीवनमा पनि धेरै प्रभाव पारेको देख्न सकिन्छ । इन्द्रजात्रा र इन्द्रजात्रासँग सम्बन्धित विभिन्न सहायक जात्रा एवं पर्वहरूको आशय र उक्त नाच एवं पर्वहरूले दिने सन्देशले समाजलाई सकारात्मक सोचउन्मुख नैतिक शिक्षा प्रदान गरेको पाइन्छ । समाजमा विद्यमान विभिन्न जातीय समूहहरू एकै ठाउँ भेला भई जात्रा सम्पन्न गर्ने भएकोले यसले समाजमा समन्वय, सहअस्तित्व र सहकार्यको भावना जागृत गराउने विश्वास गर्न सकिन्छ । इन्द्रजात्रा मनाउने क्रममा विकास हुने यो भावनाले समाजमा शान्ति र सौहार्दता कायम गरी समृद्धिको बाटोमा अघि बढाउन प्रेरणा प्रदान गर्दछ।

महिला सशक्तीकरण अहिले विश्वमै सबैभन्दा जल्दोबल्दो अभियानको

रुपमा अघि बढिरहेको छ। विश्वभरिका महिलाहरूलाई परम्परागत रुढीवादी सोच तथा अन्धविश्वासबाट मुक्त गरी अधिकार सहितको समतामूलक जीवनपद्धति अनुरुप अघि बढाउन विभिन्न शैली र स्वरुपका जुन अभियानहरू सञ्चालन भइरहेका छन् त्यसलाई पनि इन्द्रजात्रामा महिलाहरूको सहभागिताले टेवा दिने विश्वास गर्न सकिन्छ।

इन्द्रजात्रामा हिन्दू धर्म अन्तर्गतका इन्द्र, शैव, शाक्त, बैष्णव सम्प्रदाय लगायत बौद्ध धर्मको वज्रयानी सम्प्रदायको पनि श्रद्धापूर्ण सक्रिय सहभागिता रहेको पाइन्छ। नेपालमा धेरै जात्रा पर्वहरू मनाउने गरिए पनि इन्द्रजात्राको यो मौलिक विशेषता हो। विभिन्न धार्मिक सम्प्रदायको सामुहिक श्रद्धा र सक्रिय सहभागिताबाट इन्द्रजात्रा पर्व सम्पन्न हुने भएकोले यो जात्राले समाजमा धार्मिक सहिष्णुताको भावनाको विकास भएको मान्न सकिन्छ।

यस प्रकार इन्द्रजात्रामा देशका विभिन्न धार्मिक सम्प्रदाय र विभिन्न जातीय समुदायहरूको आस्था र सक्रिय सहभागिता हुने भएकोले नेपाल जस्तो बहुधार्मिक, बहुसांस्कृतिक बहुलवादी समाज भएको मुलुकमा इन्द्रजात्रा पर्वले धार्मिक-सांस्कृतिक समन्वय, एकताको भावना, सहकार्य, सहिष्णुता र भाइचाराको अभिवृद्धि हुने विश्वास गर्न सकिन्छ।

# इन्द्रजात्रा र काठमाडौं महानगरपालिका

इन्द्रजात्रा नेपाल उपत्यकामा प्राचीनकालदेखि नै मनाउन थालिएको एक महत्वपूर्ण सांस्कृतिक पर्व हो । यो जात्रासँग नेपालको धार्मिक-सांस्कृतिक मात्र होइन राजनीतिक, सामाजिक सम्बन्ध समेत रहेको पाइन्छ । इन्द्रजात्रा पर्वलाई समाजका सबै जाति, वर्गका आम जनसमुदाय मात्र होइन राष्ट्रप्रमुख र राज्यका विशिष्ट पदाधिकारीहरू समेत सहभागी भई भव्यतापूर्वक मनाउने परम्परा रहिआएको छ । ऐतिहासिककालमा यो पर्व राजा, राजपरिवार लगायत दरवारका अन्य भाइभारदार र सबैजसो उच्चपदस्थ कर्मचारीहरू समेत सहभागी भई हर्षोल्लासकासाथ मनाउने परम्परा रहेको थियो । अहिले बदलिँदो परिस्थितिमा इन्द्रजात्रालाई त्यसरी मनाउने गरिँदैन, तथापि यो जात्रालाई राज्यका तर्फबाट प्रदान गरिने राजकीय सम्मान भने कायमै रहेको छ । हरेक इन्द्रजात्रा पर्वमा अहिले राष्ट्रप्रमुखका रूपमा राष्ट्रपति सरिक भई जात्रा चलाउने गरिँदै आएको छ भने राज्यका तर्फबाट जात्राका लागि गर्नुपर्ने पूजाआजा, आर्थिक एवं अन्य महत्वपूर्ण सहयोगहरू उपलब्ध गराउँदै आइरहेको छ । राज्यका तर्फबाट प्रदान गरिने सहयोगको रकम पहिले पहिले प्रयाप्त भएता पनि पछिल्लो समयमा अपुग हुन पुगेको देखिन आउँछ । लामो समयदेखि समायोजन नभएको र महंगी, मुद्रास्फीति आदि जस्ता आर्थिकस्थितिका कारण यी सहयोगहरू अपुग भएको गुनासो पनि धेरै अघिदेखि नै सम्बन्धित गुठियारहरूले राख्दै आइरहेका छन् । तर आफ्नो धार्मिक आस्था र संस्कृतिप्रतिको असीम प्रेमका कारण राज्यले प्रदान गर्ने सहयोगहरू प्रयाप्त नभए पनि जात्रासँग सम्बन्धित गुठी र गुठियारहरूले आफ्नै योगदानबाट इन्द्रजात्रालाई अझै पनि निरन्तरता दिँदै आइरहेका छन् ।

इन्द्रजात्रा लगातार आठ दिनसम्म सञ्चालन हुने गर्दछ । इन्द्रजात्रा पर्व

एउटै भए पनि यो जात्रासँग अरु पनि धेरै सहायक जात्रा एवं पर्वहरू आयोजना हुने भएकोले यसको व्यवस्थापन गर्न सजिलो छैन । यसको लागि संस्कृतिप्रेमि आम जनसमुदाय र राज्यका विभिन्न निकायले भूमिका खेल्दै आइरहेको थियो। वि.सं. २०७२ सालमा जारी भएको नयाँ संविधानले मुलुकको जात्रापर्वहरू सञ्चालन गर्ने जिम्मा स्थानीय सरकारलाई दिएको छ। स्थानीय सरकार सञ्चालन ऐन, २०७४ अनुसार काठमाडौं महानगर क्षेत्र भित्र सञ्चालन हुने विभिन्न जात्रापर्वहरूको सञ्चालन, संवर्द्धन र प्रवर्द्धनको जिम्मेवारी अहिले काठमाडौं महानगरपालिका अन्तर्गत रहन आएको छ । यसर्थ काठमाडौं महानगरपालिकाद्वारा संरक्षण, संवर्द्धन गरिनु पर्ने विभिन्न जात्रापर्वहरू मध्ये इन्द्रजात्रा प्रमुख जात्रा हो ।

इन्द्रजात्रा पर्व नेपाल उपत्यका भित्र काठमाडौं बाहेक ललितपुर र भक्तपुर लगायत अन्य स्थानहरूमा पनि उतिकै श्रद्धा र सम्मानपूर्वक मनाउने गरिन्छ। तर पनि काठमाडौंमा मनाइने इन्द्रजात्रा भने अरु क्षेत्रका इन्द्रजात्रा भन्दा फरक र भव्य देखिन्छ । काठमाडौंमा इन्द्रजात्रा पर्वलाई स्थानीय भाषामा 'यँयाः' भनिन्छ। काठमाडौं नगरलाई 'यें' भनिन्छ। यसैलाई आधार बनाई केही संस्कृतिविद्हरूले 'यँयाः' को अर्थ 'काठमाडौंको जात्रा' भनेर पनि अर्थ्याएका छन् । 'यँयाः' पर्वलाई 'काठमाडौंको जात्रा' भन्ने अर्थ पनि लगाएको कारणले यो जात्राप्रति काठमाडौंवासीको आत्मीयता बढी नै रहेको पाइन्छ । त्यसैले इन्द्रजात्रा मनाउन काठमाडौंवासीहरू पूर्ण श्रद्धा र आत्मीयतापूर्वक सहभागी भएका हुन्छन् ।

इन्द्रजात्रा पर्वको ऐतिहासिक गरिमा, यसको धार्मिक-सांस्कृतिक महत्व र यसप्रति स्थानीय जनताको असीम श्रद्धालाई ध्यानमा राख्दै काठमाडौं महानगरपालिकाले यो पर्व सञ्चालनलाई उच्च प्राथमिकतामा राखेको छ । हाल इन्द्रजात्रा पर्व सञ्चालनका लागि संघीय सरकारले प्रदान गर्ने सहयोग बाहेक पनि काठमाडौं महानगरपालिकाले थप सहयोग गर्दै यसलाई अझ भव्य बनाउने प्रयास गर्दै आइरहेको छ । इन्द्रजात्रा पर्व सञ्चालनका लागि सरकारका तर्फबाट गुठी संस्थानले सहयोग उपलब्ध गराउँदै आइरहेको थियो। जात्रा पर्व सञ्चालनको लागि सरकारबाट उपलब्ध गराउनुपर्ने सहयोग प्रदान गर्ने अधिकार गुठी संस्थानलाई दिइएको कारण परम्परादेखि गुठी संस्थानले नै यो कार्य गर्दै आइरहेको पाइन्छ । हरेक वर्ष इन्द्रजात्रा शुरु हुने बेला

जात्रामा सहभागी हुनुपर्ने कुमारीछैं, लाखे, पुलुकिसि, दीप्याखं, सवःभक्कु, श्वेत भैरव, महाकाली नाच आदि विभिन्न गुठी खलःका पदाधिकारीहरू गुठी संस्थानमा गई आआफ्नो जात्राका लागि छुट्याइएको रकम प्राप्त गर्दथे । तर जात्रा सञ्चालनका लागि उपलब्ध गराउने यो रकम प्रयाप्त नभएको गुनासो सबै गुठियारहरूको थियो । साथै उक्त रकम प्राप्त गर्न धेरै प्रकारका प्रशासनिक प्रक्रियाहरू पनि व्यहोर्नु पर्ने भएकोले थप रकम सहित अर्को सहज व्यवस्था हुनुपर्ने माग पनि भइरहेको थियो । यसै प्रशंगमा यी विविध समस्याहरूलाई सहजता प्रदान गर्नका लागि काठमाडौं महानगरपालिकाले इन्द्रजात्रा पर्व मनाउनका लागि विशेष अनुदानहरूको व्यवस्था गरेको पाइन्छ । इन्द्रजात्राको विशेष आकर्षणको रुपमा रहेको कुमारी र कुमारीको रथयात्राको व्यवस्थापनको लागि काठमाडौं महानगरपालिकाले विशेष प्राथमिकता दिएको देखिन्छ ।

यसै सन्दर्भमा श्री कुमारीको रथयात्रा चलाउँदा सँगसँगै श्री गणेश र श्री भैरवको रथयात्रा पनि चलाउनु पर्ने भएकोले उहाँहरू तीनै जना जीवित देवीदेवताहरूका लागि पनि काठमाडौं महानगरपालिकाले आर्थिक सुविधाको व्यवस्था गरेको छ । काठमाडौं महानगरपालिकाबाट हाल जीवित देवी कुमारीलाई मासिक रू. ५० हजार र जीवित देवताहरू गणेश र भैरवलाई रू. ३०-३० हजार प्रदान गर्दै आइरहेको छ । यो भन्दा अगाडिको वर्षमा कुमारीलाई मासिक रू. ४० हजार र गणेश र भैरवलाई मासिक रू. १५-१५ हजार प्रदान गर्दै आइरहेको थियो ।

जीवित देवी कुमारी लगायत जीवित देवता गणेश र भैरवका लागि पहिले पहिले काठमाडौं महानगरपालिकाबाट आर्थिक सहयोगको व्यवस्था थिएन । वि.सं. २०५७ सालमा श्री कुमारीका लागि मासिक रू. १५ हजार बाट यो सहयोग शुरु भयो । त्यसपछि क्रमशः रू. २५ हजार, रू. ४० हजार हुँदै वि.सं. २०७६ सालमा रू. ५० हजार पुऱ्याइयो ।

त्यस्तै जीवित देवताहरू श्री गणेश र श्री भैरवका लागि पनि मासिक रू. २५०० बाट काठमाडौं महानगरपालिकाबाट सहयोग शुरु भएको थियो । त्यस पछि यो सहयोग वृद्धि गरी रू. ५ हजार, रू. १५ हजार हुँदै अहिले रू. ३० हजार पुऱ्याइएको छ ।

त्यस्तै अहिले पूर्व कुमारीहरूका लागि पनि मासिक रू. १५ हजार र

पूर्व गणेश र पूर्व भैरवहरूलाई मासिक रू. १२ हजार प्रदान गर्ने व्यवस्था गरिएको छ। यसमा पनि शुरुमा पूर्व कुमारीका लागि मासिक रू. १० हजार र पूर्व गणेश एवं पूर्व भैरवका लागि मासिक रू. ८ हजार प्रदान गरिँदै आइरहेको थियो। वि.सं. २०७६ सालमा यो रकम वृद्धि गरिएको थियो।

काठमाडौं महानगरपालिकाले हाल जीवित रहनुभएका देहाय बमोजिमका पूर्व कुमारी र पूर्व गणेश एवं पूर्व भैरवहरूको सम्मान स्वरुप उहाँहरूलाई वर्षेनी सहयोग रकम प्रदान गर्दै आइरहेको छ।

हाल जीवित रहनुभएका पूर्व कुमारीहरू निम्न हुनुहुन्छ :

| नाम | | कुमारी हुनु भएको अवधि |
|---|---|---|
| १) | नानीशोभा शाक्य | वि.सं. १९९९ - २००६ |
| २) | हर्षलक्ष्मी शाक्य | वि.सं. २०१२ - २०१८ |
| ३) | नानीमयूजु शाक्य | वि.सं. २०१८ - २०२६ |
| ४) | सुनिता शाक्य | वि.सं. २०२६ - २०३५ |
| ५) | अनिता शाक्य | वि.सं. २०३५ - २०४१ |
| ६) | रश्मिला शाक्य | वि.सं. २०४१ - २०४८ |
| ७) | अमिता शाक्य | वि.सं. २०४८ - २०५८ |
| ८) | प्रिती शाक्य | वि.सं. २०५८ - २०६५ |
| ९) | मतिना शाक्य | वि.सं. २०६५ - २०७४ |

वि.सं. २०७४ देखि हालसम्म आसनमा रहनुभएका वर्तमान श्री कुमारी तृष्णा शाक्य हुनुहुन्छ। उहाँ मञ्जुश्रीनक महाविहार ओमबहालकी शाक्य कुलपुत्री हुनुहुन्छ।

त्यस्तै हाल जीवित रहनुभएका पूर्व गणेशहरू निम्न हुनुहुन्छ :

| नाम | | गणेश हुनु भएको अवधि |
|---|---|---|
| १) | गणेश शाक्य | वि.सं. २०१३ - २०२४ |
| २) | पुरुषोत्तम शाक्य | वि.सं. २०२४ - २०३४ |
| ३) | कन्हैया शाक्य | वि.सं. २०३४ - २०४२ |
| ४) | सञ्जु शाक्य | वि.सं. २०४२ - २०४६ |

| | | |
|---|---|---|
| ५) | प्रमन राज शाक्य | वि.सं. २०४६ - २०५७ |
| ६) | कपिल रत्न शाक्य | वि.सं. २०५७ - २०६७ |

वि. सं. २०६७ देखि हालसम्म आसनमा रहनुभएका वर्तमान श्री गणेश श्री सम्वेग शाक्य हुनुहुन्छ । उहाँ धर्मचक्र महाविहार (तःधं बहाः) बटुका शाक्य कुलपुत्र हुनुहुन्छ ।

हाल जीवित रहनुभएका पूर्व भैरवहरू निम्न हुनुहुन्छ :

| नाम | | भैरव हुनु भएको अवधि |
|---|---|---|
| १) | इन्द्रबहादुर शाक्य | वि.सं. २००६ - २०१४ |
| २) | शुभरत्न शाक्य | वि.सं. २०१४ - २०२४ |
| ३) | दीपक शाक्य | वि.सं. २०२४ - २०२८ |
| ४) | बाल पुरुषोत्तम शाक्य | वि.सं. २०२८ - २०३७ |
| ५) | श्याम शाक्य | वि.सं. २०३७ - २०४४ |
| ६) | भैरव शाक्य | वि.सं. २०४४ - २०५६ |
| ७) | राजु शाक्य | वि.सं. २०५६ - २०६५ |

वि. सं. २०६५ देखि हालसम्म आसनमा रहनुभएका वर्तमान श्री भैरव श्री रुजन शाक्य हुनुहुन्छ । उहाँ केशचन्द्र पारावर्त महाविहार इतुम्बहाःका शाक्य कुलपुत्र हुनुहुन्छ ।

काठमाडौं महानगरपालिकामा वि. सं. २०७४ को निर्वाचनबाट काठमाडौं महानगरपालिकाका प्रमुखका रुपमा विद्यासुन्दर शाक्य निर्वाचित भई आइसके पछि हरेक वर्ष एक समारोह नै आयोजना गरी पूर्व कुमारी एवं पूर्व गणेश र पूर्व भैरवलाई एकमुष्ठ चेक हस्तान्तरण गर्दै आइरहेको छ । वर्तमान जीवित देवी कुमारी र जीवित देवताहरू गणेश र भैरवको सहयोग रकम भने उहाँहरूका अभिभावक मार्फत बैंक खातामा जम्मा गर्ने गरिएको छ ।

त्यस्तै कुमारी घरमा श्री कुमारीको हेरचाह गर्ने चिताइदारका लागि पनि काठमाडौं महानगरपालिकाबाट मासिक रू. ५० हजार प्रदान गर्दै आइरहेको छ । यो रकम पहिले रू. २५ हजार थियो । यसलाई बढाएर अहिले काठमाडौं महानगरपालिकाको प्रमुखबाट रू. ५० हजार बनाइएको छ ।

यस्तै काठमाडौं महानगरपालिका बाहेक संघीय सरकारको निवृत्तिभरण व्यवस्थापन कार्यालयबाट पनि वर्तमान कुमारीलाई मासिक रू. ११,२५० प्रदान गर्दै आएको छ भने पूर्व कुमारीहरूलाई रू. ५६२५ प्रदान गर्दै आइरहेको छ ।

त्यस्तै वर्तमान श्री गणेश र श्री भैरवलाई शिक्षा खर्च रू. १ हजार र घर भाडा रू. १ हजार समेत गरी जनही मासिक रू. ९,२५० प्रदान गदै आइरहेको छ । पूर्व गणेश र पूर्व भैरवहरूलाई मासिक रू. २८१२ प्रदान गर्दै आइरहेको छ । पूर्व देवीदेवताहरूलाई सरकारका तर्फबाट सम्मान स्वरुप आजीवन प्रदान गरिने यो रकमलाई श्रीपद भत्ता भनिन्छ ।

इन्द्रजात्रा पर्वलाई व्यवस्थित गर्न केही वर्ष अघिदेखि इन्द्रजात्रा व्यवस्थापन समिति गठन गरी जात्रा सुचारु गर्दै आएको छ । इन्द्रजात्रामा सहभागी हुनु पर्ने सबै नाच, पर्व, बाजागाजा, जातीय समूहका प्रतिनिधिहरू आवद्ध भई उक्त व्यवस्थापन समिति गठन गरिएको हो । इन्द्रजात्रा लगायत उक्त जात्रामा सहभागी हुनुपर्ने सबै पक्षका लागि आवश्यक आर्थिक सहयोग व्यवस्थापन गर्ने, जात्रामा कुनै पक्षलाई केही समस्या आइ परे त्यसको समाधान गरिदिने कार्य उक्त व्यवस्थापन समितिले गर्दै आइरहेको छ । काठमाडौं महानगरपालिकाले हाल उक्त व्यवस्थापन समितिसँग पनि समन्वय गरी इन्द्रजात्रालाई व्यवस्थित गर्ने कार्य गर्दै आइरहेको छ ।

इन्द्रजात्रा व्यवस्थापन समितिमा हाल इन्द्रजात्रासँग सम्बन्धित ३६ वटा गुठी खलः एवं समितिहरू आवद्ध रहेका छन् । इन्द्रजात्रा सञ्चालन गर्न यो समितिलाई नेपाल सरकारबाट हाल वर्षेनी १३ लाख ९५ हजार ६७० रुपैयाँ प्रदान गर्दै आइरहेको छ । त्यस्तै काठमाडौं महानगरपालिकाबाट यस समितिलाई वर्षेनी रू. १० लाख प्रदान गर्दै आइरहेको छ ।

इन्द्रजात्राका लागि संघीय सरकार अन्तर्गत गुठी संस्थान, निवृत्तिभरण व्यवस्थापन कार्यालयबाट विभिन्न नाच एवं गुठीहरूलाई बजेटको व्यवस्था गरिएको छ । तर हालको बजार भाउ अनुसार उक्त रकम पर्याप्त नभएकोले त्यसको लागि काठमाडौं महानगरपालिकाबाट थप आर्थिक सहयोगको व्यवस्था गर्दै आइरहेको छ ।

इन्द्रजात्रा पर्व आठ दिनसम्म चल्ने भए पनि त्यसको तयारी भने धेरै अघिदेखि नै भइरहेको हुन्छ । इन्द्रजात्राका बेला निकालिने लाखे, पुलुकिसि,

दीप्याखं, महाकाली नाच, सवःभक्कु नाचको अभ्यास महिनौं अघिदेखि शुरु भइसकेको हुन्छ । यःसिं उठाउन आवश्यक काठको मूढा लिन जाने काम पनि धेरै अघि नै विधिवत रुपमा शुरु भइसकेको हुन्छ । त्यस्तै कुमारी यात्रा र उपाकु यात्राका लागि बाटोको निरीक्षण गर्ने, आवश्यक भएको ठाउँमा मर्मत सम्भार गर्ने र कहींकतै फोहोर वा निर्माण सामग्रीहरू थुपारेर राखिएको छ भने त्यसलाई हटाउने काम पनि जात्रा अघि नै सम्पन्न गरिसक्नु पर्ने हुन्छ । जात्राका लागि गरिने यस्ता पूर्व तयारीका कार्यहरू महानगरपालिकाको पहलमा सम्पन्न हुँदै आइरहेको छ ।

इन्द्रजात्रा पर्व सञ्चालनका लागि जात्रा अघि र पछि गरिनु पर्ने विभिन्न कार्यहरूका लागि वर्षेनी सरकारका विभिन्न निकायबाट आर्थिक सहयोग प्राप्त भइरहेको छ । तर ती आर्थिक सहयोग प्राप्त गर्ने विभिन्न प्रशासनिक प्रक्रियाहरूका कारण भने जात्रा सञ्चालन गर्ने गुठी खलःहरूले सहज अनुभव गर्न सकिरहेका छैनन् । त्यसैले जात्रा सञ्चालनको लागि एउटा स्थायी कोष नै खडा गर्नुपर्ने बिचार इन्द्रजात्रा व्यवस्थापन समितिले धेरै अघिदेखि नै प्रस्तावित गर्दै आइरहेको थियो । सोही प्रस्तावलाई मध्यनजर गर्दै गत वर्षको इन्द्रजात्रा ताका त्यस्तो कोष स्थापना गर्ने घोषणा भएको थियो । काठमाडौं महानगरपालिकाका प्रमुख, इन्द्रजात्रा पर्व सञ्चालन गरिने क्षेत्रका प्रतिनिधिसभा र प्रदेश सभाका सांसदहरूको विशेष पहल र सम्माननीय राष्ट्रपति विद्यादेवी भण्डारीको विशेष निर्देशनमा गत वर्षको इन्द्रजात्रामा रू. ५ करोड रहने गरी नेपाल सरकारले उक्त कोषको घोषणा गरेको थियो । 'इन्द्रजात्रा अक्षय कोष' नामक उक्त कोषमा काठमाडौं महानगरपालिकाबाट रू. २ करोड, नेपाल सरकारबाट १ करोड ५० लाख, बागमती प्रदेश सरकारबाट १ करोड र गुठी संस्थानबाट रू. ५० लाख प्रदान गर्ने निर्णय गरेको छ । कोष निर्माण पछि त्यसको व्याजबाट जात्रा सञ्चालन सहज हुने विश्वास गरिएको छ । जात्रा सञ्चालन गर्दा कतिपय कार्यमा शुरुमै रकम निकासा गर्नुपर्ने अवस्था हुन आउँदछ । सरकारी निकायबाट जात्रा अगावै खर्च निकासा गर्नु आर्थिक नियमहरूका कारण पनि सम्भव नभएकाले स्थायी कोषले त्यस्ता अप्ठ्याराहरू समेत समाधान गर्न सहयोग पुग्ने आशा गरिएको छ ।

इन्द्रजात्रा पर्वमा आवद्ध हुने विभिन्न नाचहरूका आआफ्नै गुठीहरू पनि रहेका छन् । ती नाचहरूको सार्वजनिक प्रदर्शन इन्द्रजात्राको आठ दिन

मात्रै हुने भए पनि तिनीहरूको नित्यपूजा भने वर्षैभरि भइरहेको हुन्छ। लाखे, पुलुकिसि, सवःभक्कुको नित्यपूजा सधैँ गर्नुपर्ने हुन्छ। काठमाडौं महानगर-पालिकाले इन्द्रजात्रा पर्वमा सहभागी हुने सम्पूर्ण नाच, पर्व, बाजाखलःहरूका लागि इन्द्रजात्रा व्यवस्थापन समिति मार्फत एकमुष्ठ दश लाख रुपैयाँ प्रदान गर्दै आइरहेको छ।

यस्तै यी नाचसँग सम्बन्धित विभिन्न धार्मिक कार्यहरू सम्पन्न गर्नका साथै नाचसँग सम्बन्धित बाजागाजा, पोशाक, मुकुण्डो र अन्य सामाग्रीहरू सुरक्षितसाथ राख्न सबै गुठीहरूको आआफ्नै आगंछेँ वा द्यःछेँ अर्थात गुठीको आफ्नै घर पनि रहेका हुन्छन्। कतिपय गुठीहरूका ती आगंछेँ वा द्यःछेँहरूको जीर्णोद्धार-पुनर्निर्माण कार्यमा पनि काठमाडौं महानगर-पालिकाले आर्थिक सहयोग गर्दै आइरहेको छ। हालै मात्र किलागल टोलमा दीप्याखं गुठीको आगंछेँ निर्माणको लागि काठमाडौं महानगर पालिकाले सहयोग प्रदान गरेको थियो। दीप्याखंको आगंछेँ निर्माण कार्य अहिले शुरु भइसकेको छ। त्यस्तै किलागल टोलमै पुलुकिसिको गुठीछेँ निर्माण गर्न पनि काठमाडौं महानगरपालिकाबाट सहयोग प्रदान गरेको थियो। केही वर्ष अघि मजिपाटस्थित लाखेचुकमा लाखेछेँ पुनर्निर्माण गर्न पनि काठमाडौं महानगरपालिकाले सहयोग प्रदान गरेको थियो। त्यस्तै इन्द्रजात्रामा प्रदर्शन गरिने इन्द्रको मूर्ति राखिने मरु गणेशको द्यःछेँ पुनर्निर्माणको लागि पनि काठमाडौं महानगरपालिकाले सहयोग प्रदान गरेको थियो भने ह्यूमत टोलस्थित ह्यूमतको गुठीछेँ पुनर्निर्माणको लागि पनि महानगरपालिकाले आर्थिक सहयोग गरेको थियो। काठमाडौं महानगरपालिका भित्र रहेका मूर्त अमूर्त संस्कृति सम्पदाहरू संरक्षण संवर्द्धन गर्ने क्रममा यहाँ रहेका अन्य विभिन्न सांस्कृतिक जात्रा, पर्वहरूसँग सम्बन्धित विभिन्न गुठी खलःका गुठीछेँ, आगंछेँ, द्यःछेँ आदि निर्माण एवं पुनर्निर्माणका लागि पनि काठमाडौं महानगरपालिकाले निरन्तर सहयोग प्रदान गर्दै आइरहेको छ।

## सांस्कृतिक पर्यटन प्रवर्द्धनमा इन्द्रजात्रा

मानव जाति सधैँ नै एक ठाउँबाट अर्को ठाउँमा घुम्न र रमाउन मन पराउने प्राणी हो। नयाँ नयाँ ठाउँमा घुम्नु-डुल्नु, नयाँ कुराहरू बारे जानकारी

लिनु मानवीय स्वभाव नै हुन् । मानवीय सभ्यताको विकास नै एक ठाउँबाट अर्को ठाउँमा घुम्दै, डुल्दै, सर्दै हुन गएको ठहर नेतृत्वशास्त्रीले गरेका छन् । संसारमा भएका नयाँ नयाँ वैज्ञानिक आविष्कार र विकासका घटनाहरूले मानिसलाई एक ठाउँबाट अर्को ठाउँमा जान सजिलो बनाइदिएका छन् । ती आविष्कार एवं सुविधाको विकास सँगसँगै एक ठाउँबाट अर्को ठाउँमा जाने मानवीय स्वभावलाई अझ सहज बनाइदिएको छ । यसैका कारण मानिसहरू एक ठाउँबाट अर्को ठाउँमा जाने क्रम पनि दिन परदिन बढ्दै गइरहेको छ ।

नयाँ नयाँ ठाउँमा घुम्ने मानवीय स्वभाव र त्यसलाई सहज तुल्याउने नयाँ नयाँ भौतिक आविष्कार एवं विकासहरूकै कारण संसारमा पर्यटन क्षेत्रको पनि विकास हुँदै गएको देखिन्छ । आदिकालमा भएको चक्काको आविष्कार, त्यसैको आधारमा भएको यातायातको विकास र पछि आएर भएको हवाई उडानको विकासले पर्यटन क्षेत्रमा ठूलो परिवर्तन ल्याइदिएको छ । पर्यटन क्षेत्रमा आएका यी परिवर्तनहरूले यो क्षेत्रलाई अहिले एउटा ठूलो उद्योगकै रूपमा स्थापित गरिसकेको छ । पर्यटन उद्योग अहिले विश्वकै महत्वपूर्ण उद्योगहरू मध्ये एक भइसकेको छ जसले विश्वभरि नै आर्थिक परिचालनमा ठूलो भूमिका निर्वाह गरिरहेको छ । विश्वका कतिपय देशहरूका लागि अहिले पर्यटन नै त्यहाँको सबैभन्दा ठूलो उद्योग बनिसकेको पाइन्छ । पर्यटन उद्योगबाटै ती देशहरूले प्रशस्त आर्थिक उन्नति गरिरहेका छन् । आफ्नो मुलुकको पर्यटन उद्योगलाई प्रवर्द्धन गर्न अहिले विभिन्न देशहरूले अहिले नयाँ सोच, नयाँ नीति र नयाँ शैली मार्फत नयाँ नयाँ योजनाहरू बनाई कार्यान्वयनमा ल्याइरहेका छन् । पर्यटन क्षेत्रमा विद्यमान असीम सम्भावनालाई देखेर अहिले यो क्षेत्रमा विश्वभरि नै भइरहेको ठूलो लगानीले पनि यसको भविष्यलाई अझ सुदृढ बनाइदिएको छ । यो उद्योगमा भइरहेको लगानीको ठूलो वृद्धि सँगसँगै विश्वभरि पर्यटनका नयाँ नयाँ सम्भावनाहरू खोज्ने र रोजगारीका लाखौं अवसरहरू जुटाउने कार्य भइरहेका छन् ।

नेपालले भने पर्यटनको ढोका ढिलो मात्रै खोलेको देखिन्छ । त्यसैले यहाँ पर्यटनको विकास र यसबाट प्राप्त हुने अवसर पनि ढिलै मात्रै प्राप्त हुन गयो । राणा शासनको अन्त्य नहुँदासम्म नेपाल विश्वका लागि बन्द नै थियो । तत्कालीन इष्ट इण्डिया कम्पनीका बेलायती एवं भारतीय पदाधिकारीहरू बाहेक अरू देशका नागरिकहरूका लागि नेपालको ढोका करिब करिब बन्दै

थियो । वि.सं. २००७ सालमा भएको राजनीतिक परिवर्तन पछि मात्रै नेपाल केही मात्रामा खुल्न थाल्यो । देशमा प्रजातन्त्र आए पनि पर्यटन क्षेत्रबाट मुलुकको विकास हुन सक्छ भन्ने धारणा तत्कालीन शासकहरूमा त्यतिबेला पनि आइसकेको थिएन । पर्यटन विकासका लागि कार्य गर्ने उद्देश्यले वि.सं. २०१४ मा पहिलो पटक सरकारी पहलमा 'पर्यटन विकास बोर्ड' गठन गरियो । पर्यटन विकासको लागि सरकारले औपचारिक रुपमा चालेको यो नै पहिलो कदम थियो । तर यसले खासै काम गर्न सकेन । त्यस पछि वि.सं. २०१६ सालमा पर्यटन निर्देशनालय गठन भयो । यसले पर्यटनका सम्भावनाहरू खोज्ने र पूर्वाधार विकासमा केही योजना बनाउने काम गऱ्यो । त्यस पछि वि.सं. २०१८ सालमा यातायात मन्त्रालय अन्तर्गत 'पर्यटन विभाग' गठन गऱ्यो । त्यहाँबाट खासै काम हुन नसके पछि वि.सं. २०२४ सालमा यो विभागलाई यातायात मन्त्रालयबाट झिकेर उद्योग तथा वाणिज्य मन्त्रालय अन्तर्गत राखियो । यसरी मन्त्रालय हेरफेर गर्दागर्दै वि.सं. २०३४ सालमा आएर मात्रै पर्यटनका लागि बल्ल छुट्टै पर्यटन मन्त्रालय गठन गरियो । मन्त्रालय गठन भए पछि सरकारका तर्फबाट पर्यटन विकासका लागि विभिन्न कार्यहरू सञ्चालन हुँदै आइरहेको छ ।[१]

पर्यटन विकासको लागि सरकारले संस्थाहरू गठन गरे पनि त्यसले काम गर्ने कुनै कानुनी आधारहरू भने बनेको थिएन । साथै पर्यटन विकासको कुनै लिखित नीति समेत सरकारसँग थिएन । वि.सं. २०२१ मा तत्कालिन सरकारले 'पर्यटन विकास नीति' सार्वजनिक गऱ्यो । पर्यटन विकासको लागि सरकारले बनाएको यो नै पहिलो लिखित नीति थियो । यो नीतिले पहिले गठन गरिएको पर्यटन विभागलाई पर्यटन विकासको लागि काम गर्ने केही आधारहरू प्रदान गऱ्यो । बि.सं. २०३० मा आएर नेपाल सरकारले नेपालको समग्र पर्यटन विकासको लागि एउटा गुरुयोजना तयार गऱ्यो । त्यही गुरुयोजना कार्यान्वयन गर्न छुट्टै पर्यटन मन्त्रालय गठन गरिएको थियो ।[२]

यस पछि नेपालमा भएका अन्य विकास सम्बन्धी गतिविधिहरू सँगसँगै पर्यटन व्यवसाय पनि फस्टाउँदै गएको देखिन्छ । देशको एक मात्र अन्तर्राष्ट्रिय

---

१ गोविन्दमान सिंह कार्की, *सांस्कृतिक पर्यटन*, विराटनगरः ममता कार्की पवित्रा निरौला, वि.सं. २०५७, पृ.६० ।

२ ऐजन, पृ. ७२ ।

विमानस्थलको स्तरीयकरण, नेपालमा विदेशी विमान सेवाहरूले पनि शुरु गरेको सेवा, अरु जिल्लाहरूमा पनि नयाँ विमानस्थलहरूको निर्माण, नेपालको आफ्नै वायुसेवा निगमको स्थापना, सडक सञ्जालमा विस्तार, नयाँ नयाँ सुविधासम्पन्न होटलहरूको स्थापना आदि विभिन्न गतिविधिहरूका कारण नेपालको पर्यटन उद्योगले पनि क्रमशः गति लिन थाल्यो । अहिले पर्यटन क्षेत्र नेपालको आयआर्जनका प्रमुख स्रोतहरू मध्ये एक हुन पुगेको छ । सन् २०१९ को तथ्यांक अनुसार नेपालको कुल गार्हस्थ उत्पादनमा पर्यटन क्षेत्रको योगदान ७.९ प्रतिशत रहेको छ ।

पर्यटन उद्योगका विभिन्न क्षेत्रहरू छन् । जस्तो प्राकृतिक क्षेत्र, सांस्कृतिक क्षेत्र, मानवीय क्षेत्र, अन्तर्राष्ट्रिय क्षेत्र आदि । यी मध्ये प्राकृतिक क्षेत्र विश्व पर्यटनमा सबैभन्दा लोकप्रिय रहेको छ भने त्यसपछि सांस्कृतिक क्षेत्रले नै स्थान आगेटेको छ । सांस्कृतिक क्षेत्र अन्तर्गत प्राचीनकालदेखि आधुनिककालसम्मका मानिसहरूले आफ्नो धर्म, संस्कृति, परम्परा र आफ्नो उच्च अस्तित्व स्थापनाका लागि निर्माण गरेका धार्मिकस्थल, दरवार, कलाकृति, मन्दिर, चैत्य, जात्रा, पर्व, चाड, मेला जस्ता सम्पदाहरू पर्न आउँदछ। एक देश वा एउटा समुदायको संस्कृतिले अर्को देश वा समुदायलाई सधैँ नै आकर्षित गरिरहेको हुन्छ । हरेक मानिस कुनै न कुनै संस्कृति र संस्कार आवद्ध भएका हुन्छन् । तर उनलाई सधैँ नै अर्को देश र अर्को जातिको संस्कृति र संस्कार बारे जान्ने सुन्ने इच्छा भने जागिरहेको हुन्छ । आफू र अर्काको संस्कृति बीचको भेद, अर्काको संस्कृतिले दिने शिक्षा र सन्देश बारे जानकारी राख्ने मानिसको स्वभाव नै हो । आफ्ना यो स्वभावगत इच्छाले उनलाई सधैँ नै एक ठाउँबाट अर्को ठाउँमा यात्रा गर्न प्रेरित गरिरहेको हुन्छ ।

प्राकृतिक र सांस्कृतिक पर्यटनका दृष्टिकोणले नेपाललाई धेरै नै सम्भावना भएको मुलुकको रूपमा लिने गरिन्छ । यहाँ भएका रमणीय प्राकृतिकस्थल र ऐतिहासिक सांस्कृतिक सम्पदाहरूका कारण नेपाल पर्यटनको धेरै ठूलो सम्भावना भएको मुलुक हो । आकारमा सानो भए पनि प्राकृतिक विविधताका दृष्टिकोणले नेपाल विश्वमै एक धनी भूक्षेत्र हो । प्राकृतिक सम्पदातर्फ विश्वको सर्वोच्च शिखर सगरमाथा लगायत ८००० मिटर भन्दा अग्ला आठ वटा हिमशिखरहरू, कर्णाली, कोशी जस्ता ठूला नदीहरू, पहाड, गुफा, जंगल, तालतलैंया, हिमताल, गल्छी आदि जस्ता अनगिन्ती प्राकृतिक

महत्वपूर्ण जात्रा हो, इन्द्रजात्रा ।

इन्द्रजात्रा पर्व काठमाडौंको हनुमानढोका दरवार क्षेत्रमा मनाउने गरिन्छ । हनुमानढोका दरवार क्षेत्र आफै पनि नेपालको एक उत्कृष्ट पर्यटकीयस्थल हो । यो दरवार कहिले निर्माण भयो भन्ने स्पष्ट इतिहास छैन । वि.सं.१५६० को दशकमा राजा रत्न मल्ल भक्तपुरबाट छुट्टिएर कान्तिपुरको राजा हुँदा नै यही दरवारमा बसेर शासन चलाएको पाइन्छ । त्यतिबेला यो दरवारलाई 'गुनपो' दरवार भनिन्थ्यो । उनै राजा रत्न मल्लका सात पुस्ता पछिका राजा प्रताप मल्लले उक्त दरवारको मूलढोकामा वि.सं. १७२९ मा एउटा हनुमानको मूर्ति स्थापना गरे । त्यसपछि यो दरवारको नाम 'हनुमानध्वाखा दरवार' हुन पुग्यो । यो दरवारमा अन्तिम मल्ल राजा जयप्रकाश मल्ल लगायत आधुनिक नेपालका पहिलो शाह राजा पृथ्वीनारायण शाहले समेत शासन गरेका थिए । शाह राजा पृथ्वी वीरविक्रम शाहसम्म यो दरवारमा बसे । त्यस पछि राजदरवार नारायणहिटी दरवारमा सऱ्यो । तर राजदरवार नारायणहिटी सरे पनि हनुमानढोकामा दरवारमा गरिने प्रमुख राजकीय कार्यहरू भने जारी नै रह्यो । विभिन्न मल्ल राजाहरूले विभिन्न समयमा थप्दै थप्दै लगेको यो दरवारमा शाह राजाहरूले पनि सुधार एवं पुनर्निर्माण गरेको पाइन्छ ।[३]

यो दरवार क्षेत्रको सबैभन्दा पुरानो संरचना मरुसतः (काष्ठमण्डप) हो । हनुमानढोका दरवार भित्र तलेजु भवानीको मन्दिरका साथै नासल चोक, मूल चोक, मोहन चोक, त्रिशुल चोक, सुन्दर चोक आदि विभिन्न चोकहरू रहेका छन् । त्यस्तै यो दरवार परिसरमा कुमारी घर, महादेव-पार्वती मन्दिर, त्रैलोक्यमोहन मन्दिर, माजु देगः, सिंहसत्तल, कालभैरव, इन्द्रपुर, महेन्द्रेश्वर महादेव, कालभैरव, कागेश्वर महादेव, श्वेत भैरव, बसन्तपुर चोक, नौतले दरवार, गद्दी बैठक, ठूलो घन्टा, ठूलो नगरा आदि जस्ता सम्पदाहरू रहेका छन् ।

लिच्छविकालमा काठमाडौं नगरलाई दक्षिणकोलिग्राम र उत्तरकोलिग्राम गरी दुई क्षेत्रमा विभक्त गरिएको थियो । यी दुई क्षेत्रको बीचमा हनुमानढोका दरवार रहेको छ । काठमाडौंमा मनाइने सबैजसो जात्रापर्वहरू हनुमानढोका दरवारमा ल्याई प्रदर्शन गर्नुपर्ने परम्परा रहिआएको छ । जनबहाःद्यः, पचली भैरवको जात्रा, गाइजात्रा, चाँगुनारायणको जात्रा आदि हनुमानढोका दरवार

३ गौतमवज्र वज्राचार्य, *हनुमान्ढोका राजदरवार*, काठमाडौं: नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, वि.सं. २०३३, पृ. २३ ।

भएरै अगाडि बढाउनु पर्ने परम्परा छ । भौतिक सांस्कृतिक सम्पदामा आफै सम्पन्न हनुमानढोका दरवार परिसरमा मनाइने यी विभिन्न जात्रा पर्वहरू मध्ये काठमाडौंको एउटा महत्वपूर्ण प्राचीन जात्रा इन्द्रजात्रा पनि हो ।

संस्कृति भनेको 'आइसवर्ग' जस्तै हुन्छ । बाहिरबाट हेर्दा बरफको टुप्पो मात्रै देखिन्छ । तर त्यसको पींढमा गएर हेऱ्यो भने त्यहाँ संस्कृतिका अथाह अर्थ, मर्म, मूल्य, मान्यता, स्वभाव, चरित्र, परम्परा, अनुभवहरू छोपिएर रहेका हुन्छन् ।[४]

इन्द्रजात्रा पनि यस्तै धेरै अर्थ र मर्महरूले भरिएको जात्रा हो । वैदिककालमा अत्यन्त सम्मान गरिने स्वर्गका राजा एवं वर्षादका देवता इन्द्रको नाममा पौराणिककालदेखि आरम्भ गरिएको यो जात्राको ऐतिहासिक पृष्ठभूमि अत्यन्त समृद्ध छ । ऐतिहासिक रूपले सम्पन्न स्थान एवं मूर्त-अमूर्त सम्पदाहरूप्रति पर्यटकहरू आकर्षित हुन्छन् ।

जीवित देवी श्री कुमारी संसारकै विशिष्ट र मौलिक सांस्कृतिक परम्परा हो । जीवित व्यक्तिलाई नै देवीका रूपमा पूजा आराधना गर्ने यस्तो परम्परा संसारमा अरु कतै रहेको पाइँदैन । संसारका धेरैजसो बौद्ध मुलुकहरूमा श्री कुमारी र कुमारी परम्परा बारे धेरै नै अभिरूची रहेको पाइन्छ । श्री कुमारीको एक झलक दर्शन गर्न दैनिक सयौं पर्यटकहरू बसन्तपुरको कुमारी घर भएको विहारमा आउने गर्छन् । श्री कुमारी र कुमारी परम्पराप्रति आस्था र अभिरूची राख्ने विदेशी विद्वान एवं भक्तजनहरूले काठमाडौंका पूर्व लायूकू कुमारीहरूलाई बेला बेलामा आफ्नो मुलुकमा निमन्त्रण गरी नेपालको कुमारी परम्परा बारे जानकारी गराउने र ती देशहरूमा कुमारीलाई परिचित गर्ने कार्य पनि गर्दै आइरहेका छन् । संसारभरि यति धेरै आस्था र अभिरूचीका रुपमा लिइने श्री कुमारीलाई इन्द्रजात्राकै बेला तीन दिनसम्म रथमा राखी नगर परिक्रमा गराउने चलन रहेको छ । त्यसैले यो जात्रा प्रति पर्यटकहरूको आकर्षण रहनु स्वाभाविक हो ।

इन्द्रजात्राका अवसरमा निकालिने विभिन्न देवीनाचहरू पनि पर्यटकीय आकर्षणका दृष्टिकोणले अत्यन्त महत्वपूर्ण देखिन्छ । दीप्याखं, सवःभक्कु र महाकाली नाच काठमाडौं उपत्यकाको अत्यन्त मौलिक र ऐतिहासिक

४ A. & Chen. W Clark, *International Hospitality Management*, Amsterdam: Elsevier, 2007, p. 30.

महत्व बोकेका नाचहरू हुन् । यी नाचहरूको अवलोकनले मनमा शान्ति र आनन्द प्रदान गर्दछ । साथै यी नाचहरूले दिने देशप्रेम र सत्यताको सन्देशले मानिसलाई बौद्धिक ज्ञान पनि प्रदान गर्दछ । इन्द्रजात्रामा नचाइने लाखे र पुलुकिसि नाचले यो पर्वलाई अझै जीवन्त बनाइदिएको हुन्छ । यी नाचहरूको अवलोकनले जोकोहीलाई पनि रोमाञ्चित बनाइदिन्छ । संसारमा कहीं नपाइने यी विशिष्ट नाचहरू पनि पर्यटकीय दृष्टिकोणले अत्यन्त आकर्षक छन् ।

इन्द्रजात्राकै समयमा मात्र खुल्ला गरिने हनुमानढोकाको श्वेत भैरव, इन्द्रचोकको आकाश भैरवलाई पनि मूर्तिकलाका दृष्टिकोणले अत्यन्त आकर्षक र मौलिक कलाकृतिका रूपमा लिन सकिन्छ । यी देवताहरूको सिर्जना अत्यन्त दार्शनिक एवं आध्यात्मिक परिकल्पनाका उपज हुन् । यी मूर्तिहरूको अवलोकनले पर्यटकको आँखालाई तृप्त पार्दछ ।

इन्द्रजात्रामा प्रदर्शन गरिने यी सबै नाच एवं जात्राहरूको अवलोकनबाट पर्यटकहरूले सम्पूर्ण नेपाल नै हेर्न र बुझ्न पाए जतिकै अनुभव गर्न सक्दछन् ।

कुनै बेला इन्द्रजात्रा भारतका पनि विभिन्न ठाउँमा प्रचलित थियो । खास गरी भारतको बंगालमा इन्द्रजात्रा मनाउने चलन रहेको कुरा अभिलेख-हरूमा उल्लेख छ । तर अहिले भारतमा यो जात्रा लोप भइसकेको छ । भारतमा लोप भए पनि नेपालमा यो जात्रा अझै जीवन्त रहनु पनि यो जात्राको एउटा अर्को आकर्षक पक्ष हो । खास गरी भारतवर्षका पर्यटकहरूलाई इन्द्रजात्राको यो पक्षले आकर्षित गर्नु स्वाभाविक छ ।

यसरी इन्द्रजात्रा पर्वमा धार्मिक-सांस्कृतिक मात्र होइन पर्यटकहरूलाई आकर्षित गर्न सक्ने पर्यटकीय महत्वका गुणहरू पनि प्रचुर मात्रामा रहेको पाइन्छ । इन्द्रजात्रा पर्वमा निहित यी पर्यटकीय गुणहरूको प्रवर्द्धन गरी सम्पूर्ण नेपालकै सांस्कृतिक पर्यटनको विकासमा टेवा पुर्‍याउन सकिन्छ । पर्यटकीय दृष्टिकोणले अत्यन्त सम्भावना रहेको पर्व भएको कारणले इन्द्रजात्रा मार्फत नेपालका अन्य जात्रा, पर्व एवं सांस्कृतिक सम्पदाहरूको पनि पर्यटकीय विकासलाई अघि बढाउन सकिन्छ । यस कार्यको लागि पर्यटनसँग सम्बन्धित सरकारी, गैरसरकारी एवं व्यावसायिक निकायहरूबाट निरन्तर प्रयास हुनु आवश्यक छ । पर्यटन क्षेत्रले नेपालको कुल आयआर्जनमै महत्वपूर्ण स्थान ओगट्ने भएकोले यो क्षेत्रको विकासले समग्र मुलुककै

विकासमा योगदान गर्ने निश्चित छ ।

इन्द्रजात्रा पर्वको पर्यटकीय सम्भावनालाई अझ फराकिलो पार्ने उद्देश्यले काठमाडौं महानगरपालिकाले वि.सं. २०७६ सालको इन्द्रजात्रामा एउटा नौलो प्रयासको थालनी गरेको थियो । काठमाडौं महानगरपालिकाले उक्त वर्षको इन्द्रजात्रा अवलोकनका लागि आफूसँग भगिनी सम्बन्ध भएका विश्वका सबै सहरका प्रमुख र प्रतिनिधिहरूलाई निम्ता गरेको थियो । महानगरको निम्ता स्वीकार गरी इन्द्रजात्रा अवलोकन गर्न ५ वटा देशका ११ वटा नगरबाट ४ जना मेयर, उपमेयर/उपाध्यक्षसहित ४१ जना पाहुना सहभागी हुनुभएको थियो ।

उक्त वर्ष इन्द्रजात्रा पर्व अवलोकनका लागि सहभागी हुने पाहुनाहरूमा चीनको ल्हासा नगरका मेयर गुहेओ गुहेओ, भुटानको थिम्पु नगरका मेयर किन्ले दोर्जे, भारत नर्थ दिल्ली म्युनिसिपलिटिका मेयर सरदार अवतार सिंह र चीनको लान्चोउ कमिटी अफ द सिपिपिसिसि चिनियाँ जनराजनीतिक सल्लाहकार सभाका उपाध्यक्ष ज्याङ् सिओहाङ् हुनुहुन्थ्यो । त्यस्तै चीनबाट सियान, छेन्दु, सेञ्जेन, नान्जिन र लान्चोउ नगर, जापानको मात्सुमोतो, संयुक्त राज्य अमेरिकाको फ्रेडरिक्स्बर्ग र बोल्डर नगरबाट उच्च अधिकारीको नेतृत्वमा जात्रा अवलोकन टोली आएको थियो ।

काठमाडौं आइपुगेका विदेशी पाहुनाहरूलाई काठमाडौं महानगरपालिकाले काठमाडौंको भित्री शहर, यहाँका विभिन्न बहाःबही, मन्दिर, चैत्य आदिको अवलोकन गराएको थियो । साथै उहाँहरू मध्ये चारजना नगर प्रमुखहरूलाई बसन्तपुरको गद्दी बैठकबाट कुमारीको रथयात्रा अवलोकन गराइएको थियो । त्यस्तै अन्य सदस्यहरूलाई महादेव-पार्वती डबलीमा छुट्टै बसी जात्रा अवलोकनको व्यवस्था गरिएको थियो । जात्राका अवसरमा प्रदर्शित लाखे, पुलुकिसि, हल्चोक आकाश भैरव, महाकाली नाच, त्यससँगै गुञ्जिएको विभिन्न बाजाको धून र त्यसमा हराइरहेका जात्रालुहरूको उल्लास देखेर विदेशी पाहुनाहरू अत्यन्त रमाउनुभएको थियो ।

इन्द्रजात्रा अवलोकनका लागि आउनुभएका विदेशी पाहुनाहरूलाई इन्द्रजात्राकै बीचमा चन्द्रागिरि डाँडा र डाँडामा अवस्थित भालेश्वर महादेव, ललितपुर र भक्तपुरको दरवार परिसर, स्वयम्भू महाचैत्यको पनि भ्रमण गराइएको थियो ।

जात्रा अवलोकनमा सहभागी सबै विदेशी पाहुनाहरूले इन्द्रजात्रा पर्वका साथै काठमाडौं नगरको सांस्कृतिक वैभवतालाई मुक्तकण्ठले प्रशंसा गर्दै आ-आफ्नो नगरमा इन्द्रजात्रा पर्व बारे बताउने र आफ्ना नगरवासीलाई इन्द्रजात्रा पर्व अवलोकनको लागि प्रेरित गर्ने बिचार राख्नुभएको थियो ।

इन्द्रजात्रालाई पर्यटकीय प्रवर्द्धन गर्ने उद्देश्यले काठमाडौं महानगर-पालिकाले गरेको यो कार्य एउटा उदाहरण मात्र हो । यसबाट इन्द्रजात्रा बारे विदेशी पर्यटकहरूको रूची बढ्ने र विदेशमा इन्द्रजात्रा लगायत नेपालको अन्य सांस्कृतिक सम्पदाहरूको समेत प्रचार प्रसार हुन जाने विश्वास लिन सकिन्छ । विश्वका विभिन्न नगरका प्रतिनिधिहरूलाई इन्द्रजात्रा अवलोकन गराउन काठमाडौं महानगरपालिकाको निमन्त्रणमा आयोजना गरिएको उक्त कार्यक्रममा विदेशी पाहुनाहरूलाई केवल इन्द्रजात्रा मात्रै अवलोकन गराइएको थिएन । मुख्य उद्देश्य इन्द्रजात्रा अवलोकन भए पछि खाली भएको बीचको समयमा उहाँहरूलाई काठमाडौंको भित्री शहर, ललितपुर, भक्तपुर र चन्द्रागिरि समेत भ्रमण गराउने कार्य भएको थियो । यसलाई इन्द्रजात्रालाई केन्द्रमा राखेर बनाइएको पर्यटन प्रवर्द्धनको एउटा 'प्याकेज' को रूपमा लिन सकिन्छ जसमा इन्द्रजात्रा मात्र नभई उपत्यकाका अन्य नगर र अन्य सम्पदाहरू पनि समेटिएका छन् । इन्द्रजात्रालाई केन्द्रमा राखेर बनाइने पर्यटन प्रवर्द्धनको प्याकेजबाट काठमाडौं मात्र होइन अन्य नगरहरूले पनि लाभ उठाउन सक्दछन् भन्ने उदाहरण यसबाट ग्रहण गर्न सकिन्छ ।

यो काठमाडौं महानगरपालिकाले तयार गरेको प्याकेज हो । सम्बद्ध पर्यटन व्यवसायी, पर्यटनविज्ञ, संस्कृतिविज्ञ, पर्यटन सम्बन्धी सरकारी पदाधिकारी-हरू समेत सहभागी भई यसलाई आवश्यक परिमार्जन गरी अझ आकर्षक प्याकेज पनि बनाउन सकिन्छ । इन्द्रजात्रा हिन्दू र बौद्ध दुवै धर्मावलम्बीहरूले मान्ने पर्व भएकोले यसबारे भारत लगायत अन्य बौद्ध मुलुकहरूमा पनि प्रचार प्रसार गरी त्यहाँका पर्यटकहरू बीच अभिरूची जगाउन सकिन्छ । खास गरी भारतमा कुनै समय प्रचलनमा रहे पनि अहिले लोप भइसकेको तर नेपालमा भने अझै प्रचलनमा रहेको जात्रा भन्ने आसयको प्रचार प्रसारले भारतका धार्मिक पर्यटकहरूको ध्यान आकर्षित गर्न सकिन्छ । काठमाडौंमा इन्द्रजात्रा मनाइने समय पनि गर्मी महिना सकेर जाडो मौसम शुरु हुने पूर्वको रमणीय वातावरण हुने भएकोले यो सबै ठाउँका पर्यटकहरूका लागि उपयुक्त मौसम

हो । अतः मौसमका दृष्टिकोणले पनि इन्द्रजात्रा पर्यटक आकर्षणका लागि उपयुक्त पर्व मान्न सकिन्छ ।

इन्द्रजात्रा लगातार आठ दिनसम्म चल्ने पर्व भएकोले यसै पर्वलाई केन्द्रित गरी चारदेखि पाँच दिनसम्मको पर्यटकीय प्याकेज बनाउन सकिने देखिन्छ । यसमा इन्द्रजात्रा लगायत उपत्यकाका अरु सांस्कृतिक नगर र स्थलहरूलाई पनि जोड्न सकिन्छ । साथै पर्यटकहरूलाई काठमाडौंको बहाः पूजा, बही पूजा गर्ने परम्परागत मार्ग, पूराना शहरको सम्पदा मार्ग आदि क्षेत्र परिक्रमा गराउन सकिन्छ । काठमाडौंको मौलिक वास्तुकला र वास्तविक सामाजिक जीवनको झलक यहीं देख्न सकिने भएकोले यो मार्गको अवलोकनबाट पर्यटकहरूलाई काठमाडौं बारे जान्न र बुझ्न अझ सहयोग पुग्ने विश्वास लिन सकिन्छ ।

इन्द्रजात्रा काठमाडौं महानगरको सम्पूर्ण जनसमूहका बीच मनाइने पर्व हो । त्यसैले इन्द्रजात्रामा खास गरी कुमारीको रथयात्रा गरिने क्षेत्रमा ठूलो भीड लागिरहेको हुन्छ । पर्यटकहरूलाई त्यस्तो भीडभाडको बीचमा राखेर जात्रा अवलोकन गराउन सकिँदैन । साथै उनीहरू आफू पनि भीडभाडमा बसेर जात्रा हेर्न रुचाउँदैनन् । आनन्दकै लागि भनेर घुम्न आएका पर्यटकहरू राम्रो सर्वसुविधा (एकोमोडेशन) हरू भएको ठाउँमा मात्रै जान रुचाउँछन् । त्यसैले इन्द्रजात्रा अवलोकन गराउँदा उनीहरूका लागि राम्रा एकोमोडेशनको पनि व्यवस्था गर्नुपर्ने हुन्छ । यसको लागि कुमारीको रथयात्रा गर्ने मार्गमा अवस्थित केही निजी आवासहरूलाई अल्पकालीन होमस्टेको रूपमा प्रयोग गर्न सकिन्छ । अर्थात कुमारीको रथयात्रा हुँदा रथ परिक्रमा गरिने ठाउँमा रहेका केही निजी आवासहरूमा पर्यटकहरू बसेर आरामपूर्वक जात्रा हेर्न सकिने व्यवस्था गर्न सकिन्छ । उक्त मार्गमा परेका केही राम्रा र सफा निजी घरहरूलाई पर्यटकका लागि पहिल्यै व्यवस्था गरी इन्द्रजात्रा अवलोकन गराउने व्यवस्था मिलाउन सकिन्छ । जात्रा चलिरहेको बेला पर्यटकहरूलाई सोही आवासमा इन्द्रजात्राका अवसरमा स्थानीय जनताले खाने विभिन्न स्थानीय परिकारहरू (समयूबजि) नै खाजा वा 'लञ्च' का रूपमा उपलब्ध गराउन पनि सकिन्छ । यसले पर्यटकलाई इन्द्रजात्राको अवलोकन मात्र गर्ने होइन यो पर्वलाई अनुभूत समेत गर्ने अवसर प्रदान गर्दछ । साथै कुमारी यात्राको मार्गमा निवास भएका स्थानीय मानिसहरूलाई आय आर्जनको

अवसर पनि मिल्नेछ । यसप्रकारको सेवालाई एक प्रकारको अल्पकालीन 'होमस्टे' पनि भन्न सकिन्छ । यो सुविधा बाह्य पर्यटक मात्र नभई विभिन्न जिल्लाहरूमा रहेका आन्तरिक पर्यटकहरूका लागि पनि लागू गर्न सकिन्छ ।

काठमाडौंमा इन्द्रजात्रा मनाउन स्थानीय मानिसहरू अत्यन्त उल्लासपूर्वक सहभागी भएका हुन्छन् । स्थानीय मानिसहरूको उक्त सहभागितालाई पनि इन्द्रजात्राको थप आकर्षणको रूपमा उपयोग गर्न सकिन्छ । भाद्रशुक्ल चतुर्दशीका दिन कुमारीको रथलाई काठमाडौंको क्वःने क्षेत्र अर्थात चिकंमुगल, मजिपात, जैशीदेवल, लगन, ब्रम्हटोल, भिमसेनथान भेगतिर तान्ने गरिन्छ । कुमारीको क्वःनेयाःका दिन दीप्याखं, सवःभक्कु, महाकाली नाच लगायत लाखे, पुलुकिसि पनि बसन्तपुर क्षेत्रदेखि काठमाडौंको तल्लो भेगमै केन्द्रित भइरहेका हुन्छन् । यो अवसरमा बसन्तपुरदेखि तल्लो भेगका सम्पूर्ण क्षेत्रलाई नै यातायात निषेधित क्षेत्र बनाई उक्त दिनलाई 'क्वःनेयाः महोत्सव' का रूपमा पनि मनाउन सकिन्छ । उक्त दिन क्वःने क्षेत्रमा दिनभरि नै विभिन्न सांस्कृतिक, सांगीतिक कार्यक्रमहरू सञ्चालन गर्ने, स्थानीय परिकारहरूको खाना महोत्सव गर्ने, अझ इन्द्रजात्रामा विशेष गरी समयबजि खाने भएकोले समयबजिकै स्टलहरू राख्ने, इन्द्रजात्रासँग सम्बन्धित सांस्कृतिक पुस्तक, पोस्टर, क्यालेण्डर लगायत साना मूर्तिहरू र स्थानीय उत्पादनका सामग्रीहरू पनि बिक्री गर्ने जस्ता कार्यहरू गर्न सकिन्छ । यसरी इन्द्रजात्रालाई आन्तरिक पर्यटन प्रवर्द्धन गर्ने अवसरका रुपमा प्रयोग गर्न सकिन्छ । त्यस्तै थःनेयाःका दिन कुमारीको रथलाई काठमाडौंको माथिल्लो भेग अर्थात प्याफल, यट्खा, नरदेवी, न्ह्यःखा, बांगेमुढा, असन, इन्द्रचोक, मखन टोलमा तान्ने गरिन्छ । उक्त दिन पनि क्वःने भेगमा जस्तै यातायातलाई पूर्ण निषेध गरी माथिल्लो भेगका टोलहरूमा 'थःनेयाः महोत्सव' आयोजना गर्न सकिन्छ । यसले इन्द्रजात्रामा सम्पूर्ण परिवार नै सहभागी भई जात्रा मनाउन सकिने र जात्राको अवसरमा आर्थिक आयआर्जनको अवसर समेत सिर्जना गर्न सकिने हुन्छ ।

यसको साथसाथै इन्द्रजात्रा पर्व सञ्चालन नभएको अन्य समयमा पनि पर्यटकहरूलाई इन्द्रजात्राको झलक देखाउन मिल्ने गरी इन्द्रजात्रा सम्बन्धी नै छुट्टै संग्रहालय पनि बनाउन सकिन्छ । बसन्तपुरकै कुनै स्थानमा यस्तो संग्रहालय बनाउनु उपयुक्त हुन्छ । यस्तो संग्रहालयमा कुमारी, लाखे, पुलुकिसि, विभिन्न नाचहरूका पुरानो पोशाक, पुराना गरगहनाहरू प्रदर्शनमा

राख्न सकिन्छ । त्यस्तै जात्रा सम्बन्धी पुराना तस्वीरहरू पनि संग्रहालयमा राख्न सकिन्छ । त्यस्तै संग्रहालयमा इन्द्रजात्रा पर्वमा सञ्चालन गरिने कुमारी, गणेश र भैरवको रथयात्रा, यःसिं, लाखे, पुलुकिसि, दीप्याखं, सवःभक्कु, आकाश भैरव, श्वेत भैरव आदिको साना-साना मिनिएचरहरू बनाएर राख्नु पनि उपयुक्त हुन्छ ।

यसरी इन्द्रजात्रालाई आधार बनाएर काठमाडौंको पर्यटकीय विकास गर्न सकिने सम्भावनाहरू प्रशस्त रहेको पाइन्छ । पर्यटकीय विकासको बलियो आधार भएकोले इन्द्रजात्रा पर्व हाम्रो सांस्कृतिक पूँजी पनि हो । यसको सदुपयोगबाट समग्र पर्यटन प्रवर्द्धनलाई नै टेवा दिन सकिन्छ ।

इन्द्रजात्रालाई पर्यटकीय दृष्टिकोणले विकास गर्न तयार गरिने यी कार्यहरू एवं प्याकेजका बारे देश विदेशमा प्रचार प्रसार गर्नु आवश्यक हुन्छ । त्यसका लागि विदेशस्थित नेपाली कुटनीतिक नियोग, विदेशमा रहेका गैर आवासीय नेपालीहरूको संस्था मार्फत प्रचार प्रसार गर्न सकिन्छ । यसरी सबै तर्फबाट गरिने तयारी र प्रयासबाट इन्द्रजात्रा पर्वलाई पर्यटकीय दृष्टिकोणले एउटा सफल पर्वका रुपमा अगाडि बढाउन सकिन्छ ।

पर्यटन प्रवर्द्धनको लागि केवल पर्यटकीय योजना मात्र बनाएर पुग्दैन । यसको लागि उपयुक्त वातावरणको पनि निर्माण गर्नु पर्दछ । राजनीतिक अस्थिरता भएको ठाउँमा, सामाजिक अशान्ति मच्चिरहेको ठाउँमा, पर्यावरणीय प्रदुषणयुक्त एवं फोहोर ठाउँमा पर्यटकहरू जान रुचाउँदैनन् । इन्द्रजात्रा पर्वको पर्यटकीय विकासका लागि यी विषयहरूमाथि पनि ध्यान पुऱ्याउनु आवश्यक हुन्छ । विभिन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय निकायहरूले गरेका विभिन्न अध्ययन अनुसन्धानहरूले अहिले काठमाडौं महानगरमा अरु नगरहरूका तुलनामा धुलो र धुवाँको मात्रा बढी रहेको देखाएको छ । काठमाडौं महानगरको वायु प्रदुषित रहेको तथ्य यसले देखाउँदछ । यसलाई न्यून गर्न हाल काठमाडौं महानगरपालिका लगायत अरु पनि सरकारी निकायहरूले प्रयास गरिरहेका छन् । तर प्रदुषण नियन्त्रणको लागि सतही रूपमा गरिएको तत्कालीन कार्यले मात्र यो समस्या समाधान गर्न सकिँदैन । यसको लागि जरासम्मै पुगेर समाधान निकाल्नुपर्ने हुन्छ । काठमाडौंमा बढिरहेको अनियन्त्रित आप्रवासन, अव्यवस्थित शहरीकरण, खानेपानी-ढल आदि जस्ता अत्यावश्यक पूर्वाधारको अपर्याप्तता जस्ता दीर्घकालीन समस्याहरूलाई समाधान गर्न नसकेसम्म

बाहिरी रूपमा मात्र गरिने नियन्त्रणको प्रयासले काठमाडौंको प्रदुषणलाई सदाको लागि हटाउन सकिँदैन । जबसम्म नगरमा यस्ता प्रदुषणहरू कायम रहन्छन् तबसम्म इन्द्रजात्रा जस्ता सांस्कृतिक सम्पदाहरूमा आधारित पर्यटनको विकास गर्न कठिन हुन्छ । यी समस्याहरू स्थानीय सरकारको एकल प्रयासले मात्र समाधान गर्न सकिँदैन । काठमाडौं महानगर मुलुकको संघीय राजधानी समेत भएको कारणले यहाँ विद्यमान यस्ता समस्याहरू समाधान गर्न केन्द्रीयस्तरबाट समेत गम्भीर पहल हुनु आवश्यक छ ।

पर्यटन आयआर्जनको एउटा राम्रो श्रोत हो । यसले विभिन्न क्षेत्रमा आर्यआर्जनका सम्भावनाहरूलाई फराकिलो पारिदिन्छ । तर पर्यटनको विकास केवल आयआर्जनको लागि मात्र गरिने भने होइन । यसबाट प्राप्त हुने लाभ बहुआयामिक हुन्छन् । पर्यटन प्रवर्द्धन मार्फत आयआर्जनका साथसाथै अन्तर्राष्ट्रिय क्षेत्रमा हाम्रो संस्कृतिको प्रचार पनि भइरहेको हुन्छ । यी नै संस्कृतिहरूले विश्वमा नेपालको पहिचान पनि स्थापित गर्दै लगिरहेको हुन्छ । आयआर्जनको माध्यम समेत भएकोले उक्त संस्कृतिको संरक्षण गर्न निजी क्षेत्र पनि उतिकै सक्रिय हुनु पर्दछ । पर्यटन विकासमा योगदान पुऱ्याइरहेका मूर्त वा अमूर्त सम्पदा नष्ट हुँदा आफ्नो आयआर्जनको माध्यम समेत अवरुद्ध हुन जाने भएकोले त्यसको संवर्द्धनमा एकजुट हुन सबैका लागि बाध्यकारी स्थिति सिर्जना हुन पुग्दछ । सम्पदाहरू आयआर्जनको माध्यम बने पछि सम्पदा संरक्षणका साथसाथै उक्त सम्पदालाई असर पार्ने नकारात्मक पक्षहरूलाई न्यून गर्न पनि सरकार र निजी क्षेत्रबाट स्वतःस्फूर्त प्रयास हुन पुग्दछ । यसलाई पर्यटनको भाषामा 'फोर्स फर कल्चरल प्रिजर्भेसन (सांस्कृतिक संरक्षणको लागि दबाब)' भनिन्छ । यसरी सम्पदा संरक्षणको कार्यमा पर्यटकीय विकासले पनि सकारात्मक भूमिका निर्वाह गर्न पुग्दछ ।

# उपसंहार

नेपाल विभिन्न जातजाति, भाषाभाषी र संस्कार संस्कृतिले सम्पन्न एक सार्वभौम मुलुक हो । क्षेत्रफलमा सानो भए पनि अत्यन्त फरक भौगोलिक विविधताका कारण नेपालमा विभिन्न परिवारका भाषा, विभिन्न प्रकारका रहनसहन र विभिन्न शैलीका कलासंस्कृतिहरू प्रादुर्भाव भएको पाइन्छ। यस सन्दर्भमा नेपाल उपत्यकाको सरहद भित्र विकसित भएको मौलिक नेवाः सभ्यता विभिन्न प्रकारका कला, संस्कृति, जात्रा, पर्वहरूले सम्पन्न भएको देखिन्छ। काठमाडौं उपत्यकामा मनाइने विभिन्न प्रकारका जात्रापर्वहरू मध्ये इन्द्रजात्रा एक अत्यन्त मौलिक र सुसंस्कृत जात्रा हो ।

काठमाडौंमा मनाइने विभिन्न जात्राहरू मध्ये इन्द्रजात्रालाई मुख्य जात्रा वा सबैभन्दा प्राचीन जात्रा भन्ने गरिन्छ । यो जात्रा आठ दिनसम्म मनाउने गरिन्छ । इन्द्रजात्रा प्रत्येक वर्ष भाद्रशुक्ल द्वादशी अर्थात् यँलाथ्व द्वादशीका दिन शुरु भई आश्विनकृष्ण चतुर्दशी अर्थात यँलागाः चतुर्दशीका दिन सम्पन्न हुन्छ । यो जात्रा मनाउन राजा र सर्वसाधारण जनता समेत सहभागी भएका हुन्छन् । समाजका सबै जाति, सबै वर्ग एकै ठाउँमा भेला भई मनाइने जात्रा भएकोले इन्द्रजात्राका बेला काठमाडौं नगर पूर्ण रुपमा उल्लासमय हुन्छ ।

काठमाडौंको हनुमानढोका दरवार क्षेत्र यो जात्रा मनाइने प्रमुख स्थान हो । भाद्रशुक्ल द्वादशीका दिन हनुमानढोका दरवार अगाडि काठको यःसिं अर्थात इन्द्रध्वज उठाएर इन्द्रजात्राको आरम्भ गरिन्छ । यस पछि काठमाडौंमा विभिन्न नाच, पर्व, सहायक जात्राहरू शुरु हुन्छ। इन्द्रध्वजोत्थान पछि काठमाडौंका विभिन्न ठाउँमा लाखे, पुलुकिसि, दीप्याखं, सवःभक्कु, महाकाली नाच नचाउन शुरु हुन्छ भने हनुमानढोकामा स्वेत भैरव, इन्द्रचोकमा आकाश भैरव, वटु टोलमा बाकादे आजुलाई बाहिर ल्याई सार्वजनिक प्रदर्शन

गरिन्छ। टोल टोलमा भैरवको मूर्ति पनि प्रदर्शनीमा राखिन्छ। यसरी इन्द्रजात्रा एउटै मात्र जात्रा भए पनि यसमा अरु धेरै सहायक जात्रा एवं नाचहरू सम्मिलित भएको कारणले यसलाई विभिन्न जात्रा एवं पर्वहरूको एकीकृत जात्रा पनि भन्ने गरिन्छ।

इन्द्रजात्राको एउटा महत्वपूर्ण अंग श्री कुमारीको रथयात्रा हो। आठ दिन मनाइने इन्द्रजात्रामा तीन दिन श्री कुमारीको रथयात्रा चलाइन्छ। यसमा श्री कुमारीको साथै श्री गणेश र श्री भैरवको पनि रथयात्रा गरिन्छ। भाद्रशुक्ल चतुर्दशीका दिन काठमाडौंको तल्लो भेग (क्वःने) तिर रथयात्रा चलाइन्छ भने पूर्णिमाका दिन माथिल्लो भेग (थःने) तिर रथयात्रा चलाइन्छ। त्यस्तै अर्को एकदिन माथिल्लो भेगको बीचतिरबाट रथयात्रा चलाइन्छ। कुमारीको रथयात्रा चलाइने पहिलो दिन नै इन्द्रकी आमा दागिं सहित उक्त वर्ष दिवंगत भएका व्यक्तिका आफन्तहरू दागिं जाने चलन छ। पृथ्वीनारायण शाहले कुमारीको रथयात्रा चलाइरहेकै बेला काठमाडौंमा आक्रमण गरी जितेका कारण यसलाई नेपाली राजनीतिक इतिहासको पनि एक महत्वपूर्ण घटनाको रुपमा लिने गरिन्छ।

इन्द्रजात्रामा प्रमुख रुपमा जात्रा गरिने देवता इन्द्र स्वर्गका राजा हुन्। हिन्दू ग्रन्थ वेद, उपनिषद् तथा पुराणहरूमा इन्द्रका बारे धेरै चर्चा गरिएको पाइन्छ। यस अतिरिक्त बौद्ध ग्रन्थहरूमा पनि इन्द्रका बारे चर्चा गरिएको पाइन्छ। नेपालमा इन्द्रजात्रा सञ्चालन गर्ने जातीय समुदायहरू भने अधिकांश बौद्ध धर्मावलम्बीमा पनि वज्रयानी सम्प्रदायसँग आवद्ध भएका देखिन्छन्। इन्द्रजात्रामा प्रदर्शन गरिने नाच तथा अन्य सहायक जात्राका सञ्चालकहरू काठमाडौंका स्थानीय बौद्ध नेवार छन्। इन्द्रजात्रामा विशेष आकर्षणको केन्द्रका रुपमा रहेका जीवित देवी कुमारी समेत बौद्ध धर्मावलम्बी शाक्य कुलपुत्रीबाट छानिने गरिन्छ।

विभिन्न पुराणहरूमा इन्द्रजात्रा मनाउने विधि बारे विभिन्न कुराहरू लेखिएको भएता पनि काठमाडौंमा मनाइने इन्द्रजात्राको स्वरुप भने पुराणहरूमा वर्णित विधि भन्दा फरक रहेको पाइन्छ। प्राचीनकालमा भारतको बंगालमा पनि इन्द्रजात्रा मनाउने गरिएको प्रमाणहरू भेटिएका छन्। तर अहिले भारतमा इन्द्रजात्रा मनाउने परम्परा पूर्णतया लोप भइसकेको छ। भारतमा लोप भए पनि नेपालमा भने यो पर्व अझै वर्षेनी मनाउँदै आइरहेको

छ । भारतमा मनाइने इन्द्रजात्राको प्रमुख सांस्कृतिक कार्य भनेकै यःसिं अर्थात इन्द्रध्वजोत्थान गर्ने हो । पुराणहरूमा पनि इन्द्रध्वजलाई नै इन्द्रको प्रतीक मानेर जात्रा मनाउने व्यहोरा वर्णन गरिएको छ । तर नेपालमा इन्द्रको मूर्ति समेत बनाई यो जात्रा मनाउने गरिन्छ । नेपालमा मनाइने इन्द्रजात्राको यो अत्यन्त मौलिक पक्ष हो । इन्द्रजात्रा बारे नेपालमा जुन किंवदन्ती प्रचलित छ त्यो पुराण लगायत कुनै पनि ग्रन्थहरूमा उल्लेख भएको पाइँदैन । इन्द्रजात्रा बारे पुराणहरूमा वर्णन गरिएको भएता पनि नेपालमा भने यो आफ्नैपनको मौलिकता सहित स्थानीयकरण भइसकेको देखिन्छ ।

इन्द्रजात्रालाई काठमाडौं उपत्यकाका स्थानीय भाषामा 'यँयाः' भनिन्छ । काठमाडौं नगरलाई नेपालभाषामा 'यँ' भनिन्छ । त्यसैले 'यँयाः' को अर्थ 'काठमाडौंको जात्रा' भनी अर्थ लगाउनेहरू पनि धेरै छन् । तर इन्द्रजात्रा पर्व काठमाडौं मात्र होइन पाटन, भक्तपुर, दोलखा आदि जस्ता अन्य नगरहरूमा पनि मनाउने गरिन्छ । त्यहाँ पनि इन्द्रजात्रालाई 'यँयाः' नै भनिन्छ । त्यसैले 'यँयाः' को अर्थ 'काठमाडौंको जात्रा' भनी अर्थ्याउन मिल्ने देखिँदैन ।

स्वर्गका राजा इन्द्रलाई उपत्यकाका नेवार समुदाय 'यमाःद्यः' भनी सम्बोधन गर्दछन् । बरु 'यमाःद्यः' को जात्रा भएको कारणले यसलाई 'यँयाः' भनिएको मान्न सकिन्छ ।

इन्द्रजात्रा मनाउँदा यसमा राजा समेत सहभागी हुनुपर्ने परम्परा रहँदै आएको छ । पहिले पहिले नेपालमा पनि इन्द्रजात्रा मनाउँदा राजा तथा दर वारका भाइभारदारहरूको प्रत्यक्ष संलग्नता हुने गर्दथ्यो । अहिले नेपाल गणतान्त्रिक प्रणालीमा प्रवेश भइसकेको कारणले हाल इन्द्रजात्रा पर्वमा राजाको सट्टा राष्ट्रप्रमुखको हैसियतले राष्ट्रपतिले भाग लिने चलन भएको छ । इन्द्र स्वर्गका राजा भएको कारणले उनको नाममा मनाइने इन्द्रजात्रामा राजाहरू नै सहभागी हुने चलन भएको थियो । पुराणहरूमा पनि इन्द्रजात्रालाई राजासँगै जोडेर चर्चा गरिएको छ । तर इन्द्र वर्षादको देवता पनि भएको कारणले काठमाडौंका जनताले कृषि कार्यका लागि इन्द्रको जात्रा चलाएको देखिन्छ । किंवदन्ती अनुसार काठमाडौंका जनताले समातेर राखेका देवराज इन्द्रलाई बन्धनमुक्त गरी लान उनकी आमाले कृषिवालीका लागि आवश्यक कुइरो दिएर गएकी थिइन् । त्यसैले काठमाडौंमा इन्द्रजात्रा सकिनेबित्तिकै कुइरो आउन शुरु हुन्छ भन्ने विश्वास गरिन्छ ।

काठमाडौं उपत्यकाको ललितपुर र भक्तपुरमा पनि इन्द्रजात्रा मनाउने गरिन्छ। तर त्यहाँ मनाइने इन्द्रजात्रा काठमाडौंको भन्दा फरक छ। भक्तपुरमा मनाइने इन्द्रजात्रामा पुलुकिसि, यांमत, मूपात्र, छुमा गणेश, इन्द्रायणीको जात्रा जोडिएको छ। ललितपुरमा मनाइने इन्द्रजात्रा त्यहाँका विभिन्न टोलहरूमा केन्द्रित रहेको पाइन्छ। त्यस्तै नेपाल खाल्डोका अन्य विभिन्न ठाउँहरूमा पनि इन्द्रजात्रा पर्व मनाउने परम्परा रहेको पाइन्छ।

गएको केही वर्षदेखि विदेशमा रहेका नेवाः समुदायले पनि आआफ्नै शैलीले इन्द्रजात्रा मनाउन थालेको पाइन्छ। उनीहरूले लाखे, पुलुकिसि, कुमारी यात्रा समेत गरी इन्द्रजात्रा आयोजना गर्दै आइरहेका छन्। त्यसरी आयोजना गरिने इन्द्रजात्रा समारोहमा नेपाली मूलका अरु समुदाय लगायत त्यहींकै स्थानीय मानिसहरू समेत सहभागी हुन थालेका छन्। यसरी अहिले इन्द्रजात्रा विदेशमा रहेका नेपाली समाजलाई जोड्ने सांस्कृतिक माध्यम समेत बन्न पुगेको छ भने विदेशमा नेपालको परिचय दिने एक प्रतिनिधिमूलक संस्कृतिका रुपमा पनि स्थापित भइसकेको छ।

इन्द्रजात्रा वर्तमान समयमा मात्र होइन इतिहासका विभिन्न कालखण्डमा पनि यो जात्रालाई यसरी नै भव्यपूर्वक मनाउँदै आइरहेको पाइन्छ। पौराणिककालका विभिन्न धार्मिक ग्रन्थहरूमा इन्द्र र इन्द्रजात्राको बयान गरिएको पाइन्छ। त्यस्तै इतिहासका विभिन्न कालखण्डमा पनि इन्द्रजात्रा र जात्रासँग सम्बन्धित विभिन्न घटना परिघटनाहरू बारे उल्लेख भएको देखिन्छ।

प्राचीन सिन्धुघाटी सभ्यताको पुरातात्विक खोज हुँदा मोहनजोदाडो र हडप्पामा त्यहाँका निवासीहरूले बनाएको ढुङ्गाका शिश्न अर्थात् लिङ्गाका भग्नावशेषहरू प्राप्त भएकोले यःसिं अर्थात इन्द्रध्वजोत्थान गरी इन्द्रजात्रा मनाए जस्तै त्यहाँ पनि लिङ्गो उठाई त्यस्तै कुनै पर्व मनाउने गरिएको अनुमान गर्न सकिन्छ।

पौराणिककालका संस्कृत ग्रन्थ र धार्मिक-साहित्यिक कृतिहरूमा इन्द्रको ध्वजा उठाई इन्द्रजात्रा पर्व मनाइने कुरा उल्लेख गरिएको पाइन्छ। वेदमा इन्द्रसँग सम्बन्धित गाथाहरू मात्रै उल्लेख भए पनि इन्द्रजात्रा मनाउने चलन भने पुराणकालमा आएर मात्रै शुरु भएको देखिन्छ। पुराणहरूमा इन्द्रध्वजलाई इन्द्रकै प्रतिक मानेर इन्द्रजात्रा मनाउने प्रशंगहरू उल्लेख गरिएको पाइन्छ।

महाभारतको आदि पर्व, वाल्मिकी रामायण, हरिवंश पुराण, कालिका पुराण, देवी पुराण, बिष्णु धर्मोत्तर पुराण र वृहत्संहिता आदि ग्रन्थहरूमा इन्द्रको नाममा गरिने इन्द्रध्वजोत्थानको विषयमा चर्चा भएको पाइन्छ ।

वेदहरूमा गरिएको देवराजा इन्द्रको चर्चा र विभिन्न पुराणहरूमा गरिएको इन्द्रजात्राको वर्णनलाई नै आधार मानेर प्राचीनकालमा भारतका विभिन्न ठाउँहरूमा इन्द्रजात्रा पर्व मनाउने गरिएको संकेत पाउन सकिन्छ । तर कालान्तरमा भारतमा विभिन्न कारणले इन्द्रजात्रा मनाउने चलन लोप हुँदै गएको देखिन्छ । नेपालको शासनसत्तासम्म पुगेका विभिन्न वंशका राजाहरू भारतबाटै नेपाल आएको हुनाले उनीहरूसँगै इन्द्रजात्रा पनि नेपाल भित्रिएको हो कि भन्ने अनुमान गर्न सकिन्छ ।

इन्द्रजात्रा अत्यन्त पुरानो संस्कृति भए पनि किरातकालसम्म पनि इन्द्रजात्रा मनाउने चलन आइसकेको देखिँदैन । काठमाडौंमा मनाइने इन्द्रजात्रासँग सम्बन्धित किंवदन्तीमा वर्णन गरिएको सामाजिक वस्तुस्थिति, यहाँको तत्कालीन जनसांख्यिक अवस्था, व्यवस्थित शहरीकरण भइनसकेको अवस्था, प्रामाणिक इतिहासको अभाव आदि विविध कारणले गदौ पनि किरातकालमा इन्द्रजात्रा मनाउने परम्परा रहेको पाइँदैन भन्न सकिन्छ ।

किरातकालमा इन्द्रजात्रा मनाउने चलन आइसकेको नदेखिएता पनि लिच्छविकालमा भने इन्द्रजात्रा आरम्भ भइसकेको देखिन्छ । नेपालमा भेटिएका केही लिच्छविकालीन शिलापत्रहरूमा इन्द्रजात्रा मनाउन गुठीको व्यवस्था गरिएको वर्णन पाइन्छ । तर लिच्छविकालमा त्यो जात्रा कसरी र कुनबेला मनाइन्थ्यो भन्ने स्पष्ट इतिहास भने पाइँदैन ।

लिच्छविकालीन इन्द्रजात्रा बारे सामान्य जानकारी मात्रै प्राप्त भए पनि मल्लकालीन समयमा भने इन्द्रजात्रा पर्व क्रमशः समृद्ध हुँदै जान थालेको देखिन्छ । मल्लकालीन धेरै शिलालेखहरूमा इन्द्रजात्रा बारे उल्लेख गरिएको पाइन्छ । तत्कालीन अभिलेखहरूको अध्ययन गर्दा मल्लकालीन राजाहरू आफै नै भव्यपूर्वक इन्द्रजात्रा पर्व मनाउन अघि सर्ने गर्दथे भन्ने थाहा पाउन सकिन्छ । मल्ल राजाहरूले इन्द्रजात्रालाई अझ भव्य तुल्याउन यसमा अरु पनि विभिन्न जात्रा, पर्व एवं झाँकीहरू थप्दै लगेको देखिन्छ । लाखे नाच, सवःभक्कु नाच, महाकाली नाच आदि नाचहरू यही मल्लकालमै थपिएको देखिन्छ । काठमाडौंका मल्ल राजाहरू रत्न मल्ल, महिन्द्र मल्ल, प्रताप मल्ल

आदिले इन्द्रजात्रालाई समृद्ध बनाउन धेरै ठूलो भूमिका खेलेको पाइन्छ । जयप्रकाश मल्लको पालामा श्री कुमारी, श्री गणेश र श्री भैरवको रथयात्रा समेत थपिए पछि इन्द्रजात्राको गरिमा अझ बढ्न गएको मान्न सकिन्छ ।

मल्लकालीन समयमा राजाहरू मात्र होइन सर्वसाधारण जनताले पनि इन्द्रजात्रालाई अत्यन्त श्रद्धापूर्वक मान्ने गर्दथे भन्ने कुरा इतिहासका विभिन्न दस्तावेजहरूबाट थाहा पाउन सकिन्छ । उपत्यकाका विभिन्न स्थानहरूमा कतिपय सर्वसाधारण जनताले इन्द्रजात्राका बेला बत्ती बाल्ने, जाँड खुवाउने, स्याःबजि बाँड्ने आदि जस्ता कार्यहरू गर्न आयस्ताका रुपमा जग्गा समेत राखी छुट्टै गुठीको व्यवस्था गरिएका शिलापत्रहरू प्रशस्त पाइएका छन् । इन्द्रजात्राका लागि सर्वसाधारण जनताले गुठीको समेत व्यवस्था गरेबाट यो जात्राप्रति समाजमा रहेको ठूलो आस्था बारे थाहा पाउन सकिन्छ ।

मल्लकाल पछि शुरु भएको शाहकालमा पनि इन्द्रजात्राको गौरव अझ बढ्न गएको देखिन्छ । वि.सं. १८२५ को इन्द्रजात्राकै राति गोर्खाका राजा पृथ्वीनारायण शाहले तीनतिरबाट घेरा हाली काठमाडौंमाथि आक्रमण गरेका थिए । गोर्खाली राजा पृथ्वीनारायण शाहले गरेको उक्त काठमाडौं आक्रमण इन्द्रजात्रासँग जोडिएको नेपालको इतिहासकै सर्वाधिक महत्वपूर्ण घटना हो । इन्द्रजात्राकै दिनदेखि नेपालमा शाहकाल शुरु भएकोले शाहवंशीय राजाहरूका लागि इन्द्रजात्रा सांस्कृतिक पर्व मात्र नभई एउटा ऐतिहासिक दिन पनि हो ।

शाहवंश शुरु भएपछि शाह राजाहरूले इन्द्रजात्रामा अरु पनि पर्वहरू थप्ने र इन्द्रध्वजोत्थान जस्तो इन्द्रजात्राको प्रमुख पर्वलाई समायोजन समेत गरेको देखिन्छ । पछि शाह राजाहरूले इन्द्रजात्रालाई केवल सांस्कृतिक जात्रा मात्र होइन आफ्नो विजय उत्सव मनाउने अवसरका रुपमा समेत प्रयो ग गर्न थालेको पाइन्छ । तत्कालीन समयमा इन्द्रजात्रामा कुमारीको रथयात्रा सँगसँगै तत्कालीन राजा र राणा प्रधानमन्त्रीहरू समेत हात्तीमा चढेर नगर परिक्रमा गर्ने चलन थियो जसले गर्दा यो पर्व पूर्ण राजकीय शैलीमा सम्पन्न हुने गर्दथ्यो । २००७ सालको प्रजातन्त्र पछि इन्द्रजात्रालाई शाहवंशीय राजाहरूको विजयोत्सवको रुपमा मनाउने क्रममा राजा लगायत दरवारका भाइभारदार, प्रधानमन्त्री, मन्त्रीहरू समेत कुमारीको रथयात्रा पछि पछि सहभागी हुँदै जात्रा मनाउने चलन हट्न गयो । तथापि यो जात्रालाई प्राप्त र

ाजकीय सम्मान भने कायम रहि नै रह्यो ।

इन्द्रजात्राका अवसरमा पहिले पहिले राजाबाट सम्पन्न हुने सबै धार्मिक सांस्कृतिक कार्यहरू वर्तमान समयमा भने राष्ट्रप्रमुखका हैसियतले राष्ट्रपतिबाट सम्पन्न हुँदै आइरहेको छ । इन्द्रजात्रामा श्री कुमारीको रथयात्रा हुँदा जात्रा अवलोकन गर्ने, प्रसाद ग्रहण गर्ने, इन्द्रजात्राको अन्तिम दिन श्री कुमारीको हातबाट टीका ग्रहण गर्ने जस्ता सबै कार्यहरूमा हाल राष्ट्रपति सहभागी हुन थालेको छ । मुलुकमा ठूला राजनीतिक परिवर्तनहरू भई विभिन्न वंशका राजाहरू फेरिँदै फेरिँदै अहिले राजाविहिन गणतान्त्रिक व्यवस्था आइसक्दा पनि इन्द्रजात्राको गरिमामा भने कमी आएको छैन । नयाँ संविधानले व्यवस्था गरे अनुसार अहिले मुलुकको महत्वपूर्ण मूर्त एव अमूर्त सम्पदाहरूको संरक्षण र सम्वर्द्धन गर्ने अभिभारा स्थानीय सरकारहरूलाई दिइएको छ । यसै व्यवस्था अनुसार हाल काठमाडौंमा मनाइने इन्द्रजात्राको सञ्चालन, संरक्षण र सम्वर्द्धन गर्ने कार्य काठमाडौं महानगरपालिकाबाट सम्पन्न हुँदै आइरहेको छ ।

काठमाडौंमा मनाइने इन्द्रजात्रामा विभिन्न देवीदेवताहरूको नाच एवं पर्वहरू पनि समावेश भएका हुन्छन् । हाल यसमा करिब दुई दर्जन हाराहारी अलग अलग धार्मिक-सांस्कृतिक गतिविधिहरू सम्पन्न हुने गरिएको पाइन्छ । त्यसैले इन्द्रजात्रा विभिन्न सहायक जात्रा, पर्व एवं नाचहरूको संयोजन पनि हो । भाद्रशुक्ल द्वादशीका दिन हनुमानढोकामा यःसिं (इन्द्रध्वज) उठाइसके पछि इन्द्रजात्रा शुरु हुन्छ । यस लगत्तै विभिन्न नाच एवं पर्वहरू सार्वजनिक प्रदर्शनमा आउन थाल्दछ । त्यही दिन लाखे, पुलुकिसि, सवःद्यः (हल्चोक आकाश भैरव), महाकाली नाचहरू पनि प्रदर्शनका लागि बाहिर निकालिन्छ । सोही दिन साँझ उपाकु परिक्रमा गरिन्छ । साथै टोल टोलमा भैरवका काठको मूर्ति पनि प्रदर्शन गरिन्छ ।

इन्द्रजात्राको आरम्भ भएको पहिलो दिन गरिने इन्द्रध्वजोत्थानलाई स्थानीय नेपालभाषामा 'यःसिं थनेगु' भनिन्छ । भाद्र शुक्लपक्ष द्वादशीको दिन हनुमानढोका दरवार क्षेत्रको कागेश्वरी मन्दिर सँगै रहेको खाल्डोमा यःसिं ठड्याइन्छ । इन्द्रजात्रामा इन्द्रलाई नै प्रतीक बनाएर इन्द्रध्वजोत्थान गरिने हो । त्यसैले इन्द्रध्वजोत्थान इन्द्रजात्राकै सबैभन्दा महत्वपूर्ण अंग हो ।

यःसिं उठाएकै दिन अपरान्हदेखि बेलुकी काठमाडौंको भित्री शहरमा दिवंगतहरूको सम्झनामा नेवार वज्रयानी बौद्ध समुदायको एक प्रकारको

धार्मिक पदयात्रा 'उपाकु वनेगु' गरिन्छ । नेवार हिन्दूहरू आफ्ना दिवंगत आफन्तलाई बैकुण्ठबास होस् भन्ने कामना गरी गाइजात्रा जाने गर्दछन् भने नेवार बौद्धहरू दिवंगत आफन्तको सुखावती भुवनमा बास होस् भन्ने कामना गरी इन्द्रजात्रामा उपाकु जाने गरेको पाइन्छ ।

हनुमानढोकामा यःसिं उठाइसके पछि हनुमानढोका सँगै रहेको श्वेत भैरव सर्वसाधारणको लागि खुल्ला गरिन्छ । अरु बेला बन्द रहने श्वेत भैरवको यो मूर्ति इन्द्रजात्राको आठ दिन मात्रै सर्वसाधारणका लागि खुल्ला गरिन्छ । यो मूर्तिलाई स्थानीय नेपालभाषामा 'हाथुद्यः' भनिन्छ । जाँड अर्थात 'हाथ्वँ' झार्ने भैरव भएकोले यसलाई 'हाथुद्यः' भनिएको हो ।

त्यही दिन इन्द्रचोकमा आजुद्यः अर्थात आकाश भैरवको मूर्तिलाई पनि मन्दिरबाट बाहिर ल्याई प्रदर्शन गरिन्छ । आकाश भैरवको मूर्तिलाई फूलैफूलले सजाएर प्रदर्शन गरिन्छ । आकाश भैरवलाई पहिलो किराती राजा यलम्बरको टाउको भन्ने पनि किंवदन्ती रहेको छ । साथै त्यही बेला इन्द्रचोकसँगै वटु टोलमा आकाश भैरव जस्तै अर्को एउटा भैरवको पनि मूर्ति सार्वजनिक प्रदर्शनमा राख्ने गरिन्छ । उक्त भैरवलाई बाकादे आजु भनिन्छ । यो भैरव पनि इन्द्रजात्राको आठ दिन प्रदर्शन गरिन्छ ।

यसको साथसाथै यही दिनदेखि काठमाडौंका विभिन्न चार ठाउँमा इन्द्रको मूर्ति प्रदर्शन गर्ने चलन रहेको छ । प्राचीन भारतमा पनि इन्द्रजात्रा धुमधामकासाथ मनाइने चलन भएता पनि त्यहाँ इन्द्रको प्रतिक स्वरुप इन्द्रध्वजोत्थान (यःसिं उठाउने) मात्रै गरिन्थ्यो । इन्द्रको मूर्तिकै जात्रा गर्ने चलन भने थिएन । काठमाडौंमा भने इन्द्रको मूर्ति समेत राखेर इन्द्रजात्रा मनाइन्छ । काठमाडौंभित्र मरुटोलमा काष्ठमण्डप सँगै गःकुति अगाडि, इन्द्रचोकमा आकाश भैरवको मन्दिर अगाडि, नरदेवी (न्यत) डबली र किलागल टोलमा चार वटा लामा खम्बाहरू उठाई त्यसको चार कुनामा चार वटै हात्ती सहितको आसन बनाई त्यसमा इन्द्रको मूर्ति विराजमान गराइन्छ । त्यसमा इन्द्रको मूर्तिलाई बाँधेर राख्ने गरिन्छ । इन्द्रलाई पारिजात फूल चोर्न आएको भनी समातेर बाँधेर राखेको किंवदन्तीका आधारमा त्यस्तो मूर्ति प्रदर्शन गरिएको हो ।

यःसिं उठाएकै दिन काठमाडौंमा विभिन्न प्रकारका पाँच वटा मुकुण्डो नाचहरू सार्वजनिक रुपमा प्रदर्शन गरिन्छ । यी नाचहरू र यसमा बजाइने

विभिन्न प्रकारका बाजागाजाहरूका कारण इन्द्रजात्रा पर्व अत्यन्त उल्लासमय बन्न पुग्दछ । यस्ता विभिन्न नाचहरू इन्द्रजात्राको आठै दिन प्रदर्शन गर्ने परम्परा रहेको छ । इन्द्रजात्रामा सबैभन्दा पहिले सार्वजनिक हुने नाच दीप्याखं हो । यो काठमाडौंको किलागल टोलका स्थानीय ज्यापू समुदायले प्रदर्शन गर्ने नाच हो । दानवरूपी नकारात्मक शक्तिमाथि देवीरूपी सकारात्मक शक्तिको विजय हुन्छ भन्ने सन्देश रहेको यो नाच मञ्चन गरे मुलुकमा स्थिर शान्ति कायम हुने र लोकमा सुख व्याप्त हुने  विश्वास गरिन्छ । यो नाच प्रदर्शन गर्न काठमाडौंमा छुट्टै डबली बनाइएको पाइन्छ ।

त्यस्तै इन्द्रजात्रामा प्रदर्शन गरिने रोमाञ्चकारी नाचहरू मध्ये लाखे सर्वाधिक आकर्षक छ । यो डबली वा कुनै निश्चित ठाउँमा नचाइने नभई थःने-क्वःने र उपाकु परिक्रमा गर्ने सबै क्षेत्रमा नचाइन्छ । नेपालमा जहाँ जहाँ नेवार समुदायको वस्ती छ त्यहाँ त्यहाँ लाखे नाच निकाल्ने गरिएको पाइन्छ । तर ती सबै लाखेहरू गाइजात्रा ताका निकालिने गरिन्छ । इन्द्रजात्रा ताका निकालिने लाखे यही मजिपाः लाखे मात्र हो ।

इन्द्रजात्राको पर्याय जस्तै भइसकेको अर्को नाच पुलुकिसि हो । यसमा मान्द्रोले बनाइएको हात्ती भित्र दुई जना मानिस बसेर नाच्ने गरिन्छ । किंवदन्ती अनुसार पुलुकिसि भनेको स्वर्गका राजा इन्द्रको वाहन ऐरावत हात्तीको प्रतीक हो । पुलुकिसि आउँदा 'ताङताङ' आवाज आउने बाजा बजाएर आउने भएकोले पुलुकिसिलाई कसैकसैले 'तानाकिसि' पनि भन्ने गरेको पाइन्छ । पुलुकिसि काठमाडौंको किलागल टोलका स्थानीय ज्यापू (महर्जन) समुदायले निकाल्ने गर्दछ । इन्द्रजात्राका बेला जतातत‌ै पुलुपालु (झल्याकझुलुक) देखिने भएकोले यसलाई 'पुलुकिसि' भनिएको हो भन्ने भनाई छ । पुलुकिसि सिधै इन्द्रसँग सम्बन्धित भएकोले यो बीचमा थपिएको नाच नभई इन्द्रजात्रा सँगसँगै यो नाच पनि शुरु भएको अनुमान गर्न सकिन्छ ।

इन्द्रजात्रामा नचाइने अर्को नाच हल्चोक आकाश भैरवको नाच हो । यसलाई स्थानीय भाषामा 'सवःद्यः' वा 'सवःभक्कु' भनिन्छ । सवःभक्कु नाच हल्चोकका स्थानीय पुतुवार जातिले निकाल्ने गर्दछ यो नाच नचाउँदा 'घिन्नाले सिङ्तान' बोलको धुन बजाउने गरिन्छ । यो बोलकै कारणले यसलाई 'घिन्नाले सिङ्तान नाच' भनेर पनि चिन्ने गरिन्छ । पहिले पहिले यो नाचलाई हनुमानढोका दरवारको नासल चोकमा एउटा जीवित राँगो दिने

गरिन्थ्यो । अहिले यो बन्द भइसकेको छ । यसको बाऱ्ह वर्षे नाच गत वि.सं. २०७० सालमा निकालिएको थियो । अब अर्को बाऱ्ह वर्षे नाच वि.सं. २०८२ सालमा वैशाख १ गते निकालिने छ ।

काठमाडौंमा मनाइने इन्द्रजात्रामा भक्तपुरदेखि महाकाली नाच देखाउन ल्याइन्छ । यो नाचलाई महाकाली नाच भनिए पनि यसमा महाकाली लगायत महालक्ष्मी, कौमारी जस्ता देवीहरूका साथै अरु पनि पात्रहरू रहेका हुन्छन् । तीन जना देवीहरू महाकाली, महालक्ष्मी र कुमारी प्रकट भई महिषासुर दैत्यको वध गरी अन्य दैत्यहरूलाई समेत सखाप पारेको र त्यसै खुशियालीमा यो नाच नचाएको भन्ने जनविश्वास पाइन्छ । महाकाली नाच हेर्दा एउटै भए पनि प्रत्येक वर्ष इन्द्रजात्रामा भक्तपुरबाट काठमाडौंमा यो नाच ल्याई देखाउने समूह भने सात वटा रहेका छन् ।

इन्द्रजात्रामा प्रदर्शन गरिने विभिन्न नाचगानहरू मध्ये दश अवतारको प्रदर्शन एउटा छुट्टै महत्व बोकेको झाँकी छ । बसन्तपुरस्थित त्रैलोक्यमोहन नारायण मन्दिरको पछाडि पाँच खुड्किलाको पेटीमा यो दश अवतार प्रदर्शन गरिन्छ । यसमा भगवान बिष्णुका विभिन्न दश अवतार र ती अवतारसँग सम्बन्धित विभिन्न घटना र देवदेवीका कार्यहरूलाई झाँकीका रुपमा प्रदर्शन गरिन्छ । इन्द्रजात्रामा देखाइने विभिन्न परम्परागत नाचहरू मध्ये खःप्याखं जस्ता केही नाचहरू भने लोप भइसकेका छन् ।

इन्द्रजात्रामा धार्मिक आस्था प्रकट गर्न विभिन्न प्रकारका बत्तीहरू पनि बाल्ने चलन रहँदै आएको छ । जस्तो बौमत, ह्यूमत, ग्वराः मत, दलूमत आदि । यस मध्ये ग्वराः मत एउटा छुट्टै विशेषता रहेको बत्ती हो । ती मध्ये सबैभन्दा अग्लो ग्वराः मत बसन्तपुरको माजु देगल र लक्ष्मीनारायण सत्तलको बीचमा राखिने गरिन्छ । यहाँ बालिएको बत्तीको चमक भक्तपुरबाट समेत देखिन्छ भन्ने जनश्रुति रहेको छ ।

इन्द्रजात्राको तेश्रो दिन अर्थात भाद्रशुक्ल चतुर्दशीका दिन श्री कुमारीको रथयात्रा हुन्छ । उक्त दिन बसन्तपुरबाट श्री कुमारी, श्री गणेश र श्री भैरवको रथलाई काठमाडौंको क्वःने (तल्लो भेग) अर्थात चिकंमुगल, जैशी देवल, लगन टोल, ब्रम्ह टोल, कोहिटी, भिमसेनथानतिर तान्ने गरिन्छ । पहिलो दिन बसन्तपुरमा रथ यात्रा आरम्भ गर्दा राष्ट्रप्रमुख लगायत सरकारका विशिष्ट पदाधिकारीहरू र विदेशी कुटनीतिक नियोगका पदाधिकारीहरू पनि

जात्रामा उपस्थित हुन्छन् । रथयात्रामा सरकारको गुर्जु पल्टन लगायत नायूखिं, धिमे, खिं आदि विभिन्न बाजागाजाहरू समावेश भएका हुन्छन् ।

क्वःनेयाः समापन हुने बित्तिकै मरुटोलको छ्वासपाखा भन्ने ठाउँबाट दागिं निस्किन्छ । यो यात्रा मरु टोलको छ्वासपाखाबाट शुरु भई कुमारी रथयात्रा गर्ने थःने र क्वःने क्षेत्र परिक्रमा गरी पुनः मरु टोलमै आई समाप्त हुन्छ । नगर परिक्रमा गर्ने क्रममा दागिं आधा बाटो पुगे पछि काष्ठमण्डप पछाडिबाट बौमत निकालिन्छ । धेरै बाँस/नर्कटहरू (पंकथि) जोडेर नागबेली आकारमा करिब ४० फिट जति लामो बौमत बनाइएको हुन्छ । नाग जस्तो घुमाउरो परेको त्यही बाँसमाथि गोबरले टाँसेर दर्जनौं पाल्चा (दियो) हरू राखिन्छ । बौमत थःने र क्वःने परिक्रमा गरी पुनः काष्ठमण्डपमै पुगे पछि समापन गरिन्छ ।

भोलिपल्ट भाद्रशुक्ल पूर्णिमाको दिन काठमाडौंको थःने लागा अर्थात माथिल्लो क्षेत्रका टोलहरूमा श्री कुमारीको रथयात्रा गरिन्छ । उक्त दिनको रथयात्रालाई थःनेयाः भनिन्छ । यो दिनको पूर्णिमा इन्द्रजात्राको प्रमुख दिन हो । उक्त दिन समयूबजि खाने गरिन्छ । इन्द्रजात्राको यो पूर्णिमालाई नेपालभाषामा 'यँयाः पुन्हि' भनिन्छ । उक्त दिन समयूबजि खाने भएकोले सो पूर्णिमालाई 'समय् पुन्हि' पनि भन्ने गरिन्छ । पञ्चतत्वका गुणहरूले सम्पन्न हुने भएकोले समयूबजिको आयुर्वेदिक महत्व पनि रहेको हुन्छ । समयबजिले मानव शरीरमा पाँच तत्वको सन्तुलन कायम गरी शरीरलाई सधैँ स्वस्थ राख्न मद्दत पुऱ्याउँछ भन्ने विश्वास गरिन्छ ।

इन्द्रजात्राको पाँचौ, छैठौं र सातौं दिन (आश्विनकृष्ण परेवा, दुतिया र तृतिया) कुमारीको रथयात्रा हुँदैन । तर रथयात्रा नभए पनि लाखे, पुलुकिसि, सवःभक्कु, महाकाली नाच, दश अवतार भने प्रदर्शन भइरहेकै हुन्छ । दीप्याखं, सवःभक्कु र महाकाली नाच जस्ता देवी नाचहरूले असत्यमाथि सधैँ सत्यले नै जित्ने नैतिक सन्देश दिएको छ । यसरी इन्द्रजात्रा र योसँग सम्बन्धित विभिन्न सहायक जात्रा, नाच एवं पर्वहरूले सांस्कृतिक माध्यमबाट समाजलाई देशभक्ति, नैतिकता र सत्यनिष्ठताको सन्देश सम्प्रेषण गरिरहेको पाइन्छ ।

थःनेयाःको चार दिन पछि अर्थात भाद्रकृष्ण चौथीका दिन श्री कुमारीको 'नानीचायाः' गरिन्छ । यो दिन श्री कुमारी लगायत तीन वटै रथलाई

माथिल्लो भेगको बीच बाटोमा पर्ने नरदेवी-किलागल टोलबाट परिक्रमा गराई पुनः बसन्तपुर ल्याइन्छ । हाल उक्त दिनको रथयात्रामा महिलाहरू मात्रै सहभागी हुने र तीन वटै रथहरू महिलाहरूले मात्रै तानेर जात्रा सम्पन्न गर्ने नयाँ चलन शुरु भएको छ ।

नानीचायाः समापन भए पछि बेलुका राष्ट्राध्यक्ष कुमारी घरमा सवारी भई श्री कुमारीको हातबाट टीका ग्रहण हुन्छ । साथै कुमारी घरमै श्री गणेश र श्री भैरवबाट पनि टीका ग्रहण हुन्छ ।

इन्द्रजात्रामा श्री कुमारीको रथयात्रालाई अत्यन्त महत्वपूर्ण जात्राका रुपमा लिने गरिन्छ । इन्द्रजात्रामा कुमारीको रथयात्रा चलाउने चलन वि.सं. १८१४ मा राजा जयप्रकाश मल्लले चलाएको हो ।

जयप्रकाश मल्लले कुमारी रथयात्रालाई अत्यन्त भव्यपूर्वक चलाउने प्रथा शुरु गरे । उनको पालामा कुमारीको रथयात्रा हुँदा राजा र सम्पूर्ण जनसमुदाय नै जात्रामा चुर्लुम्म डुबिरहेका हुन्थे । त्यतिबेला काठमाडौंवासी राजा र जनताले अरुतिर ध्यानै दिन पाएका हुँदैन थिए । गोर्खाका राजा पृथ्वीनारायण शाहले त्यही मौका छोपी इन्द्रजात्राकै दिन काठमाडौंमा आक्रमण गरेका थिए ।

इन्द्रजात्रामा रथयात्रा गरिने श्री कुमारीलाई तुलजा भवानीको प्रतीकको रुपमा लिने गरिन्छ । तुलजा भवानी मल्ल राजाहरूका इष्टदेवता पनि हुन् । राजा जयप्रकाश मल्लले कुमारीको रथयात्रा शुरु गर्नुभन्दा एक वर्ष अगाडि मात्रै कुमारीका लागि छुट्टै निवासका रुपमा कुमारी घर बनाइदिएका थिए । जयप्रकाश मल्लले एउटा परम्परागत बहालको स्वरुपमा कुमारी घर निर्माण गरेका थिए । बसन्तपुरमै रहेको ऐतिहासिक श्रीखण्ड तरुमुल महाविहार (सिख्वंमू बहाः) कै एक खण्डलाई विहारको रूपमा निर्माण गरेको व्यहोरा ठ्यासफूहरूमा उल्लेख छ । उक्त विहारलाई श्री राजकीर्ति मनोरम महाविहार वा राजालक्ष्मीकुल विहार पनि भन्ने गरिन्छ । कुमारी घरमा श्री कुमारीको हेरचाह चिताइदारले गर्ने गर्दछ ।

श्री कुमारीको नानीचायाः सकिएकै राति तोकिएको साइतमा यःसिं ढालिन्छ । यःसिंलाई टेकू दोभानमा लगेर सेलाइसके पछि उक्त वर्षको इन्द्रजात्रा समाप्त हुन्छ ।

इन्द्रजात्रा पर्व आठ दिन मात्रै सञ्चालन हुने भए पनि त्यसको लागि

आवश्यक तयारी भने महिनौं अघिदेखि चलिरहेको हुन्छ । लामो तयारी गरी लाखौं जनसमुदाय बीच चलाउनु पर्ने इन्द्रजात्रा जस्तो ठूलो सांस्कृतिक पर्व हरेक वर्ष कुनै विघ्न वाधा बिना सञ्चालन गर्नु निश्चय पनि कठिन काम हो । कुनै व्यक्ति विशेष वा भीडले मात्र यस्तो कार्य सम्पन्न गर्न सक्दैन । यसको पछाडि नेपाली समाजमा परम्परादेखि जरो गाड्दै आइरहेको गुठी व्यवस्थाको ठूलो हात रहेको पाइन्छ । विभिन्न गुठीहरूको संयोजनबाट नै नेपाली समाजको धार्मिक-सामाजिक गतिविधिहरू सुचारु भइरहेको पाइन्छ । यसरी धेरै संख्यामा गुठीहरूको व्यवस्था भएको एक महत्वपूर्ण जात्रा इन्द्रजात्रा पनि हो । इन्द्रजात्रा सञ्चालन गर्न विभिन्न ठाउँमा जग्गा सहितको गुठी राखिएको पाइन्छ । इन्द्रजात्रा सञ्चालनको लागि राखिएको गुठीकै कारणले वास्तवमा इन्द्रजात्राको इतिहास समेत थाहा पाउन सकिएको हो । काठमाडौं उपत्यकाका विभिन्न पुराना वस्तीहरूमा इन्द्रजात्राका बेला सम्पन्न गर्नुपर्ने विभिन्न धार्मिक सांस्कृतिक कार्यहरू गर्न गराउन गुठीको व्यवस्था गरिएका अभिलेखहरू प्राप्त भएका छन् । इन्द्रजात्रासँग सम्बन्धित धार्मिक सांस्कृतिक कार्यहरू गर्न गुठी राख्ने चलन मल्लकाल र शाहकालमा पनि रहेको पाइन्छ ।

शाहकाल शुरु भए पछि राज्यबाट गुठीको जग्गा हरण गरेका उदाहरणहरू पनि पाइन्छन् । पृथ्वीनारायण शाहले काठमाडौं जितिसकेपछि यहाँका केही गुठी जग्गाहरू आफ्ना सेनालाई जागिरका रुपमा दिएका थिए । चाँगु (दोलाशिखर) नारायणको पूजाआजा गर्न राखिएको जग्गा सेनालाई जागिर दिएको इतिहासमै उल्लेख छ । गुठी जग्गा प्रायः करमुक्त हुन्थ्यो । पृथ्वीनारायण शाहले काठमाडौंका गुठी जग्गामा पनि कर लगाउन शुरु गऱ्यो । गुठीको जग्गामाथि कर लगाउने कामलाई पछि जंगबहादुरले झनै अघि बढायो । नेपाल-तिब्बत युद्धताका देशव्यापी गुठी जग्गामा कर लगाइएको थियो ।

गुठी जग्गाको व्यवस्थापन र जात्रापर्वहरूका लागि खर्च व्यवस्थापन गर्न नेपाल सरकारले वि.सं. २०२१ कार्तिक १७ गते गुठी संस्थान गठन गऱ्यो । तर पछिल्ला वर्षहरूमा गुठी संस्थान अन्तर्गत रहेका जग्गाहरू नै धेरै मात्रामा रैतानी भइसकेका छन् । उदाहरण स्वरुप स्वेत भैरवसँग सम्बन्धित गुठीको जग्गालाई लिन सकिन्छ जुन सम्बन्धित गुठियारहरूलाई जानकारी नै नदिई रैकर परिणत गरिएको थियो भने त्यस पश्चात बाँकी रहेको जग्गा पनि बेपत्ता पारिएको थियो ।

इन्द्रजात्रा पर्वमा सहभागी हुनुपर्ने विभिन्न नाच एवं सहायक जात्राहरूको पनि आआफ्नै गुठीहरू रहेका छन् । तर यी गुठीहरूको छुट्टै आयस्ता नभएका कारण जात्रा सञ्चालनमा समस्या रहेको देखिन्छ। इन्द्रजात्रामा दागिं निकाल्नका लागि दागिं गुठी, बौमत सञ्चालनका लागि बौमत गुठी, आकाश भैरवको जात्रा चलाउन आकाशभैरव नाथ गुठी, यःसिं उठाउने सम्बन्धी सम्पूर्ण कार्यहरू गर्न केन्द्रीय मानन्धर संघ, दीप्याखं नाच चलाउन दीप्याखं गुठी, लाखे नाच चलाउन लाखे आजु गुठी, दश अवतार सञ्चालन गर्न दिगु गुठी आदि जस्ता गुठीहरूको व्यवस्था गरिएको छ।

इन्द्रजात्रा एक धार्मिक-सांस्कृतिक पर्व भए पनि योसँग राजनीतिक, सामाजिक सम्बन्ध समेत रहेको स्पष्ट देखिन्छ । इन्द्रजात्रा मनाउन परम्परादेखि नै राज्यको तर्फबाट समेत नियमित रुपमा सहयोग उपलब्ध गराउँदै आइरहेको थियो। वि.सं. २०६५ सालमा यी सबै गुठीहरूलाई संयोजन गरी इन्द्रजात्रालाई अझ व्यवस्थित गर्न 'इन्द्रजात्रा व्यवस्थापन समिति' गठन गरियो। यो समितिलाई इन्द्रजात्रा सञ्चालन गर्न नेपाल सरकारका तर्फबाट वर्षेनी १३ लाख ९५ हजार ६७० रुपैयाँ प्रदान गर्दै आइरहेको छ। यस्तो सहयोगको रकम पहिले पहिले प्रयाप्त भएता पनि पछिल्लो समयमा भने अपुग हुँदै आएको देखिन्छ। वि.सं. २०७२ सालको नयाँ संविधानले मुलुकको जात्रापर्वहरू संरक्षण र सम्वर्द्धन गर्ने जिम्मा अब स्थानीय सरकारलाई दिइएको छ । यसर्थ इन्द्रजात्रा पर्वको सञ्चालन, संरक्षण र सम्वर्द्धन गर्ने जिम्मेवारी अहिले काठमाडौं महानगरपालिकाको काँधमा आएको छ । काठमाडौं महानगरपालिकाबाट पनि इन्द्रजात्रा सञ्चालनका लागि यही समितिलाई आर्थिक अनुदान प्रदान गर्दै आइरहेको छ । नेपाल सरकारले इन्द्रजात्रा सञ्चालनका लागि पाँच करोड रुपैयाँको अक्षय कोष स्थापना गर्ने घोषणा गरेको छ। उक्त अक्षय कोष खडा गर्न संघीय सरकार, बागमती प्रदेश सरकार, काठमाडौं महानगरपालिका र गुठी संस्थानबाट आर्थिक सहयोग उपलब्ध गरिएको छ।

इन्द्रजात्रा सम्पन्न गर्न धेरै गुठीहरू सक्रिय हुनुपर्ने भएकोले यसले नेपाली समाजमा विद्यमान गुठीको महत्वलाई पनि उजागर गरेको छ । तर गुठी भएर पनि त्यसको आयस्ताका लागि राखिएका जग्गाजमिनहरू नासिँदै जानु भने यसको दुःखद् पक्ष हो । गुठीहरू कमजोर भए त्यसको

असर इन्द्रजात्रामा पनि पर्न सक्ने हुन्छ । इन्द्रजात्रा पर्व सञ्चालन गर्न सरकारबाट उपलब्ध गराउँदै आइरहेको आर्थिक सहयोगलाई प्रचलित बजार भाउ अनुसार समायोजन नगरिएको कारणले त्यो ज्यादै न्यून हुँदै गइरहेको छ । लामो समयदेखि समायोजन नभएको र महँगी, मुद्रास्फीति आदि जस्ता आर्थिकस्थितिका कारण यी सहयोगहरू अपुग भएको गुनासो पनि धेरै अघिदेखि नै सम्बन्धित गुठियारहरूले राख्दै आइरहेका छन् । तर आफ्नो धार्मिक आस्था र संस्कृतिप्रतिको असीम प्रेमका कारण राज्यले प्रदान गर्ने सहयोगहरू प्रयाप्त नभए पनि जात्रासँग सम्बन्धित गुठी र गुठियारहरूले आफ्नै योगदानबाट इन्द्रजात्रालाई अझै पनि निरन्तरता दिँदै आइरहेका छन् । तसर्थ इन्द्रजात्राको दिगोपनाका लागि इन्द्रजात्रासँग सम्बन्धित गुठीहरूका सांस्कृतिक जिन्सी सामानहरू, गुठीको आगम घर, द्यःछेँ, गुठीछेँ आदि सम्पूर्ण कुराहरू चुस्तदुरुस्त राख्न र इन्द्रजात्रासँग आवद्ध गुठीहरूलाई पनि समयानुसार सशक्तीकरण गर्दै लैजान नेपाल सरकारबाट विशेष पहल गर्नु पर्ने देखिन्छ ।

विभिन्न गुठीहरूको समन्वयमा सञ्चालन हुने इन्द्रजात्रा पर्व मनाउन केवल आम मानिसकै मात्र सहभागिता हुने भने होइन । यसमा राष्ट्रप्रमुख र राज्यका विभिन्न अंगका प्रमुखहरू समेत संलग्न भएका हुन्छन् । अतः इन्द्रजात्रा केवल धार्मिक अनुष्ठान मात्र गरी मनाइने पर्व होइन, यो जात्रासँग अरु धेरै राजकीय कार्यहरू पनि जोडिएका हुन्छन् । नेपालमा पनि इन्द्रजात्राको आरम्भ राजा र राज्यशक्तिसँगै जोडिएर आएको पाइन्छ। धेरै इतिहासकारहरूले राजा गुणकामदेवले व्यवस्थित काठमाडौं शहर निर्माण गरेपछि त्यसको सुरक्षा र स्थायित्वको कामना गर्दै इन्द्रजात्रा पर्व आरम्भ भएको दावी गरेका छन् । त्यस्तै इन्द्रजात्रामा प्रदर्शन गरिने सबैजसो नाचहरूमा पनि विभिन्न देवीदेवताहरूले दैत्यसँग युद्ध लडी आफ्नो राज्यलाई पराधीन हुनबाट बचाएको कथा प्रस्तुत गरिएको पाइन्छ । इन्द्रचोकस्थित आकाश भैरवलाई त झन् पहिलो किराँती राजा यलम्बरकै शिरको रुपमा लिने गरिन्छ ।

नेपालको इतिहासमा मध्यकालीन मल्ल राजाहरूले इन्द्रजात्रालाई भव्यता प्रदान गरेको देखिन्छ । इन्द्रजात्राप्रति मल्ल राजाहरूको यो आशक्ति रहनुको कारण पनि राज्यशक्ति नै देखिन्छ । इतिहासमा झगडालु राजा मानिने प्रताप मल्लले आफू सधैँ युद्धमा सरिक भइरहनु पर्ने भएकोले इन्द्रजात्रालाई

पहिलेभन्दा भव्यता प्रदान गरेको कुरा इतिहासमा उल्लेख छ ।

मल्ल राजाहरूले आफ्नो राज्य सञ्चालनमा तलेजु भवानीलाई प्रमुख शक्तिका रुपमा लिने गर्दछन् । त्यसैले मल्ल राज्य विभाजित भए पछि ती विभाजित राज्यहरूमा तलेजु भवानी पनि अलग अलग स्थापित हुँदै गए । मल्ल राजाहरूले तलेजु भवानीको मन्दिर बनाउँदा त्यो आफ्नो दरवारभित्रै बनाउने गरेको पाइन्छ । ती नै तलेजु भवानीको जीवित स्वरुपका रुपमा जीवित देवी कुमारीलाई लिने गरिन्छ । त्यसैले मल्ल राज्यहरूमा छुट्टै तलेजु भवानी मात्र होइन त्यसको साथसाथै जीवित देवी कुमारीहरू पनि छुट्टै छुट्टै स्थापना गरिएको पाइन्छ । यसले गर्दा उपत्यकामा एक भन्दा बढी राज-कुमारीहरू अस्तित्वमा आए । काठमाडौंका राजा जयप्रकाश मल्लले चाहिँ यसरी तलेजु भवानीको प्रतीक स्वरुप स्थापित गरिएको कुमारीलाई नै प्यागोडा शैलीको रथ बनाएर नगर परिक्रमा गराउने रथयात्राको नयाँ चलन समेत शुरु गरे । कुमारीकै आशीर्वादले उनको शासन दश वर्ष बढेको विश्वास गरिन्छ । गोर्खाली राजा पृथ्वीनारायण शाहले पनि काठमाडौं आक्रमण गर्दा श्री कुमारीको हातबाट टीका ग्रहण गरिसकेपछि मात्रै आफूलाई 'कान्तिपुरको राजा' घोषणा गरेका थिए । काठमाडौंका स्थानीय जनताको समर्थन प्राप्त गर्न उनले मल्ल राजाहरूले जस्तै श्री कुमारीको गोडा ढोग्ने प्रथालाई पनि स्वीकारेका थिए । इन्द्रजात्राका दिन काठमाडौं जितेका कारण शाहवंशीय राजाहरूले हरेक वर्ष यसै दिन विजयो-त्सवको रुपमा कुमारीको रथयात्रालाई बढी धूमधामसँग मनाउन थालेका थिए । इन्द्रजात्रामा श्री कुमारीको हातबाट टीका ग्रहण गर्नुलाई पनि राज्यशक्तिसँग जोडेर हेर्ने गरिन्छ । उक्त दिन कुमारीको हातबाट टीका ग्रहण गर्नुको अर्थ राजालाई पुनः अर्को वर्ष पनि शासन चलाउन देवीबाट आशीर्वाद प्राप्त भएको भन्ने अर्थमा लिने गरिन्छ ।

पृथ्वीनारायण शाहका छोरा प्रतापसिंह शाहले इन्द्रजात्रालाई एकिकृत गरी राजधानी काठमाडौंमा केन्द्रित गरेका थिए । बाहिर जिल्लाहरूमा इन्द्रध्वज उठाउने चलन भइरह्यो भने भर्खर एकीकरण भएको नेपालको अंग नमान्ने मनोविज्ञान कायम रहला भनी प्रतापसिंह शाहले अरुतिर इन्द्रध्वज उठाउने पर्व नै बन्द गरी काठमाडौंमा मात्र उठाउने प्रथा शुरु गरेका थिए । इन्द्रध्वज उठाउँदा पहिले पहिले राजा पनि उपस्थित हुने चलन थियो ।

अहिले राजाको प्रतीक स्वरुप खड्ग मात्रै पठाउने गरिन्छ । नेपाली सेनाको टुकडीले खड्गलाई नै राष्ट्रिय धुन बजाई सलामी अर्पण गर्दछ ।

नेपालमा राजतन्त्र हुन्जेल नयाँ कुमारी छनौट गर्दा हुनेवाला कुमारी कन्याको चिना राजाको चिनासँग भिडाएर मात्रै छनौट गर्ने चलन थियो । अहिले देशमा राजाविहिन गणतान्त्रिक व्यवस्था लागू भएको छ । तर पनि इन्द्रजात्रासँग राज्यशक्तिको सम्बन्ध भने टुटेको छैन । अहिले इन्द्रजात्राका दिन राष्ट्रपति सरिक हुने र कुमारीको हातबाट राष्ट्रपतिले नै टीका ग्रहण गर्ने चलन भएको छ ।

इन्द्रजात्रा राज्य संयन्त्र, विभिन्न जातीय समुदाय र प्रतिकात्मक रुपमा देवीदेवताहरू समेत मिलेर मनाइने एक समन्वयात्मक जात्रा हो । सबै जातीय समुदायका मानिसहरू मिलेर इन्द्रजात्रा मनाउने भएकोले यसले विभिन्न जातजातिका मानिसहरूलाई एक आपसमा सहकार्य गरी अघि बढ्ने सामाजिक एकता र सामाजिक सद्भावको सन्देश दिएको देखिन्छ । विभिन्न जातीय समुदायको यो ऐक्यवद्धता र सामुहिकताको भावले समाजमा गर्नु पर्ने अन्य कार्यहरूलाई पनि उर्जा प्रदान गर्ने विश्वास गर्न सकिन्छ । त्यस्तै इन्द्रजात्रामा शैव (विभिन्न भैरवहरू), शाक्त (श्री कुमारी एवं देवी नाचहरू), वैष्णव (दश अवतार), वज्रयानी बौद्ध (कुमारी जात्रा, उपाकु आदि) सम्प्रदायको सहभागिता रहेको हुन्छ । अतः इन्द्रजात्रालाई धार्मिक समन्वय भएको जात्राका रुपमा पनि लिन सकिन्छ ।

नानीचायाः विशेषतः एक महिलाकै नाममा समर्पित याः (यात्रा) हो । उक्त दिनको जात्रा प्रति महिलाहरूको भावनात्मक सम्बन्ध रहनु स्वाभाविक छ । सोही कारण अहिले नानीचायाःका दिन महिलाहरूले मात्रै रथ तानेर कुमारी जात्रा सम्पन्न गर्ने चलन आएको छ । यसलाई सांस्कृतिक रुपमा आएको महिला जागरण र महिला सशक्तीकरणको रुपमा लिन सकिन्छ ।

काठमाडौं महानगरपालिका भित्र रहेका जति पनि मूर्त एवं अमूर्त सम्पदाहरू छन्, ती सबै यो नगरको सांस्कृतिक पूँजी हुन् । यी सम्पदाहरूले काठमाडौं महानगरपालिकाको पहिचानलाई स्थापित गर्दै पर्यटकीय सम्भावनालाई पनि बलियो बनाएको छ । काठमाडौंका विभिन्न ऐतिहासिक स्थलहरू लगायत पुराना वस्तीहरूमा यस्ता जात्रापर्वहरू मनाउने चलन रहेको पाइन्छ । काठमाडौं उपत्यकामा खास गरी धान वाली सकिए लगत्तै

जात्रापर्वहरू शुरु हुन थाल्छन् । यसै क्रममा भाद्र शुक्लपक्ष द्वादशीका दिनदेखि मनाइने एउटा महत्वपूर्ण जात्रा इन्द्रजात्रा हो । इन्द्रजात्रा पर्वमा अरु पनि विभिन्न सहायक जात्राहरू, नाचहरू र पर्वहरू जोडिएको कारणले यसमा पर्यटकीय महत्वका गुणहरू प्रचुर मात्रामा रहेको पाइन्छ । लाखे, पुलुकिसि जस्ता उत्तेजक नाच र दीप्याखं, महाकाली, सवःभक्कु जस्ता मुकुण्डो नाचहरू नेपाली नाट्यकलाका विशिष्ट उदाहरण हुन् । इन्द्रजात्रामा रथयात्रा गरिने जीवित देवी कुमारी संसारकै विशिष्ट र मौलिक सांस्कृतिक परम्परा हो । जीवित व्यक्तिलाई नै देवीका रूपमा पूजा आराधना गर्ने परम्परा संसारमा विरलै मात्र रहेको पाइन्छ ।

यसरी इन्द्रजात्रा पर्वमा धार्मिक-सांस्कृतिक मात्र होइन पर्यटकहरूलाई आकर्षित गर्न सक्ने पर्यटकीय महत्वका गुणहरू पनि प्रशस्त भेटिन्छ । इन्द्रजात्रा पर्वमा निहित यी पर्यटकीय गुणहरूको प्रवर्द्धन गरी सम्पूर्ण नेपालकै सांस्कृतिक पर्यटनको विकासमा टेवा पुऱ्याउन सकिन्छ । पर्यटकीय दृष्टिकोणले अत्यन्त सम्भावना रहेको पर्व भएको कारणले इन्द्रजात्रा मार्फत नेपालका अन्य जात्रा, पर्व एवं सांस्कृतिक सम्पदाहरूको पनि पर्यटकीय विकासलाई अघि बढाउन सकिन्छ । यस कार्यको लागि पर्यटनसँग सम्बन्धित सरकारी, गैरसरकारी एवं व्यावसायिक निकायहरूको प्रयास आवश्यक छ । पर्यटन क्षेत्रले नेपालको कुल आयआर्जनमै महत्वपूर्ण स्थान ओगट्ने भएकोले यो क्षेत्रको विकासले समग्र मुलुककै विकासमा योगदान गर्ने निश्चित छ । इन्द्रजात्रा पर्वको पर्यटकीय सम्भावनालाई फराकिलो पार्ने उद्देश्यले काठमाडौं महानगरपालिकाले वि.सं. २०७६ सालको इन्द्रजात्रा अवलोकन गर्न भगिनी सम्बन्ध भएका विश्वका सबै सहरका प्रमुख र प्रतिनिधिहरूलाई निम्ता गरेको थियो । महानगरको निम्ता स्वीकार गरी इन्द्रजात्रा अवलोकन गर्न ५ वटा देशका ११ वटा नगरबाट ४ जना मेयर, उपमेयर/उपाध्यक्षसहित ४१ जना पाहुना सहभागी हुनुभएको थियो । उहाँहरूलाई इन्द्रजात्रा मात्र होइन, काठमाडौंको भित्री शहर, पाटन, भक्तपुर र चन्द्रागिरि समेत भ्रमण गराइएको थियो ।

इन्द्रजात्रालाई पर्यटकीय दृष्टिकोणले अघि बढाउन काठमाडौं महानगरपालिकाले बनाएको यो प्याकेजलाई सम्बन्धित पर्यटन व्यवसायी, पर्यटनसम्बन्धी सरकारी निकाय समेत बसेर अरु परिमार्जन पनि गर्न सकिन्छ ।

त्यस्तै आन्तरिक पर्यटन प्रवर्द्धन गर्न कुमारीको क्वःनेयाः हुँदा काठमाडौको तल्लो क्षेत्रमा विशेष महोत्सव मनाउने र थःनेयाः हुँदा माथिल्लो क्षेत्रमा विशेष महोत्सव आयोजना गर्ने कार्य पनि गर्न सकिन्छ । इन्द्रजात्रा सञ्चालन नभएको अन्य समयमा पर्यटकहरूलाई इन्द्रजात्राको झलक देखाउन मिल्ने गरी इन्द्रजात्रा सम्बन्धी छुट्टै संग्रहालय पनि बनाउन सकिन्छ जहाँ कुमारी, लाखे, पुलुकिसि लगायत विभिन्न नाचहरूका पुराना पोशाक, पुराना गरगहना र ऐतिहासिक तस्वीरहरू प्रदर्शनमा राख्न सकिन्छ । इन्द्रजात्राको समयमा विदेशस्थित नेपाली कुटनीतिक नियोग, विदेशमा रहेका गैरआवासीय नेपालीहरूको संस्था मार्फत यसको प्रचार प्रसार गर्न सकिन्छ । तर सांस्कृतिक पर्यटनको विकास केवल आयआर्जनको लागि मात्र गरिने भने होइन । सम्पदाहरू आयआर्जनको माध्यम बने पछि सम्पदा संरक्षणका साथसाथै उक्त सम्पदालाई असर पार्ने नकारात्मक पक्षहरूलाई न्यून गर्न पनि सरकार र निजी क्षेत्र स्वतः सक्रिय हुन पुग्दछ । यसरी पर्यटनले सम्पदा संरक्षणको कार्यमा पनि सकारात्मक भूमिका खेल्न पुग्दछ ।

यसरी समग्रमा हेर्दा इन्द्रजात्रालाई मूलतः वेद तथा पुराणहरूमा आधारित भई भारतमै उत्पत्ति भएको जात्रा मान्न सकिन्छ । इन्द्रजात्रामा पूजा गरिने देवराज इन्द्र आफै राजा भएको, उनको आराधना गर्नाले राज्यको अक्षुण्णता कायम रहने र राज्यलाई कुनै पनि प्रकारका रोगव्याधी जस्ता संकटले छुन नसक्ने भएकोले नेपालका तत्कालीन राजाहरूले पनि यो जात्रा मनाउन शुरु गरे । साथै इन्द्र वर्षादका देवता भएका कारण कृषिप्रधान नेपालका जनताले पनि उनको नाममा गरिने जात्रामा तन्मयतापूर्वक सहभागिता जनाए । तर नेपालमा इन्द्रजात्रालाई भारतकै हुबहू शैलीमा मनाउने नगरी नेपालको आफ्नै मौलिक विशेषता सहित स्थानीयकरण गरी मनाउँदै आएको देखिन्छ ।

इन्द्रजात्रामा आयोजना हुने श्री कुमारीको रथयात्रा, विभिन्न प्रकारका मुकुण्डो नाच तथा अन्य सहायक जात्रा एवं पर्वहरूको संयोजनले यो जात्रालाई अत्यन्त भव्य स्वरुप प्रदान गरेको छ । यी विभिन्न सहायक जात्राहरू इतिहासका विभिन्न कालखण्डमा थपिंदै गएको हो । यिनै विभिन्न जात्राहरूका कारण इन्द्रजात्रा नेपालको अत्यन्त मौलिक र विशिष्ट पर्वको रुपमा पनि स्थापित भएको छ । यी विभिन्न नाच एवं सहायक जात्राहरूले इन्द्रजात्राको धार्मिक र सांस्कृतिक मात्र होइन यस भित्र अन्तर्निहित

राजनीतिक र सामाजिक आयामलाई समेत उजागर गरेको पाइन्छ ।

कुनै पनि मुलुकको इतिहास भनेको अत्यन्त गहिराई भएको विशाल महासागर जस्तै हो जसको गर्भमा असंख्य अमूल्य तथ्यहरू लुकेर बसेका हुन्छन् । इतिहासको गर्भमा रहेका यी सबै तथ्यहरू अझै पनि बाहिर प्रस्फुट हुन सकेका छैनन् । निरन्तरको अध्ययन, अनुसन्धान र अन्वेषणले मात्रै इतिहासलाई छर्लङ्ग पार्न सकिन्छ । इन्द्रजात्रासँग सम्बन्धी धेरै कुराहरू पनि अझै इतिहासको गर्भमा थिग्रिएकै अवस्थामा रहेका छन् । भविष्यमा यस क्षेत्रमा गरिने अन्य अनुसन्धानहरूले अझ थप तथ्यहरू हाम्रा सामु उजागर गर्ने नै छन् ।

काठमाडौं महानगरपालिका शहरी योजना आयोगको पहलमा गरिएको इन्द्रजात्रा सम्बन्धी यो अनुसन्धानात्मक कृतिको प्रकाशनले इन्द्रजात्रा सम्बन्धी अध्ययनको दायरालाई फराकिलो पार्ने त छँदैछ, साथै यही अनुसन्धानको आधारमा अब काठमाडौं महानगरपालिकाको पहल र नेपाल सरकारको सक्रियतामा संयुक्त राष्ट्र संघीय निकाय यूनेस्कोको अमूर्त विश्वसम्पदाको सूचीमा इन्द्रजात्रा पर्वलाई समावेश गराउने प्रयास पनि अघि बढाउने सकिने हाम्रो विश्वास रहेको छ । विश्व सम्पदाको सूचीमा नेपालका आठ वटा सांस्कृतिक सम्पदाहरू सूचीकृत भए पनि ती सबै मूर्त सम्पदाहरू हुन् । अहिलेसम्म नेपालको कुनै पनि अमूर्त सम्पदा उक्त सूचीमा समावेश भएको छैन । यदि इन्द्रजात्रालाई त्यसको लागि अघि बढाउन सकियो भने अमूर्त सम्पदाको क्षेत्रमा पनि नेपालको पहिचान विश्व सामु प्रस्तुत गर्न सहयोग मिल्ने देखिन्छ ।

# सन्दर्भ ग्रन्थ


***नेपालभाषा***

१) ज्यापु पञ्च, *श्री आकाश भैरव (वंघः आजु) जिं न्यना थें, जिं स्यू थें,* काठमाडौं: श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, बि.सं. २०६० ।

२) जुजु, बलदेव, *'वंघःत्वाःया आजुद्यः व येँदेय्'*, इन्द्रभक्त श्रेष्ठ, काठमाडौं: वि.सं २०६० ।

३) जोशी, रास (राजनलाल), *'यँयाःलिसे स्वाना वयाच्वंगु कुमारी याः'*, स्वनिगःया संस्कृति, कुतः पिकाक, ख्वप : वि.सं. २०६६ ।

४) डंगोल, शरदकुमार, *श्री आकाश भैरवनाथको छोटो परिचय,* काठमाडौं: श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, वि.सं. २०६० ।

५) पिया, रमेशमान, *'हाथु छाय् हायेकी ?'*, झीगु संस्कृति, अर्थ प्रकाशन प्रा.लि., काठमाडौं: ने.सं. ११२२ ।

६) मानन्धर, जीत बहादुर, *मानन्धर निबन्ध मुना,* काठमाडौं: मयूजु तारादेवी मानन्धर, वि.सं. २०६० ।

७) मानन्धर, प्रकाश, *'नेवाः संस्कृतिइ ग्वराः'*, येँः नेपालभाषा टाइम्स दैनिक, ने.सं. ११३९ यंलाथ्व १४ ।

८) लाछि, गणेशराम, *नेवाः संस्कृतिइ लाखे प्याखं,* नेपाः संस्कृति, वर्ष ३/४, अंक ३, नेपाल संस्कृति तथा सञ्चार समाज, काठमाडौं: ने.सं. ११३७ ।

९) वज्राचार्य, जितेन्द्रविलास, *मजिपाः लाखे,* लसना वाःपौ, वर्ष ६, अंक २७, लहना मिडिया, काठमाडौंः वि.सं. २०७६ ।

१०) शाक्यभिक्षु, सिद्धिरत्न, *वंघः लागाया थथु लायूकू,* काठमाडौंः श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार स्मारिका, श्री आकाश भैरवनाथ मन्दिर जीर्णोद्धार समिति, बि.सं. २०६० ।

११) श्रेष्ठ, बद्रीलाल, *'नेपालय् कुमारी जात्राया परम्परा',* कुमारी, अंक २ ९९, कुमारी प्रकाशन, काठमाडौंः ने.सं. ११२१ ।

१२) श्रेष्ठ, योगन्द्रमान, *नेपाःया इतिहासय् येँयाः,* येँ : शुक्रवाःया तँसापौ (नेपालभाषा टाइम्स), सन्ध्या टाइम्स पिथना प्रा.लि., वि.सं. २०७६ ।

१९) श्रेष्ठ, सुरेन्द्रमान, *'त्रंला पुन्हि',* नेवाः संस्कृतिया नखःचखः, रामभक्त भोँमि, येँः ने.सं. ११२१ ।

२०) श्रेष्ठ, सुरेन्द्रमान, *'नेवाः संस्कृतिया इतिहास',* इन्द्र-जवाहर सहयोग गुथि, काठमाडौं : ने.सं. ११२९ ।

***नेपाली***

१) आचार्य, बाबुराम, *नेपालको सांस्कृतिक परम्परा,* श्रीकृष्ण आचार्य (सम्पादक/प्रकाशक), काठमाडौंः २०५४ ।

२) आचार्य, बाबुराम, *श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी,* ललितपुरः साझा प्रकाशन, वि.सं. २०६१ (दोश्रो संस्करण) ।

३) इन्द्र, मजुपुरिया, *पेट्रिका रोबोर्टस्, लिभिङ भर्जिन गडेस कुमारी,* एम. गुप्ता, भारतः सन् २००७ ।

४) एन.भी., गोरकम, *जीवनको प्रत्येक घडीमा अभिधर्मको उपयोग,* ताइवानः द कर्पोरेट बडी अफ द बुद्धिष्ट एड्केशनल फाउण्डेशन, वि.सं. २०४१ ।

५) उच्चस्तरीय अध्ययन समिति प्रतिवेदन, *गुठी संस्थानको औचित्य र नेवाः संस्कृति सञ्चालन,* संघीय मामिला, संसदीय व्यवस्था तथा संस्कृति मन्त्रालय, काठमाडौं: वि.सं. २०६६ ।

६) कोइराला, कुलचन्द्र, *इन्द्रजात्रा,* गुठी संस्थान, रामशाह पथ, काठमाडौं: २०४२ ।

७) क्यानाडाबाट प्रकाशित अनलाईन पत्रिका *'सम्प्रदाय सन'* मा मिति सन् २०१३ फेब्रुअरी २१ मा प्रकाशित लेख ।

८) कार्की, गोविन्दमान सिंह, *सांस्कृतिक पर्यटन,* विराटनगर: ममता कार्की पवित्रा निरौला, वि.सं. २०५७ ।

९) 'कौशी तोषाखानाबाट प्राप्त लालमोहर', (लालमोहर नं. २८२ र २८१), अभिलेख, *राष्ट्रिय अभिलेखालय,* काठमाडौं: वर्ष १८, पूर्णांक १८, वि.सं. २०५७ ।

१०) खनाल, मोहनप्रसाद, *सिमरौनगढको इतिहास,* काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिवि, वि.सं. २०५६ ।

११) चोङबाङ, हर्कराज, *किरात वंशावली र सांस्कृतिक खोजीको संक्षिप्त विश्वकोष,* आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, ललितपुर: वि.सं. २०६६ ।

१२) जबरा, पुरुषोत्तमशमशेर, *श्री ३ हरूको तथ्य वृत्तान्त (भाग १),* विद्यार्थी पुस्तक भण्डार, काठमाडौं: वि.सं. २०६२ ।

१३) जोशी, तीर्थनारायण, *अनुसन्धानको पर्खाइमा दोलखा,* दोलखा : शान्तकृष्ण श्रेष्ठ, वि.सं. २०६७ ।

१४) जोशी, सत्यमोहन, *नेपाली चाडपर्व,* काठमाडौं: साझा प्रकाशन, वि.सं. २०६७ (दोश्रो) ।

१५) टण्डन, डा. गाविन्द, *नेपालमा गूठी व्यवस्था,* नेपाल अध्ययन समूह, काठमाडौं: वि.सं. २०५२ ।

१६) ढुंगेल, रमेश, र प्रधानांग, ऐश्वर्यलाल, *काठमाडौं उपत्यकाको मध्यकालिक आर्थिक इतिहास*, कीर्तिपुरः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिवि, वि.सं. २०५६ ।

१७) दाहाल, डा. पेशल, *नेपालको इतिहास*, काठमाडौंः एम.के. पब्लिसर्स एण्ड डिष्ट्रिब्युटर्स, वि.सं. २०५७ ।

१८) दीक्षित, काशिनाथ, *भएको कुरा*, नरेन्द्रमणि आदि, काठमाडौंः वि.सं. २०३१ ।

१९) देवकाटा, गृष्मबहादुर, *नेपालको राजनीतिक दर्पण (प्रथम भाग)*, ध्रुवबहादुर देवकाटा, काठमाडौंः वि.सं. २०१६ ।

२०) नःघःभनी (राजभण्डारी), तीर्थलाल, *'भक्तपुरको लिङ्गो जात्रा'*, अभिलेख, राष्ट्रिय अभिलेखालय, काठमाडौंः वर्ष १६, पूर्णांक १६, वि.सं. २०५५ ।

२१) नःघःभनी (राजभण्डारी), तिर्थलाल, *'कुमारी र कुमारी यात्रा,'* काठमाडौंः प्राचीन नेपाल पुरातत्व विभाग, सन् १९८८/१९८९ ।

२२) नःघःभनी, तीर्थलाल, *श्री तलेजु भवानी, प्राचीन नेपाल, अंक ८२*, काठमाडौंः पुरातत्व विभाग, सन् १९८४ जुन-जुलाई ।

२३) महर्जन, नरेन्द्र, *'देवीनाच एक परिचय'*, देवी नाच (दीप्याखं), काठमाडौंः वि.सं. २०७३ ।

२४) पन्त, महेशराज, *'पिशाचचतुर्दशी/घोडेजात्राको विषयमा'*, पूर्णिमा, संशोधन मण्डल, काठमाडौंः वर्ष २२, अंक २, वि.सं. २०५१, मार्ग

२५) पन्त, महेशराज, *पूर्णिमा*, पूर्णाङ्क ९५, काठमाडौंः वि.सं. २०५५, कार्तिक ।

२६) पन्त, महेशराज, *सबभन्दा पहिले प्रचारमा आएको ट्यासफू*, पूर्णिमा, पूर्णांक १४३, वि.सं. २०७३ ।

२७) पन्त, डा. महेशराज, *'नायक, प्रतिनायक, नायकदेशीय'*, काठमाडौंः कान्तिपुर कोशेली, वि.सं. २०७६, माघ ।

२८) पौड्याल, बीणा, *हिन्दू सांस्कृतिक परम्परामा देवराज इन्द्र*, कन्ट्रिब्युसन्स टु नेपलिज स्टडिज् (भोलुम २५, नं. १), कीर्तिपुरः सिनास, त्रिविवि, सन् १९९८, जनवरी ।

२९) प्रधान, भुवनलाल, *काठमाडौं उपत्यकाका केही सांस्कृतिक छिर्का-मिर्का*, काठमाडौंः डा. सुमित्रा मानन्धर गुरुङ, सन् २००७ ।

३०) प्रधानांग, सौभाग्य, *नगदेशको महाकाली नाच, नेपालमण्डलका मुकुन्डो नाच*, भक्तपुरः मध्यपुर कला परिषद् थिमि, वि.सं. २०६२ ।

३१) प्रसाईं, नरेन्द्रराज, *शताब्दी पुरुष सत्यमोहन जोशी*, त्रिमूर्ति निकेतन, काठमाडौंः बि.सं. २०७२ ।

३२) योगी, श्री देवीनाथ, *देवमाला (वंशावली)*, नारायणहिटीः श्री ज. सूरजशम्शेर ज.ब.रा., वि.सं. २०१३ ।

३३) रमेशजंग (सं.), *राजभोगमाला, प्राचीन नेपाल*, संख्या ७, काठमाडौंः पुरातत्व विभाग, शिक्षा मन्त्रालय, बि.सं. २०२६, वैशाख ।

३४) राजवंशी, शंकरमान, *'वि.सं. १८५२ को एउटा ऐतिहासिक कागत'*, पूर्णिमा, संशोधन मण्डल, काठमाडौंः वर्ष ५, अंक २ः वि.सं. २०२५, साउन-भदौ-असोज ।

३५) राजवंशी, शंकरमान, *'गुठीसम्बन्धी ऐतिहासिक पत्र'*, प्राचीन नेपाल, संख्या ७९, पुरातत्व विभाग, काठमाडौंः वि.सं. २०४७ ।

३६) रेग्मी, डा. जगदिशचन्द्र, *लिच्छवि संस्कृति*, काठमाडौं ।

३७) लंसाल, पं. देवीप्रसाद, (सं), *भाषा वंशावली (द्वितीय भाग)*, नेपाल राष्ट्रिय पुस्तकालय, काठमाडौंः वि.सं. २०२३ ।

३८) लेभी, सिल्भाँ, *नेपाल : हिन्दू अधिराज्यको इतिहास* (दोश्रो खण्ड), हिमाल किताब प्रा.लि., काठमाडौंः सन् २००७ ।

४९) वज्राचार्य, गौतमवज्र, *हनुमानूढोका राजदरवार*, नेपाल र एशियाली अध्ययन संस्थान, त्रिविवि, काठमाडौंः वि.सं. २०३३ ।

४०) वज्राचार्य, डा. चुन्दा, *नेवाः सांस्कृतिक चाडपर्व*, ललितपुरः आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, वि.सं. २०७२ ।

४१) वज्राचार्य, धनवज्र, कमल पी. मल्ल, *द गोपालराज वंशावली*, काठमाडौंः नेपाल रिसर्च सेन्टर पब्लिकेशन्स्, सन् १९८५ ।

४२) वज्राचार्य, धनवज्र, *पूर्वमध्यकालका अभिलेख*, काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिविव, वि.सं. २०६८ ।

४३) वज्राचार्य, धनवज्र, *लिच्छविकालका अभिलेख*, काठमाडौंः नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, वि.सं. २०३० ।

४४) वज्राचार्य, धनवज्र, *मध्यकालका अभिलेख*, नेपाल एशियाली अनुसन्धान केन्द्र, त्रिविवि, काठमाडौंः वि.सं. २०५६ ।

४५) वज्राचार्य, स्व.पं. जोगमुनि, अष्टसहस्रिका प्रज्ञापारमिता, काठमाडौंः ।

४६) सुवेदी, हरिचरण शर्मा, '*पापनाशक इन्द्र दह*', कान्तिपुर दैनिक, काठमाडौंः सन् १९९६ ।

४७) शर्मा, राणा प्रसाद, *पौराणिक कोश*, ज्ञानमण्डल लि,ः सन् १९८६ ।

४८) शाक्य, अजयक्रान्ति, *कान्तिपुरका बही शाक्यहरूको संस्कृति : एक अध्ययन*, काठमाडौंः वि.सं. २०७१ ।

४९) श्रेष्ठ, डा. पुरुषोत्तमलोचन, '*पनौती इन्द्रेश्वर मन्दिरस्थानको ने.सं. ७५९ को नरेश मल्लको पालाको स्वर्णपत्र*', अभिलेख, काठमाडौंः राष्ट्रिय अभिलेखालय, वर्ष १८, पूर्णांक १८, वि.सं. २०५७ ।

५०) श्रेष्ठ, सृजना, *जीवित देवी कुमारी : कथा र वास्तविकता*, काठमाडौंः सृजना श्रेष्ठ, वि.सं. २०६१ ।

५१) वैद्य, डा. जनकलाल, '*राष्ट्रिय अभिलेखालयका अभिलेख ग्रन्थहरूमा छरिएका घटनावली - टिप्पणी अभिलेखांशहरू*', अभिलेख, राष्ट्रिय अभिलेखालय, काठमाडौंः वर्ष १८, पूर्णांक १८, वि.सं. २०५७ ।

*अंग्रेजी*


१) Agrawal, H.N., *The Administrative System of Nepal from Tradition to Modernity,* Vikas Publishing House, Delhi: 1976.

२) Allen, Michael, *The Cult of Kumari,* Kathmandu: Mandala Book Point, 1976.

३) Clark, A. & Chen. W, *International Hospitality Management*, Amsterdam: Elsevier, 2007.

४) Dandekar, R.N., *Vedic Maythologival Traks*, A.P., New Delhi: 1979.

५) Gonda, J., *The Indra Festival According to the Atharvavedins*, Journal of the American Oriental Society (Vol. 87, No. 4), India, 1967.

६) Isabell Tree, *The Living Goddess*, India: Penguin Books, 2014.

७) Jha, Hemanta, *Hindu-Buddhist Festivals of Nepal*, New Delhi: Nirala Publication, 1996.

८) Kirkpatrick, Colonel, *An Account of the Kingdom of Nepal*, London: AD 1811.

९) Kirkpatrick, William J, *An Account of the Kingdom of Nepaul*, Rupa & Co., India: 2007.

१०) Kunwor, Rameshraj, *Nepalese Society : Liquor and Culture*, Ancient Nepal, Number 81, April – May, 1984.

११) Levi, Sylvain, *The Worship Monuments and Feasts, Ancient Nepal*, Number 58, June – July, 1980, Nepal

(volume 2)

१२) M.M. Anderson, *The Festivals of Nepal*, London: George Allen and Unwin, 1971.

१३) Mary Shepherd Slusser, *Nepal Mandala (v. 1),* Kathmandu: Mandala Book Point, 1998.

१४) Ronald M., *The Temlpes of Nepal*, India: S. Chand & Company Ltd, 1978.

१५) Shakya, Min Bahadur, *The Iconography of Nepalese Buddhism*, Kathmandu: Handicraft Association on Nepal, 1994.

१६) Shakya, Rashmila, (as told to Scott Berry), *From Goddess to Mortal*, Kathmandu, Vajra publication, 2005.

१७) Toffi, Gerard, *The Indra Jatra of Kathmandu as a Royal Festival : Past and Present,* Contributions To Nepalese Studies (Volume 19) , TU, Kathmandu: 1992

१८) Wright, Daniel, *History of Nepal,* Cambridge: 1877.

## अन्तर्वार्ता लिएका व्यक्तिहरू

१) काठमाडौं वडा नं.१७ थँहिटी बस्नुहुने लुम्बिनी बौद्ध विश्व विद्यालयका पूर्व उपकुलपति अ.व. ७५ का प्रा.डा. त्रिरत्न मानन्धर ।
२) काठमाडौं वडा नं. २३ मञ्जुश्रीनक महाविहारका बौद्ध विद्वान अ.व. ८५ का सुवर्ण शाक्य ।
३) नेपाल प्रज्ञा प्रतिष्ठानका प्राज्ञ अ.व. ७० का डा. दिनेशराज पन्त ।
४) काठमाडौं वडा नं. २० बस्नुहुने अ. व. ७० का संस्कृतिविद् डा. चुन्दा वज्राचार्य ।
५) काठमाडौं वडा नं. २३ सिख्वंमू बहाःका बौद्ध विद्वान अ.व. ८० का यज्ञमानपति वज्राचार्य ।
६) काठमाडौं वडा नं. २३ का सिख्वंमू बहाःका अ.व. ६० का राजगुर्जु मञ्जुश्री वज्राचार्य ।
७) इन्द्रजात्रा व्यवस्थापन समितिका अध्यक्ष अ.व. ५० का गौतम शाक्य ।
८) कुमारी घरका चिताइदार एवं लेखक अ.व. ५५ का दुर्गा शाक्य ।
९) दीप्याखं गुठीका अध्यक्ष अ.व. ६५ का नातिकाजी महर्जन ।
१०) आकाश भैरवनाथ (आजुद्यः) गुठीका सदस्य अ.व. ६० का बाबुराजा महर्जन ।
११) ठूलो भैरव गुठी (हाथुद्यः) का अध्यक्ष अ.व. ४० सुनिल ताम्राकार ।
१२) किलागःत्वाःखलः (पुलुकिसि) का सदस्यवर्ष ५० का मचाराजा महर्जन ।
१३) श्री लाखे आजु गुठीका अध्यक्ष अ.व. ३० का राजीव रंजितकार ।
१४) भैरव गुठी भक्तपुरका उपाध्यक्ष अ.व. ४५ का न्हुछेराम भेले ।
१५) महाकाली प्याखं भक्तपुरका अध्यक्ष अ.व. ५५ का तुल्सीनारायण दण्डेख्या ।
१६) ज्याठा पंचदान गुठी प्रजापति खलःका अध्यक्ष अ.व. ६० का जुजुकाजी प्रजापति ।

१७) पूर्व गणेशपूर्व भैरव संरक्षण गुठीका सचिव अ.व. ३० का विश्व शाक्य ।
१८) केन्द्रीय मानन्धर संघका सचिव अ.व. ६० का गजेन्द्र मानन्धर ।
१९) वटु मानन्धर सनाःगुथि (बाकादे आजु) का अध्यक्ष अ.व. ८४ का लिलाराम मानन्धर ।
२०) वटु मानन्धर सनाःगुथि (बाकादे आजु) का सदस्य अ.व. ५० का दिपक मानन्धर ।
२१) ललितपुरका सांस्कृतिक पत्रकार अ.व. ४० का मञ्जु वज्राचार्य ।
२२) ललितपुरका संस्कृतिकर्मी अ.व. ५२ का विद्याशाक्य ।
२३) दागिं गुठीसँग आवद्ध दागिं अ.व. ६० का मंगलमान डंगोल ।
२४) अशोक विनायक गुठीका अध्यक्ष अ.व. ७० का तीर्थमान महर्जन एवं सदस्यहरू जोगमान महर्जन, मचाकाजी महर्जन र आइतमान महर्जन ।
२५) दिगु गुठी (दशअवतार) का अध्यक्ष अ.व. ६० का दीपक प्रसाद श्रेष्ठ ।
२६) कामपा २३ का लायूकूसाः टोलनिवासी अ.व. ६० का प्रकाश मानन्धर ।
२७) ह्यूमत टोल गुठीका अध्यक्ष अ.व. ६० का इन्द्रप्रसाद महर्जन ।
२८) ललितपुर निवासी अ.व. ५० का संस्कृतिकर्मी मणिवज्र वज्राचार्य ।
२९) हल्चोक आकाश भैरव गुठी (सवःभक्कु) का अध्यक्ष अ.व. ४० का सागर पुतुवार ।
३०) काठमाडौं इटुम्बहाल निवासी पूर्व कुमारी मतिना शाक्यकी पिता अ.व. ५५ का प्रतापमान शाक्य ।
३१) किलागल दीप्याखं गुठीका सदस्य नरेन्द्र महर्जन ।
३२) काठमाडौं २१ वडाका यंगाल निवासी अ.व. ७० की बिष्णुदेवी राजभण्डारी ।
३३) किलागल दीप्याखं गुठीका मू गुरु अ.व. ८० का इन्द्र महर्जन ।

## शब्दावली *(Glossary)*

| | |
|---|---|
| *अँयूथा मरि* | खास गरी भोजमा प्रयोग गरिने रोटी |
| *अजिमा* | नेवाः परम्परामा पूजा गरिने प्रमुख मातृका |
| *आजु* | पूर्खा |
| *आजुद्यः* | आकाश भैरव |
| *आलमत* | आकाशदीप |
| *इलां* | चँदुवा |
| *इहि* | नेवार बालिकालाई रजस्वला पूर्व गरिने एक संस्कार |
| *उपाकु* | दिवंगतहरूका नाममा एउटा निश्चित परम्परागत मार्गमा गरिने सांकृतिक यात्रा |
| *कतिंपुन्हि* | दशैं लगत्तै आउने पूर्णिमा, कोजाग्रत पूर्णिमा |
| *किसिगः* | हात्ती राख्ने ठाउँ |
| *किसिप्वः* | पुलुकिसिको नाचमा बजाइने धिमेको एउटा बोल |
| *कुम्हाः* | कुमाले |
| *क्वःनेयाः* | काठमाडौंको तल्लो भेग (बसन्तपुरदेखि लगन टोल क्षेत्र) मा गरिने कुमारीको यात्रा |
| *ख्वाःपाः* | मुकुण्डो |
| *खुँद्यः* | चोर देउता |
| *गःकुति* | काष्ठमण्डपसँगै रहेको स्थान |
| *गातिला* | स्वर्गमा इन्द्रकी आमाले आयोजना गर्न लागिएको व्रत |
| *गुथ्याः* | गुठीका सदस्यहरू |

| | |
|---|---|
| *गुर्जु* | वज्राचार्य गुरु पुरोहित |
| *गुँला* | नेपाल संवत् अनुसार भाद्र-आश्विनमा पर्ने महिना |
| *गोष्ठी* | लिच्छविकालमा गुठीका लागि प्रयोग गरिने शब्द |
| *ग्वंगःमलः* | एक प्रकारको चट्याङ्ग जसले प्रहार गरेमा कुखुराको भालेले कोपरेको जस्तो क्षति हुने गर्दछ |
| *ग्वराःमत* | इन्द्रजात्रामा काठको फ्रेममा बालिने पाल्चा |
| *घःमाः* | रथको अगाडि रहने माथि फर्केको काठको लामो सत्तरी |
| *घ्यःचाकु* | घ्यूचाकु |
| *चिताइदार* | कुमारी घरमा श्री कुमारीको हेरचाह गर्ने महिला |
| *छ्वःरा* | पुलुकिसिको नाचमा बजाइने धिमेको एउटा बोल |
| *जनबहाःद्यः* | सेतो मछिन्द्रनाथ |
| *जःसिबु पूजा* | इन्द्रजात्राको समापन पछि आकाश भैरवका गुठियारहरू बीच गरिने पूजा |
| *जातः* | चिना |
| *झ्याल्चा क्यनेगु* | ललितपुरको च्यासल टोलमा इन्द्रजात्रा ताका गरिने छायाँ प्रदर्शन |
| *झ्यालिंचा* | लाखेलाई जिस्काउने अर्का पात्र |
| *त्वाःखलः* | कुनै टोलमा रहेको परम्परागत समूह |
| *तुं* | इनार |
| *थःनेयाः* | काठमाडौंको माथिल्लो भेग (बसन्तपुरदेखि असन क्षेत्र) मा गरिने कुमारीको यात्रा |
| *दथुयाः* | नानीचायाः (बसन्तपुरदेखि नरदेवी किलागल हुँदै बसन्तपुरमै समापन गरिने कुमारीको रथयात्रा) |
| *दबू प्याखं* | डबलीमा देखाइने नृत्य वा नाटक |
| *दलूमत* | घरको झ्यालमा झुण्ड्याएर राखिने विशेष बत्ती |
| *दक्षिणकोलिग्राम* | काठमाडौंको दक्षिणी भेगलाई लिच्छविकालमा गरिने सम्बोधन |

*दागिं* — देवराज इन्द्रकी आमा ।

*दाफास्वां* — चमेली

*दिशीपूजा* — कुलदेवताको पूजा गरेर मनाइने चाड

*दीप्याखं* — किलागलको देवीनाच

*दुम्बः* — ढिस्को

*द्यःपाःलाः* — पुजारी

*द्यः ल्हाये* — बाजा, नृत्य वा नाटक शुरु गर्नुभन्दा पहिले देवतालाई गरिने समर्पण

*द्यःछेँ* — देउता घर

*द्यःभाजु* — हिन्दू नेवारहरूका पुरोहित

*ध्वाखा पिने* — मूलद्वार बाहिर

*ध्वाखा* — मूलद्वार

*धिमे* — उपत्यकामा प्रचलित सांस्कृतिक बाजा

*धुन्या* — ज्यापु समुदायले धिमेको तालसँगै घुमाउने चमर र पञ्चरंगी कपडा जडित बाँसको ध्वजा

*ननी* — चोक

*नायूखिं* — जात्रापर्वमा सबैभन्दा अगाडि बजाउँदै आउने बाजा

*नानीचायाः* — काठमाडौंको माथिल्लो भेगको बीच तिर गरिने कुमारीको रथयात्रा

*नासःद्यः* — महादेवको एउटा रुप जुन कलासँग सम्बन्धित हुन्छ

*न्हवं* — लोकेश्वरहरूलाई जात्रा अघि सम्पन्न गरिने धार्मिक स्नान

*न्हयूसःनायः* — सम्पूर्ण मानन्धर जातिको नाइके

*पसूका* — पंचरंगी पवित्र धागो

*पंजरां* — पञ्चदान

*पाणि ग्रहण* — विवाह संस्कार

| | |
|---|---|
| *पाल्चा* | माटोले बनाइएको बत्ती बाल्ने सानो भाँडो |
| *पाहाँचः-हे* | काठमाडौंमा घोडेजात्राताका अजिमाहरुलाई खटयात्रा गरी मनाइने पर्व । पिशाच चतुर्दशी |
| *पिला* | सन्दुक |
| *पुं* | चित्रकार |
| *पुलुकिसि* | इन्द्रजात्रामा नचाइने ऐरावत हात्तीको प्रतीक |
| *पुंचलीभुजा* | ललितपुरको पूर्णचण्डी मन्दिरमा इन्द्रजात्राताका गरिने विशेष पूजा |
| *फल्चा* | पाटी |
| *बात्चा दायेगु* | ललितपुरका ताम्रकार जातिको पेशागत कला प्रदर्शन गरिने कार्य |
| *बलंभ्वय्* | कुमारीको रथयात्रामा सहयोग गर्नेहरूलाई रथयात्राको एक दिन अघि खुवाइने भोज |
| *बिस्काः* | बिस्केट जात्रा |
| *बीबः* | शतबिज |
| *बुसादँ* | वार्षिक उत्सव |
| *बौपाः* | धार्मिक कार्यमा प्रयोग गरिने एक प्रकारको माटोको भाँडो |
| *बौमत* | बाँसहरू जोडेर त्यसमाथि पाल्चा बालेर गरिने यात्रा |
| *बौ वायेगु* | भूतप्रेत भगाउन गरिने एक प्रकारको पूजा |
| *बहिद्यः* | बौद्ध बहिलमा रहने मूल देवता |
| *भुस्याः* | झ्याम्टा |
| *मजिपाः* | काठमाडौंको जैशी देवलसँगै रहेको एक टोल |
| *मन्दः* | मण्डला |
| *मूचुक* | मूलचोक |
| *म्हयूखा* | मुजुर |
| *यमाःद्यः* | देवराज इन्द्र |

| | |
|---|---|
| *याःन्यायेके* | जात्रा समापन गरिने |
| *यंकिदह* | इन्द्रदह |
| *यःसिं थनेगु* | इन्द्रध्वजोत्थान |
| *यःसिंख्यः* | लिङ्गोको लागि काठ लिन जाने नालास्थित वन |
| *यें* | काठमाडौं |
| *यँयाःपुन्हि* | इन्द्रजात्राको भोलिपल्ट आउने पूर्णिमा |
| *यँयाः* | इन्द्रजात्रालाई उपत्यकाका स्थानीयवासीले गर्ने सम्बोधन |
| *यंकि स्वायेगु* | इन्द्रजात्राका बेला इन्द्रको मूर्ति स्थापना गरिने कार्य |
| *यंकि लीगु* | जात्रा पछि इन्द्रको मूर्ति झिक्ने कार्य |
| *लाकासिँ* | इन्द्रध्वजोत्थान गरिसकेपछि त्यसको सुरक्षाको लागि घेरेर राखिने काठका आठवटा टुक्राहरू |
| *लाखामरि* | एक प्रकारको ठूलो मिठाई/रोटी |
| *लायूकू* | दरवार |
| *लाखेछेँ* | लाखे बस्ने घर |
| *ल्वहं देगः* | ढुंगाद्वारा निर्मित मन्दिर |
| *लंपुं छायेगु* | देवताहरूको मूर्तिमा गरिने रंगरोगन |
| *लँप्वः* | पुलुकिसिको नाचमा बजाइने धिमेको एउटा बोल |
| *वःलाः* | ज्यापू समुदायमा पुरुष सदस्यहरूका लागि गरिने एउटा संस्कार |
| *वलः घायेगु* | लिङ्गोमा बाँधिने गाँठो |
| *सगं* | सगुन |
| *समय् पुन्हि* | इन्द्रजात्राको पूर्णिमाका दिन समयबजि खाने भएकोले उक्त दिनलाई गरिने अर्को सम्बोधन। |
| *समयबजि* | च्यूरा, छोयला, कालो भटमास, अदुवा र रक्सी सहितको खाने परिकार |
| सवःभक्कु | हल्चोक आकाश भैरव |
| *सिथिनखः* | जेठ महिनामा मनाइने एक प्रमुख नेवाः चाड |

| | |
|---|---|
| *समयद्वँ* | तान्त्रिक देवीदेवताहरूलाई चढाउन सजाएर राखिएको समयबजि |
| *संल्हू* | संक्रान्ति |
| *स्याःबजि* | भुटेको च्यूरा |
| *स्वने* | तान्त्रिक विधिद्वारा गरिने अनुष्ठान |
| *हलिंपताः* | लिङ्गोमा फहराइने इन्द्रको झण्डा |
| *हाथुद्यः* | हनुमानढोकास्थित श्वेत भैरव |
| *हाथु हायेके* | भैरवको मुखबाट गरिने जाँड अर्पण |
| *ह्यूमत* | इन्द्रजात्राका बेला ह्यूमत टोलमा प्रदर्शन गरिने एक प्रकारको घुमिरहने बत्ती |
| *ह्वंगः* | दुई नदीको दोभान |
| *हिति* | धारा |
| *होल्चो* | हल्चोक |



नालास्थित यःसिंगुँमा यःसिंको लागि रुख काट्नु अघि पूजा गरिँदै ।

*फोटोः सन्देश मुनिकार*



नालास्थित यःसिंगुँमा यःसिंको लागि रुख काट्दै ।

*फोटोः सन्देश मुनिकार*



नगर प्रवेश अघि भोताहिटीमा राखिएको इन्द्रध्वज (यःसिं) *फोटोः उदेन न्हूसायूमि*



इन्द्रध्वज (यःसिं) लाई तानेर नगर प्रवेश गराइँदै । *फोटोः उदेन न्हूसायूमि*



इन्द्रध्वज (यःसिं) लाई नगर प्रवेश गराई हनुमानढोकातिर तानेर लगिँदै ।

*फोटोः उदेन न्हूसायूमि*



हनुमानढोकामा यःसिं उठाउनु अघि वज्राचार्य गुरुबाट पूजा गरिँदै । फोटोः बालकृष्ण डंगोल



हनुमानढोकामा यःसिं उठाइदै ।

फोटोः विजय सिंह



हनुमानढोकामा यःसिं उठाउने कार्यमा सहभागी जनसमुदाय ।

फोटोः अनुप प्रधान



हनुमानढोकामा उठाइने इन्द्रध्वज (यःसिं) को मुनि राखिएको इन्द्रको सुनको मूर्ति ।

*फोटोः सन्देश मुनिकार*



नजिकबाट देखिने इन्द्रध्वज मुनि राखिएको इन्द्रको सुनको मूर्ति । *फोटोः मनोज शाही*



धूप बत्ती बालेर उपाकु परिक्रमा गरिँदै ।　　　　फोटोः राजिव वज्राचार्य



उपाकु परिक्रमामा पाल्चा बालेर राखिँदै ।　　　　फोटोः सन्देश मुनिकार



पञ्चतत्वसँग आवद्ध विभिन्न परिकारहरु राखेर सजाइएको समयूद्वँ । इन्द्रजात्रामा समयूबजि खाने भएकोले यो पर्वलाई "समय् पुन्हि" पनि भनिन्छ । *फोटोः जितेन*



मन्दिर अगाडि सजाएर राखिएको समयूद्वँ र स्थानीयवासी ।

*फोटोः राजिब वज्राचार्य*




रथमा विराजमान श्री कुमारी । फोटोः *बालकृष्ण डंगोल*



इन्द्रजात्राका दिन रथयात्राका लागि श्री गणेशलाई खटमा राखी बसन्तपुर लगिँदै ।
फोटोः *सुनिल प्रधान*



इन्द्रजात्राको तेस्रो दिन बसन्तपुरको गद्दी बैठकबाट श्री कुमारीको रथयात्रा अवलोकन गर्नु हुँदै सम्माननीय राष्ट्रपति विद्यादेवी भण्डारी। साथमा उपराष्ट्रपति नन्द बहादुर पुन, काठमाडौं महानगर-पालिकाका प्रमुख विद्यासुन्दर शाक्य, उपप्रमुख हरिप्रभा खड्गी श्रेष्ठ र अन्य विशिष्ट पदाधिकारीहरू।



काठमाडौं महानगरपालिकाका प्रमुख विद्यासुन्दर शाक्य एवं उपप्रमुख हरिप्रभा खड्गी श्रेष्ठ काठमाडौं महानगरपालिकाको निमन्त्रणामा इन्द्रजात्रा अवलोकन गर्न पाल्नु भएका विभिन्न देशका नगर प्रमुखहरूसँग बसन्तपुरको गद्दी बैठकमा। *फोटोः चन्द्रमणि भट्टराई*



सम्माननीय राष्ट्रपति विद्यादेवी भण्डारीका साथमा काठमाडौं महानगरपालिकाका प्रमुख विद्यासुन्दर शाक्य, उपप्रमुख हरिप्रभा खड्गी श्रेष्ठ लगायत काठमाडौं महानगरपालिकाको निमन्त्रणामा इन्द्रजात्रा पर्व अवलोकन गर्न पाल्नु भएका भारत, चीन र भूटानका विभिन्न नगरका प्रमुखहरु । *फोटोः किरणमान चित्रकार*



बसन्तपुरबाट श्री कुमारी, श्री गणेश र श्री भैरवको रथयात्रा आरम्भ गरिँदै ।

*फोटोः बालकृष्ण डंगोल*



इन्द्रजात्राको क्रममा श्री गणेशको रथयात्रा ।

*फोटोः मनोज शाही*



रथयात्रा अवलोकन गर्न सहभागी जनसमुदाय । साथमा पुलुकिसि ।

*फोटोः बालकृष्ण डंगोल*



लाखे नाचमा लाखेलाई जिस्काउँदै झ्यालिंचा ।

फोटोः सानु



नाचमा मस्त मजिपाः लाखे ।

फोटोः *बालकृष्ण डंगोल*



लाखेछेँको आशनमा विराजमान लाखे आजुको मुकुण्डो ।

फोटोः *रेखा शाक्य*



बसन्तपुरको कुमारी घर अगाडि जनसमुदाय बीच पुलुकिसि नाच्दै ।

फोटोः *बालकृष्ण डंगोल*



बसन्तपुरमा चिरागसँगै अघि बढ्दै पुलुकिसि ।

फोटोः *रबिक उपाध्याय*



काठमाडौंमा नाच्दै हल्चोक आकाश भैरव (सवःभक्कु) का भैरव ।

फोटोः बालकृष्ण डंगोल



बसन्तपुरमा हल्चोक आकाश भैरव (सवःभक्कु) नाच प्रदर्शन गर्दै ।

*फोटोः बालकृष्ण डंगोल*



बसन्तपुरमा नाच प्रदर्शन गर्दै हल्चोक आकाश भैरव (सवःभक्कु) नाचका कुमारी ।

*फोटोः बालकृष्ण डंगोल*




हल्चोक आकाश भैरव (सवःभक्कु) नाचका कुमारी र चण्डी नाच प्रदर्शन गर्दै ।

*फोटोः बालकृष्ण डंगोल*



बसन्तपुर गद्दी बैठक अगाडि हल्चोक आकाश भैरव (सवःभक्कु) नाच प्रदर्शन गर्दै ।

*फोटोः खिचुवा*



बसन्तपुरस्थित त्रैलोक्यमोहनको मन्दिरमा दश अवतार प्रदर्शन गरिँदै ।

*फोटोः रबिक उपाध्याय*



दश अवतारको एक आकर्षक झाँकी ।

*फोटोः बिपिन*



काष्ठमण्डपमा घुमाउन तयार गरिएको बौमत



बौमत उठाएर नगर परिक्रमा गराउँदै ।

*फोटोः उदेन न्हूसायूमि*



इन्द्रजात्राको तेस्रो दिन बेलुकी काष्ठमण्डपबाट बौमत निकालिँदै ।

*फोटोः राजिब वज्राचार्य*



इन्द्रजात्रामा नाच प्रदर्शन अघि रंगरोगन गरी पूजाको लागि राखिएका हल्चोक आकाश भैरव (सवःभक्कु) देवगणका मुकुण्डोहरू । हल्चोक आकाश भैरवका मुकुण्डोहरू पूजाका लागि पनि खुल्ला राख्ने गरिन्छ । *फोटोः अनुप प्रधान*



भक्तपुरबाट निकालिने महाकाली नाच देवगणका मुकुण्डोहरू । यी मुकुण्डोहरू राख्ने सुरक्षित स्थान नभएको कारणले नाच नभएका बेला यसरी नै झुण्ड्याएर राख्ने गरिन्छ ।

*फोटोः डा अजयक्रान्ति शाक्य*



इन्द्रकी आमाको प्रतीक स्वरुप मरु टोलको छ्वासपाखाबाट निकालिएको दागिं ।

*फोटोः सुनिलमान स्थापित*



किलागल टोलबाट दीप्याखं (देवी नाच) निकालिँदै ।

*फोटोः बालकृष्ण डंगोल*



दीप्याखं (देवी नाच) नाचका भैरव ।

*फोटोः बालकृष्ण डंगोल*



दीप्याखं (देवी नाच) नाचका कुमारी र दैत्य ।

*फोटोः बालकृष्ण डंगोल*



किलागलमा दीप्याखं (देवी नाच) प्रदर्शन गरिँदै ।

*फोटोः बालकृष्ण डंगोल*



श्री कुमारीको रथयात्रामा सहभागी पञ्च बुद्धका प्रतीक स्वरुप वज्राचार्य गुर्जुहरू ।

फोटोः प्रविण प्रजापति



कुमारी रथयात्रा अवलोकन गर्न उपस्थित जनसमुदाय ।

फोटोः चन्द्रमणि भट्टराई



मरुटोलस्थित धंसा अगाडि चार वटा खम्बा माथि आसन बनाई बाँधेर राखिएको इन्द्रको मूर्ति ।



हनुमानढोकास्थित नासल चोक भित्र राजाहरूको राज्याभिषेक गरिने डबलीमा राखिएको इन्द्रको मूर्ति ।

*फोटोः सन्देश मुनिकार*



इन्द्रजात्राको पूर्णिमाका दिन इन्द्रदहमा भइरहेको मेला ।

*फोटोः राजिव वज्राचार्य*



इन्द्रजात्राको पूर्णिमाका दिन मेला लाग्ने इन्द्रदह ।

*फोटोः राजिव वज्राचार्य*



हनुमानढोकामा भक्तपुरको महाकाली नाच प्रदर्शन गरिँदै ।

*फोटोः बालकृष्ण डंगोल*



महाकाली नाचका देवगणहरू ।



महाकाली नाचका देवगणहरू नाच प्रदर्शन गर्दै ।

*फोटोः बालकृष्ण डंगोल*



हनुमानढोकामा भक्तपुरको महाकाली नाच प्रदर्शन गरिँदै ।

*फोटोः बालकृष्ण डंगोल*



ह्यूमत टोलस्थित ह्यूमत अर्थात घुमिरहने बत्ती ।  *फोटोः सन्देश मुनिकार*



बसन्तपुरस्थित आकर्षक कुमारी घर । श्री कुमारी विराजमान हुने यो घर विहार वास्तुकलामा आधारित भई निर्माण गरिएको छ । यसलाई "श्री राजकीर्ति मनोरम महाविहार" पनि भनिन्छ ।

इन्द्रजात्रा



हनुमानढोकास्थित देगु तलेजु मुनि रहेको श्वेत भैरव (हाथुद्यः) को मूर्ति



वटु टोलमा प्रदर्शन गरिने बाकादे आजु भैरवको मूर्ति



इन्द्रजात्राका बेला प्रदर्शन गरिने भैरवको एक काष्ठमूर्ति



श्री कुमारीको रथमा घःमाःको अगाडि राखिने भैरवको मूर्ति

फोटोः चन्द्रमणि भट्टराई



आकर्षक फूलमालाहरूले सजाई मन्दिर बाहिर प्रदर्शनमा राखिएको इन्द्रचोकस्थित श्री आकाश भैरव (आजु द्यः) । *फोटोः बालकृष्ण डंगोल*



हनुमानढोकास्थित श्वेत भैरव (हाथुद्यः) बाट अर्पण गरिएको जाँड ग्रहण गर्दै युवाहरू । *फोटोः बालकृष्ण डंगोल*



काठमाडौं महानगरपालिकाबाट पूर्व कुमारी एवं पूर्व गणेश र पूर्व भैरवहरूलाई सम्मान स्वरुप नगद भत्ता वितरण कार्यक्रममा सहभागी पूर्व कुमारी, पूर्व गणेश, पूर्व भैरवका साथ काठमाडौं जिल्लाका प्रतिनिधि सभा तथा प्रदेशसभाका सदस्यहरू र काठमाडौं महानगरपालिकाका प्रमुख एवं उपप्रमुख

*फोटोः चन्द्रमणि भट्टराई*



काठमाडौं महानगरपालिकाबाट पूर्व कुमारी एवं पूर्व गणेश र पूर्व भैरवहरूलाई सम्मान स्वरुप नगद भत्ता वितरण कार्यक्रम ।

*फोटोः चन्द्रमणि भट्टराई*



बि.सं. २०७६ सालको इन्द्रजात्रा पर्व अवलोकनका क्रममा सम्माननीय राष्ट्रपति विद्यादेवी भण्डारीका साथ काठमाडौं महानगरपालिकाका प्रमुख, उपप्रमुख, विभिन्न देशका कुटनीतिक नियोगका पदाधिकारीहरु तथा इन्द्रजात्रा पर्व अवलोकनका लागि काठमाडौं महानगरपालिकाको निमन्त्रणामा पाल्नुभएका विभिन्न देशका नगर प्रमुखहरू गद्दी बैठक भित्र । *फोटोः सुनिल सी. वज्राचार्य*



काठमाडौं महानगरपालिकाबाट पूर्व कुमारी एवं पूर्व गणेश र पूर्व भैरवहरूलाई सम्मान स्वरुप नगद भत्ता वितरण कार्यक्रममा सहभागी पूर्व कुमारी एवं पूर्व गणेश र पूर्व भैरवहरू ।

फोटोः चन्द्रमणि भट्टराई



भक्तपुरको टौमढीस्थित भैरवको मन्दिरमा टाँगिएको पुलु भैरव । भक्तपुरमा इन्द्रजात्राको अन्तिम दिन पुलुकिसि निकाल्दा यही पुलु भैरवलाई अगाडि राखी प्रदर्शन गरिन्छ ।

*फोटोः डा अजयक्रान्ति शाक्य*



भक्तपुरको इन्द्रजात्रामा निकालिने मूपात्र । हातमा खड्ग बोकेर आउने यो मूपात्रले ठाउँ ठाउँमा प्रदर्शनमा राखिएका जयन्तको मूर्तिलाई प्रतीकात्मक रुपमा खड्ग प्रहार गर्ने गर्दछ ।



इन्द्रजात्राका बेला भक्तपुरबाट निकालिने पुलुकिसि ।

# UPAKU ROUTE
# उपाकु जाने मार्ग

नक्सा नं – १






## UPAKU ROUTE
### उपाकु जाने मार्ग

- महाबौद्ध - भोंसिको - दुगंबही - न्यूरोड गेट - टेबहाल - सुन्धारा - धरहरा - बागदरबार - गणबहाः - लगन - नायपाचो - सबल बहाः - इनाखा - चल्खु - वन्दे - ह्यूमत - जैसिदेवल - कोहिटी - भिमसेनस्थान - कोप्राक्यब - ख्यःक्यब - मरुध्वाखा - चसान - दमाइ टोल - सुन्तागल्ली - पाछैगल्ली - तुंछेंगल्ली - कुलांभुलु अजिमा - छत्रपाटी - स्वांछ्पुगणेश - थंहिटी - ज्याठा - इनबहाः - भोटाहिटी - महाबौद्ध
- Mahaboudha - Bhonsiko - Duganbahi - Newroad Gate - Tebahal - Sundhara - Dharahara - Baghdurbar - Ganabahal - Lagan - Nayapcho - Sabalbahal - Innakha - Chalkhu - Wonde - Hyumat - Jaisidewal - Kohiti - Bhimsensthan - Koprakyaba - Khyakyeba - Maru Dwakha - Chasan - Damai Tole - Suntagalli - Pachhaigalli - Tunchhegalli - Kulanbhulu Ajima - Chhetrapati - Swanchhapu Ganesh - Thahiti - Jyatha - Inabahal - Bhotahiti - Mahaboudha

तस्विर सौजन्य: इन्टरनेट स्रोत

नक्सा नं – २

# KWONEYA ROUTE
# क्वःनेयाः मार्ग




**KWONEYA ROUTE**
**क्वःनेयाः मार्ग**

- प्रस्थान विन्दु - बसन्तपुर - भूतिसः - चिकंमुगल - अट्कोनारायण - मजिपाट - न्हूघः - ज्याबहाः - लगन - गोफल - ब्रम्हटोल - वन्दे - ह्युमत - तुकं बहाः - जौसीदेवल - भिमसेनस्थान - क्वपुंतुं - बिच्छेबहाः - भुतिसः - सिंहसत्तल - काष्ठमण्डप - बसन्तपुर - समापन विन्दु

- Starting point Basantapur - Bhutisa - Chikanmugal - Atkonarayan - Majipat - Nhu Gha: - Jyabaha - Lagan - Gophal - Brahmatole - Wonde - Hyumat - Tukan Baha - Jaisidewal - Bhimsensthan - Bichebaha - Kopuntun - Bhutisaa - Singhasattal - Kasthamandap - Basantapur -Ending point

तस्विर सौजन्यः इन्टरनेट स्रोत

# THANEYA ROUTE
## थःनेयाः मार्ग






THANEYA ROUTE
थःनेयाः मार्ग

- प्रस्थान विन्दु - बसन्तपुर - प्याफल - यट्खा - नरदेवी - टेंगल - न्ह्यःखा - थाय्मरु (बांगेमुढा) - न्ह्यकन्तला - असन - किसिध्वाखा - बालकुमारी - केल - इन्द्रचोक - मखन - हनुमानढोका - बसन्तपुर - समापन विन्दु
- Starting point Basantapur - Pyaphal - Yetkha - Naradevi - Tengal - Nhyakha - Thaymaru (Bangemudha) - Nhaikantalla - Ason - Kisidwakha - Balkumari - Kela - Indrachowk - Makhan - Hanumandhoka - Basantapur Ending point

तस्विर सौजन्यः इन्टरनेट स्रोत

भाद्रशुक्ल द्वादशीका दिन शुरु हुने इन्द्रजात्रा लगातार आठ दिनसम्म चल्ने गर्दछ। इन्द्रजात्राको आठ दिन निम्न अनुसार सञ्चालन हुन्छ।

१) **पहिलो दिन** : इन्द्रध्वजोत्थान, उपाकु र विभिन्न स्थानमा इन्द्र प्रदर्शन, लाखे, पुलुकिसि, दीप्याखं, महाकाली नाच, सवःभक्कु, दश अवतार प्रदर्शन शुरु हुन्छ।

२) **दोश्रो दिन** : कुमारीको रथयात्रामा रथ तान्ने सहयोगीहरूलाई बलंभ्वय् खुवाइन्छ। साथै लाखे, पुलुकिसि, महाकाली नाच, सवःभक्कु र दशअवतार पनि प्रदर्शन हुन्छ।



३) **तेश्रो दिन** : श्री कुमारीको रथयात्रा तल्लो भेगमा (क्वःने) गरिन्छ। क्वःने क्षेत्रमा दीप्याखं प्रदर्शन गरिन्छ। सोही दिन दागिं र बौमत निकालिन्छ।

४) **चौथो दिन** : श्री कुमारीको रथयात्रा माथिल्लो भेगमा (थःने) गरिन्छ। यो दिन पूर्णिमा भएकोले समयूबजि पनि खाने गरिन्छ। दीप्याखं माथिल्लो भेगमा प्रदर्शन गरिन्छ।

५) **पाँचौ दिन** : श्री कुमारीको रथ यात्राहुँदैन तर लाखे, पुलुकिसि, महाकाली नाच, सवःभक्कु नाच र दशअवतार प्रदर्शन हुन्छ।

६) **छैठौं दिन** : लाखे, पुलुकिसि, महाकाली नाच, सवःभक्कु नाच र दश अवतार प्रदर्शन हुन्छ। दिउँसो कुमारीको रथमा कानफट्टा जोगीहरूबाट पूजा हुन्छ।

७) **सातौं दिन** : लाखे, पुलुकिसि, महाकाली नाच, सवःभक्कु नाच र दश अवतार प्रदर्शन हुन्छ।

८) **आठौं दिन** : श्री कुमारीको नानीचायाः हुन्छ। दीप्याखं लगायत लाखे, पुलुकिसि, महाकाली नाच, सवःभक्कु नाच र दश अवतार प्रदर्शन हुन्छ। सोही दिन इन्द्रध्वज ढालेर टेकूमा सेलाइन्छ। त्यसपछि त्यस वर्षको इन्द्रजात्रा समापन हुन्छ।

ल्ने

नि,
तार

वयू



य:सिं (लिङ्गो) लाई
नगर प्रवेश गराइदै।

बे,
नि
स

चित्र : एकराम सिं



१.



२.



३

# यँया इन्द्रजात्रा



४.





श्री कुमारीको हातबाट टीका ग्रहण गर्दै तत्कालीन राजा।



५.



६.



७.



८.



जात्राको शुरुमा र समापनमा भरुवा बन्दूक पड्काउने कार्य गर्ने गुर्जुको पल्टन।



इन्द्रजात्राको आठौं दिन लिङ्गो (य:सिं) ढालेर समापन गरिन्छ।

इन्द्र
अनुस
१)
२)
३)

इन्द्रजात्राका आठ दिन गरिने विभिन्न सास्कृतिक कार्यक्रम (चित्रमा देखाइए अनुसार) :

1) *इन्द्रध्वजोत्थान, उपाकु र इन्द्र प्रदर्शन।* पहिलो दिन यी कार्यहरू गरिन्छ।

2) *कुमारीको रथयात्रामा रथ तान्ने सहयोगीहरूलाई ब्लंभ्वय् खुवाइँदै।* दोश्रो दिन यो भोज खुवाइन्छ।

3) *श्री कुमारीको रथयात्रा (क्व:नेया:), दागिं र बौमत निकालिँदै।* तेश्रो दिन यी कार्यहरू गरिन्छ।

4) *समयबजी र हनुमानढोकामा हाथुद्य: (श्वेत भैरव) प्रदर्शन।* हनुमानढोका परिसरमा श्वेत भैरव इन्द्रजात्राभरि नै प्रदर्शन गरिन्छ।

5) *सव:भक्कु नाच प्रदर्शन।* इन्द्रजात्राभरि नै सव:भक्कु नाच प्रदर्शन गरिन्छ।

समापनमा
...ाउने कार्य
...टन।



6) *लाखे र पुलुकिसि नाच।* यी दुई नाच पनि इन्द्रजात्राभरि नै प्रदर्शन गरिन्छ।

7) *महाकाली नाच।* भक्तपुरबाट ल्याइने महाकाली नाच इन्द्रजात्राभरि नै प्रदर्शन गरिन्छ।

8) *दीप्याखं।* कुमारी यात्रा चलाउने दिन लगायत जम्मा सात पटक दीप्याखं प्रदर्शन गरिन्छ।

यें महानगरपालिका

काठमाडौं महानगरपालिका

शहरी योजना आयोग

# NANICHAYA ROUTE
# नानीचाया: मार्ग






**NANICHAYA ROUTE**

**नानीचाया: मार्ग**

- प्रस्थान विन्दु - बसन्तपुर - प्याफल - यट्खा - किलागल - भेंडासिंह - इन्द्रचोक - मखन - हनुमानढोका - बसन्तपुर समापन विन्दु
- Starting point Basantapur - Pyaphal - Yetkha - Kilagal - Bhedasing - Indrachowk - Makhan - Hanumandhoka - Basantapur Ending point

तस्विर सौजन्यः इन्टरनेट स्रोत

# DAGIN AND BAUMATA ROUTE
# दागिं र बौमत जाने मार्ग




**DAGIN AND BAUMATA ROUTE**

**दागिं र बौमत जाने मार्ग**

- प्रस्थान विन्दु छ्वासापाखा - काष्ठमण्डप - प्याफल - यटखा - नरदेवी - टेंगल - न्ह्यःखा - थायमरु - न्ह्यकंतला - असन - किसिच्वाका - वालकुमारी - केल - इन्द्रचोक - मखन - हनुमानढोका - काष्ठमण्डप - चिकंमुगल - अट्कोनारायण - मजिपाट - जैसीदेवल - न्हूयः- ज्याबाहाः - लगन - गोफल - ब्रम्हटोल - वन्दे - ह्यूमत - तुकं बाहाः - भिमसेनस्थान - क्वपुंतुं - विच्छेवहाः - भुतिसः - सिंहसत्तल - काष्ठमण्डप - समापन विन्दु
- Starting point Chwasapakha - Kasthamandap - Pyaphal - Yetkha - Naradevi - Tengal - Nhyakha - Thaymaru - Nhaikantalla - Asan - Kisidwakha - Balkumari - Kela - Indrachowk - Makhan - Hanumandhoka - Kasthamandap - Chikanmugal - Jaisidewal - Atkonarayan - Majipat - Nhu Gha: -Jyabaha -Lagan - Gophal - Brahmatole - Wonde - Hyumat - Tukan Baha - Bhimsensthan - Bichhebaha - Kopuntun - Bhutisaa - Singhasattal - Kasthamandap - Ending point

# बौमतमा सहभागी कोलहरू जोड्दा देखिने नाग स्वरुप

नक्सा नं. – ६






तस्विर सौजन्य: इन्टरनेट स्रोत

